॥ श्रीगणेशाय नमः ॥

# ॥ श्रीशार्ङ्गधर संहिता ॥

(आचार्य शार्ङ्गधरले बाह्रौं शताब्दीमा लेखेको अनुपम आयुर्वेद ग्रन्थ)



सङ्कलन तथा नेपालीमा भावानुवाद : मोहन प्रसाद सापकोटा

## दुई शब्द

यो आयुर्वेद ग्रन्थका लेखक शार्ङ्गधरलाई बाह्रौं शताब्दीतिरका एक प्रसिद्ध आयुर्वेदाचार्य मानिएको पाइन्छ । शार्ङ्गधरले आफू शाकम्भरी देशमा जन्मिएको र दामोदरका छोरो भएको कुरा उनैले लेखेको अर्को ग्रन्थ शार्ङ्गधर पद्धतिमा उल्लेख गरेका छन् । आयुर्वेदको यो ग्रन्थ अन्य उनिभन्दा अघिका आचार्यहरूले लेखेका आयुर्वेदका ग्रन्थको सार हो भनिएको छ ।

मानव जीवनका प्रायः सबै क्षेत्र यो ग्रन्थमा धेरथोर समेटिएका छन् । यहाँ लेखिएको छ भन्दैमा आफैंले आफैंलाई वा अरुलाई विशेषज्ञ वैद्यको सहायता नलिई गम्भीर प्रकृतिका ओखतीको प्रयोग नगर्नू नगराउनु होला । अन्य असर नगर्ने खालका सामान्य ओखतीको प्रयोगबाट पनि धेरै नै फाइदा पुग्न सक्दछ । प्रचलनमा रहेका तर कारण थाहा नभएका धेरै कुराको ज्ञान पनि यस ग्रन्थबाट पाइनेछ । सर्वसाधारण तथा आयुर्वेदका उद्यमी सबैले यसबाट धेरथोर लाभ लिन सक्ने छन् ।

मैले यो ग्रन्थ सङ्कलन गरी नेपाली भाषामा भावानुवाद गर्न मुख्यत दुई वटा पुस्तकलाई आधारग्रन्थ बनाएको छु । सन् १९३१ मा प्रकाशन भएको गूढार्थ दीपिका सहितको एक पुस्तक र पं.रामप्रसाद राजवैद्यको भाषाटीका भएको शक सं.१८५६ मा प्रकाशन भएको अर्को पुस्तक । सन्दर्भ सामग्रीका रूपमा अन्य चार प्रति पुस्तकको पनि सहयोग लिएँ तर आधार बनाइन किन कि ग्रन्थका अन्य प्रतिमा समानता पाइएन । यी दुई ग्रन्थमा भएका भिन्नता रेखाङ्कित गर्दै सम्भव भएसम्म सँगै कोष्ठभित्र राखेको छु तर अर्थ भने कोष्ठ भित्रका कुराको दिइएको छैन । यी दुई ग्रन्थमा पनि अनेकौं पछि थपिएका श्लोकहरू छन् । शार्ङ्गधरले यो ग्रन्थमा दुई हजार छ सय श्लोक छन् भनेपनि थपिएका केही श्लोकहरू समेत गरेर जम्मा दुई हजार चार सय उनन्चालीस श्लोकमात्र यस ग्रन्थमा समेटिएका छन् ।

सबै शब्दको अर्थ सबैतिर लेख्न सम्भव नहुने हुनाले ग्रन्थको अन्तमा केही शब्दका अर्थहरु र नापोको बारेमा सामान्य जानकारी समेत राखेको छु । सबै शब्दको अर्थ जानी बुझी लेख्न पनि सकिएन ।

यसका ग्रन्थका विषयवस्तु विषय सूचीबाटै थाहा हुने हुनाले लामो भूमिका लेख्न चाहिन । भावानुवादका लागि के.यन.स्वामीको अनलाइन शब्दकोश, नेपाली बृहत् शब्दकोश, कुलचन्द्र शर्माको अमरकोश, वाचस्पत्यम्, शब्दकल्पद्रुम र आयुर्वेद विश्वकोशको सहयोग लिएँ ।

यस ग्रन्थमा जानी नजानी अनेक त्रुटी भएका हुन सक्दछन् । पाठकवृन्द र गुरुजनबाट गल्ती औंल्याइ दिनु भयोभने आगामी दिनमा सुधारेर अघि पढ्न पाउनेछु । आशा छ समाजले यस ग्रन्थबाट भरपूर लाभ उठाउनेछ । दुई दर्जनभन्दा बढी नेपालीमा भावानुवाद सकिई छपाइका क्रममा रहेका ग्रन्थरूमा यो पहिलो ग्रन्थका रूपमा आएको छ ।

## विषय सूची

# श्रीगणेशाय नमः
# श्रीशार्ङ्गधर संहिता
# पूर्वखण्डः
# अथ प्रथमोऽध्यायः
## पहिलो अध्याय

### मङ्गलाचरण

विघ्नहर्ता श्रीगणेश, वाग्देवी श्रीसरस्वती, योगाचार्य श्रीशिव, आयुर्वेदका प्रथम स्मरणकर्ता श्रीब्रह्मा तथा त्यसलाई पृथ्वीमा फैलाउने विष्णुरुप धन्वन्तरीलाई नमस्कार गर्दै शार्ङ्गधर संहिताको भावानुवादलाई म अघि बढाउँदछु ।

**श्रियं स दद्याद्भवतां पुरारिर्यदङ्गतेजःप्रसरे भवानी ।**
**विराजते निर्मलचन्द्रिकायां महौषधीव ज्वलिता हिमाद्रौ ॥१॥**



जसरी हिमालयमा अति चम्किला सञ्जीवनी आदि दिव्य औषधी निर्मल चन्द्रकिरणमा शोभायमान हुन्छन् त्यसरी नै जसका तेजपुञ्जमा श्रीपार्वती विराजमान छिन् यस्ता श्रीशिव भगवान्, हजुरलाई कल्याण र लक्ष्मीका दाता बनून् ।

### ग्रन्थ प्रयोजन

**प्रसिद्धयोगा मुनिभिः प्रयुक्ताश्चिकित्सकैर्ये बहुशोऽनुभूताः ।**
**विधीयते शार्ङ्गधरेण तेषां सुसङ्ग्रहः सज्जनरञ्जनाय ॥२॥**

चरक आदि मुनिजनले बताएका तथा उत्तम वैद्यले पटकपटक नाम, रूप र योग गरी जानकारी लिएको प्रसिद्ध ज्ञान-योग सङ्ग्रह गरी सज्जनका जानकारीका लागि म यो शार्ङ्गधर नामक ग्रन्थ लेख्दछु ।

## रोग पत्ता लगाएर मात्र उपचार गर्नू

**हेत्वादिरूपाकृतिसात्म्यजातिभेदैः समीक्ष्यातुरसर्वरोगान् ।**
**चिकित्सितं कर्षणबृंहणाख्यं कुर्वीत वैद्यो विधिवत्सुयोगैः ॥३॥**

वैद्यले रोगको कारण, पूर्वलक्षण, लक्षण, उपचार र असर सबै अध्ययन गरी रोग पत्ता लगाएर शास्त्रसम्मत विधिले रोग घटाउनु (कर्षण) र रोगका दोष वा असर बाहिर निकाल्नु पर्दछ ।

व्याख्याः- (क) हेतु : जेबाट रोग हुन्छ त्यसलाई हेतु वा निदान भनिन्छ । जस्तो माटो खानाले कमलपित्त हुन्छ । यस्तोमा कमलपित्तको हेतु माटो खानु हुन्छ । (ख) आदिरूप : रोग हुनु पूर्व आङ बटार्न मन लाग्ने, हाई आउने, अङ्ग दुख्ने, खान मन नलाग्ने आदि लक्षण देखिन्छन् । यसलाई आदिरूप वा पूर्वरूप भनिन्छ । (ग) आकृति : तिर्खा, बेहोसी, भ्रम (रिँगटा), डाह, निद्रा नलाग्ने आदि रोगका लक्षण देखिने अवस्थालाई आकृति वा रूप भनिन्छ । (घ) सात्म्य : रोगी र रोगको अवस्था अनुसार सुख हुने गरी रोगीलाई प्रयोग गरिने उपचार विधिलाई  सात्म्य वा उपशय भनिन्छ । (ङ) जाति : जुन कारणले वात आदि दोष दूषित भएको हो त्यो कारण र त्यसले उब्जाएको रोगको कारण थाहा पाउनुलाई जाति वा सम्प्राप्ति भनिन्छ ।



## ओखतीको प्रभाव

**दिव्यौषधीनां बहवः प्रभेदा वृन्दारकाणामिव विस्फुरन्ति ।**
**ज्ञात्वेति संदेहमपास्य धीरैः सम्भावनीया विविधप्रभावाः ॥४॥**

जसरी देवताका असङ्ख्य प्रकार र उत्कृष्टता हुन्छ त्यसरी नै दिव्य ओखतीका पनि असङ्ख्य प्रकार र अतुलनीय शक्ति हुन्छ । यी सबै कुरा जानी विवेकशील र गम्भीर वैद्यले शङ्का हटाई आदरपूर्वक ओखतीको सोच्नै नसकिने प्रभावलाई मनन गर्नू ।

### उपचारको योजना

**स्वाभाविकागन्तुककायिकान्तरा रोगा भवेयुः किल कर्मदोषजाः ।**
**तच्छेदनार्थं दुरितापहारिणः श्रेयोमयान्योगवरान्नियोजयेत् ॥५॥**

स्वाभाविक, आकस्मिक वा आगन्तुक, शारीरिक र भित्री (मानसिक) गरी चार प्रकारका रोगहरू आफूले गर्ने कर्म र दोष अनुसार उत्पन्न हुन्छन् । यसको शान्तिका लागि अथवा दुःखबाट रोगीलाई छुटाउनका लागि जेजस्तो उपचारको योग उत्तम हुन्छ वैद्यले त्यसको योजना बनाउनु पर्दछ ।

व्याख्या :- (क) स्वाभाविक : तिर्खा, भोक, बुढ्यौली, निद्रा आदि जस्ता स्वभावजन्य रोग । (ख) आगन्तुक : सर्प आदिले डस्नु, कुनै हातहतियारले काट्नु आदि जस्ता आकस्मिक कारणले हुने रोग । (ग) कायिक : त्रिदोश (वात, पित्त र कफ) दूषित भई हुने जरो, खोकी आदि रोग । (घ) आन्तरिक : मद (नसा), बेहोसी, भ्रम आदि रोग ।



### ग्रन्थको महत्व

**प्रयोगानागमात्सिद्धान्प्रत्यक्षादनुमानतः ।**
**सर्वलोकहितार्थाय वक्ष्याम्यनतिविस्तरान् (विस्तरात्) ॥६॥**

सारा संसारको भलो गर्न यस ग्रन्थमा प्रत्यक्ष (अनुभव), अनुमान र आगम (प्रचलित) शास्त्रबाट प्रमाणित भएका प्रयोगहरूलाई (म) संक्षेपमा वर्णन गर्नेछु ।

### पूर्वखण्डमा बताइएका विषयवस्तु

**प्रथमं परिभाषा स्याद्भैषज्याख्यानकन्तथा ।**
**नाडीपरीक्षादिविधिस्ततो दीपनपाचनम् ॥७॥**
**ततः कलादिकाख्यानमाहारादिगतिस्तथा ।**
**रोगाणां गणना चैव (चेति) पूर्वखण्डोऽयमीरितः ॥८॥**

पहिलो अध्यायमा परिभाषा; दोश्रो अध्यायमा औषधी बनाउने, खाने र पिउने विधि; तेश्रो अध्यायमा नाडी हेर्ने आदि विधि; चौथोमा दीपन र पाचन विधि; पाँचौंमा कला, सृष्टिक्रम आदि; छैटौंमा आहार, गर्भोत्पत्ति र बालकको पालनपोषण आदि र सातौंमा रोगको गन्ति सहितको खण्डलाई पूर्वखण्ड भनिएको छ ।

मध्यमखण्डमा बताइएका विषयवस्तु

**स्वरसः क्वाथफाण्टौ च हिमः कल्कश्च चूर्णकम् ।**
**तथैव गुटिकालेहौ स्नेहाः सन्धानमेव च ॥९॥**
**धातुशुद्धी रसाश्चैव खण्डोऽयं मध्यमः स्मृतः ।**

मध्यम खण्डमा यन्त्रले कुनै द्रव्य निचोरेर रस निकालिने विधि (स्वरस), औषधी आदिलाई पानीमा मिसाई उमालेर बाक्लो रस बनाउने विधि (क्वाथ, काँडापानी), कुटिएका द्रव्यलाई तातोपानीमा हाली हातले माडेर त्यसको रस निकाल्ने विधि (फाण्ट), कुटिएका द्रव्यलाई एक रातभर चिसो पानीमा डुबाएर त्यसको रस निकाल्ने विधि (हिम), बोक्रा आदिलाई तरल पदार्थमा पिँधी औषधीकारूपमा प्रयोग गर्ने विधि (कल्क), धुलो औषधी सम्बन्धी विधि, औषधीका गोली बनाउने विधि, बाक्लो लेदो औषधी (लेह) बनाउने विधि, स्नेह औषधी बनाउने विधि, धातु शुद्ध बनाउने विधि तथा रस बनाउने विधि वर्णन गरिएको छ ।

उत्तरखण्डमा बताइएका विषयवस्तु

**स्नेहपानं स्वेदविधिर्वमनञ्च विरेचनम् ॥१०॥**
**ततस्तु स्नेहबस्तिः स्यात्ततश्चापि निरूहणम् ।**
**ततश्चाप्युत्तरो बस्तिस्ततो नस्यविधिर्मतः ॥११॥**
**धूमपानविधिश्चैव गण्डूषादिविधिस्तथा ।**
**लेपादीनां विधिः ख्यातस्तथा शोणितविस्रुतिः ॥१२॥**
**नेत्रकर्मप्रकारश्च खण्डः स्यादुत्तरस्त्वयम् ।**

उत्तरखण्डमा स्नेहपान विधि, पसिना निकाल्ने विधि, बान्ता गराउने विधि, दिसा गराउने विधि, स्नेहवस्ति विधि, निरूहणवस्ति विधि, उत्तरवस्ति विधि, नस लिने विधि, धूमपान विधि, मुखमा औषधी-जल लिने विधि, मलम दल्ने आदि विधि, रगत निकाल्ने विधि र नेत्रकर्म विधि बताइएको छ ।

यस संहिता ग्रन्थमा भएका अध्याय र श्लोक सङ्ख्या

**द्वात्रिंशत् सम्मिताध्याययुक्तेयं संहिता स्मृता ॥१३॥**
**षड्विंशतिशतान्यत्र श्लोकानां गणितानि च ।**

यस संहिता ग्रन्थमा कुल बत्तीस अध्याय र दुई हजार छ सय श्लोक छन् ।

औषधीको नापो



**न मानेन विना युक्तिर्द्रव्याणाञ्जायते क्वचित् ॥१४॥**
**अतः प्रयोगकार्यार्थं मानमत्रोच्यते मया ।**

नापो नभई औषधी प्रयोग गर्ने जुक्ति नै हुँदैन । त्यसैले औषधी बनाउन नाप्ने विधि यस संहितामा बताउँदछु । यो तौलनका लागि हो खानका लागि नापो (मात्रा) प्रसङ्ग अनुसार तत् तत् स्थानमा नै बताइनेछ ।

मागध देशीय नाप-प्रणाली : परमाणु, त्रसरेणु र वंशी

**त्रसरेणुर्बुधैः प्रोक्तस्त्रिंशता परमाणुभिः ॥१५॥**
**त्रसरेणुस्तु पर्यायनाम्ना वंशी निगद्यते ।**

तीस 'परमाणु'को एक 'त्रसरेणु' हुन्छ भनी विद्वानले बताएका छन् । 'वंशी' त्यही त्रसरेणुको पर्यायवाची शब्द हो ।

### परमाणु र वंशी

**जालान्तरगते भानौ यत्सूक्ष्मं दृश्यते रजः ॥१६॥**
**तस्य त्रिंशत्तमो भागः परमाणुः स कथ्यते ।**
**जालान्तरगतैः सूर्यकरैर्वंशी विलोक्यते ॥१७॥**

प्वालबाट सूर्यको किरण छिर्दा त्यो किरणमा देखिने धूलोको अति मसिना एउटा कणको तीस भागको एक भागलाई 'परमाणु' भनिन्छ । प्वालबाट छिरेको सूर्यकिरणमा उड्ने धुलोलाई 'वंशी' पनि भनिएको छ ।

### नाप : मरीचि, राजिका, सर्षप, यव र गुञ्जा (रत्ती)

**षड्वंशीभिर्मरीचिः स्यात्ताभिः षड्भिस्तु राजिका ।**
**तिसृभी राजिकाभिश्च सर्षपः प्रोच्यते बुधैः ॥१८॥**
**यवोऽष्टसर्षपैः प्रोक्तो गुञ्जा स्यात्तच्चतुष्टयम् ।**



छ वंशीको एक 'मरीचि', छ मरीचिको एक 'राजिका', तीन राजिकाको एक 'सर्षप', आठ सर्षपको एक 'यव' र चार यवको एक 'गुञ्जा' (रत्ती) हुन्छ भनी विज्ञहरूले बताएका छन् ।

### नापः हेम वा धान्यक

**षड्भिस्तु रक्तिकाभिः स्यान्माषको हेमधान्यकौ ॥१९॥**

छ रत्तीको एक 'मासा' हुन्छ र यसलाई 'हेम' वा 'धान्यक' पनि भनिन्छ ।

### नापोः शाण, धरण वा टङ्क, कोल आदि

**माषैश्चतुर्भिः शाणः स्याद्धरणः स निगद्यते ।**
**टङ्कः स एव कथितस्तद्द्वयं कोल उच्यते ॥२०॥**
**क्षुद्रको वटकश्चैव द्रङ्क्षणः स निगद्यते ।**

चार मासाको एक 'शाण' हुन्छ जसलाई 'धरण' वा 'टङ्क' पनि भनिन्छ । दुई शाणको एक 'कोल' हुन्छ जसलाई 'क्षुद्रक', 'वटक' र 'द्रंक्षण' पनि भनिन्छ ।

नापो : कर्ष र यसका पर्यायवाची शब्द

**कोलद्वयञ्च कर्षः स्यात् स प्रोक्तः पाणिमानिका ॥२१॥**
**अक्षं पिचुः पाणितलं किञ्चित् पाणिश्च तिन्दुकम् ।**
**विडालपदकञ्चैव तथा षोडशिका मता ॥२२॥**
**करमध्यो हंसपदं सुवर्णं कवलग्रहः ।**
**उदुम्बरञ्च पर्यायैः कर्ष एव निगद्यते ॥२३॥**

दुई कोलको एक 'कर्ष' हुन्छ र यसलाई 'पाणिनामिका', 'अक्ष', 'पिचु', 'पाणितल', 'किञ्चित्पाणि', 'तिन्दुक', 'बिडालपदक', 'षोडशिका', 'करमध्य', 'हंसपदक', 'सुवर्ण', 'कवलग्रह' र 'उदुम्बर' पनि भनिन्छ ।



नापो : आधा पल र पल

**स्यात्कर्षाभ्यामर्द्धपलं शुक्तिरष्टमिका तथा ।**
**शुक्तिभ्याञ्च पलं ज्ञेयं मुष्टिराम्रञ्चतुर्थिका ॥२४॥**
**प्रकुञ्चः षोडशी बिल्वं पलमेवाऽत्र कीर्त्त्यते ।**

दुई कर्षको एक 'अर्धपल' हुन्छ र यसलाई 'शुक्ति' र 'अष्टमिका' पनि भनिन्छ । दुई अर्धपलको एक 'पल' हुन्छ र यसलाई 'मुष्टि', 'आम्र', 'चतुर्थिका', 'प्रकुञ्च', 'षोडशी' र 'बिल्व' पनि भनिन्छ ।

नापोः प्रसर, कुडव, मानिका

**पलाभ्यां प्रसृतिर्ज्ञेया प्रसृतश्च निगद्यते ॥२५॥**
**प्रसृतिभ्यामञ्जलि स्यात्कुडवोऽर्द्धशरावकः ।**
**अष्टमानञ्च स ज्ञेयः कुडवाभ्याञ्च मानिका ॥२६॥**
**शरावोऽष्टपलन्तद्वज्ज्ञेयमत्र विचक्षणैः ।**

दुई पलको एक 'प्रसृति' वा 'प्रसृत' (पसर) हुन्छ । दुई प्रसृतिको एक 'अञ्जलि' (अँजुली) हुन्छ र यसलाई 'कुडव', 'अर्द्धशरावक' र 'अष्टमान' पनि भनिन्छ । दुई अञ्जलिको एक 'मानिका' हुन्छ र यसलाई 'शराव' वा 'अष्टपल' पनि भनिन्छ । (एक शरावमा एक सय अठ्ठाईस टङ्क हुन्छ) ।

नापो : प्रस्थ र आढक



**शरावाभ्यां भवेत् प्रस्थश्चतुःप्रस्थैस्तथाढकम् ॥२७॥**
**भाजनं कंसपात्रञ्च चतुःषष्टिपलञ्च तत् ।**

दुई शरावको एक 'प्रस्थ' हुन्छ (यसमा सोह्र पल हुन्छ) । चार प्रस्थको एक 'आढक' हुन्छ जसलाई 'भाजन' वा 'कंसपात्र' पनि भनिन्छ । यो चौसठ्ठी पलको हुन्छ ।

नापोः द्रोण, शूर्प, शराव र द्रोणी

**चतुर्भिराढकैर्द्रोणः कलशो नल्वणोऽर्मणः ॥२८॥**
**उन्मानश्च घटो राशिर्द्रोणपर्यायसंज्ञकाः ।**
**द्रोणाभ्यां शूर्पकुम्भौ च चतुःषष्टिशरावकाः ॥२९॥**
**शूर्पाभ्याञ्च भवेद् द्रोणी वाहो(ही) गोणी च सा स्मृता ।**

चार आढकको एक 'द्रोण' हुन्छ जसलाई 'कलश', 'नल्वण', 'अर्मण', 'उन्मान', 'घट' र 'राशि' पनि भनिन्छ । दुई द्रोणको एक 'शूर्प' हुन्छ र यसलाई 'कुम्भ' पनि भनिन्छ । एक शूर्पमा चौसठ्ठी शराव हुन्छ । दुई शूर्पको एक 'द्रोणी' हुन्छ जसलाई 'वाह' र 'गोणी' पनि भनिन्छ ।

नापो : खारी

**द्रोणीचतुष्टयं खारी कथिता सूक्ष्मबुद्धिभिः ॥३०॥**
**चतुःसहस्रपलिका षण्णवत्यधिका च सा ।**

चार द्रोणको एक 'खारी' हुन्छ जसमा चार हजार छयान्नब्बे पल हुन्छ भनेर नापोका सूक्ष्म जानकारहरूले बताएका छन् ।

नापो : भार र तुला



**पलानां द्विसहस्रञ्च भार एकः प्रकीर्त्तितः ॥३१॥**
**तुला पलशतं ज्ञेया सर्वत्रैवैष निश्चयः ।**

दुई हजार पलको एक 'भार' हुन्छ र सय पलको एक 'तुला' हुन्छ । (मगध देशमा मात्र नभई) सबैतिर यही नै तौलविधि जान्नू ।

नापो : चार गुना

**माषटङ्काक्षबिल्वानि कुडवः प्रस्थमाढकम् ॥३२॥**
**राशिर्गोणीः खारिकेति यथोत्तरचतुर्गुणाः ।**

मासादेखि खारीसम्म एउटाभन्दा अर्कोको तौल चार गुना हुन्छ भनी जान्नू । जस्तै :- चार मासाको एक शाण, चार शाणको एक कर्ष, चार कर्षको एक बिल्व, चार बिल्वको एक

अञ्जली,  चार अञ्जलीको एक प्रस्थ, चार प्रस्थको एक आढक, चार आढकको एक राशि, चार राशिको एक गोणी र चार गोणीको एक खारी ।

### तरल, गिला र सुक्खा औषधीको नापो

## गुञ्जादिमानमारभ्य यावत् स्यात् कुडवस्थितिः ॥३३॥
## द्रवार्द्रशुष्कद्रव्याणां तावन्मानं समं मतम् ।

जल आदि तरल पदार्थ तथा गिला र सुक्खा औषधी रत्तीदेखि कुडवसम्म बराबर नापेर लिनू ।

## प्रस्थादिमानमारभ्य द्विगुणन्तद् द्रवार्द्रयोः ॥३४॥
## मानन्तथा तुलायाश्च द्विगुणन्न क्वचित् स्मृतम् ।



जल आदि पातला पदार्थ र गिला औषधी लिनुपर्दा भने प्रस्थदेखि लिएर तुलासम्म सुक्खा भन्दा दोब्बर लिनू । तर तुलाभन्दा माथि लिनु पर्दा दोब्बर नभई बराबर लिनू ।

व्याख्या:- यो नापो प्रायः स्नेहपाक विधिमा लागु हुन्छ । भर्खर लेराइएको औषधीलाई गिलो (वा आर्द्र) र घाममा सुकाइएको वा लेराएको धेरै दिन भएको औषधीलाई सुकेको (वा शुष्क) भनिन्छ ।

### नाप्नका लागि कुडवपात्र बनाउने विधि

## मृद्वृक्षवेणुलोहादेर्भाण्डं यच्चतुरङ्गुलम् ॥३५॥
## विस्तीर्णञ्च तथोच्चञ्च तन्मानं कुडवं वदेत् ।

चार अमल लामो, चार अमल चौडा र चार अमल गहिरो यस्तो माटो वा बाँसको वा फलाम आदि धातुको वा हस्तिहाड वा अरु काठको भाँडो बनाउनू, यसलाई ‘कुडव’ भनिन्छ । (यसले दूध, पानी, तेल, घिउ आदि नापिन्छ) ।

### औषधी सम्मिश्रणको नाम रहने विधि

**यदौषधन्तु प्रथमं यस्य योगस्य कथ्यते ॥३६॥**
**तन्नाम्नैव स योगो हि कथ्यतेऽसौ(त्र) विनिश्चयः ।**

औषधीको मिश्रण गर्दा मूलरूपमा जुन औषधी प्रयोग हुन्छ त्यसैको नाममा त्यो मिश्रित औषधीको नाम रहन्छ । जस्तैः- गुडूच्यादि क्वाथ, चन्दनादि तैल आदि ।

### औषधीको मात्रा

**स्थितिर्नास्त्येव मात्रायाः कालमग्निं वयो बलम् ॥३७॥**
**प्रकृतिं दोषदेशौ च दृष्ट्वा मात्रां प्रकल्पयेत् ।**



औषधीको मात्रा यति नै हो भन्न सकिन्न किन कि समय (काल), रोगीको पाचनशक्ति, उमेर वा अवस्था, शारीरिक बल, प्राकृतिक अवस्था, रोगको अवस्था (दोष) र देश हेरेर वैद्यले मात्राका बारेमा निर्णय गर्नुपर्ने हुन्छ ।

### कलियुगमा औषधीको मात्रा

**यतो मन्दाग्नयो ह्रस्वा हीनसत्त्वा नराः कलौ ॥३८॥**
**अतस्तु मात्रा तद्योगा(ग्या) प्रोच्यते सुज्ञसम्मता ।**

कलियुगमा मानिसको पाचनशक्ति कमजोर हुन्छ, शरीर पनि सानो हुन्छ, बल पनि सामान्य हुन्छ त्यसैले तिनलाई उपयोगी र वैद्यलाई मान्य हुने गरी औषधीको मात्रा बताइन्छ ।

कलिङ्ग देशको नापो

यवो द्वादशभिर्गौरसर्षपैः प्रोच्यते बुधैः ॥३९॥
यवद्वयेन गुञ्जा स्यात् त्रिगुञ्जो वल्ल उच्यते ।
माषो गुञ्जाभिरष्टाभिः सप्तभिर्वा भवेत् क्वचित् ॥४०॥
स्याच्चतुर्माषक(कै): शाणः स निष्कष्टङ्क एव च ।
गद्याणो माषकैः षड्भिः कर्षः स्याद्दशमाषिकः ॥४१॥
चतुष्कर्षैः पलं प्रोक्तं दशशाणमितं बुधैः ।
चतुष्पलैश्च कुडवं प्रस्थाद्याः पूर्ववन्मताः ॥४२॥

बाह्र सेतो सर्सिउँको एक 'यव', दुई यवको एक 'गुञ्जा', तीन गुञ्जाको एक 'वल्ल' र आठ गुञ्जाको एक 'माषा' हुन्छ । कतै कतै (अरु शास्त्रमा) सात गुञ्जाको एक माषा हुन्छ भनेर पनि बताइएको छ । चार माषाको एक 'शाण' हुन्छ जसलाई 'निष्क' वा 'टङ्क' पनि भनिन्छ । छ माषाको एक 'गद्याणक' र दश माषाको एक 'कर्ष' हुन्छ । चार कर्षको एक 'पल' हुन्छ जसमा दश शाण हुन्छ । चार पलको एक 'कुडव' हुन्छ । प्रस्थ आदि तौल मागधीय परिभाषा अनुसार नै जान्नू तर यही अनुसारको क्रमले लिनू । मागध परिभाषाको कर्ष र पल नलिनू ।

कलिङ्ग र मागध गरी दुई किसिमका नापो

कालिङ्गं मागधञ्चेति द्विविधं मानमुच्यते ।
कालिङ्गान्मागधं श्रेष्ठं मानं मानविदो विदुः (प्राहुर्मानविदो जनाः) ॥४३॥

उडिसातिर र मागधतिर प्रचलित गरी तौल दुई किसिमको हुन्छ । त्यसमा उडिसा (कलिङ्ग) को भन्दा मागधको तौल श्रेष्ठ हुन्छ भनी तौलका ज्ञाता वैद्यले भनेका छन् । (मागधमान चरकको र कलिङ्गमान सुश्रुतको हो) ।

नयाँ र पुरानो द्रव्यको औषधीका लागि प्रयोग गर्ने विधि

**नवान्येव हि योज्यानि द्रव्याण्यखिलकर्मसु ।**
**विना विड(ढ)ङ्गकृष्णाभ्यां गुडधान्याज्यमाक्षिकैः ॥४४॥**

कुनै पनि औषधी (द्रव्य) का लागि नयाँ औषधीको प्रयोग गर्ने योजना बनाउनू । तर, वायुविडङ्ग, पिप्ला, शखर, अनाज, घिउ र मह गरी छ प्रकारका पदार्थ भने पुराना गुणकारी हुन्छन् ।

औषधीका लागि सधैँ गिलो वा आलो वा ताजा प्रयोग गर्नुपर्ने द्रव्य

**गुडूची कुटजो वासा कूष्माण्डश्च शतावरी ।**
**अश्वगन्धा सहचरी शतपुष्पा प्रसारिणी ॥४५॥**
**प्रयोक्तव्याः सदैवार्द्रा द्विगुणा नैव योजयेत् ।**



गुर्जो, ठूलो कुरो, असुरो, कुभिण्डो, कुरिलो, अश्वगन्धा, पहेँलो कपुरनली, सुप र बिरी : यी नौ थरी औषधी सधैँ आलो (ताजा) लिनू तर आलो छ भनेर दोब्बर नलिनू ।

अन्य द्रव्यको औषधीका लागि प्रयोग गर्ने नियम (प्रक्षिप्त श्लोक)

**शुष्कं नवीनं यद् द्रव्यं योज्यं सकलकर्मसु ॥४६॥**
**आर्द्रञ्च द्विगुणं युञ्ज्यादेष सर्वत्र निश्चयः ।**

माथि बताइएका नौ थरी औषधी बाहेकका अरु औषधी सबै कार्यमा सुकेको तर ताजा लिनुपर्दछ र आलो भए दोब्बर लिनुपर्दछ, यही निर्णय सबैतिर जान्नू ।

**नतोकिएका स्थानमा द्रव्यको औषधीका लागि प्रयोग गर्ने विधि**

**कालेऽनुक्ते प्रभातं स्यादङ्गेऽनुक्ते जटा भवेत् ॥४७॥**
**भागेऽनुक्ते तु साम्यं स्यात् पात्रेऽनुक्ते च मृण्मयम् ।**
**द्रवेऽनुक्ते जलं ग्राह्यं तैलेऽनुक्ते तिलोद्भवम् ॥४८॥** (प्रक्षिप्त श्लोक)

जहाँ कतिखेर लिने भनिएको हुन्न त्यहाँ बिहान लिने भनी जान्नू । जहाँ औषधीको कुन भाग लिने भनिएको हुन्न त्यहाँ त्यसको जरा लिनू । जुन सम्मिश्रणमा कति भनेर तोकिएको हुन्न त्यहाँ बराबर मात्रा लिनू । जहाँ भाँडो तोकिएको हुन्न त्यहाँ माटाको भाँडो लिनू । जहाँ तरल पदार्थ तोकिएको हुन्न त्यहाँ जल लिनू । जहाँ कुन तेल भनेर तोकिएको हुन्न त्यहाँ तिलको तेल लिनू ।

**दुई पटक नाम लिइएको द्रव्य दोब्बर लिनू**

**एकमप्यौषधं योगे यस्मिन्यत् पुनरुच्यते ।**

**मानतो द्विगुणं प्रोक्तं (कार्यं) तद्द्रव्यं तत्त्वदर्शिभिः ॥४९॥**

जुन सम्मिश्रणमा एउटै औषधीको नाम पर्यायवाची शब्द राखेर दुई पटक बताइएको हुन्छ, त्यस्तोमा आयुर्वेदको रहस्य जान्ने वैद्यले त्यो औषधी दोब्बर लिनू ।

**रातो वा सेतो चन्दनको प्रयोग**

**चूर्णस्नेहासवा लेहाः प्रायशश्चन्दनान्विताः ।**
**कषायलेपयोः प्रायो युज्यते रक्तचन्दनम् ॥५०॥**

धुलो, घृत, तेल, आसव र लेहमा सेतो चन्दन प्रयोग गर्नू । काँढापानी र मलम आदिमा प्रायः रातोचन्दन लिनू ।

### औषधीको प्रयोग मिति

गुणहीनं भवेद्वर्षादूर्ध्वं तद्रूपमौषधम् ।
मासद्वयात्तथा चूर्णं हीनवीर्यत्वमाप्नुयात् ।।५१।।
हीनत्वं गुटिकालेहौ लभेते वत्सरात् परम् ।
हीनाः स्युर्घृततैलाद्याश्चतुर्मासाधिकात्तथा ।।५२।।
ओषध्यो लघुपाकाः स्युर्निर्वीर्या वत्सरात् परम् ।
पुराणाः स्युर्गुणैर्युक्ता आसवा धातवो रसाः ।।५३।।

वनबाट लेराइएका औषधी एक वर्षपछि गुणहीन हुन्छन् । धुलो औषधी दुई महिना पछि केही गुणहीन (हीनवीर्य) हुन्छ । गोली र चाट्ने खालका औषधी (लेह) प्रायः वर्ष दिन पछिपनि जस्ताका तस्तै हुन्छन् तर केही भने गुणहीन हुन्छन् । घिउ, तेल आदि सोह्र महिना पछि गुणहीन हुन्छ । कसै कसैले वर्षा ऋतुका चार महिना बितेपछि यी कुरा हीनवीर्य हुन्छन् पनि भनेका छन् । घिउ, तेल आदिमा पकाइएका गहुँ, चना आदिका औषधी एक वर्षपछि निर्वीर्य हुन्छन् । सक्खर भने जति पुरानो भो त्यति गुनिलो हुन्छ । आसव, विभिन्न धातुका भष्म तथा रसायनहरु पनि जति पुरानो भयो त्यति बढी गुणकारी हुन्छन् ।



### औषधीको मिश्रण विधि

व्याधेरयुक्तं यद्द्रव्यं गणोक्तमपि तत्त्यजेत् ।
अनुक्तमपि यद्युक्तं योजयेत्तत्र तद् बुधः ।।५४।।

वैद्यले कुनै औषधीको सम्मिश्रण तयार गर्दा त्यसमा मिसाउनू भनिएको कुनै औषधी मिसाउँदा रोगको प्रतिकूल हुन जान्छ भने त्यस्तो औषधी मिश्रण नगर्नू । त्यस्तै मिश्रणमा नबताइए पनि कुनै औषधीले रोगीको रोगलाई फाइदा गर्नेछ भन्ने लागे त्यो औषधी मिसाउनू ।

स्थान आदि अनुसार द्रव्यका गुण

**आग्नेया विन्ध्यशैलाद्याः सौम्यो हिमगिरिर्मतः ।**
**अतस्तदौषधानि स्युरनुरूपाणि हेतुभिः ॥५५॥**
**अन्येष्वपि प्ररोहन्ति वनेषूपवनेषु च ।**

विन्ध्याचल आदि स्थानमा हुने औषधी गर्मीगर्ने खालका र हिमालयतिर हुने औषधी ठण्डी गर्ने खालका हुन्छन् । पर्वत, वन, उपवनका हकमा पनि ती उपलब्ध हुँदा जेजस्तो पृथ्वीको ऋतु हुन्छ सोही अनुसारका औषधीका गुण  हुन्छन् ।

औषधीका लागि द्रव्य जम्मा गर्ने विधि

**गृह्णीयात्तानि सुमनाः शुचिः प्रातः सुवासरे ॥५६॥**
**आदित्यसम्मुखो मौनी नमस्कृत्य शिवं हृदि ।**

**साधारणधराद्द्रव्यं गृह्णीयादुत्तराश्रितम् ॥५७॥**

औषधी लेराउनका लागि बिहान स्वस्थ मन गरी पवित्र हुनू र उत्तम दिन सूर्यतिर फर्की नमस्कार गरेर मनले भगवान् शिवलाई ध्यान गर्दै चूपचाप उत्तरतिरका पृथ्वीका जङ्गल आदिमा हुने सामान्य औषधी ग्रहण गर्नू । कसैले यसलाई “औषधी लिंदा उत्तरतिर फर्केर लिनू भनिएको हो” पनि भनेका छन् ।

गलत स्थानमा उम्रेका जडीबूटी ओखतीका लागि प्रयोग गर्न निषेध

**वल्मीककुत्सितानूपश्मशानोषरमार्गजाः ।**
**जन्तुवह्निहिमव्याप्ता नौषध्यः कार्यसिद्धिदाः ॥५८॥**

धमिरा आदिको गोलाको, प्रदूषित जमिनको, सिमसार जमिनको, मसानको, बाँझो जमिनको, बाटोमा उम्रने, कीराले खाएको, आगोले डढेको र तुषारोले खाएको औषधीले काम गर्दैन । त्यसैले यस्ता स्थानको र बिग्रेको औषधी नलेराउनू ।

व्याख्या : औषधी टिप्न वा बटुल्न वैद्य नै जानू । उ गयो भने सबै कुरा जाँचपडताल गर्दछ । अरुले यी कुरा हेर्दैनन् । त्यसैले पनि आजकल औषधीले काम गर्दैन । नाम मात्रका वैद्यले पनि आयुर्वेदको बदनाम गरिरहेका हुन्छन् ।

**औषधी बटुलबाटुल पार्ने ऋतु**

**शरद्यखिलकार्यार्थं ग्राह्यं सरसमौषधम् ।**
**विरेकवमनार्थञ्च वसन्तान्ते समाहरेत् ॥५९॥**

शरद् ऋतुमा सबै औषधीमा रस भरिएको हुन्छ, त्यसैले सबै कामका लागि यसबेला औषधी बटुलेर घरमा लेराई राख्ने गर्नू । बान्ता वा दिसा गराउने खालका औषधी भने ग्रीष्म ऋतुमा जोरजाम गर्नू ।



**जडीबुटीको कुन भाग लिने**

**अतिस्थूलजटा याः स्युस्तासां ग्राह्यास्त्वचो बुधैः ।**
**गृह्णीयात् सूक्ष्ममूलानि सकलान्यपि बुद्धिमान् ॥६०॥**

जुन वृक्षका ठूला वा मोटा जरा हुन्छन् तिनको बोक्रा झिक्नु पर्दछ अनि जुन वनस्पतिको साना जरा हुन्छन् तिनको सबै भाग (जरा, पात, फूल, हाँगा) लिनु पर्दछ । कसैले ठूलो रुखको जराको बोक्रा र सानोको जरामात्र लिनू पनि भनेका छन् ।

**न्यग्रोधादेस्त्वचो ग्राह्याः सारः स्याद्बीजकादितः ।**
**तालीसादेश्च पुष्पाणि फलं स्यात् त्रिफलादितः ॥६१॥**
**धातक्यादेश्च पुष्पाणि स्नुह्यादेः क्षीरमाहरेत् ।**

औषधीका लागि लिँदा बरों आदि वृक्षको बोक्रा; विजयसाल आदिको चोप (सार); तालीस, घिउकुमारी आदिको पात; त्रिफला आदिको फल, धँयेरो आदिको फूल र सिँउडी आदिको दूध लिनू ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां शार्ङ्गधरसंहितायां
पूर्वखण्डे परिभाषा नाम प्रथमोऽध्यायः

✷

शार्ङ्गधर संहिताको पूर्वखण्ड अन्तर्गत पहिलो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोक संख्या:-०+६१.५=६१.५

✷

# अथ द्वितीयोऽध्यायः

## दोश्रो अध्याय

### औषधी खाने सामान्य समय

**भैषज्यमभ्यवहरेत् प्रभाते प्रायशो बुधः ।**
**कषायाँश्च विशेषेण तत्र भेदस्तु दर्शितः ॥१॥**

वैद्यले सामान्यतः रोगीलाई बिहान औषधी खुवाउनु पर्दछ । कषाय (ताजा रस, बोक्राको औषधी, काँढापानी, फाँडो र रातभरी पानीमा राखिएका औषधी) सामान्यतः बिहानै खान दिनु पर्दछ । तर वैद्यले आफ्नो बुद्धि प्रयोग गरी औषधी खुवाउने समयमा हेरफेर गर्न भने सक्नेछ ।

### औषधी खाने पाँच समय



**ज्ञेयः पञ्चविधः कालो भैषज्यग्रहणे नृणाम् ।**
**किञ्चित् सूर्योदये जाते तथा दिवसभोजने ॥२॥**
**सायन्तने भोजने च मुहुश्चापि तथा निशि ।**

औषधी खाने पाँच समय हुन्छन् । केही औषधी सूर्योदय भएपछि, केही दिउस खाना खाने बेलामा, केही साँझ खाना खाने बेलामा, केही जतिखेर पनि र केही राती खानु पर्ने हुन्छ ।

### औषधी खाने पहिलो समय

**प्रायः पित्तकफोद्रेके विरेकवमनार्थयोः ॥३॥**
**लेखनार्थञ्च भैषज्यं प्रभाते तत् समाहरेत् ।**
**एवं स्यात् प्रथमः कालो भैषज्यग्रहणे नृणाम् ॥४॥**

प्रायः पित्त र कफले उपद्रो मच्चाएका रोगीलाई बान्ता गराउन वा दिसा लगाउन तथा दोषलाई कम गराउन दिइने औषधी बिहान खाली पेटमा दिनु पर्दछ । यो औषधी खाने पहिलो समय हो । (तर बान्ता गराउने औषधी खाली पेटमा खुवाउन भने हुन्न) ।

### औषधी खाने दोश्रो समय

**भैषज्यं विगुणेऽपाने भोजनाग्रे प्रशस्यते ।**
**अरुचौ चित्रभोज्यैश्च मिश्रं रुचिरमाहरेत् ॥५॥**
**समानवाते विगुणे मन्देऽग्नावग्निदीपनम् ।**
**दद्याद्भोजनमध्ये च भैषज्यं कुशलो भिषक् ॥६॥**
**व्यानकोपे च भैषज्यं भोजनान्ते समाहरेत् ।**
**हिक्काक्षेपककम्पेषु पूर्वमन्ते च भोजनात् ॥७॥**
**एवं द्वितीयकालश्च प्रोक्तो भैषज्यकर्मणि ।**



अपानवायू सम्बन्धी समस्यामा खाना खानुभन्दा केही अघि औषधी खानू । खाना खान मन नलाग्दा विभिन्न प्रकारका स्वादिला र रुचिला खानेकुरामा मिसाएर औषधी खानू । नाइटो वा त्यस वरिपरि हुने समान नामको वायुजन्य रोगमा र पाचन शक्ति कमजोर हुँदा त्यसलाई बढाउन खाइने औषधी खाना खाँदा बीचमा खानू । सबै शरीरमा व्याप्त “व्यान” नामक वायुको प्रकोप शान्त पार्न खाइने औषधी खाना खाएपछि अन्तमा खानू । यसैगरी बाडुली, आक्षेपक वायु (विभिन्न प्रकारका चोटपटक आदिका कारण वायुको मार्ग अवरुद्ध भई शरीर पछिल्तिर ढल्कने, कुनै भाग नचल्ने, मूर्च्छा हुने आदि) र कम्पवायु (काँप्ने समस्या जो वायु प्रदूषित हुनाले हुन्छ) मा खाना खानुअघि र खाना खाएपछि औषधी खानू । यसलाई औषधी खाने दोश्रो समय भनिएको छ ।

### औषधी खाने तेश्रो समय

**उदाने कुपिते वाते स्वरभङ्गादिकारिणि ॥८॥**
**ग्रासे ग्रासान्तरे देयं भैषज्यं सान्ध्यभोजने ।**

**प्राणे प्रदुष्टे सान्ध्यस्य भुक्तस्यान्ते च दीयते ॥९॥**
**औषधं प्रायशो धीरैः कालोऽयं स्यात्तृतीयकः ।**

घाँटी बस्नु, लाटो हुनु आदि जस्ता उदान वायुजन्य घाँटी सम्बन्धी रोगमा साँझ खाना खाँदा गाँस सँगसँगै वा दुई गाँसका बीचमा औषधी खुवाउनू । हृदयमा रहेको प्राणवायु बिग्रेर हुने रोगमा खुवाइने औषधी साँझको खानापछि खुवाउनू । यसैलाई औषधी खाने वा खुवाउने तेश्रो समय भनी धैर्यशाली व्यक्तिले जान्नू ।

### औषधी खाने चौथो समय

**मुहुर्मुहुश्च तृट्छर्दिहिक्काश्वासगरेषु च ॥१०॥**
**सान्नञ्च भेषजं दद्यादितिकालश्चतुर्थकः ।**

तिर्खा रोग, वाकवाकी, बाडुली रोग, श्वासप्रश्वास र विषजन्य रोगमा पटकपटक खानासँग वा खाली पेटमा औषधी खुवाइनु पर्दछ । यो औषधी खाने वा खुवाउने चौथो समय हो ।



### औषधी खाने पाँचौं समय

**ऊर्ध्वजत्रुविकारेषु लेखने बृंहणे तथा ॥११॥**
**पाचनं शमनं देयमनन्नं भेषजं निशि ।**
**इति पञ्चमकालः स्यात् प्रोक्तो भैषज्यकर्मणि ॥१२॥**

काँधको जोर्नीभन्दा माथिका रोगमा, वात आदि दोष घटाउनु पर्दा तथा अलिअलि देखिएका दोष बढाएर उपचार गर्नुपर्दा रातको पहिलो प्रहरमा पाचक र रोक निको पार्ने औषधी बिना अन्न खुवाउनू । यसरी औषधी खाने र खुवाउने पाँच समयका बारेमा पनि बताएर सकियो ।

### द्रव्यका पाँच अवस्था

**द्रव्ये रसो गुणो वीर्यं विपाकः शक्तिरेव च ।**
**सम्वन्देन (संवेदन) क्रमादेताः पञ्चावस्थाः प्रकीर्त्तिताः ॥१३॥**

औषधीका रस, गुण, वीर्य, विपाक र शक्ति गरी पाँच अवस्था हुन्छन् । यिनलाई क्रमैले बताइएको छ ।

### रसका प्रकार

**मधुरोऽम्ल पटुश्चैव कटुतिक्तकषायकाः ।**
**इत्येते षड्रसाः ख्याता नानाद्रव्यसमाश्रिताः ॥१४॥**

गुलियो, अमिलो, नुनिलो, पिरो, तितो र टर्रो गरी छ थरीका रस बताइएको छ । यी रस अनेक औषधीमा आश्रय लिइरहेका हुन्छन् ।



### रसको उत्पत्ति

**धराऽम्बुक्ष्माऽनलजलज्वलनाकाशमारुतैः ।**
**वाय्वग्निक्ष्मानिलैभूर्तद्वयै रसभवः क्रमात् ॥१५॥**

पृथ्वी र जलको सम्मिश्रणबाट गुलियो रस उत्पन्न भएको हो । यसैगरी, पृथ्वी र अग्निको सम्मिश्रणबाट अमिलो रस, जल र अग्निको सम्मिश्रणबाट नुनिलो रस, आकाश र वायुको सम्मिश्रणबाट पिरो रस, वायु र अग्निको सम्मिश्रणबाट तितो रस र पृथ्वी र वायुको सम्मिश्रणबाट टर्रो रस उत्पन्न हुन्छ । दुई दुई महाभूतको सम्मिश्रणबाट एक एक वटा रस उत्पन्न हुन्छ । यसरी रसको उत्पत्तिका बारेमा जान्नू ।

**पञ्चमहाभूतका गुण**

**गुरुः स्निग्धश्च तीक्ष्णश्च रूक्षो लघुरिति क्रमात् ।**
**धराम्बुवह्निपवनव्योम्नां प्रायो गुणाः स्मृताः ॥१६॥**
**एष्वेवान्तर्भवन्त्यन्ये गुणेषु गुणसञ्चयाः ।**

विशेषतः पृथ्वीको गह्रौं, जलको चिल्लो, अग्निको तिखो, वायुको रुखो र आकाशको हलुका गुण हुन्छ । यसरी पञ्चमहाभूतका गुणका बारेमा जान्नू । यिनै गुणभित्र अन्य गुण पनि समाहित भएका हुन्छन् ।

द्रव्यमा हुने वीर्य

**वीर्यमुष्णं तथा शीतं प्रायशो द्रव्यसंश्रयम् ॥१७॥**
**तत् सर्वमग्नीषोमीयं दृश्यते भुवनत्रये ।**

**अत्रैवान्तर्भविष्यन्ति वीर्याण्यन्यानि यान्यपि ॥१८॥**

प्रायः वीर्य औषधी (जडीबूटी, अन्न, आदि) भित्र रहेको हुन्छ । यो दुई किसिमको हुन्छ, शरीरलाई ठण्डी गर्ने र शरीरलाई गर्मी गर्ने । सूर्य (अग्नि) र चन्द्रमा (जल) का प्रभावका कारण यस्तो गुण हुने गर्दछ । यी दुई थरी वीर्यभित्र चिल्लोपन, रुखोपन, आदि गुण समाहित भएका हुन्छन् ।

रस पचेपछिको रस (विपाक)

**त्रिधा विपाको द्रव्यस्य स्वाद्वम्लकटुकात्मकः ।**
**मिष्टः पटुश्च मधुरमम्लोऽम्लं पच्यते रसः ॥१९॥**
**कषायकटुतिक्तानां पाकः स्यात् प्रायशः कटुः ।**
**मधुराज्जायते श्लेष्मा पित्तमम्लाच्च जायते ॥२०॥**
**कटुकाज्जायते वायुः कर्माणीति विपाकतः ।**

जब यी रस पच्दछ तब गुलियो, नुनिलो र मिठो स्वादको हुन्छ । पिरोको पचेपछिको रस पिरो हुन्छ । टर्रो, तितो प्रायः अति तिक्खर हुन्छ । गुलियो रसको विपाकले कफ, अमिलोको विपाकले पित्त र पिरोको विपाकले वायु बढाउँदछ । यसरी तीन थरीका दोष उत्पन्न हुन्छन् ।

### द्रव्यको प्रभाव

**प्रभावस्तु यथा धात्री लकुचस्य रसादिभिः ॥२१॥**
**समापि कुरुते दोषन्नियतस्य विनाशनम् ।**
**क्वचित्तु केवलं द्रव्यं कर्म कुर्यात् प्रभावतः ॥२२॥**
**ज्वरं हन्ति शिरोबद्धा सहदेवीजटा यथा ।**

अमलाको रस, गुण, वीर्य र पकाउँदाका गुण बडहरको जस्तै भएता पनि आफ्नो प्रभावले यसले वात, पित्त र कफ तीन वटै दोष नाश गर्दछ । यस्तो शक्तिलाई “प्रभाव” भनिन्छ । कतै कतै यस्ता औषधी पनि हुन्छन् जसले आफ्नै प्रभावबाट अती चाँडो रोग नष्ट पार्दछन् । जस्तैः- सहदेवी नामक बूटीको जरा निधारमा बाँध्नाले जरो निको हुन्छ ।



### रस, वीर्य आदिको भिन्नाभिन्नै प्रभाव

**क्वचिद्रसो गुणो वीर्यं विपाकः शक्तिरेव च ॥२३॥**
**कर्म स्वं स्वं प्रकुर्वन्ति द्रव्यमाश्रित्य ये स्थिताः ।**

सम्बन्धित द्रव्यमा समाहित भएर रहेका कुनैको रसले, कुनैको गुणले, कुनैको वीर्यले, कुनैको पचेपछिको रसले र कुनैको शक्तिले आआफ्ना प्रभाव र काम गर्ने गर्दछन् ।

ऋतु अनुसार रोगको उत्पत्ति, विस्तार र नाश

**चयकोपशमा यस्मिन् दोषाणां सम्भवन्ति हि ॥२४॥**
**ऋतुषट्कं तदाख्यातं रवे राशिषु सङ्क्रमात् ।**

जुन छ वटा ऋतुमा रोग बढ्ने, फैलने र कम हुने सम्भावना हुन्छ त्यो सबै सूर्य बाह्र राशिमा घुम्ने कारणले गर्दा हुने गर्दछ । (अर्थात् सूर्यका किरणका कारणले नै पृथ्वीमा रोग जन्मने, बढ्ने, फैलने र नासिने गर्दछ) ।

छ ऋतु

**ग्रीष्मो मेषवृषौ प्रोक्तौ प्रावृण्मिथुनकर्कयोः ॥२५॥**
**सिंहकन्ये स्मृता वर्षास्तुलावृश्चिकयोः शरत् ।**
**धनुर्ग्राहौ च हेमन्तो वसन्तः कुम्भमीनयोः ॥२६॥**



मेष सङ्क्रान्तिदेखि वृष सङ्क्रान्तिसम्म ग्रीष्म ऋतु हुन्छ । मिथुन सङ्क्रान्तिदेखि कर्कट सङ्क्रान्तिसम्म प्रावृट् ऋतु हुन्छ । सिंह सङ्क्रान्तिदेखि कन्या सङ्क्रान्तिसम्म वर्षा ऋतु हुन्छ । तुला सङ्क्रान्तिदेखि वृश्चिक सङ्क्रान्तिसम्म शरद् ऋतु हुन्छ । धनु सङ्क्रान्तिदेखि मकर सङ्क्रान्तिसम्म हेमन्त ऋतु हुन्छ । कुम्भ सङ्क्रान्तिदेखि मीन सङ्क्रान्तिसम्म वसन्त ऋतु हुन्छ ।

ऋतु अनुसार जम्मा हुने र नासिने दोष

**ग्रीष्मे सञ्चीयते वायुः प्रावृट्काले प्रकुप्यति ।**
**वर्षासु चीयते पित्तं शरत् काले प्रकुप्यति ॥२७॥**
**हेमन्ते चीयते श्लेष्मा वसन्ते च प्रकुप्यति ।**
**प्रायेण प्रशमं याति स्वयमेव समीरणः ॥२८॥**
**शरत् काले वसन्ते च पित्तं प्रावृड्तौ कफः ।**

शरीरमा ग्रीष्म ऋतु (वैशाख-जेठ) मा वायु सञ्चय हुन्छ र प्रावृट् ऋतु (असार-साउन) मा यसमा दोष पैदा हुन्छ । वर्ष ऋतु (भदौ-असौज) मा पित्त सञ्चय हुन्छ र शरद् ऋतु (कार्तिक-मंसिर) मा दोष पैदा गर्दछ । हेमन्त ऋतु (पुष-माघ) मा कफ सञ्चय हुन्छ र वसन्त ऋतुमा (फागुन-चैत) दोष पैदा गर्दछ । स्वभावतः वायुको दोष शरद् ऋतुमा, पित्तको दोष वसन्त ऋतुमा र कफको दोष प्रावृट् ऋतुमा आफैं शान्त हुन्छ (हुनु पर्दछ) ।

### यमदंष्ट्रा र नयाँ अन्न खाने नियम

**कार्त्तिकस्य दिनान्यष्टावाष्टावाग्रयणस्य च ॥२९॥**
**यमदंष्ट्रा समाख्याता स्वल्पभुक्तो हि जीवति ।**

कार्तिकको अन्तिम आठ दिन र मंसिरको शुरुका आठ दिनलाई “यमदंष्ट्रा” भनिन्छ । यी सोह्र दिन कम खाने मानिस जीवित हुन्छ (रोग लाग्दैन) ।



व्याख्या : पुरानो अन्न खान बन्द गर्ने र नयाँ अन्न खान शुरु गर्ने समयकारूपमा यसलाई व्याख्या गरिएको पाइन्छ । एक्कासी पुरानो अन्न खान छोडेर नयाँ अन्न पुरानो सरह खाँदा शरीरलाई हानी गर्दछ, त्यसैले विस्तारै पुरानो अन्न कम कम गर्दै खान छाड्नू र नयाँ अन्न विस्तारै अलिअलि गरेर बढाउँदै खानु पर्दछ ।

### द्रव्यका गुण अनुसारका दोष

**चयकोपशमा दोषा विहाराहारसेवनैः ॥३०॥**
**समानैर्यान्त्यकालेऽपि विपरीतैर्विपर्ययम् ।**

वात आदि दोषका जे जस्ता गुण हुन्छन्, त्यस्तै गुणका आहार र विहारले गर्दा दोष जम्मा हुने, त्यसमा विकार उत्पन्न हुने र निको हुने गर्दछ ।

व्याख्याः अर्थात् वात, पित्त र कफ सञ्चय हुने कालमा यी बढ्ने पदार्थ खानपिन गर्दा जम्मा हुन्छ, प्रकोप कालमा प्रकोप हुन्छ र निको हुने बेलामा खानाले निको हुन्छ । यसैगरी वात आदि दोषको गुणभन्दा विपरित गुण भएको आहार विहारले समय नआए पनि यिनको असर नष्ट हुन्छ ।

शरीरमा वायुविकार बढ्ने कारणहरू

**लघुरूक्षमिताहारादतिशीताच्छ्रमात्तथा ।।३१।।**
**प्रदोषे कामशोकाभ्यां भीचिन्तारात्रिजागरैः ।**
**अभिघातादपां गाहाज्जीर्णेऽन्ने धातुसङ्क्षयात् ।।३२।।**
**वायुः प्रकोपं यात्येभिः प्रत्यनीकैश्च शाम्यति ।**

चाँडै पच्ने कुरा मात्र खाने गरे, रुखो खाना खाने गरे, शरीरलाई चाहिने भन्दा कम खाने गरे, शरीरलाई अति चिसो हावा वा खानपिन खुवाए, अति धेरै परिश्रम गरे, सूर्यास्त पछिको डेढघण्टामा स्त्री-संसर्ग गरे, धन-पुत्र आदिको वियोगमा दुःख हुँदा, डर हुँदा, चिन्ता हुँदा, रातमा नसुती बस्दा, हातहतियार-लौरो आदिले चोटपटक लाग्दा, पानीमा धेरै बेर बस्दा, पेट खाली हुँदा, धातु क्षीण हुँदा आदि अवस्थामा शरीरमा वायु बढ्दछ र यी माथि उल्लेखित कुराको विपरीत हुँदा वायु शान्त हुन्छ ।



शरीरमा पित्तविकार बढ्ने कारणहरू

**विदाहिकटुकाम्लोष्णभोज्यैरत्युष्णसेवनात् ।।३३।।**
**मध्याह्ने क्षुत्तृषो रोधाज्जीर्यत्यन्नेऽर्द्धरात्रके ।**
**पित्तं प्रकोपं यात्येभिः प्रत्यनीकैश्च शाम्यति ।।३४।।**

पेट पोल्ने कुरा खानपिन गर्नाले; रायो, मरीच आदि तिक्खर कुरा धेरै खानाले, पिरो वा तातो कुरा खानाले, धेरै आगो ताप्नाले, मध्याह्नमा भोक तिर्खा रोक्नाले, आधारातमा

खाएको कुरा पच्दा आदि अवस्थामा शरीरमा पित्तको प्रकोप हुन्छ । यसको विपरीत अवस्थामा पित्त शान्त हुन्छ ।

**शरीरमा कफविकार बढ्ने कारणहरू**

**मधुरस्निग्धशीतादिभोज्यैर्दिवसनिद्रया ।**
**मन्देऽग्नौ च प्रभाते च भुक्तमात्रे तथाऽश्रमात् ॥३५॥**
**श्लेष्मा प्रकोपं यात्येभिः प्रत्यनीकैश्च शाम्यति ।**

गुलियो, चिल्लो वा चिसो खानाले, भैंसीको दूध आदि जस्ता गह्रौं कुरा खानाले, मास आदिको दाल (श्लक्ष्ण वा लेस्याइला पदार्थ) खानाले, दिउस सुत्नाले, पाचनशक्ति कमजोर हुँदा धेर खानाले, बिहान चँडै खाने गर्नाले, शारीरिक परिश्रम नगरी बसिरहने आदि गर्नाले शरीरमा कफको प्रकोप हुन्छ र यसको विपरीत हुँदा शान्त हुन्छ ।

❧ इति श्रीदामोरसूनुना शार्ङ्गधरेण विरचितायां शार्ङ्गधरसंहितायां
पूर्वखण्डे भैषज्याख्यानकं नाम द्वितीयोऽध्यायः ☙



❧✷☙

❧ शार्ङ्गधर संहिताको पूर्वखण्ड अन्तर्गत दोश्रो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो ☙

❧✷☙

शुरुदेखिको श्लोकको संख्या:-६१.५+३५.५=९७

❧✷☙

# अथ तृतीयोऽध्यायः
## तेश्रो अध्याय

### नाडीपरीक्षा (नारी छाम्ने) विधि

**करस्याङ्गुष्ठमूले या धमनी जीवसाक्षिणी ।**
**तच्चेष्टया सुखं दुःखं ज्ञेयं कायस्य पण्डितैः ॥१॥**

मानव-प्राणवायुको साछी मानिने हृदयबाट विभिन्न अङ्गमा रगत जाने नाडी (वा शिरा वा मुख्य नशा वा धमनी) हातको बूढी औंलाको फेदमा हुन्छ । त्यसलाई छामी विज्ञ वैद्यले शरीरको सुखदुःखको अवस्था थाहा पाउनू ।

### वातविकारको नाडी

**नाडी धत्ते मरुत्कोपे जलौकासर्पयोर्गतिम् ।**

वायुजन्य रोगले पिडीत मानिसको नाडीको गति वा चाल पानीजुका वा सर्पको गतिजस्तो बाङ्गो हुन्छ ।

### पित्तविकारको नाडी

**कुलिङ्गकाकमण्डूकगतिं पित्तस्य कोपतः ॥२॥**

पित्तजन्य रोगले पिडीत मानिसको नाडीको गति वा चाल घरमुसा, कौवा वा भ्यागुतोको गतिजस्तो उफ्रने खालको हुन्छ ।

### कफविकारको नाडी

**हंसपारावतगतिं धत्ते श्लेष्मप्रकोपतः ।**

कफजन्य रोगले पिडीत मानिसको नाडीको गति वा चाल हाँस वा परेबाको गतिजस्तो मन्द हुन्छ ।

### सन्निपात विकारको नाडी

**लावतित्तिरवर्त्तीनां गमनं सन्निपाततः ॥३॥**

तिनवटै दोष मिसिएर कुनै रोग (सन्निपात) हुँदा नाडीको गति लाभे चरा, तित्रो चरा वा बट्टाई चराको जस्तो चञ्चल हुन्छ ।

### कुनै दुई दोषले विकृत हुने नाडी

**कदाचिन्मन्दगमना कदाचिद्वेगवाहिनी ।**
**द्विदोषकोपतो ज्ञेया ...।**

शरीरमा दुई थरी दोष (वा रोग) हुनेको नाडी कहिले बिस्तारै त कहिले छिटो छिटो चल्ने किसिमको हुन्छ ।

### मृत्युदायक नाडीका लक्षण

**...हन्ति च स्थानविच्युता ॥४॥**
**स्थित्वा स्थित्वा चलति या सा स्मृता प्राणनाशिनी ।**
**अतिक्षीणा च शीता च जीवितं हन्त्यसंशयम् ॥५॥**

स्थानच्यूत र रोकिई रोकिई चल्ने नाडीले ज्यान लिन्छ भनी जान्नू । अत्यन्त क्षीण र चिसो वा कुटिल र उच्च नाडीले पनि ज्यान लिन्छ, यसमा शङ्का नगर्नू ।

### विभिन्न रोगमा नाडीको गति

**ज्वरकोपेण धमनी सोष्णा वेगवती भवेत् ।**
**कामक्रोधाद्वेगवहा क्षीणा चिन्ताभयप्लुता ॥६॥**
**मन्दाग्नेः क्षीणधातोश्च नाडी मन्दतरा भवेत् ।**
**असृक्पूर्णा भवेत् कोष्णा गुर्वी सामा गरीयसी ॥७॥**

सामान्य जरोमा नाडी छिटो छिटो चल्दछ । स्त्री-चाहना भई नपाउँदा र रिसाउँदा पनि नाडी छिटो छिटो चल्दछ । चिन्ता र डर हुँदा नाडीको मन्द गति हुन्छ । धातु क्षीण हुनेको र पाचनशक्ति कमजोर हुनेको नाडी पनि मन्द हुन्छ । रक्तजन्य विकार हुनेको नाडी केही तातो र गह्रौं हुन्छ । पाचनशक्ति कमजोर हुनेको नाडी पनि अति गह्रौं हुन्छ ।

### स्वस्थ नाडी



**लघ्वी वहति दीप्ताग्नेस्तथा वेगवती मता ।**
**सुखितस्य स्थिरा ज्ञेया तथा बलवती स्मृता ॥८॥**
**चपला क्षुधितस्यापि तृप्तस्य वहति स्थिरा ।**

जुन पुरुषको जठराग्नि प्रज्वलित हुन्छ उसको नाडी स्थिर र बलियो हुन्छ । भोको मानिसको नाडी चञ्चल हुन्छ । खाना खाएकाको नाडी स्थिर हुन्छ ।

(इति नाडीपरीक्षा)

(नाडी हेर्ने विधि सकियो)

### दूतको परीक्षा

### वैद्य बोलाउन जाने दूतमा हुनुपर्ने गुण

**दूताः स्वजातयोऽव्यङ्गाः पटवो निर्मलाम्बराः ॥९॥**
**सुखिनोऽश्ववृषारूढाः शुभ्रपुष्पफलैर्युताः ।**

**सुजातयः सुचेष्टाश्च सजीवदिशि सङ्ग(श्रि)ताः ॥१०॥**
**भिषजं समये प्राप्ता रोगिणः सुखहेतवे ।**

वैद्यलाई बोलाउन जाने व्यक्ति रोगीकै जातको हुनु पर्दछ । उसका हातगोडा सद्दे हुनुपर्दछ । उ सबै काममा कुशल हुनुपर्दछ । उसले सेता लुगा लगाएको, सुखी भई उत्तम घोडा वा साँढेमा चढी सेतो फूल र रसिला फल लिएको हुनुपर्दछ । उ उत्तम कुलको र उत्तम सोच राख्ने हुनु पर्दछ ।

वैद्य बोलाउन जाँदाको साइत

**वैद्याह्वानाय दूतस्य गच्छतो रोगिणः कृते ॥११॥**
**न शुभं सौम्यशकुनं प्रदीप्तञ्च सुखावहम् ।**

जुन बेला दूत वैद्यलाई बोलाउन जान्छ त्यसबेलामा बाटोमा भेरी, मादल बजेको सुनिए रोगीका लागि शुभदायक हुँदैन । यसबेला देखिने शुभ साइत रोगीका लागि अशुभ र अशुभ साइत शुभ हुन्छन् ।



रोगीका घरमा वैद्य जाँदाको साइत

**चिकित्सां रोगिणः कर्तुं गच्छतो भिषजः शुभम् ॥१२॥**
**यात्रेयं सौम्यशकुनं प्रोक्तं दीप्तन्न शोभनम् ।**

यसैगरी रोगीलाई उपचार गर्न रोगीको घरमा वैद्य जाँदा बाटामा देखिने शुभ कुरा शुभदायक र अशुभ कुरा अशुभ दायक हुन्छन् ।

उपचारका लागि योग्य रोगी

**निजप्रकृतिवर्णाभ्यां युक्तः सत्त्वेन संयुतः ॥१३॥**
**चिकित्स्यो भिषजा रोगी वैद्यभक्तो जितेन्द्रियः ।**

जुन् रोगीको प्रकृति र शरीरको वर्ण विपरीत छैन, जो सत्वगुणी छ, जसले वैद्यको सल्लाह मान्दछ र जसले इन्द्रियलाई वशमा पार्न सक्दछ यस्तो रोगीको वैद्यले उपचार गर्नू ।

रोगीले देख्ने खराब सपनाको फल

स्वप्नेषु नग्नान्मुण्डाँश्च रक्तकृष्णाम्बरावृतान् ॥१४॥
व्यङ्गाँश्च विकृतान् कृष्णान् सपाशान् सायुधानपि ।
बध्नतो निघ्नतश्चापि दक्षिणां दिशमाश्रितान् ॥१५॥
महिषोष्ट्रखरारूढाँस्त्रीपुंसो यस्तु पश्यति ।
स स्वस्थो लभते व्याधिं रोगी यात्येव पञ्चताम् ॥१६॥

सपनामा नाङ्गो, सन्यासी, कपाल खौरेका व्यक्ति, रातो वा कालो लुगा लगाएका मानिस, नाककान काटिएका वा कुनै अङ्ग कम भएका, विकृत रुपका, काला, हातमा पाश लिएका, हातमा हतियार लिएका, बाँधिदै गरेका, मारिँदै गरेका, दक्षिण दिशामा भैंसी-उँट-गधामाथि चढेका महिला वा पुरुष देखिए निरोगी भए मानिस रोगी हुन्छ र रोगी भए त्यही रोगका कारण उसको मृत्यु हुन्छ ।



अरु केही खराब सपनाको फल

अधो यो निपतत्युच्चाज्जलेऽग्नौ वा विलीयते ।
श्वापदैर्हन्यते योऽपि मत्स्याद्यैर्गिलितो भवेत् ॥१७॥
यस्य नेत्रे विलीयेते दीपो निर्वाणतां व्रजेत् ।
तैलं सुरां पिबेद्वाऽपि लोहं वा लभते तिलान् ॥१८॥
पक्वान्नं लभतेऽश्नाति विशेत् कूपं रसातलम् ।
स स्वस्थो लभते रोगं रोगी यात्येव पञ्चताम् ॥१९॥

जो सपनामा : आफू रुख, पर्वत आदि अग्लो स्थानबाट तल खस्दछ, जो पानीमा डुब्दछ, जो आगोमा पर्दछ, जसलाई कुकुरले टोक्दछ, जो नातेदार मारेर पछुताउँदछ, जसलाई माछा आदिले निल्दछन्, जसका आँखा फुट्दछ वा झर्दछ तथा जसले बलेको बत्ती निभेको, तेल-मदिरा पिएको, कुनै सुन आदि धातु एवं कपास-पिना-नुन-पाकेका अन्न आदि लिएको वा खाएको देख्दछ तथा जो आमाका पेट वा काखमा सुत्दछ तथा जो गहिरो कुवा वा खाल्डोमा जान्छ त्यो मानिस निरोगी भए रोगी हुन्छ, रोगी भए पञ्चतत्वमा विलीन हुन्छ ।

### खराब सपना देख्दा गर्नुपर्ने विधि

**दुःस्वप्नानेवमादींश्च दृष्ट्वा ब्रूयान्न कस्यचित् ।**
**स्नानं कुर्यादुषस्येव दद्याद्धेमतिलानयः ॥२०॥**
**पठेत् स्तोत्राणि देवानां रात्रौ देवालये वसेत् ।**
**कृत्वैवं त्रिदिनं मर्त्यो दुःस्वप्नात् परिमुच्यते ॥२१॥**



उल्लेखित खालका खराब सपना देखिए कसैलाई नभन्नू, उठेर नुहाउनू र कालो तिल, सुन र फलाम दान गर्नू । विभिन्न खालका दुःस्वप्न नाशक स्तोत्र पाठ गर्नू । दिउसो यति गरी राती देवालयमा गई जागराम बस्नू । यस्तो तीन दिन गरेपछि उ दुःस्वप्नको दोषबाट मुक्त हुन्छ ।

### राम्रा सपना र फल

**स्वप्नेषु यः सुरान् भूपाञ्जीवतः सुहृदो द्विजान् ।**
**गोसमिद्धाग्नितीर्थानि पश्येत् सुखमवाप्नुयात् ॥२२॥**

जसले सपनामा इन्द्रादि देवता, राजा, महाराजा, जीवित मित्र वा नातेदार वा ब्राह्मण, गाई, बलिरहेको आगो र पवित्र तीर्थस्थल देख्दछ उसले सुख प्राप्त गर्दछ ।

**तीर्त्वा कलुषनीराणि जित्वा शत्रुगणानपि ।**
**आरुह्य सौधगोशैलकरिवाहान्सुखी भवेत् ॥२३॥**

जसले सपनामा नदी-खोलो-समुद्र तर्दछ, शत्रुलाई जितेर फर्कन्छ वा सेतो घर-साँढे-पर्वत-हात्ती-घोडा माथि आफू चढ्दछ उसलाई सुखप्राप्त हुन्छ ।

**शुभ्रपुष्पाणि वासांसि मांसमत्स्यफलानि च ।**
**प्राप्यातुरः सुखी भूयात् स्वस्थो धनमवाप्नुयात् ॥२४॥**

जसले सपनामा सेतो फूल, सेतो कपडा, काँचो मासु, माछा र आँप आदि फलफूल देख्दछ रोगी भए उसको रोग निको हुन्छ, निरोगी भए धन पाउँदछ ।

**अगम्यागमनं लेपो विष्ठया रुदितं मृतिः ।**
**आममांसाशनं स्वप्ने धनारोग्याप्तये विदुः ॥२५॥**

जसले सपनामा अगम्या गमन गर्दछ, अगम्य स्थानमा जान्छ, शरीरभरी मल (दिसा) लतपतिएको देख्दछ, आफू वा अरु रोइरहेको वा मरेको देख्दछ र काँचो मासु खाइरहेको देख्दछ उ रोगमुक्त हुन्छ, निरोगी भए धन प्राप्त गर्दछ ।

**जलौका भ्रमरी सर्पो मक्षिका वाऽपि यं दशेत् ।**
**रोगी स भूयादुल्लाघः स्वस्थो धनमवाप्नुयात् ॥२६॥**

जसलाई सपनामा जुका, भमरा, सर्प र माहुरीले टोक्दछ उ रोगी भए निरोगी र निरोगी भए धन प्राप्त गर्दछ ।

इति श्रीदामोदसूनुना शार्ङ्गधरेण विरचितायां शार्ङ्गधरसंहितायां
पूर्वखण्डे नाडीपरीक्षादिविधिर्नाम तृतीयोऽध्यायः

✷

शार्ङ्गधर संहिताको पूर्वखण्ड अन्तर्गत तेश्रो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-९७+२६=१२३

✷

# अथ चतुर्थोऽध्यायः

## चौथो अध्याय

### दीपन, पाचन र दीपनपाचन शब्दको अर्थ

**पचेन्नामं वह्निकृच्च दीपनं तद्यथा मिशिः ।**
**पचत्यामं न वह्निञ्च कुर्याद्यत्तद्धि पाचनम् ॥१॥**
**नागकेशरवद्विद्याच्चित्रो दीपनपाचनः ।**

जुन औषधीले आम (खाएको कुरा पचेर बनेको रस) लाई पचाउँदैन तर पाचकाग्निलाई बाल्दछ त्यस्ता औषधीलाई “दीपन” भनिन्छ । जस्तैः सुप । जुन औषधीले आमलाई पचाउँदछ तर पाचकाग्निलाई बाल्दैन त्यस्ता औषधीलाई “पाचन” भनिन्छ । जस्तै : नागकेसर । जुन औषधीले पाचकाग्निलाई पनि बाल्दछ र आमलाई पनि पचाउँदछ त्यस्ता औषधीलाई “दीपनपाचन” भनिन्छ । जस्तै : चितू, अँडिर ।



### शमन शब्दको अर्थ

**न शोधयति न द्वेष्टि समान्दोषाँस्तथोद्धतान् ॥२॥**
**समीकरोति विषमाञ्शमनन्तद्यथाऽमृता ।**

मानिसले खाएपिएको कुरासँग विद्वेष (वैरभाव) नगरी ती शरीरभित्र जहाँ छन् त्यहीँ गई ती कुरासँग मिसिएर तिनको दोष नष्ट गर्ने (वान्ता वा दिसा नलगाई रोग ठिक गर्ने) औषधीलाई “शमन” भनिन्छ । जस्तैः अमला ।

### अनुलोमन द्रव्य

**कृत्वा पाकं मलानां यद्भित्त्वा बन्धमधो नयेत् ॥३॥**
**तच्चानुलोमनं ज्ञेयं यथा प्रोक्ता हरीतकी ।**

कब्जियत भएर पेटभित्र रहेको मल वा रोकिएको मूत्रलाई खुकुलो बनाई आन्द्राभुँडी सफा गर्दै तलतिर धकेलेर दिसापिसाब मार्फत बाहिर निकाल्ने औषधीलाई “अनुलोमन” औषधी भनिन्छ । जस्तै : हर्रो ।

**स्रंसन शब्दको अर्थ**

**पक्तव्यं यदपक्त्वैव श्लिष्टं कोष्ठे मलादिकम् ।।४।।**
**नयत्यधः स्रं(श्रं)सनं तद्यथा स्यात् कृतमालकः ।**

पछी पच्ने सम्भावना रहेका तर वात आदि दोषले गर्दा कतै पेटभित्र अड्किएका खाएको कुरालाई नपचीकनै तल्लो भागमा लेराई मलद्वार मार्फत निकाल्ने खालका औषधीलाई “स्रंसन” औषधी भनिन्छ । जस्तै : राजवृक्ष फलको गुदी ।



**भेदन शब्दको अर्थ**

**मलादिकमबद्धं यद्बद्धं वा पिण्डितं मलैः ।।५।।**
**भित्त्वाऽध पातयति तद्भेदनं कटुकी यथा ।**

वात आदि दोषले पेटभित्र अड्किएका वा गोटा परेर बसेका मलमूत्रलाई टुक्राटुक्रा पारी मलद्वार वा मूत्रनली मार्फत बाहिर निकाल्ने औषधीलाई “भेदन” औषधी भनिन्छ । जस्तै : कटुकी ।

**रेचन शब्दको अर्थ**

**विपक्वं यदपक्वं वा मलादि द्रवतां नयेत् ।।६।।**
**रेचयत्यपि तज्ज्ञेयं रेचनं त्रिवृता यथा ।**

पेटमा रहेका राम्ररी पचेका वा केही नपचेका खाएका कुरालाई पातलो बनाई मलद्वारतिर धकेल्ने औषधीलाई "रेचन" भनिन्छ । जस्तै : सेतो निशोध ।

व्याख्या : यस्तो औषधीमा पृथ्वी र जलको गुण हुने हुनाले माटो र पानीले सोरेर तलतिर लगे जस्तै वरिपरिका विकार सोरेर तलतिर लैजाने गर्दछन् ।

**वमन ओखतीको अर्थ**

**अपक्वपित्तश्लेष्माणौ बलादूर्ध्वं नयेत्तु यत् ॥७॥**
**वमनं तद्धि विज्ञेयं मदनस्य फलं यथा ।**

जुन औषधीले नपचेका तर पित्त र कफ बनेर पेटभित्र अड्किएका कुरालाई बलपूर्वक मुख मार्फत (बान्ता गराई) निकाल्दछ त्यसलाई "वमन" भनिन्छ । जस्तै : मैनफल ।

व्याख्या : सबै खाले वमनकारी औषधीमा वायु र अग्निको हलुको हुने गुण हुन्छ । यसैले यिनमा आफूसँगैका कुरा बलपूर्वक लिएर माथितिर जाने गर्दछन् । कसैकसैले नपचेको कफलाई मुखबाट र नपचेको पित्तलाई मलमूत्रद्वारबाट निकाल्नू पनि भन्दछन् । तर पिरो, तितो र अमिलोले गर्ने विकारलाई मुखबाटै वमन गरी निकाल्नु पर्दछ ।

**शोधन वा संशोधन शब्दको अर्थ**

**स्थानाद् बहिर्नयेदूर्ध्वमधो वा मलसञ्चयम् ॥८॥**
**देहसंशोधनं तत् स्याद्देवदालीफलं यथा ।**

जुन औषधीले वात दोषका कारण शरीरभित्र कतै जमेर बसेका मललाई फोरफार गरी माथि नाक-मुखबाट वा तल मल-मूत्रद्वारबाट बाहिर निकाल्दछ, त्यसलाई "संशोधन" भनिन्छ । जस्तैः देवदारको फल ।

### छेदन शब्दको अर्थ

**श्लिष्टान् कफादिकान् दोषानुन्मूलयति यद्बलात् ॥९॥**
**छेदनं तद्यथा क्षारा मरिचानि शिलाजतु ।**

जुन औषधीले एक आपसमा मिली जमेर बसेको कफ आदि दोषलाई आफ्नो तागतले अलग गरी फोर्दछ (तर बाहिर निकाल्न सक्ने क्षमता हुन्न) त्यसलाई "छेदन" भनिन्छ । जस्तै : यवक्षार, मरिच, शिलाजित आदि ।

### लेखन शब्दको अर्थ

**धातून् मलान् वा देहस्य विशोष्योल्लेखयेच्च यत् ॥१०॥**
**लेखनं तद्यथा क्षौद्रं नीरमुष्णं वचा यवाः ।**



जुन औषधीले रस आदि धातु वा वात आदि दोषलाई (भित्रभित्रै) सुकाएर (वा घटाएर) शरीरबाट बाहिर निकाली दिन्छ त्यसलाई "लेखन" भनिन्छ । जस्तै : ठूलो बिही, तातो पानी, बोझो, जौ आदि ।

### ग्राहि शब्दको अर्थ

**दीपनं पाचनं यत् स्यादुष्णत्वाद्द्रवशोषकम् ॥११॥**
**ग्राहि तच्च यथा शुण्ठी जीरकं गजपिप्पली ।**

जुन औषधीले पेटभित्रको अग्निलाई बाल्दछ, "आम" आदिलाई पचाउँदछ, गर्मीकारक हुनाले गर्दा जलले पैदा गर्ने कफ आदि दोष, धातु र मललाई सोस्दछ त्यसलाई "ग्राही" भनिन्छ । जस्तै : सुठो, जीरा, चाभा आदि ।

### स्तम्भन शब्दको अर्थ

**रौक्ष्याच्छैत्यात् कषायत्वाल्लघुपाकाच्च यद्भवेत् ॥१२॥**
**वातकृत्स्तम्भनं तत् स्याद्यथा वत्सकटुण्टुकौ ।**

जुन औषधी रुखो, ठण्डीगर्ने र टर्रो स्वादका हुनाका कारण पाकेपछि हलुका हुन्छन् र वातदोष जन्माउँदछन् तिनलाई "स्तम्भन" भनिन्छ । जस्तै : ठूलोकुरो, टटेलो आदि ।

### रसायन शब्दको अर्थ

**रसायनञ्च तज्ज्ञेयं यज्जराव्याधिनाशनम् ॥१३॥**
**यथाऽमृता रुदन्ती च गुग्गुलुश्च हरीतकी ।**

जुन औषधीले शरीरको बुढ्यौली (सत्तरी वर्ष पछि) मा हुने रोग र (सबै उमेरका) जरो आदि रोगलाई निको पार्दछ त्यसलाई "रसायन" भनिन्छ । जस्तै : गुर्जो, रुदन्ती (हिमाली सागजातको बूटी विशेष), गोकुलधूप, हर्रो आदि ।

### वाजीकर शब्दको अर्थ

**यस्माद् द्रव्याद्भवेत्स्त्रीषु हर्षो वाजीकरञ्च तत् ॥१४॥**
**यथा नागबलाद्या स्युर्बीजञ्च कपिकच्छुजम् ।**

जुन औषधीले पुरुषको धातु बढाई त्यस मार्फत स्त्रीमा रोमाञ्च सहितको शक्ति सञ्चार (मैथुन सुख) पैदा गर्दछ त्यसलाई "वाजीकरम्" भनिन्छ । जस्तै गुनालु (एकजातको बलु झार), जाइफल, कुरिलो, दूध, सखर, काउछोका गेडा आदि ।

### शुक्रल शब्दको अर्थ

**यस्माच्छुक्रस्य वृद्धिः स्याच्छुक्रलञ्च तदुच्यते ॥१५॥**
**यथाऽश्वगन्धा मुसली शर्करा च शतावरी ।**

जुन औषधीले शुक्र वृद्धि गर्दछ त्यसलाई “शुक्रलम्” भनिन्छ । जस्तै : अश्वगन्धा, मुसलीकन्द, सखर, कुरिलो आदि ।

### रेतस शब्दको अर्थ

**दुग्धं माषाश्च भल्लातफलमज्जाऽमलानि च ॥१६॥**
**प्रवर्त्तकानि कथ्यन्ते जनकानि च रेतसः ।**

पुरुषको शरीरमा रहेको शुक्र धातुलाई सक्रिय (चैतन्य) बनाउने वा उत्पन्न गर्ने खालका औषधीलाई “रेतस” भनिन्छ । जस्तै : दूध, माष, भलायो फलको गुदी, अमला आदि ।

### यौनसम्बन्धी जडीबूटी र स्त्री

**प्रवर्त्तनी स्त्री शुक्रस्य रेचनं बृहतीफलम् ॥१७॥**

**जातीफलं स्तम्भकञ्च शोषणी च हरीतकी ।**

स्त्रीहरू शुक्रको प्रवर्तक (स्वकार्यमा सशक्त बनाई लगाउने माध्यम) हुन् । ठूलो कण्टकारीले शुक्रकीटलाई पातलो बनाएर बाहिर निकाल्दछ । जाईफलले शुक्र (वा वीर्य) लाई शीघ्रपतन हुन दिँदैन (स्तम्भक) । हर्रोले शुक्रलाई सोस्दछ वा सुकाउँदछ (शोषणी च हरीतकी) ।

व्याख्या : वीर्य-लेखन हर्रोको गुण हो । अरु कुनै रोग विशेषका लागि हर्रो त्यत्तिकै वा पोलेर चुसिरहने गर्दा हर्रोले गर्ने उपर्युक्त अवगुणका बारेमा पनि थाहा पाइरहनु पर्दछ । त्रिफलाकारुपमा हर्रोको प्रयोग गर्दा भने हर्रोको यो अवगुण कम हुन्छ ।

### सूक्ष्म शब्दको अर्थ

**देहस्य सूक्ष्मछिद्रेषु विशेद्यत् सूक्ष्ममुच्यते ॥१८॥**
**तद्यथा सैन्धवं क्षौद्रं निम्बतैलं रुबूद्भवम् ।**

जुन औषधी रौंका प्वालप्वालमा छिर्दछ त्यसलाई “सूक्ष्म औषधी” भनिन्छ । जस्तै : सिधेनुन, ठूलो कण्टकारी, नीम वा अँडिरको तेल आदि ।

### व्यवायि शब्दको अर्थ

**पूर्वं व्याप्याखिलं कायन्ततः पाकञ्च गच्छति ॥१९॥**
**व्यवायि तद्यथा भङ्गा फेनं चाहिसमुद्भवम् ।**

नपचिकन खाएपछि शरीर भरी फैलिने र मदिरा वा विष जसरी पछि पच्ने (र असर गर्ने) औषधीलाई “व्यवायि” भनिन्छ । जस्तै : भाँग, अफिम आदि ।

### विकाशि शब्दको अर्थ

**सन्धिबन्धाँस्तु शिथिलान्यत् करोति विकाशि तत् ॥२०॥**
**विश्लेष्यौजश्च धातुभ्यो यथा क्रमुककोद्रवाः ।**

जुन औषधीले शरीरका सबै बन्धनलाई खुकुलो पार्दछ र रसादि धातुका तेजलाई त्यो धातुबाट सोस्दछ त्यसलाई “विकाशि” भनिन्छ । जस्तै : सुपारी, कोदो (यी पनि नपचीकनै उल्लेखित काम गर्दछन्) ।

### मदकारि शब्दको अर्थ

**बुद्धिं लुम्पति यद्द्रव्यं मदकारि तदुच्यते ॥२१॥**
**तमोगुणप्रधानञ्च यथा मद्यसुराऽदिकम् ।**

जे कुरा (खानपिन गर्ना) ले बुद्धिलाई लोप गराउँदछ त्यसलाई “मदकारी” भनिन्छ । यस्ता कुरामा तमोगुण बढी हुन्छ । जस्तै : सुरा, मद्य आदि ।

व्याख्या : "बुद्धि" शब्द भित्र मेधा, धृति, स्मृति, मति र प्रतिपत्ति अर्थ समावेश भएको हुन्छ । पढेको कुरो वा ग्रन्थ धारणा गर्ने शक्तिलाई मेधा, सन्तुष्ट हुने आदत वा धैर्यतालाई धृति, सम्झना शक्तिलाई स्मृति, थाहा नपाइएका कुराको ज्ञान हुनुलाई मति तथा भूत-वर्तमान र भविष्यका बारेमा ज्ञान हुनुलाई प्रतिपत्ति भनिन्छ । रक्सी आदि नसा लाग्ने पदार्थ धेरै खाने मानिसमा यी सबै गुण विस्तारै हराउँदै जान्छ ।

**विष**

**व्यवायि च विकाशि स्यात् सूक्ष्मं छेदि मदावहम् ॥२२॥**
**आग्नेयं जीवितहरं योगवाहि स्मृतं विषम् ।**

(माथि बताइएका) व्यवायि, विकाशि, सूक्ष्म, छेदि, मदकारी र आग्नेय द्रव्यमध्ये जसले गर्दा ज्यान जान्छ वा जो योगवाही (शरीर भित्र गर्मी गर्ने पदार्थसँग मिलेर अति गर्मी गर्ने र ठण्डी गर्ने पदार्थसँग मिली अति ठण्डी गर्ने) हुन्छ त्यस्तो द्रव्यलाई "विष" भनिन्छ ।

**प्रमाथि शब्दको अर्थ**

**निजवीर्येण यद्द्रव्यं स्रोतोभ्यो दोषसञ्चयम् ॥२३॥**
**निरस्यति प्रमाथि स्यात्तद्यथा मरिचं वचा ।**

जुन द्रव्य आफ्नो शक्तिले कान, मुख, नाक आदि प्वालबाट वा अरु प्वालबाट शरीरभित्र सञ्चित कफ आदि दोष र गढेका रोगलाई बाहिर निकाल्दछ त्यसलाई "प्रमाथि" भनिन्छ । जस्तै : मरिच, बोझो आदि ।

**अभिष्यन्दि शब्दको अर्थ**

**पैच्छिल्याद्गौरवाद्द्रव्यं रुद्ध्वा रसवहाः शिराः ॥२४॥**
**धत्ते यद्गौरवं तत् स्यादभिष्यन्दि यथा दधि ।**

जुन द्रव्यले आफ्नो चिल्लो र रसिलो गुण मार्फत गह्रौं गर्दै शरीरका रस बहने चौबीस शिरालाई रोकी शरीर भारी बनाउँदछ त्यसलाई "अभिष्यन्दि" भनिन्छ । जस्तै : दही ।

व्याख्या : शरीर सक्रिय हुँदा वा दिउस मात्र दही खान र राती दही खान निषेध गरिएको यही कारणले हो । राती आराम गरिरहेका शिरालाई दहीले थप शिथिल बनाउँदछ ।

❧ इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां शार्ङ्गधरसंहितायां
पूर्वखण्डे दीपनपाचनादिकथनं नाम चतुर्थोऽध्यायः ☙

❧✷☙

❧ शार्ङ्गधर संहिताको पूर्वखण्ड अन्तर्गत चौथो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो ☙

❧✷☙

इति सूत्रस्थानम्

❧✷☙

सूत्रस्थान पूर्ण भयो

❧✷☙



शुरुदेखिको श्लोकको संख्या:-१२३+२४.५=१४७.५

❧✷☙

# अथ शारीर स्थानम्

अव शारीरस्थान शुरु हुन्छ ।

## अथ पञ्चमोऽध्यायः

पाँचौं अध्याय

### कला, कोष्ठ, धातु र मल

**धात्वाशयान्तरस्थस्तु यः क्लेदस्त्वधितिष्ठति ।**
**देहोष्मणा विपक्वो यः सा कलेत्यभिधीयते ॥** (प्रक्षिप्त श्लोक)

धातु भित्र रहने हँडिदो (हल्का हरियो रङ तथा अमिलो र उग्लिएको स्वादको) पदार्थ जो शरीरको तातोले पच्दछ त्यसलाई “कला” भनिन्छ ।



**कलाः सप्ताशयाः सप्त धातवः सप्त तन्मलाः ।**
**सप्तोपधातवः सप्त त्वचः सप्त प्रकीर्त्तिताः ॥१॥**

शरीरमा सात कला हुन्छन् । रस वा खाए पिएको कुरा रहने शरीरका मध्यभागको भित्र सात स्थान (आशय वा कोष्ठ) हुन्छ । धातु सात (रस, रगत, मासु, बोसो, हाड, मासी र शुक्र) हुन्छन् । सात धातुका सात विकार (मल) हुन्छन् । धातुसँगै रहने सात उपधातु हुन्छन् । सात थरीका छाला हुन्छन् ।

### दोष, स्नायुबन्धन, जोर्नी र हाडको संख्या

**त्रयो दोषा नवशतं स्नायूनां सन्धयस्तथा ।**
**दशाऽधिकञ्च द्विशतमस्थ्नाञ्च त्रिशतन्तथा ॥२॥**

तीन दोषहरू हुन्छन् । स्नायुका नौ सय बन्धनहरू हुन्छन् । दुई सय दश भन्दाबढी जोर्नीहरू हुन्छन् । तीन सय हाडहरू हुन्छन् ।

### मर्मस्थल, शिरा र धमनीको संख्या

**सप्तोत्तरं मर्मशतं शिराः सप्तशतन्तथा ।**
**चतुर्विंशतिराख्याता धमन्यो रसवाहिकाः ॥३॥**

शरीरमा एक सय सात मर्मस्थल, सात सय भन्दा बढी शिरा र चौबीस धमनी हुन्छन् ।

### मांसपेशी र ठूला स्नायुको संख्या

**मांसपेश्यः समाख्याता नृणां पञ्चशतं बुधैः ।**
**स्त्रीणाञ्च विंशत्यधिकाः कण्डराश्चैव षोडश ॥४॥**

पाँच सय मांसपेशी हुन्छन् । स्त्रीमा यसको सङ्ख्या बीसले बढी हुन्छ । ठूला स्नायु सोह्र हुन्छ ।



### शरीरका मुख्य प्वाल

**नृदेहे दश रन्ध्राणि नारीदेहे त्रयोदश ।**
**एतत्समासतः प्रोक्तं विस्तरेणाधुनोच्यते ॥५॥**

पुरुषका शरीरमा दश र स्त्रीका शरीरमा तेह्र (प्रमुख) प्वाल हुन्छन् । यसरी संक्षेपमा बताएँ, अव विस्तारपूर्वक बताउँदछु ।

### सात कला

**मांसासृङ्मेदसां तिस्रो यकृत्प्लीह्नोश्चतुर्थिका ।**
**पञ्चमी च तथाऽन्त्राणां षष्ठी चाग्निधरा मता ॥६॥**
**रेतोधरा सप्तमी स्यादिति सप्त कलाः स्मृताः ।**

पहिलो कलाले मासुलाई धारण गर्ने हुनाले त्यसलाई **मांसधरा** भनिन्छ । दोश्रोले रगत धारण गर्दछ त्यसैले त्यसलाई **रक्तधरा** भनिन्छ । बोसो धारण गर्नेलाई **मेदधरा** भनिन्छ । पित्त (कलेजो) र फियोको बीचमा रहने चौथो कलालाई **कफधरा** भनिन्छ । आन्द्रा धारण गर्ने पाँचौं कलालाई **पुरीषधरा** भनिन्छ । अग्निलाई धारण गर्ने छैटौं कलालाई **पित्तधरा** भनिन्छ । शुक्र धारण गर्ने सातौं कलालाई **रेतोधरा** भनिन्छ । यसरी सात कला बताइएको छ ।

**सात आशयस्थल**

**श्लेष्माशयः स्यादुरसि तस्मादामाशयस्त्वधः ॥७॥**

छाती कफको आशयस्थल हो । त्योभन्दा केही तल "आम"को आशयस्थल हुन्छ । (जहाँ नपचेको अन्न रहन्छ त्यसलाई आमाशय भनिन्छ) ।



**ऊर्ध्वमग्न्याशयो नाभेर्वामभागे व्यवस्थितः ।**
**तस्योपरि तिलं ज्ञेयं तदधः पवनाशयः ॥८॥**

नाइटोभन्दा केही माथि देब्रेतिर अग्निको स्थान हुन्छ (यसैलाई ग्रहणी पनि भनिन्छ) । त्यसभन्दा माथि ढाडतिर एउटा ग्रन्थी हुन्छ, जसलाई तिल वा क्लोम भनिन्छ । यही नै तिर्खा लाग्ने वा लगाउने स्थान (आशय) हो । यसभन्दा तल हावा रहने स्थल हुन्छ । यहाँ रहने वायुलाई "समान वायु" भनिन्छ ।

व्याख्या: यसरी पेटभित्र सबभन्दा तल वायु त्यसमाथि अग्नि र त्यसमाथि जल रहने स्थान हुन्छ । जब केही खानपिन गरिन्छ तब आफैं स्थिर भएर वायुले अग्निलाई बाल्दछ, अग्निले त्यसमाथि रहेको जल अति धेरै तताउँदछ । अनि त्यो तातो जलले खाएका अन्न आदिलाई राम्ररी पकाउँदछ ।

**मलाशयस्त्वधस्तस्य वस्तिर्मूत्राशयस्त्वधः ।**
**जीवरक्ताशयमुरो ज्ञेयाः सप्ताशयस्त्वमी ॥९॥**

पवनाशय भन्दा तल मलाशय हुन्छ । यसैलाई पक्वाशय पनि भनिन्छ । यो पेटको देब्रेतिर हुन्छ । पक्वाशयभन्दा केही तल दाहिनेतिर छालाको एउटा थैलो हुन्छ, त्यसलाई मूत्राशय वा वस्ति भनिन्छ । जीवन समान जुन रगत हुन्छ त्यसको स्थान मुटु हो । यसरी सात आशयका बारेमा जान्नू ।

नारीको विशेष आशयस्थल

**पुरुषेभ्योऽधिकाश्चान्ये नारीणामाशयास्त्रयः ।**
**धरा गर्भाशयः प्रोक्तः स्तनौ स्तन्याशयौ मतौ ॥१०॥**

पुरुषको तुलनामा स्त्रीका तीन आशय बढी हुन्छन् । गर्भाशय एक र स्तनाशय दुई (दूध रहने स्थान) ।



सात धातुका नाम र उत्पत्ति क्रम

**रसासृङ्मांसमेदोऽस्थिमज्जाशुक्राणि धातवः ।**
**जायन्तेऽन्योन्यतः सर्वे पाचिताः पित्ततेजसा ॥११॥**

रस, रगत, मासु, बोसो, हाड, मासी र शुक्र-यी सात धातु पित्तका तेजले पची क्रमशः एकपछि अर्को उत्पन्न हुन्छन् ।

व्याख्या : अन्न पचेपछि त्यसको सार रस बन्दछ र त्यसको मल मलमूत्र बन्दछ । रस पचेपछि त्यसको सार रगत बन्दछ । यसको ठोस मल कफ र तरल मल रस नै रहन्छ । रगत पचेपछि ठोस भागको मल पित्त र तरल भागको मल रगत नै रहन्छ, सारको मासु बन्दछ । मासुपच्ने क्रममा मल कानेगुजी बन्दछ ।

यस अवस्थामा स्थूल भाग मासु नै रहन्छ भने सूक्ष्म भागले बोसो बन्दछ । बोसो पच्ने क्रममा मल पसिना हुन्छ । यसको स्थूल भाग बोसो नै रहन्छ र सूक्ष्म भागले हाड बन्दछ । हाड पच्ने क्रममा नै शरीरभरी कपाल र रौं बन्दछ । यो प्रक्रियामा पनि स्थूल भाग हाड नै र सूक्ष्म भाग मासी बन्दछ । मासी पच्ने क्रममा चिप्रा, दिसा र छालामा मैलो मलकारुपमा बाहिर निस्कन्छ । मासी पच्ने क्रममा यसको स्थूल भाग मासी नै रहन्छ भने सूक्ष्म भागले शुक्र बन्दछ । शुक्र बनि सकेपछि चौबीस क्यारेटको सुनजस्तै शुद्ध हुन्छ, त्यसको मल निस्कँदैन । यो पच्दा स्थूल भाग शुक्र नै रहन्छ र सूक्ष्म भागले तेज बन्दछ ।

**रसाद्रक्तं ततो मांसं मांसान् मेदः प्रजायते ।**
**मेदसोऽस्थि ततो मज्जा मज्जायाः शुक्रसम्भवः ॥१२॥**

शरीरमा रसले रगत, रगतले मासु, मासुले बोसो, बोसोले हाड, हाडले मासी र मासीले शुक्र बन्दछ ।



सात धातुका मल उत्पत्तिको क्रम

**जिह्वानेत्रकपोलानाञ्जलं पित्तञ्च रञ्जकम् ।**
**कर्णविड्रसनादन्तकक्षामेढ्रादिजं मलम् ॥१३॥**
**नखनेत्रमलं वक्त्रे स्निग्धत्वं पिण्डिकास्तथा ।**
**जायन्ते सप्तधातूनां मलान्येतान्यनुक्रमात् ॥१४॥**
**कफः पित्तं मलं खेषु प्रस्वेदो नखरोम च ।**
**नेत्रविट् त्वक्षु च स्नेहो धातूनां क्रमशो मलाः ॥१५॥**

सात धातुका आआफ्नै मल हुन्छन् । जिभ्रोको जल (कफ), आँखाको जल र गालाको जललाई रसधातुको मल भनी थाहा पाउनू । पित्त रगतको मल हो । मासुको मल कानेगुजी हो । जिभ्रो, दाँत, कोख र पुरुष जननेन्द्रियको मल तथा पसिना बोसोका मल हुन् ।

(शार्ङ्गधर भने पसिनालाई उपधातु मान्दछन्) । नङ, कपाल र रौँ हाडका मल हुन् । चिप्रा, मुखको अत्यधिक चिल्लोपन यी मासीका मल हुन् । मुखमा डण्डिफोर, दाह्री र जुँगा आउनु शुक्रका मल हुन् । (कसैकसैले छ थरी मात्र धातुमल हुन्छ भनेका छन् । तिनले नेत्रमल, चिल्लो मुख र डण्डिफोरलाई मासीको मल भनेका छन् ।)

उपधातु

**स्तन्यं रजश्च नारीणां काले भवति गच्छति ।**
**शुद्धमांसभवः स्नेहः सा वसा परिकीर्त्तिता ॥१६॥**
**स्वेदो दन्तास्तथा केशास्तथैवोजश्च सप्तमम् ।**
**इति धातुभवा ज्ञेया एते सप्तोपधातवः ॥१७॥**

दूध रसधातुको र रज रगतधातुको उपधातु हो । यी समय अनुसार स्त्रीमा प्रकट हुन्छन् र समय अनुसार नै नष्ट हुन्छन् । शुद्ध मासुले बनेको चिल्लो, मासुको उपधातु हो । बोसोको उपधातु पसिना हो । दाँत हाडको उपधातु हो । कपाल मासीको उपधातु हो । तेज शुक्रको उपधातु हो । यसरी सात धातुबाट उत्पन्न हुने सात उपधातुका बारेमा जान्नू । केही आचार्यहरू यी उपधातुलाई पनि धातुका मलकै रूपमा मान्दछन् ।



ओज

**ओजः शर्वशरीरस्थं शीतं स्निग्धं स्थितं मतम् ।**
**सोमात्मकं शरीरस्य बलपुष्टिकरं मतम् ॥१८॥**

चिसो, चिल्लो र अमृतमय ओज शरीरको सबै भागमा रहेको हुन्छ । यसैले शरीरलाई बल र पुष्टि दिन्छ ।

सात प्रकारका छाला

**ज्ञेयाऽवभासिनी पूर्वं सिध्मस्थानञ्च सा मता ।**
**द्वितीया लोहिता ज्ञेया तिलकालकजन्मभूः ॥१९॥**
**श्वेता तृतीया सङ्ख्याता स्थानं चर्मदलस्य च ।**
**ताम्रा चतुर्थी विज्ञेया किलासश्वित्रभूमिका ॥२०॥**
**पञ्चमी वेदनी ख्याता सर्वकुष्ठोद्भवस्ततः ।**
**विख्याता रोहिणी षष्ठी ग्रन्थिगण्डापचीस्थितिः ॥२१॥**
**स्थूला त्वक्सप्तमी ख्याता विद्रध्यादेः स्थितिश्च सा ।**
**इति सप्त त्वचः प्रोक्ताः स्थूला व्रीहिद्विमात्रया ॥२२॥**

शरीरमा हुने पहिलो छालाको नाम “अवभासिनी” हो । यो दुबी (सिध्म) आदि रोगको जन्मभूमी हो । यो जौको अठार भागको एक भाग सरह मोटो हुन्छ । दोश्रो छालाको नाम “लोहिता” हो । यो कोठी आदि रोगको जन्मभूमी हो । यो जौको सोह्र भागको एक भाग बराबर मोटो हुन्छ । तेश्रो छालाको नाम “श्वेता” हो । यो चर्मदल नामक कुष्ठरोगको जन्मभूमि हो र जौको बाह्र भागको एक भाग बराबर मोटो हुन्छ । चौथो छालाको नाम “ताम्रा” हो । यो किलासकुष्ठको जन्मभूमि हो र जौको आठ भागको एक भाग बराबर मोटो हुन्छ । पाँचौं छालाको नाम “वेदनी” हो । यो सबै खाले कुष्ठरोगको जन्मभूमि हो । यो जौको पाँच भागको एक भाग बराबर मोटो हुन्छ । छैटौं छालाको नाम “रोहिणी” हो । यसको स्थान गण्डमाला र अपची हो । ग्रन्थी आदि कफ प्रधान हुनाले अर्बुद आदि रोगको जन्मस्थान पनि यही हो । सातौं छालाको नाम “स्थूला” हो । यो विदध्रि, अल्काई, भगन्दर आदि रोगको जन्मस्थान हो । यसरी सात प्रकारका छालाका बारेमा बताइयो । यी सात वटै छाला मोटो भागमा जौ जत्रै हुन्छन् ।

त्रिदोष

**वायुः पित्तं कफो दोषा धातवश्च मलास्तथा ।**
**तत्रापि पञ्चधा ख्याताः प्रत्येकं देहधारणात् ॥२३॥**

शरीरमा वात, पित्त र कफ गरी तीन दोष हुन्छन् । यिनले रस आदि धातुलाई दूषित गर्दछन् । त्यसैले यिनलाई दोष भनिन्छ । शरीरले धारण गर्ने हुनाले यिनलाई धातु पनि भनिन्छ । यिनले रस आदि धातुलाई मलीन गर्ने हुनाले मल पनि भनिन्छ । शरीरले धारणा गरे अनुसार यी हरेकको पाँच पाँच प्रकार हुन्छ ।

दोष, धातु र मल

**शरीरदूषणाद्दोषा धातवो देहधारणात् ।**
**वातपित्तकफा ज्ञेया मलिनीकरणान्मलाः ॥२४॥**

शरीरलाई दूषित बनाउने हुनाले वात, पित्त र कफलाई दोष भनिएको हो । शरीरलाई धारण गर्ने हुनाले धातु भनिएको हो । धातुलाई मलिन बनाउने हुनाले मल भनिएको हो ।

**पित्तं पङ्गु कफः पङ्गुः पङ्गवो मलधातवः ।**
**वायुना यत्र नीयन्ते तत्र गछन्ति मेघवत् ॥२५॥**

पित्त, कफ, शरीरका मल र शरीरका धातु यी सबै पङ्गु (धुँडा नचल्ने वा लङ्गडा हुन्छन्) । यी बादल गएजस्तै वायुले जताजता लैजान्छ त्यतै त्यतै जान्छन् । (यसैले वायु नै मानिसको स्वस्थताको प्रमुख कारण हुने गर्दछ) ।

शरीरमा रहने पाँच किसिमका वायु

**पवनस्तेषु बलवान्विभागकरणान्मतः ।**
**रजोगुणमयः सूक्ष्मः शीतो रूक्षो लघुश्चलः ॥२६॥**
**मलाशये चरेत्कोष्ठे वह्निस्थाने तथा हृदि ।**
**कण्ठे सर्वाङ्गदेशेषु वायुः पञ्चप्रकारतः ॥२७॥**
**अपानः स्यात्समानश्च प्राणोदानौ तथैव च ।**
**व्यानश्चेति समीरस्य नामान्युक्तान्यनुक्रमात् ॥२८॥**

वात, पित्त र कफ यी तीन दोषमा वायु (वात) बलियो हुन्छ । यसको मलादिलाई अलग्याउने तथा पित्त र कफलाई जहाँ मन लाग्यो त्यहाँ लैजाने शक्ति हुन्छ । वायुमा रजोगुण बढी हुन्छ । यो अति सूक्ष्म हुन्छ, शीतल र रुखो हुन्छ अनि एकैस्थानमा स्थिर भएर पनि बस्दैन । यो पाँच स्थानमा हिँडडुल गर्दछ, त्यसैले पाँच थरी भनी जान्नु पर्दछ । मलाशय वा पक्वाशयमा रहने वायुलाई "अपान" भनिन्छ । आमाशयमा अग्निरहने स्थानमा हुने वायुलाई "समान" भनिन्छ । हृदयमा रहने वायुलाई "प्राण" भनिन्छ भने घाँटीमा रहने वायुलाई "उदान" भनिन्छ । यसैगरी शरीरभर रहने वायुलाई "व्यान" भनिन्छ । यसरी शरीरमा हुने पाँच वायु र तिनको स्थान जान्नू ।

### शरीरमा हुने पाँच किसिमका पित्त

पित्तमुष्णं द्रवं पीतं नीलं सत्त्वगुणोत्तरम् ।
कटुतिक्तरसं ज्ञेयं विदग्धं चाम्लतां व्रजेत् ॥२९॥
अग्न्याशये भवेत् पित्तमग्निरूपं तिलोन्मितम् ।
त्वचि कान्तिकरं ज्ञेयं लेपाभ्यङ्गादिपाचकम् ॥३०॥
दृश्यं यकृति यत् पित्तं तद्रसं शोणितं नयेत् ।
यत् पित्तं नेत्रयुगले रूपदर्शनकारि तत् ॥३१॥
यत् पित्तं हृदये तिष्ठेन् मेधाप्रज्ञाकरञ्च तत् ।
पाचकं भ्राजकञ्चैव रञ्जकालोचके तथा ॥३२॥
साधकञ्चेति पञ्चैव पित्तनामान्यनुक्रमात् ।

पित्त गर्मी गर्ने एक पातलो पदार्थ हो । दूषित पित्त नीलो र शुद्ध पित्त पहेँलो रङ्गको हुन्छ । पित्तमा सत्वगुण बढी हुन्छ । शुद्ध पित्तको स्वाद पिरो र तितो हुन्छ । यसमा तातो आदि पदार्थ पर्दा अमिलो स्वादको हुन्छ । पित्त शरीरका पाँच स्थानमा रहन्छ । आमाशय अग्निको स्थान हो यहाँ हुने पित्त अग्निस्वरूपी र तिल आकारको हुन्छ । त्यो पित्तले पित्तस्थानमा रहेर चार प्रकारका अन्नलाई पचाउँदछ त्यसैले यसलाई "पाचक पित्त" पनि भनिन्छ । छालामा रहने पित्तले छालामा तेज उत्पन्न गर्दछ । चन्दन, तेल आदि दलेर वा

नुहाएर यो पित्त पच्दछ । यसैले यसलाई "भ्राजक" पित्त भनिन्छ । यो पित्त फियोको देब्रेतिर रही जसरी रगत प्रकट हुन्छ त्यसरी नै दाहिनेतिर पनि कलेजोसँगै रहेर रगत उत्पन्न गर्दछ । यो कार्य देखिने हुनाले यसलाई "रञ्जक" पित्त भनिन्छ । आँखामा रहने पित्तले सेतो, नीलो वा पहेंलो आदि रङ्ग देखाउँदछ र यसलाई "आलोचक पित्त" भनिन्छ । जो पित्त हृदयमा हुन्छ त्यसले मेधा एवं प्रज्ञारूपी बुद्धिलाई जन्माउँदछ । यसैले यसलाई "साधक" भनिन्छ । यसरी पित्तका पाँच नाम र क्रम जान्नू ।

**शरीरमा रहने पाँच प्रकारका कफ**

**कफः स्निग्धो गुरुः श्वेतः पिच्छिलः शीतलस्तथा ॥३३॥**
**तमोगुणाधिकः स्वादुर्विदग्धो लवणो भवेत् ।**
**कफश्चामाशये मूर्ध्नि कण्ठे हृदि च सन्धिषु ॥३४॥**
**तिष्ठन् करोति देहस्य स्थैर्यं सर्वाङ्गपाटवम् ।**
**क्लेदनः स्नेहनश्चैव रसनश्चावलम्बनः ॥३५॥**
**श्लेष्मकश्चेति नामानि कफस्योक्तान्यनुक्रमात् ।**



कफ-चिप्लो, गह्रौं, सेतो, च्याटच्याटे र शीतल हुन्छ । कफमा तमोगुण धेरै हुन्छ । यो मिठो हुन्छ र दूषित भएपछि नुनिलो हुन्छ । कफ शरीरभित्र पाँच ठाउँमा बसी शरीरलाई स्थिर र पुष्ट पार्दछ । "आम" स्थानमा रहने कफलाई "क्लेदन" भनिन्छ । यो आमाशयमा रहने चार थरीका आहारका आधार हो । मधुर, पिच्छिल र प्रक्लेदित्व भएर पनि स्वशक्तिले सबै कफस्थानलाई स्वकर्ममा तल्लिन गराउँदछ । टाउकामा रहने कफलाई "स्नेहन" भनिन्छ । यसले आवश्यक लेस्याइलो पन पठाई सबै इन्द्रियलाई आआफ्ना काममा सक्षम बनाउँदछ । घाँटीमा हुने कफलाई "रसन" भनिन्छ । यो जिभ्राको फेदमा हुन्छ र तितो, पिरो आदि रस-ज्ञानको कारण हुन्छ । हृदयमा हुने कफलाई "अवलम्बन" भनिन्छ । यसले अँगाल्ने आदि कार्य गरी हृदयको पोषण गर्दछ । शरीरका जोर्नीहरूमा रहने कफलाई "संश्लेषण" भनिन्छ । यसले जोर्नीहरूलाई फुस्कन दिँदैन । यसरी कफका पाँच स्थान र नाम क्रमैले जान्नू ।

**शरीरका स्नायु**

## स्नायवो बन्धनं प्रोक्ता देहे मांसास्थिमेदसाम् ॥३६॥

स्नायु वा मांसरज्जुले मासु, हाड र बोसोलाई एक आपसमा जोर्ने वा जेल्ने कार्य गर्दछ ।

**शरीरका सन्धिस्थल**

## सन्धयश्चाङ्गसन्धानाद्देहे प्रोक्ताः कफान्विताः ।

शरीरका अङ्गहरु जोडिने स्थानलाई सन्धि भनिन्छ र यहाँ कफ रहने गर्दछ ।

**शरीरका सार हाड**

## आधारश्च तथा सारः कायेऽस्थीनि बुधा जगुः ॥३७॥

शरीरको सार वा आधार हाड हो भनी विद्वानहरू भन्दछन् ।

**शरीरका मर्मस्थल**

## मर्माणि जीवाधाराणि प्रायेण मुनयो जगुः ।

शरीरमा रहने मर्मस्थल आत्माको आधार हो भनी मुनिजन भन्दछन् ।

व्याख्या : शरीरमा मासुका मर्मस्थल एघार, शिराका एकचालीस, स्नायुका सत्ताईस, हाडका आठ र जोर्नीका बीस गरी जम्मा एक सय सात मर्मस्थल हुन्छन् । यी अत्यन्त सम्वेदनशील र सामान्य चोटपटकमा पनि ज्यान जान सक्ने स्थल हुन् ।

शरीरका शिरा

**सन्धिबन्धनकारिण्यो दोषधातुवहाः शिराः ॥३८॥**

शिराले जोर्नीलाई बलियो बनाउँदछ, वात आदि दोष र रस आदि धातुलाई एक ठाउँबाट अर्को ठाउँसम्म बहाएर लैजान्छ ।

शरीरका धमनी

**धमन्यो रसवाहिन्यो धमन्ति पवनं तनौ ।**

रस वहने धमनीले शरीरको वायुलाई पनि सक्रिय (आवाजयुक्त) बनाउँदछ ।

शरीरका मांसपेशी



**मांसपेश्यो बलाय स्युरवष्टम्भाय देहिनाम् ॥३९॥**

मांसपेशीले शरीरलाई चल्न बल दिन्छ र सिधा उभिन मद्दत गर्दछ ।

शरीरका मोटा नसा

**प्रसारणाकुञ्चनयोरङ्गानां कण्डरा मताः ।**

मोटो नसाले शरीरलाई खुम्चन र फैलन मद्दत गर्दछ ।

शरीरमा रहेका प्वालहरू

**नासानयनकर्णानां द्वे द्वे रन्ध्रे प्रकीर्त्तिते ॥४०॥**

मेहनापानवक्त्राणामेकैकं रन्ध्रमुच्यते ।
दशमं मस्तके प्रोक्तं रन्ध्राणीति नृणां विदुः ॥४१॥
स्त्रीणां त्रीण्यधिकानि स्युः स्तनयोर्गर्भवर्त्मनः ।
सूक्ष्मच्छिद्राणि चान्यानि मतानि त्वचि जन्मिनाम् ॥४२॥

नाक, आँखा र कानमा दुई दुई प्वाल हुन्छन् । लिङ्ग, मलद्वार र मुखमा एक एक प्वाल हुन्छ । तालुमा पनि एक प्वाल हुन्छ जसलाई ब्रह्मरन्ध्र भनिन्छ । यसरी पुरुषका शरीरमा देखिने (ठूला) नौ प्वाल हुन्छन् (यसलाई नवद्वार पनि भनिन्छ) । तालुमा हुने दशौं प्वाल छोपिएको हुन्छ । स्तनसम्बन्धी दुई र गर्भभागमा एक गरी तीन प्वाल स्त्रीका शरीरमा बढी हुन्छन् । यसरी नै प्राणीका शरीरका छालामा अनेक प्वाल हुन्छन् तर अती सूक्ष्म हुनाले ती नाङ्गा आँखाले देखिन्न भन्ने आचार्यहरू पनि छन् ।

फियो र कलेजो



तद्वामे फुफ्फुसप्लीहौ दक्षिणाङ्गे यकृन्मतम् ।
उदानवायोराधारः फुफ्फुसः प्रोच्यते बुधैः ॥४३॥
रक्तवाहिशिरामूलं प्लीहा ख्याता महर्षिभिः ।
यकृद्रञ्जकपित्तस्य स्थानं रक्तस्य संश्रयः ॥४४॥

मुटुको देब्रेतिर फियो र फोक्सो तथा दाहिनेतिर कलेजो हुन्छ जसलाई कालखण्ड पनि भनिन्छ । फोक्सो घाँटीबाट छिर्ने उदान वायुको, फियो रगत बहने शिराको र कलेजो बिग्रेको रगत र पित्तको आधार वा स्थान हो ।

तिलक्लोम

जलवाहिशिरामूलं तृष्णाच्छादनकं तिलम् ।

शरीरमा कलेजो नजिकै दाहिनेतिर त्यसभन्दा माथि ढाडतिर एउटा ग्रन्थी हुन्छ, जसलाई तिल वा क्लोम भनिन्छ । यो जलबहने शिराको मूल हो । यहीँबाट मानिसलाई तिर्खा उत्पन्न हुन्छ ।

### मृगौला

## वृक्कौ तुष्टिकरौ प्रोक्तौ जठरस्थस्य मेदसः ॥४५॥

मृगौला द्वयले पेटमा हुने बोसो पुष्ट गर्दछ वा बढाउँदछ ।

### अण्डकोष

## वीर्यवाहिशिराधारौ वृषणौ पौरुषावहौ ।

अण्डकोष वीर्य बहने नसाको आधार हो । अतः यसले पुरुषार्थ दिन्छ । (यसलाई बीजवाही पनि भनिन्छ) ।

### पुरुष जननेन्द्रिय

## गर्भाधानकरं लिङ्गमयनं वीर्यमूत्रयोः ॥४६॥

पुरुष जननेन्द्रियले वीर्यद्वारा गर्भ उत्पन्न गर्दछ, यो मूत्र तथा वीर्य निस्कने बाटो हो ।

### मुटु

## हृदयं चेतनास्थानमोजसश्चाश्रयो मतम् ।

कमलको केही फुलेको कोपिला घोप्टो परेको जस्तो मुटु हुन्छ । यो चेतना र तेजको सार स्थान हो ।

### शिरा र धमनी

**शिरा धमन्यो नाभिस्थाः सर्वा व्याप्य स्थितास्तनुम् ॥४७॥**
**पुष्णन्ति चानिशं वायोः संयोगात् सर्वधातुभिः ।**

नाइटो रहेको भागमा रहेका शिरा र धमनीले वायुसँग मिली सारा शरीरमा व्याप्त भई रस आदि धातु लगी पोषण गर्दछन् । (यिनले युवा शरीरलाई पोषण र वृद्ध शरीरलाई पालन गर्दछन्) ।

### प्राणवायु

**नाभिस्थः प्राणपवनः स्पृष्ट्वा हृत्कमलान्तरम् ॥४८॥**
**कण्ठाद्बहिर्विनिर्याति पातुं विष्णुपदामृतम् ।**
**पीत्वा चाम्बरपीयूषं पुनरायाति वेगतः ॥४९॥**
**प्रीणयन्देहमखिलं जीवयञ्जठरानलम् ।**

नाभिमा रहेको प्राणवायु मुटुलाई छुँदै बाहिरी आकाशबाट हावा लिन घाँटीबाट बाहिर जान्छ, त्यो वायु पिएर फेरी त्यही गतिमा नाकबाट आफ्नो स्थानमा आई सारा शरीर र जीवलाई सन्तुष्ट पार्दै जठराग्निलाई बाल्दछ । (यो वायु सारा शरीरमा व्याप्त हुनाले नाइटोमा बेरिएका शिरामा पनि रहेको हुन्छ) ।

### जीवन र मृत्यु

**शरीरप्राणयोरेव संयोगादायुरुच्यते ॥५०॥**
**कालेन तद्वियोगाच्च पञ्चत्वं कथ्यते बुधैः ।**

शरीर र प्राण यी दुईको संयोगलाई नै आयु भनिन्छ जब समयले यी दुईलाई अलग्याउँदछ तब त्यसलाई मृत्यु भनिन्छ ।

### अमरत्व र उपचार

न जन्तुः कश्चिदमरः पृथिव्याञ्जायते क्वचित् ॥५१॥
अतो मृत्युरवार्यः स्यात् किन्तु रोगान्निवारयेत् ।

संसारका कुनै पनि प्राणी अमर छैनन् । त्यसैले मृत्युलाई हटाउन वा टाल्न कोही पनि समर्थ छैन । तर पनि वैद्यले रोगको उपचार गर्नु पर्दछ ।

### उपचार

याप्यत्वं याति साध्यश्च याप्यो गच्छत्यसाध्यताम् ॥५२॥
जीवितं हन्त्यसाध्यस्तु नरस्याऽप्रतिकारिणः ।

सजिलै निको हुने खालका रोगको बेलैमा उपचार गरिएन भने त्यो लुकाउने स्थितिमा पुग्दछ । फेरी पनि उपचार गरिएन भने रोग निको नहुने स्थितिमा पुग्दछ, रोग निको नहुने स्थितिमा पुगेपछि त्यसले मानिसलाई मार्दछ ।

### शरीरको रक्षा

धर्मार्थकाममोक्षाणां शरीरं साधनं यतः ॥५३॥
अतो रुग्भ्यस्तनुं रक्षेन्नरः कर्मविपाकवित् ।

शरीर धर्म, अर्थ, काम र मोक्षको साधन हो त्यसैले शुभ-अशुभ कर्म जान्ने मानिसले रोगबाट शरीरलाई रक्षा गर्नू ।

**शरीरमा दोष, धातु र मलको मात्रा**

**धातवस्तन्मला दोषा नाशयन्त्यसमास्तनुम् ।।५४।।**
**समाः सुखाय विज्ञेया बलायोपचयाय च ।**

रस आदि सात धातु, मल र वात आदि तीन दोषमा तलमाथि हुँदा त्यसले शरीरलाई नष्ट गर्दछ भने यथोचित मात्रामा हुँदा त्यसले सुख, बल र शरीरलाई बढाउँदछ ।

(इति शारीरे कलादिकथनम्)
(कला आदिको वर्णन सकियो)

**सृष्टिको क्रम**

**जगद्योनेरनिच्छस्य चिदानन्दैकरूपिणः ।।५५।।**
**पुंसोऽस्ति प्रकृतिर्नित्या प्रतिच्छायेव भास्वतः ।**



महदादि रूपी जुन् जगत् आदि कारण भई इच्छारहित तथा चिदानन्द ज्ञानमय यस्तो जुन पुरुष छ उसलाई ईश्वर भनिन्छ । त्यो पुरुष नित्य छ र उसका सूर्यको छाया समान प्रकृति छे, यसैलाई अव्यक्त पनि भनिन्छ ।

**अचेतनाऽपि चैतन्ययोगेन परमात्मनः ।।५६।।**
**अकरोद्विश्वमखिलमनित्यं नाटकाकृति ।**

तिनै मूलप्रकृतिले जड भई परमात्मासँग चैतन्य सम्बन्ध गाँसी अनित्य जस्ता सारा महदादिरूपी विश्वलाई बनाउँदछे ।

**प्रकृतिर्विश्वजननी पूर्वं बुद्धिमजीजनत् ।।५७।।**
**इच्छामयीं महद्रूपामहङ्कारस्ततोऽभवत् ।**

त्रिविधः सोऽपि सञ्जातो रजः सत्त्वतमोगुणैः ।।५८।।

जगतकी माता प्रकृतिले पहिला बुद्धिलाई सृष्टि गरिन् । इच्छानुसार चल्ने र महान प्रकृतिको त्यो बुद्धिबाट अहङ्कार जन्मियो । यो पनि सात्विक, राजसिक र तामसिक गरी तीन प्रकारको हुन गयो ।

इन्द्रिय र मन

तस्मात्सत्त्वरजोयुक्तादिन्द्रियाणि दशाभवन् ।
मनश्च जातन्तान्याहुः श्रोत्रत्वङ्नयनन्तथा ।।५९।।
जिह्वाघ्राणवचोहस्तपादोपस्थगुदानि च ।
पञ्च बुद्धीन्द्रियाण्याहुः प्राक्तनानीतराणि च ।।६०।।
कर्मेन्द्रियाणि पञ्चैव कथ्यन्ते सूक्ष्मबुद्धिभिः ।



राजसी अहङ्कारको सहयोगमा तामसी अहङ्कारसँग मिसिएर सात्विक अहङ्कारबाट कान, छाला, आँखा, जिभ्रो, नाक, बोली, हात, गोडा, मलद्वार, मूत्रद्वार र मन गरी एघार इन्द्रियहरू जन्मिए । यसमा शुरुका छाला आदि ज्ञानेन्द्रिय हुन् किन भने यी बुद्धिको आश्रयमा हुने गर्दछन् । बाँकी पाँचलाई कर्मेन्द्रिय भनिन्छ किन कि यी कर्मको आश्रयमा रहन्छन् । यी दुवै तथा बुद्धि र कर्म समाहित भएको मन हुन्छ ।

पञ्चतन्मात्र

तमः सत्त्वगुणोत्कृष्टादहङ्कारादथाभवत् ।।६१।।
तन्मात्रपञ्चकन्तस्य नामान्युक्तानि सूरिभिः ।
शब्दतन्मात्रकं स्पर्शतन्मात्रं रूपमात्रकम् ।।६२।।
रसतन्मात्रकं गन्धतन्मात्रं चेति तद्विदुः ।

राजसी अहङ्कार सहायक भएको र सत्वगुणले युक्त तामसी अहङ्कारबाट तन्मात्रामा त्यही त्यही आश्रयमा मुख्य तत्व भएका गुणहरू उत्पन्न भए । यिनलाई शब्दतन्मात्र, स्पर्शतन्मात्र, रूपतन्मात्र, रसतन्मात्र र गन्धतन्मात्र भनी जान्नू । यी तन्मात्रालाई योगीले मात्र थाहा पाउन सक्दछन् ।

### पञ्चतन्मात्रका विशेषता

**शब्दः स्पर्शश्च रूपञ्च रसगन्धावनुक्रमात् ॥६३॥**
**तन्मात्राणां विशेषाः स्युः स्थूलभावमुपागताः ।**

शब्द, स्पर्श, रूप, रस र गन्ध-यी क्रमैले पाँच तन्मात्राका विशेषता भनी जान्नू । यिनलाई सुख, दुःख र मोहबाट अनुभव गरिन्छ । त्यसैले स्थूलत्वमा पुगेका पाँच तन्मात्राको अनुभव सूक्ष्म हुन्छ ।



### पञ्चमहाभूत

**तन्मात्रपञ्चकात्तस्मात् सञ्जातं भूतपञ्चकम् ॥६४॥**
**व्योमानिलानलजलक्षोणीरूपञ्च तन्मतम् ।**

शब्द आदि गरिएका पाँच तन्मात्राबाट आकाश, वायु, अग्नि, जल र पृथ्वी गरी पाँच महाभूतको उत्पत्ति भयो ।

### इन्द्रियका विषय

**बुद्धीन्द्रियाणां पञ्चैव शब्दाद्या विषया मताः ॥६५॥**
**कर्मेन्द्रियाणां विषया भाषादानविहारिताः ।**
**आनन्दोत्सर्गकौ चैव कथितास्तत्त्वदर्शिभिः ॥६६॥**

कान, छाला, आँखा, जिभ्रो र नाक यी पाँच बुद्धीन्द्रिय हुन् र यिनका शब्द, स्पर्श, रूप, रस र गन्ध यी क्रमैले विषय हुन्। यसैगरी मुख, हात, गोडा, जननेन्द्रिय र मलद्वार यी पाँच कर्मेन्द्रिय हुन् र यिनका बोली, लेनदेन, घुमफिर, आनन्द ग्रहण, मल उत्सर्जन यी पाँच क्रमैले विषय हुन्।

प्रकृतिका पर्यायवाची नाम

**प्रधानं प्रकृतिः शक्तिर्नित्या चाविकृतिस्तथा ।**
**एतानि तस्या नामानि शिवमाश्रित्य या स्थिता ॥६७॥**

प्रधान, प्रकृति, शक्ति, नित्या, र अविकृति यी प्रकृतिका पर्यायवाची नाम हुन्। यी शिवमा आश्रित भएर रहेका हुन्छन्।

प्रकृति र विकृति



**महानहङ्कृतिः पञ्चतन्मात्राणि पृथक्पृथक् ।**
**प्रकृतिर्विकृतिश्चैव सप्तैतानि बुधा जगुः ॥६८॥**

महतत्व, अहङ्कार र पञ्च तन्मात्रा यी सात इन्द्रिय आदिका कारण हुन्। अर्थात् प्रकृतिरूप, प्रकृतिका कर्मरूप वा विकृतिरूप हुन् भनी विद्वानले भनेका छन्।

सोह्र विकार

**दशेन्द्रियाणि चित्तञ्च महाभूतानि पञ्च च ।**
**विकाराः षोडश ज्ञेयाः सर्वं व्याप्य जगत्स्थिताः ॥६९॥**

दशवटा इन्द्रिय, मन र पञ्चमहाभूत यी सोह्र विकार हुन्। यी सारा संसारमा व्यापक भई रहेका हुन्छन्।

जीवात्मा

**एवं चतुर्विंशतिभिस्तत्त्वैः सिद्धे वपुर्गृहे ।**
**जीवात्मा नियतेर्निघ्नो वसति स्वान्तदूतवान् ॥७०॥**
**स देही कथ्यते पापपुण्यदुःखसुखादिभिः ।**
**व्याप्तो बद्धश्च मनसा कृत्रिमैः कर्मबन्धनैः ॥७१॥**

अव्यक्त, महान्, अहङ्कार, शब्द, स्पर्श, रूप, रस, गन्ध, कान, छाला, आँखा, नाक, जिब्रो, वोली, हात, गोडा, जननेन्द्रिय, मलद्वार, मन, पृथ्वी, जल, तेज, वायु र आकाश यी चौबीस तत्व हुन् । यी चौबीस तत्वले बनेको शरीररूपी घरमा पच्चीसौं पुरुष सदासर्वदा बस्ने गर्दछ, त्यसैलाई जीवात्मा भनिन्छ । मन त्यो जीवात्माको दूत हो । त्यो जीवात्मा महदादिको सूक्ष्म लिङ्ग शरीरमा रहन्छ, त्यसैले त्यसलाई देही वा कर्मपुरुष पनि भनिन्छ । अतः उ पापपुण्य र सुखदुःख गरिरहेको हुन्छ । त्यसैगरी मनसँगै कृत्रिम कर्मबन्धनमा आवद्ध भई रहने गर्दछ ।



व्याख्या : आदि भन्नाले इच्छा, द्वेष, प्रयाश, प्राण, अपान, उन्मेष, बुद्धि, मन, सङ्कल्प, विचार, स्मृति, विज्ञान, अध्यवसाय, विषय, उपलब्धि आदि गुणलाई पनि बुझाउँदछ । कसैले विकाररहित जीवात्मा विकारी वस्तुसँग कसरी आवद्ध हुन्छ भनेर प्रश्न गर्लान् । वास्तवमा जीवात्मा निर्विकार भएर पनि विकारी वस्तुसँग मिलेपछि विकारवान् हुन पुग्दछ । जस्तै : साँझमा आकाश सूर्यका किरणले गर्दा रातो हुन्छ । यसैगरी जीव विकारी भएर पनि आकाश समान निर्विकार हुन्छ । कोही आचार्य भन्दछन् कि यी सबै विकार त्यो लिङ्ग देहमा प्रतिबिम्ब सरह त्यसरी नै बसेका हुन्छन् जसरी तलाउ आदिको जल हल्लँदा किनारमा रहेका वृक्षादि पनि हल्लिएको जस्तो देखिने गर्दछ ।

जीव-बन्धन

**कामक्रोधौ लोभमोहावहङ्कारश्च पञ्चमः ।**
**दशेन्द्रियाणि बुद्धिश्च तस्य बन्धाय देहिनः ॥७२॥**

काम, क्रोध, लोभ, मोह, अहङ्कार, दश इन्द्रिय र बुद्धि यी त्यो जीवका बन्धनहरू हुन् । (यिनका लक्षण क्रमैले अरु ग्रन्थबाट बताइन्छ) ।

काम

**स्त्रीषु जातो मनुष्याणां स्त्रीणाञ्च पुरुषेषु वा ।**
**परस्परकृतः स्नेहः काम इत्यभिधीयते ॥**

स्त्रीले पुरुषलाई र पुरुषले स्त्रीलाई परस्पर गर्ने मायालाई काम भनिन्छ । तर यो माया उपभोगका लागि हुने गर्दछ ।

क्रोध

**य उष्मा हृदयाज्जातः समुत्तिष्ठति वै सकृत् ।**
**परहिंसात्मकः क्लेशः क्रोध इत्यभिधियते ॥**

एकपटक प्राणीको हृदयबाट गर्मी उत्पन्न भई त्यसले अरुलाई हिंसात्मक तरिकाले दुःख दिने हुन्छ, यसले चित्तलाई एक किसिमको दुःख हुन्छ र त्यही दुःख (क्लेश) लाई क्रोध भनिन्छ ।

लोभ

**परार्थं परभागाँश्च परसामर्थ्यमेव च ।**
**दृष्ट्वा श्रुत्वा च या तृष्णा जायते लोभ एव सः ॥**

अर्कोको धन, अरुको भाग र अरुको सामर्थ्य देखेर वा सुनेर यो प्राणीको चित्तमा जुन तृष्णा उत्पन्न हुन्छ त्यसैलाई लोभ भनिन्छ ।

**मोह**

## अश्रेयः श्रेयसोर्मध्ये भ्रमणं संशयो भवेत् ।
## मिथ्याज्ञानन्तु तं प्राहुरहिते हितदर्शनम् ॥

अकल्याण र कल्याण यी दुईमा हुने बुद्धिको भ्रमणलाई संशय भनिन्छ । कुभलोमा भलो देख्नुलाई मोह (मिथ्याज्ञान) भनिन्छ ।

**अहङ्कार**

## अहमित्यभिमानेन यः क्रियासु प्रवर्तते ।
## कायकारणयुक्तस्तु तदहङ्कारलक्षणम् ॥

जब प्राणी कार्य र कारण दुबै म गर्दछु भन्ने अभिमानले कर्ममा लाग्दछ तब त्यसलाई अहङ्कार भनिन्छ ।

**दुःख र सुख**



## आप्नोति बन्धमज्ञानादात्मज्ञानाच्च मुच्यते ।
## तद्दुःखयोगकृद्व्याधिरारोग्यं तत्सुखावहम् ॥७३॥

पुरुष अज्ञानताले गर्दा नै क्लेशादि बन्धनमा पर्ने गर्दछ भने आत्मज्ञान भएपछि त्यसबाट मुक्त हुन्छ । शरीर र शरीरधारीलाई जेले दुःख दिन्छ त्यलाई रोग भनिन्छ भने जेले यिनलाई सुख दिन्छ त्यसलाई आरोग्य भनिन्छ । प्राणीका लागि स्वभावतः दुःख प्रतिकूल र सुख अनुकूल हुने गर्दछ ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां शार्ङ्गधरसंहितायां
पूर्वखण्डे कलादिकाख्यानं नाम पञ्चमोऽध्यायः

✷

शार्ङ्गधर संहिताको पूर्वखण्ड अन्तर्गत पाँचौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-१४७.५+७३=२२०.५

✷

# अथ षष्ठोऽध्यायः

## छैटौं अध्याय

### पाचन-प्रणाली

**यात्यामाशयमाहारः पूर्वं प्राणानिलेरितः ।**
**माधुर्यं फेनभावञ्च षड्रसोऽपि लभेत सः ॥१॥**

(पाञ्चभौतिक अन्न आदि) आहार प्राणवायुले अभिप्रेरित भई खाएपछि पहिले आमाशयमा पुग्दछ । त्यसपछि छ रसले युक्त भएको त्यो आहार कफ (मधुरभाव) र फिँजमा परिणत हुन पुग्दछ ।

व्याख्या :- पृथ्वी, जल, अग्नि, वायु र आकाशको अंशबाट उत्पन्न हुने हुनाले आहारलाई पाञ्चभौतिक नाम दिइएको हो । **चतुर्धाषड्रसोपेतोऽनेकविध्यनुपक्रमः । द्विविधोष्टविधो वीर्यैराहारः पाञ्चभौतिकः ॥** कफको रस मधुर हुन्छ, त्यसैले माधुर्य हुनु भनेको कफमा परिणत हुनु हो भनेर बुझ्नु पर्दछ ।



**अथ पाचकपित्तेन विदग्धश्चाम्लतां व्रजेत् ।**
**ततः समानमरुता ग्रहणीमभिनीयते ॥२॥**
**(षष्ठी पित्तधरा नाम या कला परिकीर्त्तिता ।**
**पक्वामाशयमध्यस्था ग्रहणीत्यभिधीयते ॥३॥)**
**ग्रहण्यां पच्यते कोष्ठवह्निना जायते कटुः ।**

यसपछि त्यो कफ र फिँजयुक्त आहार त्यही आमाशयमा पचाउने पित्त (पाचकपित्त जो पहेँलो र रसदार हुन्छ) बाट जलाइँदै अमिलो बन्न पुग्दछ । यसपछि समान नामक वायुले यसलाई धकेल्दै पचाउने स्थान (अग्निस्थान वा ग्रहणी) मा लैजान्छ । पहिले पित्तधरा नामका जुन कलाका बारेमा बताइयो त्यहाँ पक्वाशय र आमाशयका बीचमा ग्रहणी रहेको हुन्छ र त्यो भागमा रहेको अग्निबाट त्यो आहार पाक्दछ । यतिखेर आहारको स्वाद पिरो हुन पुग्दछ । यसरी आहार शुरुमा मिठो, त्यसपछि अमिलो र तेश्रो अवस्थामा पिरो हुन पुग्दछ ।

### रस र आम

**रसो भवति सम्पक्वादपक्वादामसम्भवः ॥४॥**

पेटभित्र आहार राम्ररी पचे वा पाके त्यसबाट “रस” बन्दछ भने नपाकी काँचै भए त्यो “आम” बन्दछ । (सामान्यतः “आम” पनि रसै हो तर आहार राम्ररी नपाकी वा नपची बनेको रस हो भनेर बुझ्नु पर्दछ) ।

### रसको काम

**वह्नेर्बलेन माधुर्यं स्निग्धतां याति तद्रसः ।**
**पुष्णाति धातूनखिलान्सम्यक्पक्वोऽमृतोपमः ॥५॥**

राम्ररी पचेको वा पाकेको पूर्वोक्त अनुसार बनेको रसले पुनः मधुर र चिल्लो हुँदै रगत आदि शरीरका धातुलाई पोषण गर्दछ । अतः यसरी राम्ररी पाकेको वा पचेको आहारको रस अमृत समान हुन्छ ।



### आमरसको काम

**मन्दवह्निविदग्धश्च कटुश्चाम्लो भवेद्रसः ।**
**विषभावं व्रजेद्वाऽपि कुर्याद्वा रोगसङ्करम् ॥६॥**

तर, मन्द अग्निका कारण रस पचेन भने त्यो विषसरह हुन पुग्दछ । यो पिरो र अमिलो हुन्छ र यसले ज्यानै लिन पनि सक्दछ । कथंकदाचित् यस्तो आम रस थोरै भएर आफैँले कुनै वित्तण्डा मचाउन नसक्ने अवस्थामा छ भने पनि यो त्रिदोषलाई दूषित पार्दै रगतमा विकार उत्पन्न गर्न, जरो फुटाउन तथा भगन्दर, कुष्ठ आदि जस्ता रोग उब्जाउन कारक तत्व बन्न पुग्दछ ।

**रस, मल र मूत्र**

**आहारस्य रसः सारः सारहीनो मलद्रवः ।**
**शिराभिस्तज्जलं नीतं वस्तौ मूत्रत्वमाप्नुयात् ॥७॥**
**तत्किट्टञ्च मलं ज्ञेयं तिष्ठेत् पक्वाशये च तत् ।**

यसरी आहार पचेर बन्ने सार तत्वलाई "रस" भनिन्छ भने त्यसपछि बाँकी रहने सारहीन तत्वलाई "मलद्रव (मलमूत्र)" भनिन्छ । यस्तो सारहीन झोल पदार्थ मूत्रवाही नसाहुँदै तल्लोपेटमा रहेको मूत्राशयमा पुग्दछ भने सारहीन ठोस कुरा पक्वाशयको एउटा भागमा पुगी दिसा भएर जम्मा हुन पुग्दछ ।

**मलको उत्सर्जन**

**वलित्रितयमार्गेण यात्यपानेन नोदितम् ॥८॥**
**प्रवाहिणी सर्जनी च ग्राहिकेति वलित्रयम् ।**

मलद्वार नजिक रहेका शङ्खका फुक्नेतिरको भागमा जस्तै तीन खण्ड वा तह (बलि) हुँदै मल शरीरबाट बाहिर निस्कने गर्दछ । यी तीन वलिलाई प्रवाहिणी, सर्जनी र ग्राहिका भनिन्छ ।

**रसको रगत बन्ने क्रम**

**रसस्तु हृदयं याति समान मरुतेरितः ॥९॥**
**रञ्जितः पाचितस्तत्र पित्तेनायाति रक्तताम् ।**

अग्निस्थानमा पचेको रस समान (नाइटो र त्यस वरिपरि बस्ने) वायुबाट धकेलिँदै मुटुमा पुग्दछ । त्यहाँ रञ्जक नामक पित्तमा रहने अग्निसँग मिसिई पुनः पच्दै त्यो रस रगतको रूपमा परिणत हुन पुग्दछ ।

**रगतको भूमिका**

## रक्तं सर्वशरीरस्थं जीवस्याधारमुत्तमम् ।।१०।।
## स्निग्धं गुरु चलं स्वादु विदग्धं पित्तवद्भवेत् ।

शरीरमा रहेको रगत सबै शरीरको मूल तत्व भएको हुनाले यो हरेक जीवको मूल आधार हुने गर्दछ । यो चिल्लो, गह्रौं, चञ्चल र स्वादिलो हुन्छ । जब यही रगत विकृत हुन्छ तब पित्त जस्तै (तितो) हुन पुग्दछ ।

**शुक्र र रजको उत्पत्ति**

## पाचिताः पित्ततापेन रसाद्या धातवः क्रमात् ।।११।।
## शुक्रत्वं यान्ति मासेन तथा स्त्रीणां रजो भवेत् ।

रस आदि गरिएका शरीरका सात धातु पित्तको तातोले पाक्ने गर्दछन् र क्रमैले एक महिनामा शुक्र उत्पन्न हुने गर्दछ । यही क्रममा एक महिनामा स्त्रीमा पनि रज उत्पन्न हुने गर्दछ ।

व्याख्या : नियमित प्रक्रिया हुनाले तुरुन्त बनेको हो कि जस्तो भान हुन्छ तर विशेष प्रकारका खानपिनले बाहेक सामान्यतः रज वा वीर्य चाँडै बन्दैन । पाँच किलोमिटर परको मूल बन्द हुँदा पाँच किलोमिटर वरको धारोमा पानी बन्द हुन पनि समय लाग्दछ । धारोमा आइरहेको पानी मूलबाट निस्कनासाथ आइरहेको त हुँदैन तर त्यस्तै भान भने दिन्छ ।

**गर्भको उत्पत्ति**

## कामान्मिथुनसंयोगे शुद्धशोणितशुक्रजः ।।१२।।
## गर्भः सञ्जायते नार्याः स जातो बाल उच्यते ।

मनले सङ्कल्प गरी स्त्री र पुरुषका बीचमा ग्राम्यधर्म हुँदा शुद्ध रगत (रज) र शुद्ध धातु मिल्न गई स्त्रीका गर्भाशयमा गर्भ बस्न पुग्दछ, जब यो गर्भ प्रकट हुन्छ तब त्यसलाई बालक भन्ने गरिन्छ ।

व्याख्या : शुद्ध शोणितः-शशासृक्प्रतिमं यच्च यद्वा लाक्षारसोपमम् । तदार्तवं प्रशंसन्ति यद्वासो न विरञ्जयेत् । त्र्यहं गत्वा प्रवृत्ति च कुरुते शोणितं स्त्रियः । व्युपद्रवा स्रंसते या गर्भस्तस्या ध्रुवं भवेत् ।

खरायोको रगत जस्तो वा लाहाको रङ्ग जस्तो कपडामा लागेर धुँदा दाग नबस्ने आर्तव (वा शोणित) लाई प्रंशसायोग्य आर्तव मानिएको छ ।

शुद्ध शुक्रः-स्फटिकाभं द्रवं स्निग्धं मधुरं मधुगन्धि च । शुक्रमिच्छन्ति केचित्तु तैलक्षौद्रनिभं तथा । वातादिदूषितं पूतिकुणपग्रन्थिरूपिणम् । क्षीणमूत्रपुरीषाभ्यां गन्धशुक्रं तु निष्फलम् ।

शुद्ध शुक्र स्फटिक जस्तो, तरल, चिल्लो, मधुर र महजस्तो बास्ना आउने हुन्छ । कसैले तेल र महजस्तो शुक्रलाई उत्तम मानेका छन् । वात आदिले प्रदूषित, पीप गनाए जस्तो गनाउने, सडेको जस्तो गन्ध आउने, गिर्खा सहितको, अति पातलो र कम, मलमूत्र मिसिएको वा त्यस्तो गगन्ध आउने शुक्रले काम गर्दैन ।



स्त्री, पुरुष र नपुंसक बच्चा जन्मने कारण

**आधिक्ये रजसः कन्या पुत्रः शुक्राधिके भवेत्॥१३॥**
**नपुंसकं समत्वेन यथेच्छा पारमेश्वरी ।**

गर्भाधानका समयमा ऋतुसम्बन्धी रगत (रज) बढी भए कन्या र शुक्र बढी भए पुत्र हुन्छ । बराबर भए नपुंसक सन्तान हुन्छ । यसको कारण मानिसले गर्ने कर्म आदि अनि परमेश्वरको इच्छा पनि हो ।

बालकदेखि वृद्धसम्मको ओखतीको मात्रा

**बालस्य प्रथमे मासि देया भेषजरक्तिका॥१४॥**
**अवलेही कृतैकैव क्षीरक्षौद्र सिताघृतैः ।**

**वर्धयेत्तावदेकैकां यावद्भवति वत्सरः ॥१५॥**
**माषैर्वृद्धिस्तदूर्ध्वं स्याद्यावत्षोडशवत्सरः ।**
**ततः स्थिरा भवेत्तावद्यावद्वर्षाणि सप्ततिः ॥१६॥**
**ततो बालकवन्मात्रा ह्रासनीया शनैः शनैः ।**
**मात्रेयं कल्कचूर्णानां कषायाणाञ्चतुर्गुणा ॥१७॥**

नवजात बालकलाई जन्मेको दिनदेखि पहिलो महिना (आमाको) दूध, साना मौरी (घर मौरी) को मह, चिनी र गाईको घिउमध्ये जे उपयुक्त हुन्छ त्यसमा एक रत्ती सुवर्णादिक औषधी हाली चटनी बनाएर खुवाउनू । दोश्रो महिनामा दुई रत्ति, तेश्रो महिनामा तीन रत्ति गर्दै बढाउँदै एक वर्षसम्म खुवाउनु पर्दछ । यसै गरी दोश्रो वर्षमा दुई मासा, तेश्रो वर्षमा तीन मासा गर्दै सोह्र वर्षसम्म खुवाउनु पर्दछ । सत्तरी वर्षपछि जसरी बालकलाई बढाउँदै खुवाइएको हुन्छ त्यसरी नै घटाउँदै खुवाउनु पर्दछ । बालक र वृद्धको उपचार विधि समान हुने हुनाले यसो गरिएको हो । वृद्धावस्थामा औषधीजन्य जडीबुटीका बोक्राको काँडापानी, औषधीको धुलो वा अन्य काँडापानी बालकलाई भन्दा चार गुना बढी दिनु पर्दछ ।



व्याख्या:- बालक दूध मात्र पिउने भए दूधसँग, दूध र अन्न पनि खाने भए महसँग र अन्न मात्र खाने भए चिनीसँग खुवाउने भनी बुझ्नू । यसरी खुवाउने उपरोक्त औषधी विभिन्न द्रव्यको संयोजन गरी बनाइएको हुन्छ । त्यस्तो औषधी उपलब्ध नहुँदा स्वर्ण आदि भष्मको प्रयोग गर्ने र त्यो पनि नहुँदा सुन, चाँदी आदि धातु घोटेर खुवाउन सकिने विधान अन्यत्र ग्रन्थमा उल्लेख गरिएका छन् ।

### जन्मेदेखि गर्न हुने कुरा

**अञ्जनञ्च तथा लेपः स्नानमभ्यङ्गकर्म च ।**
**वमनं प्रतिमर्शश्च जन्मप्रभृति शस्यते ॥१८॥**

बालकका आँखामा गाजल लगाउन, शरीरमा बुकुवा दल्न, नुहाउन, तेल आदि दल्न र बान्ता गराउन वा पिचकारीले मलद्वार मार्फत आन्द्रा सफा गर्न बालक जन्मेदेखि नै गर्नु हितकारी हुन्छ ।

### निश्चित उमेर नपुग्दासम्म गर्न नहुने कुराहरू

**कवलः पञ्चमाद्वर्षादष्टमान्नस्यकर्म च ।**
**विरेकः षोडशाद्वर्षाद्विंशतेश्चैव मैथुनम् ॥१९॥**

बालक पाँच वर्षको भएपछि मात्र औषधीपानीले मुख कुला गर्न दिनू (वा सिकाउनू) । आठ वर्षको भएपछि मात्र नाकबाट नस हाल्न दिनू (वा सिकाउनू) । सोह्र वर्षको भएपछि मात्र दिसा खुलाउने कडा औषधीको प्रयोग गर्नू (वा गर्न सिकाउनू)। अनि बीस वर्षको भएपछि मात्र ग्राम्यधर्ममा सहभागी हुनु पर्दछ (स्त्रीको हकमा ग्राम्यधर्मको नियम सोह्र वर्ष त पुरुषको हकमा पच्चीस वर्ष पनि कुनै ग्रन्थमा उल्लेख भएको छ । भनिएको छ-पञ्चविंशतिमे वर्षे पुमान् नारी तु षोडशे । समत्वागतवीर्यौ तौ जानीयात् कुशलो भिषक् ।)

### विभिन्न कुरा नाश हुने उमेर

**बाल्यं वृद्धिर्वपुर्मेधा त्वग्दृष्टिः शुक्रविक्रमौ ।**
**बुद्धिः कर्मेन्द्रियञ्चेतो जीवितं दशतो ह्रसेत् ॥२०॥**



जन्मेको दश वर्षपछि वाल्यावस्था नाश हुन थाल्दछ । बीस वर्ष पछि शरीर बढ्ने क्रममा ह्रास आउँदछ । तीस वर्षपछि शरीर मोटाउने क्रमम क्रममा ह्रास आउँदछ । (यहाँ वपुको स्थानमा कुनै पुस्तकमा छवि शब्द छ, यसको अर्थ कान्ति भन्ने हुन्छ) । चालीस वर्षपछि पढेको कुरा सम्झन सक्ने शक्तिमा ह्रास आउँदछ । पचास वर्षपछि शरीरको छाला शिथिल हुन थाल्दछ । साठी वर्षपछि आँखाको शक्ति कमजोर हुन थाल्दछ । सत्तरी वर्षपछि वीर्य रहँदैन । अस्सी वर्षपछि पराक्रममा ह्रास आउँदछ । नब्बे वर्षपछि बुद्धिमा ह्रास आउँदछ । एक सय वर्षपछि शरीरका कर्मेन्द्रियले काम गर्न छाड्दछन् । एक सय दश वर्षपछि चेतनाशक्ति नष्ट हुन्छ र एक सय बीस वर्षमा मानिस नै नष्ट हुन्छ । यसरी हरेक दश दश वर्षमा एक एक थोक ह्रास हुँदै जान्छ । (सामान्य नियम यही हो अपवादमा जे पनि हुन सक्दछ) ।

### वातप्रकृति भएको शरीरको लक्षण

**अल्पकेशः कृशो रूक्षो वाचालश्चलमानसः ।**
**आकाशचारी स्वप्नेषु वातप्रकृतिको नरः ॥२१॥**

पातलो कपाल, दुब्लो र तेजहीन (रुखो) शरीर, पटरपटर बोलिरहने स्वभाव (वाचाल), चञ्चलचित्त तथा आफू आकाशतिर उडिरहेको सपना बढी देख्ने जस्ता लक्षण हुने मानिसलाई वातप्रकृति (वायुको प्रभाव शरीरमा बढी भएको) को मानिस भनिन्छ ।

### पित्तप्रकृति भएको शरीरको लक्षण

**अकालपलितैर्व्याप्तो धीमान् स्वेदी च रोषणः ।**
**स्वप्नेषु ज्योतिषां द्रष्टा पित्तप्रकृतिको नरः ॥२२॥**

उमेर नपुग्दै कपाल फुल्नु, बुद्धिमान् हुनु, अति धेरै पसिना आउनु, रिसाउने स्वभाव हुनु र सपनामा नक्षत्र-तारा-ग्रह-अग्नि आदि देख्नु जस्ता लक्षण पित्तप्रकृति हुने मानिसका लक्षण हुन् ।

### कफप्रकृति भएको शरीरको लक्षण

**गम्भीरबुद्धिः स्थूलाङ्गः स्निग्धकेशो महाबलः ।**

**स्वप्ने जलाशयालोकी श्लेष्मप्रकृतिको नरः ॥२३॥**

गम्भीर बुद्धि (क्षमाशील बुद्धि), पुष्ट शरीर, चिल्लो कपाल, अधिक शारीरिक बल र सपनामा जलाशय (तलाउ, पोखरी आदि) देखिरहने मानिस कफ प्रकृतिको मानिस हो ।

### मिश्रित प्रकृतिको शरीरको लक्षण

**ज्ञातव्या मिश्रचिह्नैश्च द्वित्रिदोषोल्बणा नराः ।**

उपरोक्त तीन प्रकृतिमध्ये कुनै दुई प्रकृतिको लक्षण देखिए द्वि-दोषज र तीन प्रकृतिको लक्षण देखिए त्रि-दोषज मानिस हुन्छ भनी जान्नू ।

### निद्रा, मूर्छा, भ्रम र तन्द्राको कारण

**तमः कफाभ्यां निद्रा स्यान्मूर्च्छा पित्ततमोभवा ॥२४॥**
**रजः पित्तानिलैर्भ्रान्तिस्तन्द्रा श्लेष्मतमोऽनिलैः ।**

तमोगुण र कफ मिलेपछि निद्रा आउँदछ । तमोगुण र पित्त मिलेपछि मूर्छा हुने गर्दछ । रजोगुण, पित्त र वायु मिलेपछि भ्रम हुन्छ । कफ, तमोगुण र वायु मिलेपछि तन्द्रा लाग्दछ वा हुन्छ ।

**ग्लानिको कारण**

**ग्लानिरोजःक्षयाद्दुःखादजीर्णाच्च श्रमाद्भवेत् ॥२५॥**
**यः सामर्थ्येऽप्यनुत्साहस्तदालस्यमुदीर्यते ।**

कुनै कारणवश शरीरमा रहने कुनै एक वा सबै (सात वटै) धातु खिइए पछि, दुःख हुँदा, खाएको कुरा नपच्दा र परिश्रमले गर्दा मानिसलाई मानसिक दुःख (ग्लानि) हुन्छ । यसलाई अर्को शब्दमा हर्ष-क्षय पनि भनिन्छ । (प्रायः ग्लानि शब्दले परिश्रम बिनाको थकाईलाई बुझाउँदछ) ।



**हाई**

**चैतन्यशिथिलत्वाद्यः पीत्वैकं श्वासमुद्वमेत् ॥२६॥**
**विदीर्णवदनः श्वासं जृम्भा सा कथ्यते बुधैः ।**

चेतना (वा होस्) मा शिथिलता आएपछि मानिस एक पटकको सासलाई पनि मुखमा केही समय रोकेर फेरी त्यसलाई मुख बाएर बाहिर निकाल्दछ, यसलाई हाई आउनु भनिन्छ ।

**हाच्छिउँ**

**उदानप्राणयोरूर्ध्वयोगान्मौलिकफस्रवात् ॥२७॥**
**शब्दः सञ्जायते नस्तः क्षुतन्तत् कथ्यते बुधैः ।**

(घाँटीमा रहने) उदान नामक वायु र (हृदयमा रहने) प्राण नामक वायुको दिमागमा मिलन भएपछि कफका छिटा खस्दछ । यी दुई वायुको मिलन हुँदा शब्द उत्पन्न हुन्छ । यसरी उत्पन्न हुने शब्दलाई हाच्छिउँ आउनु भनिन्छ ।

**डकार**

**उदानकोपादाहारसुस्थितत्वाच्च यद्भवेत् ॥२८॥**
**पवनस्योर्ध्वगमनं तमुद्गारं प्रचक्षते ।**

उदान वायु दूषित हुँदा तथा अन्न आदि आहार पेटभित्र आफ्नो स्थानमा पुगी कतै स्थिर हुँदा जुन वायु माथितिर सरेर मुख एवं नाकबाट बाहिर निस्कन्छ त्यो वायुलाई डकार भनिन्छ ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण पिरचितायां शार्ङ्गधरसंहितायां पूर्वखण्डे शारीरे
आहारादिगतिकथनं नाम षष्ठोऽध्यायः

✷

शार्ङ्गधर संहिताको पूर्वखण्ड अन्तर्गत छैटौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-२२०.५+२८.५=२४९

✷

# अथ सप्तमोऽध्यायः

## सातौँ अध्याय

### रोगगणना

**रोगाणां गणना पूर्वं मुनिभिर्या प्रकीर्त्तिता ।**
**मयाऽत्र प्रोच्यते सैव तद्भेदा बहवो मताः ॥१॥**

पहिलेका मुनिजनले रोगको गणनाका बारेमा जे बताए त्यो नै म यहाँ बताउँदछु । रोगको सङ्ख्या धेरै छ ।

### जरोका प्रकार

**पञ्चविंशतिरुद्दिष्टा ज्वरास्तद्भेद उच्यते ।**
**पृथग्दोषैस्तथा द्वन्द्वभेदेन त्रिविधः स्मृतः ॥२॥**



पच्चीस किसिमका जरोका बारेमा बताइन्छ । वात, पित्त र कफका बेग्लाबेग्लै दोषले आउने तीन र यी त्रिदोषमध्ये कुनै दुई दोष मिलेर आउने जरो तीन किसिमका हुन्छन् । (वातज्वर, कफज्वर र पित्तज्वर तथा वातपित्तज्वर, वातकफज्वर र पित्तकफज्वर) ।

व्याख्या : (क) वातजरो : शरीर काम्नु, जरो तलमाथि हुनु, घाँटी-ओठ र मुख सुक्नु, निद्रा नलाग्नु, हाच्छिउँ नआउनु, शरीर रुखो हुनु, टाउको र अन्य अङ्ग दुख्नु, मुख सुक्नु, दिसा नखुल्नु तथा शूल, पेट फुल्नु र हाई आइरहनु । (ख) पित्तजरो : धेरै जरो आउनु, आउँ पर्नु, निद्रा कम लाग्नु, बान्ता हुनु, घाँटी-ओठ-मुख-नाक पाक्नु, पसिना आउनु, बडबडाउनु, मुख तितो हुनु, बेहोस हुनु, डाह हुनु, भ्रम हुनु, तिर्खा लाग्नु, मल-मूत्र-आँखा-शरीरको छाला पहेँलो हुनु । (ग) कफजरो : शरीरले भिजेको वस्त्र ओढेको जस्तो चिसो महशूष गर्नु, हल्का जरो आउनु, अल्छी लाग्नु, मुख गुलियो हुनु, मलमूत्र सेतो हुनु, शरीर जकडिनु, खान मन नलाग्नु, शरीर भारी हुनु, चिसो लाग्नु, सुक्खा बान्ता हुनु, बेलाबेलामा जीउ सिरिङ सिरिङ हुनु, धेरै निद्रा पर्नु, नाडीको गति

मन्द हुनु, हल्का दिसा हुनु, मुख पाक्नु, कफ निस्कनु, खोकी लाग्नु, आँखा सेतो हुनु, गर्मी रुचाउनु, पाचन शक्ति कमजोर हुनु र दुख्नु । (घ) वातपित्तजरो : तिर्खा, मूर्छा, भ्रम, डाह, अनिद्रा, टाउको दुख्ने, घाँटी र मुख सुक्ने, बान्ता हुने, खान मन नलाग्ने, अँध्यारो देखिने, जोर्नी दुख्ने र हाई आउने । (ङ) वातकफजरो : शरीर रुखो हुनु, जोर्नी दुख्नु, निद्रा लाग्नु, शरीर भारी हुनु, टाएको भारी हुनु, नाकबाट पानी बहनु, खोकी लाग्नु, पसिना आउनु, डाह हुनु र जरो ठिकै आउनु । (च) पित्तकफजरो : कफका ढिक्का आउनु, मुख तितो हुनु, तन्द्रा आउनु, बेहोस हुनु, खोकी लाग्नु, खान मन नलाग्नु, तिर्खा लाग्नु, बेलाबेलामा शरीर भतभती पोल्नु, चिसो हुनु, पसिना आउनु र कफबाट पित्त आउनु ।

**एकश्च सन्निपातेन तद्भेदा बहवो स्मृताः ।**
**प्रायशः सन्निपातेन पञ्च स्युर्विषमाज्वराः ॥३॥**

वात, पित्त र कफ यी तीन वटै दोष मिलेर आउने सन्निपात जरो धेरै किसिमको हुन्छ । सन्निपात जरोमध्ये विषमज्वर प्रायः पाँच किसिमको हुन्छ ।



व्याख्या : सन्निपातजरो : छिनछिनमा एक्कासी डाह हुनु, छिनमै चिसो हुनु, हाड-जोर्नी र टाउको दुख्नु, आँखामा आँशु भरिनु, कालो-रातो र ठूलठूला आँखा हुनु, कानमा आवाज गुञ्जनु र दुख्नु, घाँटी पोल्नु, तन्द्रा, बेहोसी, बरबराउनु, खोकी लाग्नु, तिर्खा लाग्नु, खान मन नलाग्नु, भ्रम हुनु, कालो, शिथिल र खस्रो जिब्रो हुनु, रगत मिसिएको थुक आउनु, टाउको यताउता झट्कार्नु, निद्रा नलाग्नु, छाती दुख्नु, पसिना आउनु, कतिखेर कतिखेर दिसापिसाब हुनु, घाँटी बज्नु, शरीरमा काला राता डाबर देखिनु, विस्तारै बोल्नु, कान-नाक-मुख आदि शरीरका प्वाल पाक्नु, पेट भारी हुनु, दिउस धेरै निद्रा लाग्नु राती नसुत्नु, कहिले गाउने र कहिले रुने गर्नु र कहिले नाच्ने त कहिले हाँस्ने गर्नु ।

**सन्ततः सततश्चैव अन्येद्युष्कस्तृतीयकः ।**
**चातुर्थकश्च पञ्चैते कीर्तिता विषमज्वराः ॥४॥**

सन्तत, सतत, अन्येद्यु, तृतीयक र चतुर्थक : यी पाँच प्रकारका विषमज्वर हुन् ।

व्याख्या : सात, दश वा बाह्रदिनसम्म एकनासले आउने जरोलाई सन्तत भनिन्छ । रातदिन गरेर दिनको दुईपटक आउने जरोलाई सतत भनिन्छ । रातोदिन एकनासले आउने जरोलाई अन्येद्यु भनिन्छ । एकदिन बिराएर आउने जरोलाई तृतीयक भनिन्छ भने दुई दिन बिराएर आउने जरोलाई चतुर्थक भनिन्छ ।

**तथागन्तुज्वरोऽप्येकस्त्रयोदशविधो मतः ।**
**अभिचारग्रहावेशशापैरागन्तुकस्त्रिधा ॥५॥**
**श्रमाच्छेदात्क्षताद्दाहाच्चतुर्धा घातजो ज्वरः ।**

यसैगरी आगन्तुक जरोका तेह्र प्रकार हुन्छन् । अभिचार, ग्रहावेश र श्राप गरी तीन किसिमको जरो आगन्तुक जरो हो । परिश्रमले आउने, आगो आदिले पोल्नाले आउने, घाउका कारण आउने र हतियार आदिले काटेर आउने समेत गरी चार प्रकारका जरोलाई "अभिघात जरो" भनिन्छ ।



व्याख्या : शत्रु मार्न आदि भनी गरिएको होमले गर्दा आउने अथवा सर्सिउँको होम गर्नाले आउने जरोलाई "अभिचार जरो" भनिन्छ । ब्रह्मराक्षस आदिका कारणले आउने जरोलाई "ग्रहावेश जरो" भनिन्छ ।

**कामाद्भीतेः शुचो रोषाद्विषादौषधगन्धतः ॥६॥**
**अभिषङ्गज्वराः षट् स्युरेवं ज्वरविनिश्चयः ।**

सहवास गर्न मन भई नपाउँदा आउने जरोलाई "कामज्वर" भनिन्छ । डरले आउने जरोलाई "भयज्वर" भनिन्छ । शोकका कारण आउने जरोलाई "शोकज्वर" भनिन्छ । रिसका कारण आउने जरोलाई "क्रोधज्वर" भनिन्छ । विषका कारण आउने जरोलाई "विषज्वर" भनिन्छ । (औषधी आदिको) तिव्र गन्धले आउने जरोलाई "गन्धज्वर" भनिन्छ । यी छ थरीका जरोलाई "अभिषङ्ग" भनिन्छ ।

### आउँ र ग्रहणी रोगका प्रकार

**पृथक्त्रिदोषैः सर्वैश्च शोकादामाद्भयादपि ॥७॥**
**अतीसारः सप्तधा स्याद्ग्रहणी पञ्चधा मता ।**
**पृथग्दोषैः सन्निपातात्तथा चामेन पञ्चमी ॥८॥**

आउँ सात किसिमका हुन्छन् (वात, पित्त, कफ, सन्निपात, शोक, आम र भयले हुने) । ग्रहणी रोग वात, पित्त, कफ, सन्निपात र आमजन्य गरी पाँच किसिमका हुन्छन् ।

### पखालाका प्रकार

**प्रवाहिका चतुर्धा स्यात्पृथग्दोषैस्तथास्रतः ।**

पखाला (प्रवाहिका) वात, पित्त, कफ र रगतका कारण हुने गरी चार प्रकारका हुन्छन् ।

### अजीर्णका प्रकार



**अजीर्णं त्रिविधं प्रोक्तं विष्टब्धं वायुना मतम् ॥९॥**
**पित्ताद्विदग्धं विज्ञेयं कफेनामं तदुच्यते ।**
**विषाजीर्णं रसादेकं...।**

वायुले हुने विष्टब्ध, पित्तले हुने विदग्ध, र कफले हुने आम गरी अजीर्ण तीन किसिमका हुन्छन् । अन्नका कारण हुने एउटै अजीर्णलाई भने विषाजीर्ण भनिन्छ ।

### अलसक र हैजा आदिका प्रकार

**...दोषैः स्यादलसस्त्रिधा ॥१०॥**
**विसूची त्रिविधा प्रोक्ता दोषैः सा स्याते पृथक् पृथक् ।**
**दण्डकालसकश्चैव एकैव स्याद्विलम्बिका ॥११॥**

त्रिदोषजन्य तीन किसिमका अलसक रोग हुन्छन् । हैजा पनि त्रिदोषजन्य तीन किसिमका हुन्छन् । दण्डालसक र विलम्बिका रोग भने एक एक प्रकारका हुन्छन् ।

**अल्काईका प्रकार**

**अर्शांसि षड्विधान्याहुर्वातपित्तकफास्ततः ।**
**सन्निपाताच्च संसर्गात्तेषां भेदो द्विधा स्मृतः ॥१२॥**
**सहजोत्तरजन्मभ्यान्तथा शुष्कार्द्रभेदतः ।**

वात, पित्त, कफ, सन्निपात, रक्त र संसर्ग गरी छ प्रकारका अल्काई हुन्छन् । यसका पनि जन्मजात र पछि हुने गरी दुई भेद हुन्छन् । सुक्खा र गिलो गरी फेरी यसका पनि दुई किसिम हुन्छन् ।

**चर्मकीलका प्रकार**

**त्रिधैव चर्मकीलानि वातात्पित्तात्कफादपि ॥१३॥**



वात, पित्त र कफजन्य गरी चर्मकील रोग पनि तीन किसिमका हुन्छन् ।

**कीराहरू**

**एकविंशतिभेदेन कृमयः स्युर्द्विधोच्यते ।**
**बाह्यास्तथाऽभ्यन्तरे च तेषु यूका बहिश्चराः ॥१४॥**
**लिक्षाश्चान्येऽन्तरचराः कफात्ते हृदयादकाः ।**
**अन्त्रादा उदरावेष्टाश्चूरवश्च महागुहाः ॥१५॥**
**सुगन्धा दर्भकुसुमास्तथा रक्ताश्च मातरः ।**
**सौरसा लोमविध्वंसा रोमद्वीपा उदुम्बराः ॥१६॥**
**केशादाश्च तथैवान्ये शकृज्जाता मकेरुकाः ।**
**लेलिहाश्च मलूनाश्च सौसुरादाः ककेरुकाः ॥१७॥**

## तथान्यः कफरक्ताभ्यां सञ्जातः स्नायुकः स्मृतः ।

बाहिरी र भित्री दुई थरीका गरी एक्काईस किसिमका कीरा हुन्छन् । यिमध्ये जुम्रा, लिखा र चमजुम्रा शरीर बाहिर हुन्छन् । बाँकी अठार प्रकारका किरा शरीर भित्र हुन्छन् । मुटुमा हुने, आन्द्रामा हुने, चुर्ना, महागुहा, सुगन्धा र दर्भकुसुम नामका किरा कफले उत्पन्न हुन्छन् । मातर, सौरस, लोमविध्वंश, रोमद्वीप, उदुम्बर र केशाद नामका कीरा रगतबाट उत्पन्न हुन्छन् । मकेरुक, लेलिह, मलून, सौसुराद र ककेरुक नामका कीरा मलबाट उत्पन्न हुन्छन् । यस्तै कफ र रगतबाट उत्पन्न हुने कीरालाई स्नायुक भनिन्छ ।

## व्रणस्य कृमयश्चान्ये विषमा बाह्ययोनयः ॥१८॥

बाहिरी घाउखटिरामा हुने अन्य अनेका थरी किरा पनि हुन्छन् ।

**पाण्डुरोग र कमलपित्तका प्रकार**

## पाण्डुरोगाश्च पञ्च स्युर्वातपित्तकफैस्त्रिधा ।
## त्रिदोषैर्मृत्तिकाभिश्च...।



वात, पित्त, कफ, सन्निपात र माटो खानाले हुने गरी पाँच प्रकारका पाण्डु रोग हुन्छन् ।

## ...तथैका कामला स्मृता ॥१९॥
## स्यात्कुम्भकामला चैका तथैकञ्च हलीमकम् ।

यसैगरी कमलपित्त रोग (प्रायः) एक प्रकारको हुन्छ । (पाण्डुरोगलाई बेवास्ता गर्नाले कमलपित्त हुन्छ) । कमलपित्तका कुम्भकामला र हलीमक गरी दुई भेद हुन्छन् ।

व्याख्या : कुम्भकामलामा बान्ता हुने, खान मन नलाग्ने, डकार आइरहने, जरो आउने, त्यत्तिकै अचानक थकाई लाग्ने, तथा सास फुल्ने, खोकी लाग्ने र आउँ पर्ने लक्षण हुन्छ । वातविकार एवं पित्तविकार बढी रोगी हरियो, पहैँलो वा कालो देखिने; बल र उत्साह नाश हुने, उँग आइरहने, पाचनशक्ति नाश हुने, हल्का जरो आउने, सहवास गर्न इच्छा नहुने, अङ्ग जरजर हुने, पोल्ने, तिर्खा

लागिरहने, अन्न हेर्न मन नलाग्ने र रिँगटा वा भ्रम हुने जस्ता लक्षण देखिनुलाई हलीमक भनिन्छ ।

रक्तपित्तका प्रकार

**रक्तपित्तं त्रिधा प्रोक्तमूर्ध्वगं कफसङ्गतम् ॥२०॥**
**अधोगं मारुताज्ज्ञेयं तद् द्वयेन द्विमार्गगम् ।**

रक्तपित्त तीन किसिमको हुन्छ : माथितिर जान खोज्ने, तलतिर जान खोज्ने र दुवैतिर जान खोज्ने । माथितिर जान खोज्ने अर्थात् नाक, मुख आदिबाट निस्कने रक्तपित्त कफविकारले गर्दा हुन्छ । मलद्वार, आदिबाट निस्कने रक्तपित्त वातविकारका कारणले हुने गर्दछ । वात र कफ दुवैका कारणले हुने रक्तपित्तमा दुवैतिरबाट रगत निस्कने गर्दछ ।

खोकीका प्रकार

**कासाः पञ्च समुद्दिष्टास्ते त्रयस्तु त्रिभिर्मलैः ॥२१॥**

**उरः क्षताच्चतुर्थः स्यात्क्षयाद्धातोश्च पञ्चमः ।**

वात, पित्त, कफ, छातीमा आघात भएर हुने र धातु क्षय भएर हुने गरी खोकी पाँच प्रकारका हुन्छन् ।

क्षयरोगका प्रकार

**क्षयाः पञ्चैव विज्ञेयास्त्रिभिर्दोषैस्त्रयश्च ते ॥२२॥**
**चतुर्थः सन्निपातेन पञ्चमः स्यादुरःक्षतात् ।**

वात, पित्त, कफ, सन्निपात र उरक्षत गरी क्षयरोग पनि पाँच किसिमका हुन्छन् ।

सुकेनासका प्रकार

**शोषाः स्युः षट्प्रकारेण स्त्रीप्रसङ्गाच्छुचो व्रणात् ॥२३॥**
**अध्वश्रमाच्च व्यायामाद् बार्धक्यादपि जायते ।**

शरीर सुकेर जाने रोग पनि क्षयरोगकै एक प्रकार हो । अती मैथुन, अती शोक, चोटपटक, अती हिँडाई, अति व्यायाम वा श्रम वा दण्ड र वृद्धावस्था गरी छ कारणले शरीर सुक्ने (शोषरोग) गर्दछ ।

### दमका प्रकार

**श्वासाश्च पञ्च विज्ञेयाः क्षुद्रः स्यात्तमकस्तथा ॥२४॥**
**ऊर्ध्वश्वासो महाश्वासच्छिन्नश्वासश्च पञ्चमः ।**

श्वासप्रश्वास सम्बन्धी रोग वा दम पनि क्षुद्र, तमक, ऊर्ध्व, महा र छिन्न गरी पाँच किसिमका हुन्छन् ।

व्याख्या : रुखो खाने र परिश्रम गर्ने कारणले हुने दमलाई "क्षुद्र" भनिन्छ । शरीर भित्र रहेको वायु उल्टो गतिले कफलाई समेत साथमा लिएर हिँड्न थालेपछि पिनास आदि रोग निकाल्दै हुने दमलाई "तमक" भनिन्छ । धेरै बेर लामो सास तान्ने र कफ भरिएर आउने खालको दमलाई "ऊर्ध्व" भनिन्छ । साँढे छिउँके जसरी ठूलो आवाज निकालेर सास लिने दमलाई "महा" भनिन्छ । रोकिई रोकिई सास फेर्ने खालको दमलाई "छिन्न" भनिन्छ ।



### बाडुलीका किसिम

**कथिताः पञ्च हिक्कास्तु तास्तु क्षुद्राऽन्नजा तथा ॥२५॥**
**गम्भीरा यमला चैव महती पञ्चमी तथा स्मृता ।**

बाडुली पनि पाँच किसिमका हुन्छन् । क्षुद्रा, अन्नजा, गम्भीरा, यमला र महती ।

व्याख्या : जुन बाडुली धेरै बेरको अन्तरालमा घाँटी र मुटु हुँदै निस्कन्छ त्यसलाई "क्षुद्र" भनिन्छ । अन्न वा पानी धेरै खाँदा वा पिउँदा आउने बाडुलीलाई "अन्नजा" भनिन्छ । नाइटो नजिकबाट आउने र तिर्खा, जरो आदि अन्य समस्या समेत

लेराउने खालको बाडुलीलाई "गम्भीरा" भनिन्छ । अडकिएर दुईदुई पटक आउने र आउँदा टाउको र काँध कँपाउने खालको बाडुलीलाई "यमला" भनिन्छ । मर्मस्थान दुखाउँदै र पूरै शरीरलाई कँपाउँदै आइरहने बाडुलीलाई "महती" भनिन्छ ।

अग्निविकारका प्रकार

**चत्वारोऽग्नेर्विकाराः स्युर्विषमो वातसम्भवः ॥२६॥**
**तीक्ष्णः पित्तात्कफान्मन्दो भस्मको वातपित्तयोः ।**

जठराग्निका चार किसिमका विकार हुन्छन् । वातले विषमाग्नि, पित्तले तिक्ष्णाग्नि, कफले मन्दाग्नि र वात-पित्तले भस्माग्नि हुन्छ ।

अरुचीका प्रकार

**पञ्चैवारोचका ज्ञेया वातपित्तकफैस्त्रिधा ॥२७॥ सन्निपातान्मनस्तापात्...**



भोक नलाग्ने रोग पाँच किसिमका हुन्छन् । वातारोचक, पित्तारोचक, कफारोचक, सन्निपातारोचक र मनमा पीर पर्नाले हुने अरोचक ।

बान्ताका प्रकार

**...छर्दयः सप्तधा मताः ।**
**त्रिभिर्दोषैः पृथक्त्रिस्रः कृमिभिः सन्निपाततः ॥२८॥**
**घृणया च तथा स्त्रीणां गर्भाधानाच्च जायते ।**

बमन रोग वातविकारले हुने, पित्तविकारले हुने, कफविकारले हुने, कीराको विकारले हुने, सन्निपातले हुने, घृणाले हुने र गर्भधारण गर्नाले स्त्रीलाई हुन गरी सात किसिमका हुन्छन् ।

घाँटीबस्ने रोगका प्रकार

**स्वरभेदाः षडेव स्युर्वातपित्तकफैस्त्रयः ॥२९॥**

**मेदसा सन्निपातेन क्षयात्षष्ठः प्रकीर्तितः ।**

घाँटी बस्ने रोग वातविकारले, पित्तविकारले, कफविकारले, बोसो बढेर, सन्निपातले र क्षयरोगले हुने समेत गरी छ किसिमका हुन्छन् ।

### तिर्खारोगका प्रकार

**तृष्णा च षड्विधा प्रोक्तावातात्पित्तात्कफादपि ॥३०॥**
**त्रिदोषैरुपसर्गेण क्षयाद्धातोश्च षष्ठिका ।**

तिर्खारोग पनि वातविकारले, पित्तविकारले, कफविकारले, सन्निपातले, हातहतियार आदिले शरीरमा घाउ वा चोटपटक लाग्नाले (उपसर्गज) र शरीरका धातु क्षय हुनाले हुने गरी छ प्रकारका हुन्छन् ।

व्याख्या : पटकपटक पानी पिउन मन लाग्ने र पानी पिउँदा पनि तिर्खा नमेटिने रोगलाई तिर्खारोग भनिन्छ ।



### मूर्च्छा, भ्रम, निद्रा, तन्द्रा, संन्यास र ग्लानिका प्रकार

**मूर्च्छा चतुर्विधा ज्ञेयाः वातपित्तकफैः पृथक् ॥३१॥**
**चतुर्थी सन्निपातेन तथैकश्च भ्रमः स्मृतः । निद्रा तन्द्रा च संन्यासो**
**ग्लानिश्चैकैकशः स्मृताः ॥३२॥**

वात, पित्त, कफ र सनिन्नपातजन्य गरी मूर्छा चार प्रकारका हुन्छन् । भ्रम, निद्रा, तन्द्रा, संन्यास र ग्लानि रोग एक एक किसिमका हुन्छन् ।

### मदरोगका प्रकार

**मदाः सप्त समाख्याता वातपित्तकफैस्त्रयः ।**
**त्रिदोषैरसृजा मद्याद्विषादपि स सप्तमः ॥३३॥**

मदरोग वातविकारले, पित्तविकारले, कफविकारले, सन्निपातले, रक्तविकारले र धेरै मद्य पिउनाले हुने गरी सात प्रकारका हुन्छन् ।

**मदात्ययका प्रकार**

**मदात्ययश्चतुर्धा स्याद्वातपित्तकफादपि ।**
**त्रिदोषैरपि विज्ञेय एकः परमदस्तथा ॥३४॥**
**पानाजीर्णं तथा चैकं तथैकः पानविभ्रमः ।**
**पानात्ययस्तथा चैको...।**

मदात्यय वात, पित्त, कफ र सन्निपातजन्य गरी चार प्रकारका हुन्छन् । परमपद, पानाजीर्ण, पानविभ्रम र पानात्यय गरी अर्को प्रकारले यो चार प्रकारको हुन्छ ।

**डाहका प्रकार**


**...दाहाः सप्त मतास्तथा ॥३५॥**
**रक्तपित्तात्तथा रक्तात्तृष्णायाः पित्ततस्तथा ।**
**धातुक्षयान्मर्मघाताद्रक्तपूर्णोदरादपि ॥३६॥**

डाह रोग रक्तपित्त विकारले, रगतको विकारले, तिर्खा रोक्नाले, पित्तविकारले, धातु क्षय हुनाले, मर्मस्थलमा चोटपटक लाग्नाले र हातहतियार आदिले चोटपटक लागी रगत जम्नाले हुने समेत गरी सात किसिमका हुन्छन् ।

**उन्मादका प्रकार**

**उन्मादाः षट् समाख्यातास्त्रिभिर्दोषैस्त्रयश्च ते ।**
**सन्निपाताद्विषाज्ज्ञेयः षष्ठो दुःखेन चेतसः ॥३७॥**

उन्माद रोग वात, पित्त, कफ, सन्निपात, विष र मनको दुःखले हुने गरी जम्मा छ किसिमका हुन्छन् ।

### भूतोन्मादका प्रकार

**भूतोन्मादा विंशतिः स्युस्ते देवाद्दानवादपि । गन्धर्वात्किन्नराद्यक्षात्पितृभ्यो गुरुशापतः ॥३८॥**
**प्रेताच्च गुह्यकाद्वृद्धात्सिद्धाद्भूतात्पिशाचतः ।**
**जलाधिदेवतायाश्च नागाच्च ब्रह्मराक्षसात् ॥३९॥**
**राक्षसादपि कूष्माण्डात्कृत्या वेतालयोरपि ।**

भूतोन्माद बीस किसिमका हुन्छन् : देवगण, दानवगण, गन्धर्वगण, किन्नरगण, यक्षगण, पितृगण, गुरुको श्राप, प्रेत, गुह्यक, वृद्ध, सिद्ध, भूत, पिशाच, जलका देवता, नाग, ब्रह्मराक्षस, राक्षस, कूष्माण्डा, कृत्या र वेतालका कारण हुने ।

### अपस्मारका प्रकार

**अपस्मारश्चतुर्द्धा स्यात्समीरात्पित्ततस्तथा ॥४०॥**
**श्लेष्मणोऽपि तृतीयः स्याच्चतुर्थः सन्निपाततः ।**

वात, पित्त, कफ र सन्निपातजन्य गरी अपस्मार रोग चार किसिमका हुन्छन् ।

### आमवातका प्रकार

**चत्वारश्चामवाताः स्युर्वातपित्तकफैस्त्रिधा ॥४१॥ चतुर्थः सन्निपातेन...।**

वात, पित्त, कफ र सन्निपातजन्य गरी आमवात रोग पनि चार प्रकारका हुन्छन् ।

### शूलरोगका प्रकार

**...शूलान्यष्टौ बुधा जगुः ।**
**पृथग्दोषैस्त्रिधा द्वन्द्वभेदेन त्रिविधान्यपि ॥४२॥**
**आमेन सप्तमं प्रोक्तं सन्निपातेन चाष्टमम् ।**

विद्वानहरूले शूलरोग वात, पित्त, कफ, वातपित्त, पित्तकफ, कफवात, आम र सन्निपातजन्य गरी आठ प्रकारका बताएका छन् ।

परिणामशूल, खाना पचेर हुने शूलका प्रकार

**परिणामभवं शूलमष्टधा परिकीर्त्तितम् ॥४३॥**
**मलैर्यैः शूलसंख्या स्यात्तैरेव परिणामजम् ।**

वात आदि दोषले हुने परिणामशूल पनि (शूलभैँ) आठ किसिमकै हुन्छन् ।

अन्नद्रवजरत्पित्तशूलका प्रकार

**अन्नद्रवभवं शूलं जरत्पित्तभवन्तथा ॥४४॥**
**एकैकं गणितं सुज्ञैः...।**



अन्नद्रवशूल (अन्न पचेपछि वा पच्दा अथवा नपच्दा पथ्य र अपथ्यको सम्मिश्रणले हुने शूल विशेष) र जरत्पित्त शूल (अम्लपित्तले हुने) एक एक किसिमका हुन्छन् ।

उदावर्तका प्रकार

**....उदावर्तास्त्रयोदश ।**
**एकः क्षुन्निग्रहात्प्रोक्तस्तृष्णारोधाद् द्वितीयकः ॥४५॥**
**निद्राघातात्तृतीयः स्याच्चतुर्थः श्वासनिग्रहात् ।**
**छर्दिरोधात्पञ्चमः स्यात्षष्ठः क्षवथुनिग्रहात् ॥४६॥**
**जृम्भारोधात्सप्तमः स्यादुद्गारग्रहतोऽष्टमः ।**
**नवमः स्यादश्रुरोधाद्दशमः शुक्रधारणात् ॥४७॥**
**मूत्ररोधान्मलस्यापि रोधाद्वातविनिग्रहात् ।**
**उदावर्तास्त्रयश्चैते घोरोपद्रवकारकाः ॥४८॥**

उदावर्त रोग भोक रोक्नाले, तिर्खा रोक्नाले, निद्रा रोक्नाले, सास रोक्नाले, बान्ता रोक्नाले, हाच्छिउँ रोक्नाले, हाई रोक्नाले, डकार रोक्नाले, आँशु रोक्नाले, शुक्र रोक्नाले, मूत्र रोक्नाले, दिसा रोक्नाले र अपानवायु रोक्नाले हुने गरी तेह्र प्रकारका हुन्छन् । यिमध्ये पनि दिसा, पिसाब र अपानवायु रोकेर हुने उदावर्त अति नै खतरनाक हुन्छ ।

आनाहका प्रकार

**आनाहो द्विविधो ज्ञेय एकः पक्वाशयोद्भवः ।**
**आमाशयोद्भवश्चान्यः प्रत्यानाहः स कथ्यते ॥४९॥**

पक्वाशयबाट हुने र आमाशयबाट हुने प्रत्यानाह गरी आनाह दुई किसिमका हुन्छन् ।

उरोग्रह र हृदय रोग

**उरोग्रहस्तथा चैको हृद्रोगाः पञ्च कीर्त्तिताः ।**
**वातादयस्त्रयः प्रोक्ताश्चतुर्थः सन्निपाततः ॥५०॥**

**पञ्चमः क्रिमिसञ्जातः....।**

उरोग्रह रोग एक किसिमको हुन्छ । मुटुका रोग वात, पित्त, कफ, सन्निपात र किराजन्य गरी पाँच प्रकारका हुन्छन् ।

पेटका रोग

**...तथाष्टावुदराणि च ।**
**वातात्पित्तात्कफात्त्रीणि त्रिदोषेभ्यो जलादपि ॥५१॥**
**प्लीह्नः क्षतादूबद्धगुदादष्टमं परिकीर्त्तितम् ।**

पेटका रोग वात, पित्त, कफ, सन्निपात, जल, फियो, क्षत र वद्धगुद गरी आठ प्रकारका हुन्छन् ।

### गुल्मका प्रकार

**गुल्मास्त्वष्टौ समाख्याता वातपित्तकफैस्त्रयः ॥५२॥**
**द्वन्द्वभेदास्त्रयः प्रोक्ताः सप्तमः सन्निपाततः ।**
**रक्तस्त्वष्टमकः ख्यातो...।**

गुल्मरोग वात, पित्त, कफ, वातपित्त, पित्तकफ, कफवात, सन्निपात र रक्तजन्य गरी आठ प्रकारका हुन्छन् ।

### मूत्राघातका प्रकार

**....मूत्राघातास्त्रयोदश ॥५३॥**
**वातकुण्डलिका पूर्वं वाताष्ठीला ततः परम् ।**
**वातवस्तिस्तृतीयः स्यान्मूत्रातीतश्चतुर्थकः ॥५४॥**
**पञ्चमं मूत्रजठरं षष्ठो मूत्रक्षयः स्मृतः ।**

**मूत्रोत्सर्गः सप्तमः स्यान्मूत्रग्रन्थिस्तथाऽष्टमः ॥५५॥**
**मूत्रशुक्रं तु नवमं विड्घातो दशमः स्मृतः ।**
**मूत्रसादश्चोष्णवातो वस्तिकुण्डलिका तथा ॥५६॥**
**त्रयोऽप्येते मूत्रघाताः पृथग्घोराः प्रकीर्त्तिताः ।**

मूत्राघात रोग तेह्र किसिमका हुन्छन् । वातकुण्डलिका, वाताष्ठीला, वातवस्ति, मूत्रातीत, मूत्रजठर, मूत्रक्षय, मूत्रोत्सर्ग, मूत्रग्रन्थी, मूत्रशुक्र, विड्घात, मूत्रसाद, उष्णवात र वस्तिकुण्डलिका अन्तिमका तीनले ज्यान नै लिन सक्दछ, अति खतरनाक हुन्छन् ।

### मूत्रकृच्छ्रका प्रकार

**मूत्रकृच्छाणि चाष्टौ स्युर्वातपित्तकफैस्त्रिधा ॥५७॥**
**सन्निपाताच्चतुर्थं स्याच्छुक्रकृच्छ्रञ्च पञ्चमम् ।**
**विट्कृच्छ्रं षष्ठमाख्यातं घातकृच्छ्रञ्च सप्तमम् ॥५८॥**

**अष्टमं चाश्मरीकृच्छ्रं....।**

मूत्रकृच्छ्र वात, पित्त, कफ, सन्निपात, शुक्र, विण्, घात र अश्मरीजन्य गरी आठ प्रकारका हुन्छन्।

व्याख्या : चिरफार गर्दा मूत्रवाहिनी स्रोतमा घाउ भएपछि हुने मूत्रकृच्छ्रलाई घात-मूत्रकृच्छ्र भनिन्छ ।

**पत्थरीका प्रकार**

**...चतुर्धा चाश्मरी मता ।**
**वातात्पित्तात्कफाच्छुक्रात्...।**

पत्थरी वात, पित्त, कफ र शुक्रका कारण हुने गरी चार किसिमको हुन्छ ।

**प्रमेहका प्रकार**



**... तथा मेहाश्च विंशतिः ॥५९॥**
**इक्षुमेहः सुरामेहः पिष्टमेहश्च सान्द्रकः ।**
**शुक्रमेहोदकाख्यौ च लालामेहश्च शीतकः ॥६०॥**
**सिकताख्यः शनैर्मेहो दशैते कफसम्भवाः ।**
**मञ्जिष्ठाख्यो हरिद्राभो नीलमेहश्च रक्तकः ॥६१॥**
**कृष्णमेहः क्षारमेहः षडैते पित्तसम्भवाः ।**
**हस्तिमेहो वसामेहो मज्जामेहो मधुप्रभः ॥६२॥**
**चत्वारो वातजा मेहा इति मेहाश्च विंशतिः ।**

इक्षुप्रमेह (उखुको रस जस्तो अति गुलियो पिसाब हुने), सुराप्रमेह (सुराजस्तो देख्दा सङ्लो तर भित्र गाढा पिसाब हुने), पिष्ट (चामलको पिठोको घोलजस्तो सेतो, धेरै र गर्दा रोमाञ्चित हुनेगरी पिसाब हुने), सान्द्रप्रमेह (रातभर कुनै भाँडामा राखेको जस्तो पिसाब हुने),

शुक्रप्रमेह (शुक्रजस्तो वा शुक्र मिसिएको पिसाब हुने), उदकप्रमेह (स्वच्छ, अति सेतो, शीतल, सजिलै, पानी समान, केही गाढा र चिल्लो पिसाब हुने), लालाप्रमेह (र्‍यालजस्तो लेस्याइलो र चिल्लो पिसाब हुने), शीतकप्रमेह (गुलियो, चिसो, धेरै पटक र धेरै पिसाब हुने), सिकताप्रमेह (बालुवाका कण जस्तो पदार्थ मिसिएको पिसाब हुने) र शनैर्प्रमेह (बिस्तारै र कम वेगमा पिसाब हुने) गरी दश प्रकारका प्रमेह कफविकारका कारण हुने गर्दछ । मञ्जिष्ठाप्रमेह (मजिठो भिजाइएको पानीजस्तो रातो र गनाउने पिसाब हुने), हरिद्राप्रमेह (हलेदोजस्तो पहेँलो र पोल्दै पिसाब हुने), नीलप्रमेह (नीलो  वा कोइलीको प्वाँखजस्तो पिसाब हुने), रक्तप्रमेह (रगत जस्तो रातो वा रगत मिसिएको वा रगत जस्तै गनाउने तातो पिसाब हुने), कृष्णप्रमेह (मसीजस्तो कालो पिसाब हुने) र क्षारप्रमेह ( गन्ध, वर्ण, रस र स्पर्शमा नुन मिसिएको पानीजस्तो पिसाब हुने) गरी छ प्रकारका प्रमेह पित्तविकारका कारण हुने गर्दछ । हस्तिप्रमेह (मदोन्मत्त हात्तीले जसरी लगातार, वेगरहित, लेस्याइलो र उभिएर मात्र पिसाब हुने), वसाप्रमेह (वोसोजस्तो वा वोसो मिसिएको पिसाब हुने), मज्जाप्रमेह (मासीजस्तो वा मासी मिसिएको पिसाब पटकपटक हुने) र मधुमेह (महजस्तो गुलियो, टर्रो र चिल्लो पिसाब हुने) गरी चार प्रकारका प्रमेह वातविकारका कारण हुने गर्दछन् । यसरी प्रमेह रोग बीस प्रकारका हुन्छन् भनी जान्नू ।



सोमरोग र प्रमेहजन्य पिलो

**सोमरोगस्तथा चैकः...।**

शरीरको पानी विकृत भई स्त्रीहरूको मूत्रमार्गबाट सेतो पानी बहने रोग विशेषलाई सोमरोग भनिन्छ र यो एक प्रकारको हुन्छ ।

**...प्रमेहपिडका दश ॥६३॥**
**शराविका कच्छपिका पुत्रिणी विनतालजी ।**
**मसूरिका सर्षपिका जालिनी च विदारिका ॥६४॥**
**विद्रधिश्च दशैताः स्युः पिडका मेहसम्भवाः ।**

प्रमेहका कारण शरीरमा आउने खटिरा वा पिलोलाई प्रमेहपिडका भनिन्छ र यो दश किसिमको हुन्छ । शराविका (मदिराको भुँड्कोजस्तो आकारका), कच्छपिका (कछुवाको

खपटो जस्ता), पुत्रिणी (बीचमा ठूलो र वरिपरि मसिना आउने), विनता (ढाड वा पेटमा आउने धेरै दुख्ने, चिसा र नीला), अलजी (रातो, कालो, फोको उठ्दै फुट्दै गर्ने डरलाग्दो खालको), मसूरिका (मसुरोको दाना जत्रा), सर्षपिका (सर्सिउँको दाना जत्रो), जालिनी (मासुमा जरा गाडेर फिजिने र अति पोल्ने), विदारिका (भुइँकुभिण्डो जस्तो गोलो र साह्रो) र विद्रधि (गुदद्वार, वस्ति, नाइटो, कोखा, तिघ्राको काप, मिर्गौला, मुटु, कलेजो र फियो उठ्ने र पछि आफै फुट्ने खालका फोका) ।

मेदरोग

## मेदो दोषस्तथा चैकः...।

मेद (बोसो) रोग एकै किसिमको हुन्छ ।

सुन्निने रोग

## ...शोथ रोगा नव स्मृताः ॥६५॥
## दोषैः पृथग्द्वयैः सर्वैरभिघाताद्विषादपि ।



शरीर सुन्निने रोग नौ प्रकारका हुन्छन् । वात, पित्त, कफ, वातपित्त, पित्तकफ, कफवात, सन्निपात, घाउ-चोटपटक र विष ।

अण्डकोष वृद्धिरोग

## वृद्धयः सप्त गदिता वातात्पित्तात्कफेन च ॥६६॥
## रक्तेन मेदसा मूत्रादन्त्रवृद्धिश्च सप्तमी ।

अण्डकोष सुन्निने रोग सात किसिमको हुन्छ । वात, पित्त, कफ, रगत, मेह, मूत्र र आन्द्रामा हुने विकारले हुने ।

## अण्डवृद्धिस्तथा चैकः...।

एउटा मात्र अण्डकोष बढ्ने रोग (आँडे) का पनि अण्डकोष सुन्निएकै जस्ता लक्षण हुन्छन् र यो एक किसिमको मात्र हुन्छ ।

गण्डमालिका, गलगण्ड र अपची

**...तथैका गण्डमालिका ॥६७॥ गण्डोऽपचीति चैका स्यात्... ।**

वरका गेडा जत्रा गिर्खा माला जसरी घाँटीमा आउने रोग (गण्डमालिका) र गण्डालजी (गण्डमाला जस्तै धेरै दिनसम्म दुखिरहने गिर्खा, गलगाँड) एक एक प्रकारका हुन्छन् ।

ग्रन्थिभेद

**......ग्रन्थयो नवधा मताः ।**
**त्रिभिर्दोषैस्त्रयो रक्ताच्छिराभिर्मेदसो व्रणात् ॥६८॥**
**अस्थ्ना मांसेन नवमः...।**



गिर्खारोग नौ किसिमका हुन्छन् । वात, पित्त, कफ, रगत, शिरा, बोसो, खटिरा, हाड र मासु ।

अर्बुदरोग

**...षड्विधं स्यात्तथाऽबुर्दम् ।**
**वातात्पित्तात्कफाद्रक्तान्मांसादपि च मेदसः ॥६९॥**

अर्बुदरोग छ प्रकारका हुन्छन् । वात, पित्त, कफ, रक्त, मांस र मेद ।

हात्तीपाइले रोग

**श्लीपदञ्च त्रिधा प्रोक्तं वातात्पित्तात्कफादपि ।**

वात, पित्त र कफजन्य गरी हात्तीपाइले रोग तीन किसिमका हुन्छन् ।

विद्रधि रोग

**विद्रधिः षड्विधः ख्यातो वातपित्तकफैस्त्रयः ॥७०॥**
**रक्तात् क्षतात् त्रिदोषैश्च...।**

विद्रधि रोग वात, पित्त, कफ, रगत, घाउ-चोटपटक र सन्निपातजन्य गरी छ प्रकारका हुन्छन् ।

घाउखटिरा

**...व्रणाः पञ्चदशोदिताः ।**
**तेषाञ्चतुर्द्धा भेदाः स्युरागन्तुर्देहजस्तथा ॥७१॥**
**शुद्धो दुष्टश्च विज्ञेयस्तत् सङ्ख्या कथ्यते पृथक् ।**
**वातव्रणः पित्तजश्च कफजो रक्तजो व्रणः ॥७२॥**
**वातपित्तभवश्चान्यो वातश्लेष्मभवस्तथा ।**

**तथा पित्तकफाभ्याञ्च सन्निपातेन चाष्टमः ॥७३॥**
**नवमो वातरक्तेन दशमो रक्तपित्ततः ।**
**श्लेष्मरक्तभवश्चान्यो वातपित्तासृगुद्भवः ॥७४॥**
**वातश्लेष्मासृगुत्पन्नः पित्तश्लेष्मास्रसम्भवः ।**
**सन्निपातासृगुद्भूत इति पञ्चदश व्रणाः ॥७५॥**

घाउखटिरा पन्ध्र किसिमका हुन्छन् । यसका बाहिरी कारणले हुने, शरीर भित्रैको खराबीले हुने, शुद्ध (जिभ्रोको तल्लो भागजस्तो नरम, स्वच्छ, चिल्लो, अलिअलि दुख्ने र रगत आदि नबहने) र दुष्ट (गनाउने, पाक्ने, रगतपीप बहने र धेरै समय रहने) गरी चार वर्ग हुन्छन् । वात, पित्त, कफ, रक्त, वातपित्त, वातकफ, पित्तकफ, सन्निपात, वातरक्त, रक्तपित्त, कफरक्त, वातपित्तरक्त, वातकफरुधिर, पित्तकफरुधिर र सन्निपातरुधिर गरी घाउखटिरा पन्ध्र किसिमका हुन्छन् ।

बाहिरी कारणका घाउखटिरा

**सद्योव्रणस्त्वष्टधा स्यादवक्लृप्तविलम्बितौ ।**
**छिन्नभिन्नप्रचलिता घृष्टविद्धनिपातिताः ।।७६।।**

बाहिरी कारणले हुने घाउखटिरा आठ किसिमका हुन्छन् । अवक्लृप्त (भित्र कैँचीले कोतरे जसरी दुख्ने), विलम्बित (मासु झोल्लिने), छिन्न (तेर्सो, सिधा र लामो हुने), भिन्न (बाण, सिङ आदिको टुप्पो जस्तो चुच्चो परेको), प्रचलित (कडा मुङ्ग्रो आदिको प्रहारले हुने), घृष्ट (अति खस्रा लुगाले वा चोटपटकले शरीरको बाहिरी छाला गएर हुने), विद्ध (तिखा औजार वा हतियारले घोचेर हुने) र निपातित (अङ्ग धेरै छिन्नभिन्न नहुने गरी लागेका चोटपटकले हुने) ।

पेट फुटेको

**कोष्ठभेदो द्विधा प्रोक्तश्छिन्नान्त्रो निःसृतान्त्रकः ।**



छिन्नान्त्रक (कुनै हतियारले पेटको आन्द्रा काटिएको र हतियार पनि शरीरमै रहेको) र निसृतान्त्रक (कुनै हतियारले पेटको आन्द्रा काटिएको र बाहिर निस्किएको) गरी पेट फोरिएका रोग दुई किसिमका हुन्छन् ।

हाड खिइनु आदि

**अस्थिभङ्गोऽष्टधा प्रोक्तो भग्नपृष्ठविदारितौ ।।७७।। विवर्तितश्च**
**विश्लिष्टस्तिर्यक्क्षिप्तस्त्वधोगतः । ऊर्ध्वगः सन्धिभग्नश्च....।**

जोर्नीका हाड फुट्ने वा खिइने वा सर्ने रोग आठ किसिमका हुन्छन् । भग्नपृष्ठ (जोर्नीका हाड रगडिएर खिइनु), विदारित (जोर्नीका दुबैतिरका हाड भाँचिनु), विवर्तित (जोर्नीका दुबैतिरका हाडले ठाउँ छोड्नु वा फुस्कनु), विश्लिष्ट (जोर्नीमा अती पीडा हुनु), तिर्यक्क्षिप्त (जोर्नीको एउटा हाड फुस्किई तेर्सो पर्नु), अधोगत (जोर्नीको एउटा हाड तलतिर सर्नु), ऊर्ध्वग

(जोर्नीको एउटा हाड माथितिर सर्नु) र सन्धिभग्न (जोर्नीका हाड धुलोपिठो हुनु वा भाँचिएर दुई टुक्रा हुनु) ।

आगोको पोलाई

**...वह्निदग्धश्चतुर्विधः ॥७८॥**
**प्लुष्टो विदग्धो दुर्दग्धः सम्यग्दग्धः प्रकीर्त्तितः ।**

आगोले पोल्ने रोग चार किसिमका हुन्छन् । प्लुष्ट (अङ्गको रङ बदलिने गरी पोल्नु), विदग्ध (हाड, मासु, नसा, जोर्नी देखिने गरी पोल्नु), दुर्दग्ध (फोका उठ्ने गरी पोल्नु र फोका चाँडै निको नहुनु) र सम्यग्दग्ध (शरीर ताडीको रुखजस्तो कालो हुने गरी पोल्नु) ।

नाडीव्रण : नसासम्म गडेको चाँडै निको नहुने खालको घाउ

**नाड्यः पञ्च समाख्याता वातपित्तकफैस्त्रिधा ॥७९॥**
**त्रिदोषैरपि शल्येन...।**



नाडीव्रण वात, कफ, पित्त, त्रिदोष र शल्यजन्य गरी पाँच किसिमका हुन्छन् ।

व्याख्या:- पाकेको घाउलाई वास्ता नगर्दा जब त्यो भित्रसम्म गड्दछ तब त्यसले नाडीव्रणको रूप लिन्छ । वातजन्य नाडीव्रणमा खटिराको मुख रुखो र सानो हुन्छ । वरिपरि सुन्निन्छ र यस्तो घाउबाट फिँज जस्तो पानी राती बढी बहने गर्दछ । पित्तजन्य नाडीव्रणमा तिर्खा लाग्ने, जरो आउने र भतभती पोल्ने गर्दछ । यस्तो घाउबाट पहेँलो रङको तातो पानी दिउस धेरै बग्दछ । कफजन्य नाडीव्रणबाट सेतो, गाढा र चिल्लो पानी बहन्छ । चिलाउँदछ र राती बढी पानी बहन्छ । डाहा हुने, जरो आउने, स्वाँ स्वाँ हुने, बेहोस हुने, मुख सुक्ने लगायत उपरोक्त तीनै किसिमका लक्षण समेत देखिने नाडीव्रणलाई सन्निपातजन्य नाडीव्रण भनिन्छ । यसले ज्यानै लिन पनि सक्दछ । कुनै किसिमका काँडो छालाभित्र छिरेर अड्किएको वा भाँचिएको छ भने त्यसले

पनि नाडीव्रण हुन सक्दछ । यस्तो घाउबाट निरन्तर पिँज र रगत मिसिएको तातो पानी बग्दछ तथा धेरै दुख्दछ ।

भगन्दर

**...तथाऽष्टौ स्युर्भगन्दराः ।**
**शतपोनस्तु पवनादुष्ट्रग्रीवस्तु पित्ततः ॥८०॥**
**परिस्रावी कफाज्ज्ञेय ऋजुर्वातकफोद्भवः ।**
**परिक्षेपी मरुत्पित्तादर्शोजः कफपित्ततः ॥८१॥**
**आगन्तुजातश्चोन्मार्गी शङ्खावर्तस्त्रिदोषजः ।**

भगन्दर रोग आठ प्रकारका हुन्छन् । वातविकारबाट शतपोनक, पित्तविकारबाट उष्ट्रग्रीव, कफविकारबाट परिस्रावी, वातकफ विकारबाट ऋजु, वातपित्तविकारबाट परिक्षेपी, कफपित्तविकारबाट अर्शोज, बाहिरी कारणबाट उन्मार्गी र त्रिदोषबाट शङ्खावर्त नामको भगन्दर हुन्छ ।



व्याख्या:- मलद्वार नजिक आउने दुई अमल लामो, अति दुख्ने र फुट्ने खालको पिलोलाई भगन्दर भनिन्छ । (क) शतपोनक :- धेरै टर्रो र रुखो खानपिनका कारण वायुविकृत भई मलद्वारमा आउने खटिरालाई बेवास्ता गर्दा पाकेर फुट्दछ । यसपछि दुख्दछ र यसबाट रातो फिँजयुक्त पानी बग्दछ । यसका अनेक मुख हुन्छन् । यी मुखबाट पछि मूत्र, दिसा र शुक्र समेत निस्कन थाल्दछ । शतपोनकको अर्थ चाल्नु हुन्छ । चाल्नुजस्तो प्वालैप्वालै हुने हुनाले यो भगन्दरलाई शतपोनक भगन्दर भनिएको हो । (ख) पित्तविकार बढाउने खालका खानपिनले विकृत भएको पित्तले मलद्वारमा रातो रङको पिलो उब्जाउँदछ । यो चाँडै पाक्दछ र यसबाट तातो पानी बहन्छ । पिलोको आकारको उँटको घाँटीजस्तो हुने हुनाले यसलाई उष्ट्रग्रीव भनिएको हो । (ग) चिलाउने, गाढा पानी बहने, साह्रो, कम दुख्ने र सेतो खालको भगन्दरलाई परिस्रावी भनिन्छ । (घ) शतपोनक र परिस्रावीका लक्षण हुने र सिधा पानी बहने भगन्दरलाई ऋजु भनिन्छ । (ङ) शतपोनकर र उष्ट्रग्रीवका लक्षण हुने

भगन्दरलाई परिक्षेपी भनिन्छ । (च) उष्ट्रग्रीव र परिस्रावीका लक्षण हुने भगन्दरलाई अर्शोज भनिन्छ । (छ) गुदमा किला आदिले बनाएको घाउमा बेवास्ता गर्दा पाकेर किरा परी गडेर भित्र पुगेको र किराले धेरै मुख बनाएको घाउलाई उन्मार्गी भगन्दर भनिन्छ । (ज) गाईका थुनजस्ता धेरै, पहेँला, अनेक थरीको पानी बहने र शङ्खको मुखजस्तो गोलाकार भगन्दरलाई शङ्खावर्त वा शम्बुकावर्त भगन्दर भनिन्छ ।

उपदंश रोगका प्रकार

**मेढ्रे पञ्चोपदंशाः स्युर्वातपित्तकफैस्त्रिधा ॥८२॥**
**सन्निपातेन रक्ताच्च...।**

पुरुषको जननेन्द्रियमा हुने उपदंश रोग पाँच प्रकारका हुन्छन् । वात, पित्त, कफ, सन्निपात र रगतजन्य ।

व्याख्या :- जननेन्द्रियलाई कठोर हातले धेरै रगड्नाले, दाँत-नङ आदिले घाउ हुनाले, ग्राम्यधर्म पछि नधुनाले, आफ्नी श्रीमतीबाहेक अरु स्त्रीसँग असाबधानीपूर्वक ग्राम्यधर्ममा संलग्न हुनाले, लामो-कठोर र रोग लागेको स्त्री-जननेन्द्रियको उपभोगले, ब्रह्मचारिणी र रजोवती स्त्रीसँग ग्राम्यधर्ममा संलग्न हुनाले, मर्द हुन जथाभावी औषधी उपचार गर्नाले आदि कारणले पुरुष जननेन्द्रियमा उत्पन्न हुने रोगलाई उपदंश भनिन्छ । (क) वातजन्य : माथिल्लो भागमा काला फोका उठ्ने, फुट्दा दुख्ने र फरफराउने । (ख) पित्तजन्य : पहेँला रङका फोका उठ्ने, यसबाट पानी धेरै बहने र पोल्ने । (ग) कफजन्य : सेतो र बाक्लो फोका उठ्ने, चिलाउने, सुन्निने र गाढा पानी बहने । (घ) सन्निपातजन्य : उल्लेखित तीन वटै लक्षणले युक्त । (ङ) रगतजन्य : मासुको रङ जस्ता राता फोका उठ्ने ।

शूकरोगका प्रकार

**...मेढ्रे शूकामयास्तथा ।**

**चतुर्विंशतिराख्याता लिङ्गार्शो ग्रथितन्तथा ॥८३॥**
**निवृत्तमवमन्थश्च मृदितं शतपोनकः ।**
**अष्ठीलिका सर्षपिका त्वक्पाकश्चावपाटिका ॥८४॥**
**मांसपाकः स्पर्शहानिर्निरुद्धमणिरुद्धतः ।**
**मांसार्बुदं पुष्करिका सम्मूढपिडिकाऽलजी ॥८५॥**
**रक्तार्बुदं विद्रधिश्च कुम्भिकातिलकालकः ।**
**निरुद्धं प्रकाशः प्रोक्तस्तथैव परिवर्तिका ॥८६॥**

पुरुष जननेन्द्रियमा हुने शूकरोग चौबीस प्रकारका हुन्छन् । लिङ्गार्श, ग्रथित, निवृत्त, अवमन्य, मृदित, शतपोनक, अष्ठीलिका, सर्षपिका, त्वक्पाक, अवपीडिका, मांसपाक, स्पर्शहानि, निरुद्धमणि, मांसार्बुद, पुष्करिका, संमूढपिडिका, अलजी, रक्तार्बुद, विद्रधि, कुम्भिका, तिलकालक, निरुद्ध, प्रकाश र परिवर्तिका ।



व्याख्या : जो मूर्ख पुरुष आफ्नो जननेन्द्रिय मोटो बनाउन, आयुर्वेदले बताएका भन्दा बाहेकाका विधिले बनाइएका विष मिश्रित वा विषाक्त जीवजन्तुबाट बनाइएको लेप लगाउँदछ अथवा वात्स्यायनले बताएको जलयोग गर्दछ उसको जननेन्द्रियमा शूकरोग हुन्छ । पानीको फोहोरमा उत्पन्न हुने एक प्रकारको जलजन्तुलाई शूक भनिन्छ (सविषाल्पडुण्डुभादिजलमलोद्भव-जन्तुः-शब्दकल्पद्रुमः) । शूकजस्तै हुने हुनाले यो रोगलाई शूकरोग भनिएको हो । (क) लिङ्गार्श : अल्काइका लक्षण हुने । (ख) ग्रथित : निरन्तर लेप दल्नाले टुप्पामा गाँठो पर्ने । (ग) निवृत्त : कफविकारको बढी प्रभाव हुने । (घ) अवमन्य : लामा लामा पिलो आउने र फुट्दै भित्रभित्र गड्दै जाने । (ङ) मृदित : फोका उठ्ने, दुख्ने र टेढो हुने । (च) शतपोनक : मसिना प्वाल पर्ने । (छ) अष्ठीलिका : कुनै साना कुनै ठूला, कुनै सिधा र कुनै बाङ्गा मासुका टुसा पलाउने । (ज) सर्षपिका : सेता सर्सिउँका दाना जस्ता र जत्रा फोका आउने । (झ) त्वक्पाक : छाला पाक्ने, जरो आउने र पोल्ने । (ञ) अवपीडिका : च्यातिएको जस्तो भान हुने । (ट) मांसपाक : मासु पाकेर कुहिने र धेरै दुख्ने । (ठ) स्पर्शहानि : छाला लाटो हुने । (ड) निरुद्धमणि : मणि लाटो हुने ।

(ढ) मांसार्बुद : मासुको अर्बुद हुने । (ण) पुष्करिका : कमलको केसरजस्ता मसिना फोका उठ्ने । (त) संमूढपिडिका : लेप लगाएर चिलाएपछि मुख नभएको फोका उठ्ने । (थ) अलजी : प्रमेहका कारण आउने रातो वा कालो अलजी नामको पिलोको जस्तै लक्षण भएको । (न) रक्तार्बुद : राता, काला फोका उठ्दै जाने । (प) विद्रधि : विद्रधिका लक्षण युक्त भएको । (फ) कुम्भिका : जामुनुका गेडा जस्ता काला फोका हुने । (ब) तिलकालक : रङ्गीबिरङ्गी फोका उठी छाला कालो हुने र गल्ने । (भ) निरुद्ध, प्रकाश र परिवर्तिका : निरुद्ध, प्रकाश र परिवर्तिका नामक क्षुद्र रोग विशेषका लक्षण हुने ।

### कुष्ठरोगका प्रकार

कुष्ठान्यष्टादशोक्तानि वातात् कापालिकं भवेत् ।
पित्तेनोदुम्बरं प्रोक्तं कफान्मण्डलचर्चिके ॥८७॥
मरुत्पित्तादृक्षजिह्वा श्लेष्मवाताद्विपादिका ।

तथा सिध्मैककुष्ठञ्च किटिभञ्चालसन्तथा ॥८८॥
कफपित्तात् पुनर्दद्रुः पामा विस्फोटकन्तथा ।
महाकुष्ठं चर्मदलं पुण्डरीकं शतारुकम् ॥८९॥
त्रिदोषैः काकणं ज्ञेयं तथाऽन्यच्छ्वित्रसंज्ञितम् ।
तथा वातेन पित्तेन श्लेष्मणा च त्रिधा भवेत् ॥९०॥

कुष्ठरोग अठार प्रकारका हुन्छन् । कापालिक वातविकारले; पित्तविकारले औदुम्बर; कफविकारले मण्डल र विचर्चिका; वातपित्त विकारले ऋक्षजिह्वा; कफवातविकारले विपादिका, सिध्म, किटिभ र अलस; कफपित्त विकारले दद्रु, पामा, विस्फोटक, महा, चर्मदल, पुण्डरीक र शतारुक; त्रिदोषले काकण र श्वित्र । यो त्रिदोष अनुसार तीन किसिमको हुन्छ ।

क्षुद्र रोगहरु

क्षुद्र रोगाः षष्टिसङ्ख्यास्तेष्वादौ शर्करार्बुदम् ।
इन्द्र वृद्धा पनसिका विवृतान्धालजी तथा ॥९१॥
वराहदँष्ट्रो वल्मीकं कच्छपी तिलकालकः ।
गर्दभी रकसा चैव यवप्रख्या विदारिका ॥९२॥
कदरो मषकश्चैव नीलिका जालगर्दभः ।
ईरिवेल्ली जतुमणिर्गुदभ्रंशोऽग्निरोहिणी ॥९३॥
सन्निरुद्धगुदः कोठः कुनखोऽनुशयी तथा ।
पद्मिनीकण्टकश्चिप्यमलसो मुखदूषिका ॥९४॥
कक्षावृषणकच्छूश्च गन्धः पाषाणगर्दभः ।
राजिका च तथा व्यङ्गश्चतुर्द्धा परिकीर्त्तितः ॥९५॥
वातात्पित्तात्कफाद्रक्तादित्युक्तं व्यङ्गलक्षणम् ।

विस्फोटाः क्षुद्र रोगेषु तेऽष्टधा परिकीर्त्तिताः ॥९६॥
पृथग्दोषैस्त्रयो द्वन्द्वैस्त्रिविधाः सप्तमोऽसृजः ।
अष्टमः सन्निपातेन क्षुद्र रुक्षुन्मसूरिका ॥९७॥
चतुर्दशप्रकारेण त्रिभिर्दोषैस्त्रिधा च सा ।
द्वन्द्वजा विविधा प्रोक्ता सन्निपातेन सप्तमी ॥९८॥
अष्टमी त्वग्गता ज्ञेया रक्तजा नवमी स्मृता ।
दशमी मांसजा ख्याता चतस्रोऽन्याश्च दुस्तराः ॥९९
मेदोऽस्थिमज्जशुक्रस्थाः क्षुद्र रोगा इतीरिताः ।

क्षुद्ररोग साठी प्रकारका हुन्छन् । शर्करार्बुद, इन्द्रवृद्धा, पनसिका, विवृत्ता, अन्धालजी, वराहदंष्ट्र, वल्मीक, कच्छपी, तिलकालक, गर्दभी, रकसा, यवप्रख्या, विदारिका, कदर, मसक, नीलिका, जालगर्दभ, इरिवेल्लिका, जतुमणि, गुदभ्रंश, अग्निरोहिणी, सन्निरुद्धगुद, काठ, कुनख, अनुशयी, पद्मनीकण्टक, चिप्य, अलस, मूखदूषिका, कक्षा, वृषणकच्छु,

गन्ध, पाषाणगर्दभ, राजिक, वातव्यङ्ग, पित्तव्यङ्ग, कफव्यङ्ग र रुधिरव्यङ्ग गरी अठतीस । विस्फोट रोगमा फोका उठ्दछ त्यसैले यसलाई पनि क्षुद्ररोगमै गणना गरिएको छ । विस्फोट वात, पित्त, कफ, वातपित्त, कफपित्त, वातकफ, रक्त र सन्निपात गरी आठ प्रकारकारका हुन्छन् । शरीरमा शीतला रोगले पनि फोका उठ्दछ त्यसैले मसूरिका रोगलाई पनि क्षुद्ररोगमा गणाना गरिएको छ । मसूरिका चौध प्रकारको हुन्छ । वात, पित्त, कफ, कफपित्त, वातपित्त, वातकफ, सन्निपात, त्वक्, रक्त, मांस, मेद, अस्थि, मज्जा र शुक्र । यिनमा अन्तिमका चार मसूरिका निको हुन कठिन हुन्छ ।

### विसर्प रोगका प्रकार

**विसर्परोगो नवधा वातपित्तकफैस्त्रिधा ॥१००॥**
**त्रिधा स द्वन्द्वभेदेन सन्निपातेन सप्तमः ।**
**अष्टमो वह्निदाहेन नवमश्चाभिघातजः ॥१०१॥**

विसर्प रोग नौ किसिमको हुन्छ । वात, पित्त, कफ, वातपित्त, कफवात, कफपित्त, सन्निपात, जठराग्नितापजन्य र अभिघातजन्य ।

### उदर्द रोगका प्रकार

**तथैकः श्लेष्मपित्ताभ्यामुदर्दः परिकीर्त्तितः ।**
**वातपित्तेन चैकस्तु शीतपित्तामयः स्मृतः ॥१०२॥**

कफ र पित्त विकारले हुने उदर्द एक किसिमको हुन्छ भनिएको छ । वात र पित्तविकारले हुने शीतपित्त पनि एक किसिमको हुन्छ ।

### अम्लपित्तका प्रकार

**अम्लपित्तं त्रिधा प्रोक्तं वातेन श्लेष्मणा तथा ।**
**तृतीयं श्लेष्मवाताभ्याम्...।**

वातजन्य, कफजन्य र कफवातजन्य गरी अम्लपित्त तीन किसिमको हुन्छ ।

वातरक्तका प्रकार

...वातरक्तं तथाऽष्टधा ॥१०३॥
वाताधिक्येन पित्ताच्च कफाद्दोषत्रयेण च ।
रक्ताधिक्येन दोषाणां द्वन्द्वेन त्रिविधः स्मृतः ॥१०४॥

वात, पित्त, कफ, त्रिदोष, रगत र दुई थरी दोषले हुने तीन गरी वातरक्त आठ प्रकारका हुन्छन् ।

वातरोगका प्रकार

अशीतिर्वातजा रोगाः कथ्यन्ते मुनिभाषिताः ।
आक्षेपको हनुस्तम्भ ऊरुस्तम्भः शिरोग्रहः ॥१०५॥
बाह्यायामोऽन्तरायामः पार्श्वशूलं कटिग्रहः ।
दण्डापतानकः खल्ली जिह्वास्तम्भस्तथाऽर्दितम् ॥१०६॥
पक्षाघातः क्रोष्टुशीर्षो मन्यास्तम्भश्च पङ्गुता ।
कलायखञ्जता तूनी प्रतितूनी च खञ्जता ॥१०७॥
पादहर्षो गृध्रसी च विश्वाची चापबाहुकः ।
अपतानो व्रणायामो वातकण्टोऽपतन्त्रकः ॥१०८॥
अङ्गभेदोऽङ्गशोषश्च मिन्मिनत्वञ्च कल्लता (गद्गदः) ।
प्रत्यष्ठीलाऽष्ठीलिका च वामनत्वञ्च कुब्जता ॥१०९॥
(अङ्गभङ्गोऽङ्गशूलञ्च सङ्कोचस्तम्भरूक्षताः ।)
अङ्गपीडाङ्गविभ्रंशो विड्ग्रहो बद्धविट्कता ॥११०॥
मूकत्वमतिजृम्भा स्यादत्युद्गारोऽन्त्रकूजनम् ।
वातप्रवृत्तिः स्फुरणं शिराणां पूरणन्तथा ॥१११॥
कम्पः कार्श्यं श्यावता च प्रलापः क्षिप्रमूत्रता ।

निद्रानाशः स्वेदनाशो दुर्बलत्वं बलक्षयः ॥११२॥
अतिप्रवृत्तिः शुक्रस्य कार्श्यं नाशश्च रेतसः ।
अनवस्थितचित्तत्वं काठिन्यं विरसास्यता ॥११३॥
(कषायवक्त्रताध्मानं प्रत्याध्मानञ्च शीतता ।
रोमहर्षश्च भीरुत्वं तोदः कण्डू रसाज्ञता ॥११४॥
शब्दाज्ञता प्रसुप्तिश्च गन्धाज्ञत्वं दृशः क्षयः ।

वातरोग अस्सी प्रकारका हुन्छन् भनी मुनिजनले बताएका छन् । आक्षेपक, हनुस्तम्भ, ऊरुस्तम्भ, शिरोग्रह, बाह्यायाम, अभ्यन्तरायाम, पार्श्वशूल, कटिग्रह, दण्डापतानक, खल्ली, जिह्वास्तम्भ, अर्दित, पक्षाघात, क्रोष्टुशीर्ष, मन्यास्तम्भ, पङ्गु, कलायखञ्ज, तूनी, प्रतितूनी, खञ्ज, पादहर्ष, गृध्रसी, विश्वाची, अवबाहुक, अपतन्त्रक, व्रणायाम, वातकण्टक, अपतानक, अङ्गभेद, अङ्गशोष, मिन्मिन, गद्गद, प्रत्यष्ठीलिका, अष्ठीला, वामनत्व, कुब्जत्व, अङ्गपीडा, अङ्गशूल, सङ्कोच, स्तम्भ, रूक्षता, अङ्गभङ्ग, अङ्गविभ्रंश, विड्ग्रह, बद्धविट्कता, मूकत्व, अतिजृम्भ, अत्युद्गार, अन्त्रकूजन, वातप्रवृत्ति, स्फुरण, शिरापूरण, कम्पवायु, कार्श्य, श्यावता, प्रलाप, क्षिप्रमूत्रता, निद्रानाश, स्वेदनाश, दुर्बलत्व, बलक्षय, शुक्रातिप्रवृत्ति, शुक्राकार्श्य, शुक्रनाश, अनवस्थितचित्तत्व, काठिन्य, विरसास्यता, कषायवक्त्रता, आध्मान, प्रत्याध्मान, शीतता, रोमहर्ष, भीरुत्व, तोद, कण्डू, रसाज्ञता, शब्दाज्ञता, प्रसुप्ति गन्धाज्ञत्व र दृशक्षय ।



### पित्तरोगका प्रकार

अथ पित्तभवा रोगाश्चत्वारिंशदिहोदिताः ॥११५॥
धूमोद्गारो विदाहः स्यादुष्णाङ्गत्वं मतिभ्रमः ।
कान्तिहानिः कण्ठशोषो मुखशोषोऽल्पशुक्रता ॥११६॥
तिक्तास्यताऽम्लवक्त्रत्वं स्वेदस्रावोऽङ्गपाकता ।
क्लमो हरितवर्णत्वमतृप्तिः पीतगात्रता ॥११७॥
रक्तस्रावोऽङ्गदरणं लोहगन्धास्यता तथा ।
दौर्गन्ध्यं पीतमूत्रत्वमरतिः पीतविट्कता ॥११८॥

पीतावलोकनं पीतनेत्रता पीतदन्तता ।
शीतेच्छा पीतनखता तेजोद्वेषोऽल्पनिद्रता ॥११९॥
कोपश्च गात्रसादश्च भिन्नविट्कत्वमन्धता ।
उष्णोच्छ्वासत्वमुष्णत्वं मूत्रस्य च मलस्य च ॥१२०॥
तमसो दर्शनं पीतमण्डलानाञ्च दर्शनम् ।
निःसहत्वञ्च पित्तस्य चत्वारिंशद्रुजः स्मृताः ॥१२१॥

पित्तविकारले हुने रोग चालीस प्रकारका हुन्छन् भनिएको छ । धूमोद्गार, विदाह, उष्णाङ्गत्व, मतिभ्रम, कान्तिहानि, कण्ठशोष, मुखशोष, अल्पशुक्रता, तिक्तास्यता, अम्लवक्त्रत्व, स्वेदस्राव, अङ्गपाकता, क्लम, हरितवर्णत्व, अतृप्ति, पीतगात्रता, रक्तस्राव अङ्गदरण, लोहगन्धास्यता, दौर्गन्ध्य, पीतमूत्रत्व, अरतिः पीतविट्कता, पीतावलोकन, पीतनेत्रता, पीतदन्तता, शीतेच्छा, पीतनखता, तेजोद्वेष, अल्पनिद्रता, कोप, गात्रसाद, भिन्नविट्कत्व, अन्धता, उष्णोच्छ्वासत्व, उष्णमूत्रत्व, उष्णमलत्व, तमोदर्शन, पीतमण्डलदर्शन र निःसहत्व । यी चालीस पित्तरोगहरू हुन् भनी जान्नू ।



### कफरोगका प्रकार

कफस्य विंशतिः प्रोक्ता रोगास्तन्द्राऽतिनिद्रता ।
गौरवं मुखमाधुर्यं मुखलेपः प्रसेकता ॥१२२॥
श्वेतावलोकनं श्वेतविट्कत्वं श्वेतमूत्रता ।
श्वेताङ्गवर्णता शैत्यमुष्णेच्छा तिक्तकामिता ॥१२३॥
मलाधिक्यञ्च शुक्रस्य बाहुल्यं बहुमूत्रता ।
आलस्यं मन्दबुद्धित्वं तृप्तिर्घर्घरवाक्यता ॥१२४॥
अचैतन्यञ्च गदिता विंशतिः श्लेष्मजा गदाः ।

कफजन्य रोग बीस प्रकारका हुन्छन् भनिएको छ । तन्द्रा, अतिनिद्रा, गौरव, मुखमाधुर्य, मुखलेप, प्रसेकता, सेतो देख्नु, दिसा सेतो हुनु, पिसाब सेतो हुनु, शरीरको रङ्ग सेतो हुनु,

शैत्य, (उष्णेच्छा), तिक्तकामिता, मलको मात्रा बढ्नु, शुक्रको बाहुल्यता, बहुमूत्रता, आलस्य, मन्दबुद्धि, तृप्ति, घर्घर बोली र अचैतन्य ।

रक्तरोगका प्रकार

**रक्तस्य च दश प्रोक्ता व्याधयस्तेषु गौरवम् ॥१२५॥**
**रक्तमण्डलता रक्तनेत्रत्वं रक्तमूत्रता ।**
**रक्तनिष्ठीवनं रक्तपिटिकानाञ्च दर्शनम् ॥१२६॥**
**औष्ण्यञ्च पूतिगन्धत्वं पीडा पाकश्च जायते ।**

रगतविकारले हुने रोग दश प्रकारका हुन्छन् । गौरव, रक्तमण्डलता, रक्तनेत्रत्व, रक्तमूत्रता, रक्तनिष्ठीवन, रक्तपिटिकादर्शन, उष्णत्व, पूतिगन्धत्व, पीडा र पाक ।

मुखका रोगहरू



**चतुःसप्ततिसङ्ख्याका मुखरोगास्तथोदिताः ॥१२७॥**

मुखमा जम्मा चौहत्तर प्रकारका रोग हुन्छन् । जुन निम्नानुसार हुन्छन् ।

ओठका रोगहरू

**तेष्वोष्ठरोगा गणिता एकादशमिता बुधैः ।**
**वातपित्तकफैस्त्रेधा त्रिदोषैरसृजा तथा ॥१२८॥**
**क्षतं मांसार्बुदञ्चैव खण्डोष्ठञ्च जलार्बुदम् ।**
**मेदोऽर्बुदञ्चार्बुदञ्च रोगा एकादश स्मृताः ॥१२९॥**

वातजन्य, पित्तजन्य, कफजन्य, सन्निपातजन्य, रक्तजन्य, क्षतज, मांसार्बुद, खण्डोष्ठ, जलार्बुद, मेदोर्बुद, र अर्बुद गरी ओठमा एघार किसिमका रोगहरू हुन्छन् ।

दाँतका रोगहरू

**दन्तरोगा दशाख्याता दालनः कृमिदन्तकः ।**
**दन्तहर्षः करालश्च दन्तचालश्च शर्करा ॥१३०॥**
**अधिदन्तः श्यावदन्तो दन्तभेदः कपालिका ।**

दालन, कृमिदन्तक, दन्तहर्ष, कराल, दन्तचाल, दन्तशर्करा, अधिदन्त, श्यावदन्त, दन्तभेद र कपालिक गरी दश थरी दाँतका रोग हुन्छन् ।

दाँतका जरामा हुने रोगहरू

**तथा त्रयोदशमिता दन्तमूलामयाः स्मृताः ॥१३१॥**
**शीतादोपकुशौ द्वौ तु दन्तविद्रधिपुप्पुटौ ।**
**अधिमांसो विदर्भश्च महासौषिरसौषिरौ ॥१३२॥**
**तेष्वेव गतयः पञ्च वातात्पित्तात्कफादपि ।**
**सन्निपाताद्गतिश्चान्या रक्तनाडी च पञ्चमी ॥१३३॥**

दाँतको जरामा तेह्र प्रकारका रोगहरू हुन्छन् । शीताद, उपकुश, दन्तविद्रधि, पुप्पुट, अधिमांस, विदर्भ, महासौषिर, सौषिर, वातजन्य, पित्तजन्य, कफजन्य, सन्निपातजन्य र रक्तजन्य ।

जिभ्रोका रोगहरू

**तथा जिह्वाऽमयाः षट् स्युर्वातपित्तकफैस्त्रिधा ।**
**अला(ल्ल)सश्च चतुर्थः स्यादधिजिह्वश्च पञ्चमः ॥१३४॥**
**षष्ठी चैवोजपजिह्वा स्यात्...।**

वातजन्य, पित्तजन्य, कफजन्य, अलास, अधिजिह्व र उपजिह्व गरी जिभ्रोमा छ प्रकारका रोगहरू हुन्छन् ।

### तालुमा हुने रोगहरू

**...तथाऽष्टौ तालुजा गदाः ।**
**अर्बुदं तालुपिटिका कच्छपी तालु (मांस) संहतिः ॥१३५॥**
**गलशुण्डी तालुशोथा (शोष)स्तालुपाकश्च पुप्पुटः ।**

अर्बुद, तालुपिटिका, कच्छपी, तालु (मांस) संहति, गलशुण्डी, तालुशोथ (शोष), तालुपाक र पुप्पुट गरी तालुमा आठ प्रकारका रोगहरू हुन्छन् ।

### घाँटीका रोगहरू

**गलरोगास्तथा ख्याता अष्टादशमिता बुधैः ॥१३६॥**
**वातरोहिणिका पूर्वं द्वितीया पित्तरोहिणी ।**
**कफरोहिणिका प्रोक्ता त्रिदोषैरपि रोहिणी ॥१३७॥**
**मेदोरोहिणिका वृन्दो गलौघो गलविद्रधिः ।**

**स्वरहा तुण्डिकेरी च शतघ्नी शा(ता)लुकोऽर्बुदम् ॥१३८॥**
**गिलायुर्वलयश्चापि वाताद्गण्डः कफात्तथा ।**
**मेदोगण्डस्तथैव स्यादित्यष्टादश कण्ठजाः ॥१३९॥**

घाँटीका रोग अठार प्रकारका हुन्छन् भनी विद्वानहरूले बताएका छन् । वातरोहिणी, पित्तरोहिणी, कफरोहिणी, सन्निपातरोहिणी, मेदरोहिणी, वृन्द, गलौघ, गलविद्रधि, स्वरहा, तुण्डिकेरी, शतघ्नी, शालुक, अर्बुद, गिलायु, वलय, वातगण्ड, कफगण्ड र मेदगण्ड ।

### मुखभित्र हुने रोगहरू

**मुखान्तःसम्भवा रोगा अष्टौ ख्याता महर्षिभिः ।**
**मुखपाको भवेद्वातात्पित्तात्तद्वत्कफादपि ॥१४०॥**
**रक्ताच्च सन्निपाताच्च पूत्यास्योर्ध्वग(गु)दावपि ।**
**अर्बुदं चेति मुखजाश्चतुः सप्ततिरामयाः ॥१४१॥**

मुखभित्र आठ प्रकारका रोग हुन्छन् । वातमुखपाक, पित्तमुखपाक, कफमुखपाक, रक्तमुखपाक, सन्निपातमुखपाक, पूत्यास्य, उर्ध्वगद र अर्बुद । यसरी मुखमा जम्मा चौहत्तर किसिमका रोग हुन्छन् ।

कानमा हुने रोगहरू

**कर्णरोगाः समाख्याता अष्टादशमिता बुधैः ।**
**वातात्पित्तात्कफाद्रक्तात्सन्निपाताच्च विद्रधिः ॥१४२॥**
**शोथोऽर्बुदं पूतिकर्णः कर्णार्शः कर्णहल्लिका ।**
**बाधिर्यं तन्त्रिका कण्डूः शष्कुली कृमिकर्णकः ॥१४३॥**
**कर्णनादः प्रतीनाह इत्यष्टादश कर्णजाः ।**

कानका रोग अठार प्रकारका हुन्छन् । वातजन्य, पित्तजन्य, कफजन्य, रक्तजन्य, सन्निपातजन्य, विद्रधि, सुन्निनु, अर्बुद, पूतिकर्ण, कर्णार्श, कर्णहल्लिका, बहिरोपन, तन्त्रिका, कान चिलाउनु, शष्कुली, कृमिकर्णक, कर्णनाद र प्रतीनाह : यी अठार कानका रोग हुन् ।



कानको लोतीमा हुने रोगहरू

**कर्णपालीसमुद्भूता रोगाः सप्त इहोदिताः ॥१४४॥**
**उत्पातः पालिशोषश्च विदारी दुःखवर्धनः ।**
**परिपोटश्च लेही च पिप्पली चेति संस्कृताः ॥१४५॥**

कानको लोतीमा सात किसिमका रोगहरू हुन्छन् । उत्पात, पालिशोष, विदारी, दुःखवर्धन, परिपोट, लेही र पिप्पली ।

कानका जरामा हुने रोगहरू

**कर्णमूलामयाः पञ्च वातात्पित्तात्कफादपि ।**
**सन्निनपाताच्च रक्ताच्च...**

कानका जरामा पाँच प्रकारका रोग हुन्छन् । वातजन्य, पित्तजन्य, कफजन्य, सन्निपातजन्य र रक्तजन्य ।

नाकमा हुने रोगहरू

**...तथा नासाभवा गदाः ॥१४६॥**
**अष्टादशैव सङ्ख्याताः प्रतिश्यायास्तु तेष्वपि ।**
**वातात्पित्तात्कफाद्रक्तात्सन्निपातेन पञ्चमः ॥१४७॥**
**अपीनसः पूतिनासो नासाऽर्शो भ्रंशथुः क्षवः ।**
**नासानाहः पूतिरक्तमर्बुदं दुष्टपीनसम् ॥१४८॥**
**नासाशोषो घ्राणपाकः पूय(पुट)स्रावश्च दीप्तकः ।**

नाकमा हुने रोगहरू अठार प्रकारका हुन्छन् । ती वातजन्य पिनास, पित्तजन्य पिनास, कफजन्य पिनास, रक्तजन्य पिनास, सन्निपातजन्य पिनास, अपीनस, पूतिनास, नासार्श, भ्रंशथु, क्षव, नासानाह, पूतिरक्त, अर्बुद, दुष्टपीनस, नासाशोष, घ्राणपाक, पूयस्राव र दीप्तक हुन् ।

टाउकाका रोग

**तथा दश शिरोरोगा वातेनार्धावभेदकः ॥१४९॥**
**शिरस्तापश्च वातेन पित्तपीडा तृतीयका ।**
**चतुर्थी कफजा पीडा रक्तजा सन्निपातजा ॥१५०॥**
**सूर्यावर्ताच्छिरः कम्पात्क्रिमिभिः शङ्खकेन च ।**

टाउकाका रोग दश प्रकारका हुन्छन् । अर्धावभेदक, वातजन्य शिरताप, पित्तजन्य शिरताप, कफजन्य शिरताप, रक्तजन्य शिरताप, सन्निपातजन्य शिरताप, सूर्यावर्त, शिरकम्प, क्रिमिज र शङ्खक ।

कपालका रोग

**तथा कपालरोगाः स्युर्नव तेषूपशीर्षकम् ॥१५१॥**
**अरुंषिका विद्रधिश्च दारुणं पिटिकाऽर्बुदम् ।**
**इन्द्रलुप्तश्च खलतिः पलितश्चेति ते नव ॥१५२॥**

कपालका उपशीर्षक, अरुंषिका, विद्रधि, दारुण, पिटिका, अर्बुद, इन्द्रलुप्त, खालित्य र पलित गरी नौ प्रकारका रोगहरू हुन्छन् ।

आँखाका पलकमा हुने रोग

**तथा नेत्रभवाः ख्याताश्चतुर्नवतिरामयाः ।**
**तेषु वर्त्मगदाः प्रोक्ताश्चतुर्विंशतिसंज्ञकाः ॥१५३॥**
**कृच्छ्रोन्मीलः पक्ष्मशातः कफोत्क्लिष्टश्च लोहितः ।**
**अरुन्निमेषः कथितो रक्तोत्क्लिष्टः कुकूणकः ॥१५४॥**
**पक्ष्मार्शः पक्ष्मरोधश्च पित्तोत्क्लिष्टश्च पोथकी ।**
**क्लिष्टवर्त्मा च बहलः पक्ष्मोत्सङ्गस्तथाऽर्बुदम् ॥१५५॥**
**कुम्भिका सिकतावर्त्म लगणोऽञ्जननामिका ।**
**कर्दमः श्याववर्त्मा च बिसवर्त्मा तथाऽलजी ॥१५६॥**
**उत्क्लिष्टवर्त्मेति गदाः प्रोक्ता वर्त्मसमुद्भवाः ।**



आँखामा चौरान्नब्बे किसिमका रोगहरू हुन्छन् । तिमध्ये आँखा ढाक्ने परेला उम्रिएका दुईतिरका छाला (पलक) मा चौबीस प्रकारका हुन्छन् । कृच्छ्रोन्मील, पक्ष्मशात, कफोत्क्लिष्ट, लोहित, अरुन्निमेष, रक्तोत्क्लिष्ट, कुकूणक, पक्ष्मार्श, पक्ष्मरोध, पित्तोत्क्लिष्ट, पोथकी, क्लिष्टवर्त्म, बहल, पक्ष्मोत्सङ्ग, अर्बुद, कुम्भिका, सिकतावर्त्म, अलगण, अञ्जननामिका, कर्दम, श्याववर्त्म, बिसवर्त्म, अलजी र उत्क्लिष्टवर्त्म ।

### आँखाको कुनोमा हुने रोग

**नेत्रसन्धिसमुद्भूता नव रोगाः प्रकीर्त्तिताः ॥१५७॥**
**जलस्रावः कफस्रावो रक्तस्रावश्च पर्वणी ।**
**पूयस्रावः क्रिमिग्रन्थिरुपनाहस्तथाऽलजी ॥१५८॥**
**पूयालस इति प्रोक्ता रोगा नयनसन्धिजाः ।**

आँखाका कुनामा नौ किसिमका रोग हुन्छन् । जलस्राव, कफस्राव, रक्तस्राव, पर्वणी, पूयस्राव, क्रिमिग्रन्थि। उपनाह, अलजी र पूयालस ।

### आँखाको सेतो भागमा हुने रोग

**तथा शुक्लगता रोगा बुधैः प्रोक्तास्त्रयोदश ॥१५९॥**
**सिरोत्पातः सिराहर्षः सिराजालश्च शुक्तिका ।**
**शुक्लार्म चाधिमांसार्म प्रस्तार्यर्म च पिष्टकः ॥१६०॥**

**शिराजपिटिका चैव कफग्रथितकोऽर्जुनः ।**
**स्नाय्वर्म शोणितार्म (अधिमांस) स्यादिति शुक्लगता गदाः ॥१६१॥**

आँखाको सेतो भागमा तेह्र प्रकारका रोगहरू हुन्छन् । सिरोत्पात, सिराहर्ष, सिराजाल, शुक्तिक, शुक्लार्म, अधिमांसार्म, प्रस्तार्यर्म, पिष्टक, शिराजपिटिका, कफग्रथितक, अर्जुन, स्नाय्वर्म र शोणितार्म (वा अधिमांस) ।

### आँखाको कालो भागमा हुने रोग

**तथा कृष्णसमुद्भूताः पञ्च रोगाः प्रकीर्तिताः ।**
**शुद्धशुक्रं शिराशुक्रं क्षतशुक्रं तथाऽजका ॥१६२॥**
**शिरासङ्गश्च सर्वेऽपि प्रोक्ताः कृष्णगता गदाः ।**

आँखाको कालो भागमा पाँच किसिमका रोग हुन्छन् । शुद्धशुक्र, शिराशुक्र, क्षतशुक्र, अजक र शिरासङ्ग ।

### आँखाको काच रोग

**काचन्तु षड्विधं ज्ञेयं वातात्पित्तात्कफादपि ॥१६३॥**
**सन्निपाताच्च रक्ताच्च षष्ठं संसर्गसम्भवम् ।**

वात, पित्त, कफ, सन्निपात, रक्त र संसर्गजन्य गरी आँखाका हुने काचरोग छ प्रकारका हुन्छन् ।

### धमिलो देखिने आँखाका रोग

**तिमिराणि षडेव स्युर्वातपित्तकफैस्त्रिधा ॥१६४॥**
**संसर्गेण च रक्तेन षष्ठं स्यात्सन्निपाततः ।**



धमिलो देखिने आँखाका रोग पनि वात, पित्त, कफ, संसर्ग, रक्त र सन्निपातजन्य गरी छ प्रकारका हुन्छन् ।

### आँखा नदेख्ने रोग

**लिङ्गनाशः सप्तधा स्याद्वातात्पित्तात्कफेन च ॥१६५॥**
**त्रिदोषैरुपसर्गेण संसर्गेणासृजा तथा ।**

आँखा नदेख्ने रोग सात किसिमका हुन्छन् । वात, पित्त, कफ, सन्निपात, उपसर्ग, संसर्ग र रक्तजन्य ।

### दृष्टिमण्डल रोग

**अष्टधा दृष्टिरोगाः स्युस्तेषु पित्तविदग्धकम् ॥१६६॥**
**अम्लपित्तविदग्धञ्च तथैवोष्णविदग्धकम् ।**

**नकुलान्ध्यं धूसरान्ध्यं रात्र्यान्ध्यं ह्रस्वदृष्टिकः ॥१६७॥**
**गम्भीरदृष्टिरित्येते रोगा दृष्टिगता मताः ।**

दृष्टिमण्डल रोग आठ किसिमका हुन्छन् । पित्तविदग्ध, अम्लपित्तविदग्ध, उष्णविदग्ध, नकुलान्ध्य, धूसरान्ध्य, रात्र्यान्ध, ह्रस्वदृष्टि र गम्भीरदृष्टि ।

अभिष्यन्दरोग

**अभिष्यन्दाश्च चत्वारो रक्ताद्दोषैस्त्रिभिस्तथा ॥१६८॥**

रक्त, पित्त, कफ र वातजन्य गरी अभिष्यन्द रोग चार किसिमका हुन्छन् ।

अधिमन्थरोग

**चत्वारश्चाधिमन्थाः स्युर्वातपित्तकफास्रतः ।**



वात, कफ, पित्त र रक्तजन्य गरी चार किसिमका अधिमन्थ रोग हुन्छन् ।

पूरै आँखामा हुने रोग

**सर्वाक्षिरोगाश्चाष्टौ स्युस्तेषु वातविपर्ययः ॥१६९॥**
**अल्पशोफोऽन्यतोवातस्तथा पाकात्ययः स्मृतः ।**
**शुष्काक्षिपाकश्च तथा शोफोऽध्युषित एव च ॥१७०॥**
**हताधिमन्थ इत्येते रोगाः सर्वाक्षिसम्भवाः ।**

पूरै आँखामा लाग्ने रोग आठ प्रकारका हुन्छन् । वातविपर्यय, अल्पशोफ, अन्यतोवात, पाकात्यय, शुष्काक्षिपाक, शोफ, अध्युषित र हताधिमन्थ ।

नपुंसक रोग

**पुंस्त्वदोषास्तु पञ्चैव प्रोक्तास्तत्रेर्ष्यकः स्मृतः ॥१७१॥**

आसेक्यश्चैव कुम्भीकः सुगन्धिः षण्ढसंज्ञकः ।

ईर्ष्यक, आसेक्य, कुम्भिक, सुगन्धि र षण्ढ गरी पाँच प्रकारका नपुंसक रोग हुन्छन् ।

शुक्ररोग

शुक्रदोषास्तथाऽष्टौ स्युर्वातात्पित्तात्कफेन च ॥१७२॥
कुणपं चास्रपित्ताभ्यां पूयाभं श्लेष्मपित्ततः।
क्षीणञ्च वातपित्ताभ्यां ग्रन्थिलं श्लेष्मवाततः ॥१७३॥
मलाभं सन्निपाताच्च शुक्रदोषा इतीरिताः ।

शुक्ररोग आठ प्रकारका हुन्छन् । वातजन्य, पित्तजन्य, कफजन्य, रगतर र पित्तले हुने कुणप, कफ र पित्तले हुने पूयाभ, वात र पित्तले हुने क्षीण, कफ र वातले हुने ग्रन्थिल तथा सन्निपातले हुने मलाभ ।



अथ स्त्रीरोगनामानि (स्त्रीरोग)
रजरोग

अथ स्त्रीरोगनामानि प्रोच्यन्ते पूर्वशास्त्रतः ॥१७४॥
अष्टावार्तववदोषाः स्युर्वातपित्तकफैस्त्रिधा ।
पूयाभं कुणपं ग्रन्थिं क्षीणं मलसमन्तथा ॥१७५॥

यसपछि स्त्रीरोगका बारेमा पहिलेका शास्त्र अनुसार बताइन्छ । रजरोग आठ प्रकारका हुन्छन् । वातजन्य, पित्तजन्य, कफजन्य, पूयाभ, कुणप, गन्थि, क्षीण र मलसम ।

रक्तप्रदर रोग

तथा च रक्तप्रदरश्चतुर्विधमुदाहृतम् ।
वातपित्तकफैस्त्रेधा चतुर्थं सन्निपाततः ॥१७६॥

रजस्वलामा हुने अनियमितताका रोग चार किसिमका हुन्छन् । वातजन्य, पित्तजन्य, कफजन्य र सन्निपातजन्य ।

### योनिरोग

**विंशतिर्योनिरोगाः स्युर्वातात्पित्तात्कफादपि ।**
**सन्निपाताच्च रक्ताच्च लोहितक्षयतस्तथा ॥१७७॥**
**शुष्का च वामिनी चैव षण्ढी चान्तर्मुखी तथा ।**
**सूचीमुखी विप्लुता च पुत्रघ्नी च परिप्लुता ॥१७८॥**
**उपप्लुता प्राक्चरणा महायोनिश्च कर्णिका ।**
**स्यान्नन्दा चातिचरणा योनिरोगा इतीरिताः ॥१७९॥**

योनिरोग बीस किसिमका हुन्छन् । वातजन्य, पित्तजन्य, कफजन्य, सन्निपातजन्य, रक्तजन्य, लोहितक्षाया, शुष्का, वामिनी, षण्ढी, अन्तर्मुखी, सूचीमुखी, विप्लुता, पुत्रघ्नी, परिप्लुता, उपप्लुता, प्राक्चरणा, महायोनि, कर्णिका, स्यान्नन्दा र अतिचरणा ।



### योनिकन्द रोग

**चतुर्विधं योनिकन्दं वातपित्तकफैस्त्रिधा ।**
**चतुर्थं सन्निपातेन...।**

वात, पित्त, कफ र सन्निपातजन्य गरी योनिकन्द रोग चार प्रकारका हुन्छन् ।

### गर्भरोग

**...तथाष्टौ गर्भजा गदाः ॥१८०॥**
**उपविष्टकगर्भः स्यात्तथा नागोदरः स्मृतः ।**
**मक्कल्लो मूढगर्भश्च विष्टम्भो गूढगर्भकः ॥१८१॥**
**जरायुदोषो गर्भस्य पातश्चाष्टमकः स्मृतः ।**

गर्भका रोग आठ प्रकारका हुन्छन् । उपविष्टकगर्भ, नागोदर, मक्कल्ल, मूढगर्भ, विष्टम्भ, गूढगर्भक, जरायुदोष र गर्भपात ।

स्तनरोग

**पञ्चैव स्तनरोगाः स्युर्वातात्पित्तात्कफादपि ॥१८२॥**
**सन्निपातात्क्षताच्चैव...।**

वात, पित्त, कफ, सन्निपात र घाउचोटकजन्य गरी स्तनका रोग पाँच किसिमका हुन्छन् ।

स्तन्यरोग

**...तथा स्तन्योद्भवा गदाः ।**
**बालरोगेषु कथिताः...।**

दूधसम्बन्धी पाँच प्रकारका रोगका बारेमा बालरोग बताउँदा बताई सकियो ।



स्त्रीमा मानसिक समस्याले उत्पन्न हुने रोग

**...स्त्रीदोषाश्चत्रयः स्मृताः ॥१८३॥**
**अदक्षपुरुषोत्पन्नः सपत्नीविहितस्तथा ।**
**दैवाज्जातस्तृतीयस्तु...।**

अदक्षपुरुषोत्पन्न, सपत्नीविहित र भाग्यजन्य गरी तीन प्रकारका स्त्रीका रोग हुन्छन् ।

व्याख्याः (क) अदक्षपुरुषोत्पन्न दुःख :- ग्राम्यधर्ममा स्त्रीको चाहना वा सन्तुष्टी मतलब नगर्ने मूर्ख लोग्नेका कारण पीर गर्दै हुने रोग । (ख) सपत्नीविहित :- लोग्नेले सौता हालेर वा हाल्ने डरले वा आफूले पाउनुपर्ने माया नपाउनाले वा माया बाँडिनाले पर्ने पीरका कारण हुने रोग । (ग) भाग्यजन्य :- पति वा आश्रित नातेदारको मृत्युमा एक्लो महशूष गर्दै पीर गरी उत्पन्न हुने रोग ।

### सूतिकारोग

**...तथा ये सूतिकागदाः ॥१८४॥**
**ज्वरादयश्चिकित्स्यास्ते यथादोषं यथाबलम् ।**

सुत्केरी भएपछि हुने जरो आदि रोगलाई सूतिका रोग भनिन्छ । यी रोगको अवस्था हेरी उपचार गर्नुपर्दछ ।

### बालरोग

**द्वाविंशतिर्बालरोगास्तेषु क्षीरालसास्त्रयः ॥१८५॥**
**वातात्पित्तात्कफाच्चैव दन्तोद्भेदश्चतुर्थकः ।**
**दन्तघातो दन्तशब्दोऽकालदन्तोऽहिपूतनम् ॥१८६॥**
**मुखपाको मुखस्रावो गुदपाकोपशीर्षकौ ।**
**पार्श्वारुणस्तालुकण्टो विच्छिन्नं पारिगर्भिकः ॥१८७॥**

**दौर्बल्यं गात्रशोषश्च शय्यामूत्रं कुकूणकः ।**
**रोदनश्चाजगल्ली स्यादिति द्वाविंशतिः स्मृताः ॥१८८॥**

बालकलाई हुने रोग बाईस प्रकारका हुन्छन् । दूध पिएका कारण हुने वातजन्य, पित्तजन्य र कफजन्य गरी तीन; दन्तोद्भेद, दन्तघात, दन्तशब्द, अकालदन्त, अहिपूतन, मुखपाक, मुखस्राव, गुदपाक, उपशीर्षक, पार्श्वारुण, तालुकण्ट, विच्छिन्न, पारिगर्भिक, दौर्बल्य, गात्रशोष, शय्यामूत्र, कुकूणक, रोदन र अजगल्ली ।

### बालग्रह रोग

**तथा बालग्रहाः ख्याता द्वादशैव मुनीश्वरैः ।**
**स्कन्दग्रहो विशाखः स्यात्स्वग्रहश्च पितृग्रहः ॥१८९॥**
**नैगमेयग्रहस्तद्वच्छकुनिः शीतपूतना ।**
**मुखमण्डितिका तद्वत्पूतना चान्धपूतना ॥१९०॥**

**रेवती चैव सङ्ख्याता तथा स्याच्छुष्करेवती ।**

ग्रहका कारण बालकलाई हुने बालग्रह रोग बाह्र किसिमका हुन्छन् । स्कन्दग्रह, विशाखग्रह, स्वग्रह, पितृग्रह, नैगमेयग्रह, शकुनि, शीतपूतना, मुखमण्डिति(नि)का, पूतना, अन्धपूतना, रेवती र शुष्करेवती ।

गोडाका रोग

**तथा चरणभेदास्तु वातरक्तादिकाश्च ये ॥१९१॥**
**द्विचत्वारिंशदुक्तास्ते रोगेष्वेव मुनीश्वरैः ।**

श्रेष्ठ मुनिजनले वातरक्त आदि बयालीस प्रकारका रोग गोडामा हुने कुरा बताएका छन् ।

वातविकार वा वातरोग

**द्विषष्टिर्दोषभेदाः स्युः सन्निपातादिकाश्च ये ॥१९२॥**

**तेऽपि रोगेषु गणिताः पृथक्प्रोक्ता न ते क्वचित् ।**

सन्निपात आदिले हुने बैसठ्ठी प्रकारका वात आदि रोगका प्रकार ऋषिहरूले बेग्लै कतै बताएका छैनन् । यी रोगलाई गोडाका रोगमा र वातव्याधिमा गणना गरिएको पाइन्छ ।

पञ्चकर्मजन्य रोग

**हीनमिथ्याऽतियोगानां भेदैः पञ्चदशोदिताः ॥१९३॥**
**पञ्चकर्मभवा रोगा रोगेष्वेव प्रकीर्त्तिताः ।**

पञ्चकर्म (बान्ता गराउने, छेराउने, निरूहणवस्ति, अनुवासनवस्ति र नस सुँघाउने) मा हुने हीनयोग, मिथ्यायोग र अतियोगले तीन किसिमका रोग हुने गर्दछ । पाँच कर्ममा गरी यी पन्ध्र थरी हुन्छ । यसको मर्म त्यही रोगबाट थाहा हुन्छ जे का लागि यी कर्म पहिले गरिएका हुन्छन् ।

स्नेहादी उपचारका कारणले हुने रोग

स्नेहस्वेदौ तथा धूमो गण्डूषोऽञ्जनतर्पणे ॥१९४॥
पीडा अष्टादशैतज्जास्ताश्च रोगेषु लक्षिताः ।

स्नेहपान, पसिना बगाउने कार्य, धूमपान, कुला गर्ने काम,, गाजल लगाउने काम र तर्पणमा पनि हरेकको हीनयोग, मिथ्यायोग र अतियोगले कुल अठार प्रकारका रोग हुने गर्दछ । यिनको विवरण पनि यी रोग बताउँदा खेरी नै समावेश गरिएका छन् ।

धेरै चिसो, तातो आदिले हुने रोग

शीतोपद्रव एकः स्यादेकश्चोष्णोद्भवो मतः ॥१९५॥
शल्योपद्रव एकश्च क्षाराच्चैकः स्मृतस्तथा ।

अति चिसो लाग्नाले एक र अति गर्मी भएर एक किसिमको रोग हुन्छ । नङ, कपाल, हाड आदि कुनै कुरा पेटभित्र पुग्नाले वा बिझ्नाले उत्पन्न हुने रोग चार प्रकारका हुन्छन् ।



विषरोग

स्थावरञ्जङ्गमञ्चैव कृत्रिमञ्च त्रिधा विषम् ॥१९६॥
तेषाञ्च कालकूटाद्यैर्नवधा स्थावरं विषम् ।
जङ्गमं बहुधा प्रोक्तन्तत्र लूता भुजङ्गमाः ॥१९७॥
वृश्चिका मूषिकाः कीटाः प्रत्येकन्ते चतुर्विधाः ।
दंष्ट्राविषं नखविषं बालशृङ्गास्थिभिस्तथा ॥१९८॥
मूत्रात्पुरीषाच्छुक्राच्च दृष्टेर्निश्वासतस्तथा ।
लालायाः स्पर्शतस्तद्वत्तथा शङ्काविषं मतम् ॥१९९॥

स्थावर (निर्जीव), जङ्गम (सजीव) र कृत्रिम गरी तीन प्रकारका विष हुन्छन् । तिमध्ये कालकूट आदि स्थावर विष नौ प्रकारका हुन्छन् । जङ्गम विष धेरै किसिमको हुन्छ । त्यसमा माकुरो, सर्प, बिच्छी, मुसा, किरा आदि प्रत्येकको विष त्रिदोष र सन्निपातजन्य गरी चार

चार प्रकारका हुन्छन् । दाँत, नङ, रौं, सिङ, हाड तथा मूत्र, दिसा, शुक्र, दृष्टि, सास, थुक र स्पर्शमा हुने गरी विष हुने स्थान जीव अनुसार फरक फरक हुन्छ । विष लागेको शङ्कै शङ्कामा शरीरमा वायुविकार भई पूरै शरीर सुन्निने र जरो आदि आउने विषरोगलाई शङ्काविष भनिन्छ ।

**कृत्रिमं द्विविधं प्रोक्तं गरदूषीविभेदतः ।**
**सप्तधातुविषं ज्ञेयं तथा सप्तोपधातुजम् ॥२००॥**
**तथैवोपविषेभ्यश्च जातं सप्तविधं मतम् ।**
**दुष्टनीरविषश्चैकं तथैकं दग्धजं विषम् ॥२०१॥**

कृत्रिम विष दुई किसिमको हुन्छ । गर र दूषी । शुद्धी नगरी सुन आदि सात किसिमका धातु तथा हरिताल आदि सात उपधातुको भस्म खानाले, आँक आदि अशुद्ध सात प्रकारका उपविष खानाले पनि विषले जस्तै पीडा दिन्छ । यसैले यिनलाई पनि विष नै मानिन्छ । प्रदूषित पानी प्रयोग गर्नाले तथा विषाक्त हतियारले चोटपटक लाग्नाले पनि विष लाग्दछ, यस्तो विषलाई क्रमशः जलविष र अस्त्रज विष भनिन्छ ।



**कपिकच्छुभवा कण्डूर्दुष्टनीरभवा तथा ।**
**तथा सूरणकण्डूश्च शोथो भल्लातजस्तथा ॥२०२॥**

काउसोको भुस (वा कपास), प्रदूषित पानी र ओलले शरीरलाई छुँदा शरीर अति नै चिलाउँदछ र डाह हुन्छ । यस्तै भलायोको गेडाको तेल छुनाले अङ्ग सुन्निन्छ र चिलाउँदछ । यस्ता विषलाई उपद्रव विष भनिन्छ ।

मद (नसा) का प्रकार

**मदश्चतुर्विधश्चान्यः पूगभङ्गाऽक्षकोद्रवैः ।**
**चतुर्विधोऽन्यो द्रव्याणां फलत्वङ्मूलपत्रजः ॥२०३॥**

सुपारी, भाङ, बर्रोको गुदी र कोदो खानाले बेग्लाबेग्लै चार किसिमको नसा लाग्दछ । अन्य विभिन्न द्रव्यका फल, बोक्रा, जरा र पातले लाग्ने गरी नसा चार किसिमका हुन्छन् ।

उपसंहार

**इति प्रसिद्धा गणिता ये किलोपद्रवा भुवि ।**
**असङ्ख्याश्चापरे धातुमूलजीवादिसम्भवाः ॥२०४॥**

प्रसिद्ध प्रसिद्ध रोगका सङ्ख्याका बारेमा बताइयो । यस बाहेकका सुन आदि धातु, हरिताल अदि उपधातु, विभिन्न वनस्पति, ओखती र जीवले गर्दा हुने रोग असङ्ख्य हुन्छन् ।

इति श्रीदामोदरसूनुना शाङ्गधरेण विरचितायां शाङ्गधरसंहितायां
पूर्वखण्डे रोगगणनानामसप्तमोऽध्यायः

✷

शाङ्गधर संहिताको पूर्वखण्ड अन्तर्गत सातौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷



शुरुदेखिको श्लोकको संख्याः-२४९+२०४=४५३

✷

इति शाङ्गधरसंहितायां पूर्वखण्डः समाप्तः

✷

शाङ्गधर संहिता अन्तर्गत पूर्वखण्डको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# अथ मध्यमखण्डः

# अथ प्रथमोऽध्यायः

## पहिलो अध्याय

### रस आदि

अथ पञ्चकषायाः (पाँच किसिमका काँडापानी)

**अथातः स्वरसः कल्कः क्वाथश्च हिमफाण्टकौ ।**
**ज्ञेयाः कषायाः पञ्चैते लघवः स्युर्यथोत्तरम् ॥१॥**

स्वरस, कल्क, क्वाथ, हिम र फाण्टलाई कषाय भनिन्छ भनी थाहा पाउनू । यी क्रमशः पचाउन हलुका हुन्छन् ।

### स्वरसको परिभाषा

**आहतात्तत्क्षणाकृष्टाद्द्रव्यात्क्षुण्णात्समुद्धरेत् ।**
**वस्त्रनिष्पीडितो यः स रसः स्वरस उच्यते ॥२॥**

(किरा, आगो, हावा, पानी आदिले) नबिग्रिएको वनस्पति लेराई तुरुन्त कुटेर सफा कपडामा हाली निचोर्नू । यसरी निचोरिएको रसलाई “स्वरस” वा “अङ्गरस” भनिन्छ ।

### स्वरसको दोश्रो परिभाषा

**कुडवं चूर्णितं द्रव्यं क्षिप्तञ्च द्विगुणे जले ।**
**अहोरात्रं स्थितं तस्माद्भवेद्वा रस उत्तमः ॥३॥**

सुकेको औषधीको सोह्र तोला धुलो बनाउनू । फेरी त्यसको दोबर पानी हालेर त्यो धुलोलाई कुनै भाँडामा भिजाउनू । एक रात र एक दिन बितेपछि मिचेर त्यो पानीलाई सफा कपडाले छान्नू, यसलाई पनि “स्वरस” भनिन्छ ।

स्वरसको तेश्रो परिभाषा

**आदाय शुष्कद्रव्यं वा स्वरसानामसम्भवे ।**
**जलेऽष्टगुणिते साध्यं पादशिष्टञ्च गृह्यते ॥४॥**

आलो औषधी नपाउँदा सुकेको औषधी लेराई त्यसलाई त्यसको आठ गुना पानीमा हालेर उमाल्नू । एक चौथाई पानी बाँकी भएपछि झिकेर छान्नू । यो तेश्रो प्रकारको "स्वरस" हो ।

स्वरस सेवन गर्ने मात्रा

**स्वरसस्य गुरुत्वाच्च पलमर्धं प्रयोजयेत् ।**
**निशोषितञ्चाग्निसिद्धं पलमात्रं रसं पिबेत् ॥५॥**

स्वरस पचाउन कठिन हुने हुनाले दुई तोला पिउने गर्नू । राती भिजाएर बिहान खाने स्वरस भए चार तोलासम्म पिउने गर्नू ।



स्वरसमा हालिने अरु कुराको परिमाण

**मधु श्वेता गुडं क्षाराञ्जीरकं लवणन्तथा ।**
**घृतं तैलञ्च चूर्णादीन्कोलमात्रान् रसे क्षिपेत् ॥६॥**

स्वरसमा मह, मिस्री, सक्खर, क्षार, जीरा, नुन, घिउ, तेल वा अरु केही धुलो मिसाउने हो भने एक कोल (रोग र रोगीको अवस्था हेरी दुई तोला) मिसाउनू ।

गुर्जो र अमलाको स्वरस : प्रमेहको ओखती

**अमृताया रसः क्षौद्रयुक्तः सर्वप्रमेहजित् ।**
**हरिद्रा चूर्णयुक्तो वा रसो धात्र्याः समाक्षिकः ॥७॥**

गुर्जोको स्वरसमा मह मिसाएर पिउने गरे सबै प्रकारको प्रमेह नाश हुन्छ । अमलाको स्वरसमा बेसार र मह मिसाएर पिउने गरे पनि सबै प्रकारका प्रमेह निको हुन्छ ।

असुरोको स्वरस

**वासकस्वरसः पेयो मधुना रक्तपित्तजित् ।**
**ज्वरकासक्षयहरः कामलाश्लेष्मपित्तहा ॥८॥**

असुरोको स्वरसमा मह मिसाएर पिउने गरे रक्तपित्त, जरो, खोकी र क्षयरोग ठिक हुन्छ । यसले कमलपित्त, कफविकार र पित्तविकार समेत ठिक गर्दछ । (असुरोको स्वरस दुई तोला र मह एक तोलाको तीनभागको दुई भाग लिनू) ।

कमलपित्त रोगमा स्वरस

**त्रिफलाया रसः क्षौद्रयुक्तो दार्वीरसोऽथ वा ।**
**निम्बस्य वा गुडूच्या वा पीतो जयति कामलाम् ॥९॥**



त्रिफला वा चुत्रो वा नीम वा गुर्जोको स्वरसमा मह मिसाएर पिउने गरे कमलपित्त रोग निको हुन्छ ।

विषमज्वरमा स्वरस

**पीतो मरिचचूर्णेन तुलसीपत्रजो रसः ।**
**द्रोणपुष्पीरसो वाऽपि निहन्ति विषमज्वरान् ॥१०॥**

तुलसीपत्रको वा गुम्पातीको स्वरसमा कालो मरिचको धुलो मिसाएर पिउने गरे विषमज्वर निको हुन्छ ।

रक्तातीसारमा स्वरस

**जम्ब्वाम्रामलकीनाञ्च पल्लवोत्थो रसो जयेत् ।**

**मध्वाज्यक्षीरसंयुक्तो रक्तातीसारमुल्बणम् ॥११॥**

जामुनु, आँप र अमला : यी तीनको पातको स्वरसमा मह, घिउ र दूध मिसाएर पिउने गरेमा गढेको रक्तातिसार पनि निको हुन्छ ।

अतिसारमा स्वरस

**स्थूलबब्बूलिकापत्ररसः पानाद्व्यपोहति ।**
**सर्वातिसारान् श्योनाककुटजत्वग्रसोऽथवा ॥१२॥**

ठूलो जातको बब्बूलिका (?) का पातको अथवा टटेलो वा ठूलोकुरो (इन्द्रजौ) को बोक्राको स्वरस पिएमा सबै खालका अतिसार निको हुन्छ ।

अदुवाको स्वरस

**आर्द्रकस्वरसः क्षौद्रयुक्तो वृषणवातनुत् ।**

**श्वासकासारुचीर्हन्ति प्रतिश्यायं व्यपोहति ॥१३॥**

अदुवाको स्वरसमा मह मिसाएर पिउने गरे अण्डकोशको वातरोग, दम, खोकी, अरुची र पिनास भगाउँदछ ।

शूलरोगमा स्वरस

**बीजपूररसः पानान्मधुक्षारयुतो जयेत् ।**
**पार्श्वहृद्बस्तिशूलानि कोष्ठवातञ्च दारुणम् ॥१४॥**

बिमिरोको (फल वा जराको) स्वरसमा  मह र जवाखार मिसाएर पिउने गरे कोखा, मुटु एवं तल्लो पेटका शूल र पेटमा मडारिने पुरानो वायुरोग नाश हुन्छ ।

पित्तशूल र अपचीमा स्वरस

**शतावर्याश्च मधुना पित्तशूलहरो रसः ।**

**निशाचूर्णयुतः कन्यारसः प्लीहाऽपचीहरः ॥१५॥**

कुरिलोको स्वरस महसँग मिलाएर पिउने गरे पित्तविकारले हुने शूलरोग निको हुन्छ । घिउकुमारीको स्वरसमा बेसार मिसाएर पिउने गरे फियोका रोग निको हुन्छन् । यसले अपची (घाँटीमा माला लगाए जसरी खटिरा आई फोका उठेर पीप बग्ने रोग) पनि निको हुन्छ ।

अपची, गण्डमाला र कमलपित्तमा स्वरस

**अलम्बुषायाः स्वरसः पीतो द्विपलमात्रया ।**
**अपचीगण्डमालानां कामलायाश्च नाशनः ॥१६॥**

गोरखमुण्डीको स्वरस आठ तोला पिउने गरे अपची, गण्डमाला र कमलपित्त ठिक गर्दछ । (गण्डमालाको एक प्रकार अपची हो) ।



सूर्यावर्त र अधा दुख्ने रोगमा स्वरस

**शश(रसो)मुण्ड्या सकोष्णो वा मरिचैरवधूलितः ।**
**जयेत् सप्तदिनाभ्यासात्सूर्यावर्तार्धभेदकौ ॥१७॥**

गोरखमुण्डीको स्वरसलाई मनतातो पारी कालो मरिचको धुलो मिसाएर पिउने गरे एक हप्तामा सूर्यावर्त र अधा दुख्ने रोग निको हुन्छ । (सूर्यावर्त :-जति जति घाम माथि आयो उतीउती टाउको दुख्दै जाने र घाम अस्ताउँदै गएपछि कम हुँदै जाने रोग ।)

पागलपन वा मानसिक रोगमा स्वरस

**ब्राह्मीकूष्माण्डषड्ग्रन्थाशङ्खिनीस्वरसाः पृथक् ।**
**मधुकुष्ठयुताः पीताः सर्वोन्मादापहारिणः ॥१८॥**

ब्राह्मी, भुइँ कुभिण्डो, बोझ्रो वा बोधो, सिन्काहुली यी द्रव्यको बेग्लाबेग्लै स्वरस निकाल्नू र दिनहुँ कुनै एक स्वरसमा मह मिसाएर पिउने गरे सबै किसिमका उन्माद (पागलपन) ठिक हुन्छ ।

कोदोको मद नाशक स्वरस

**कूष्माण्डकस्य स्वरसो गुडेन सह योजितः ।**
**दुष्टकोद्रवसञ्जातमदं पानाद्व्यपोहति ॥१९॥**

भुइँकुभिण्डोको स्वरसमा सक्खर मिसाएर पिउने गरे कोदाजन्य पदार्थको सेवनले हुने मद नाश हुन्छ ।

हतियार आदिले काटेको घाउको पीडा कम गर्ने स्वरसः

**खड्गादिच्छिन्नगात्रस्य तत्कालं पूरितो व्रणः ।**
**गाङ्गेरुकीमूलरसैर्जायते गतवेदनः ॥२०॥**



तरबार आदि हातहतियारले काट्दा तुरुन्त गुनालु (बलुविशेष) को स्वरस त्यो काटेको ठाउँमा भर्नाले दुख्न बन्द हुन्छ ।

पुटपाक विधि
पुटपाकविधिको महत्व

**पुटपाकस्य कल्कस्य स्वरसो गृह्यते यतः ।**
**अतस्तु पुटपाकानां युक्तिरत्रोच्यते मया ॥२१॥**

पुटपाक र बोक्राको पनि स्वरस निकालिने गरिन्छ त्यसैले यो विधि मैले यहाँ बताउन खोजेको हुँ ।

पुटपाक विधि

**पुटपाकस्य मात्रेयं लेपस्याङ्गारवर्णता ।**

**लेपञ्च द्व्यङ्गुलं स्थूलं कुर्याद्वाऽङ्गुष्ठमात्रकम् ॥२२॥**
**काश्मरीवटजम्ब्वादिपत्रैर्वेष्टनमुत्तमम् ।**
**पलमात्रं रसो ग्राह्यः कर्षमात्रं मधु क्षिपेत् ॥२३॥**
**कल्कचूर्णद्रवाद्यास्तु देयाः स्वरसवद् बुधैः ।**

गिलो वा ताजा वनस्पतिलाई लेराई कुटेर ससाना गोली बनाउनू । त्यो गोलीलाई खमारी, बर्रो, जामुनु वा आँपको पातले बेर्नू । अनि दुई अमल वा बूढी औंलो जति बाक्लो हुने गरी माटोले वरिपरि लिप्नू । त्यसपछि यसलाई आगाको भुङ्गोमा माटो रातो नहुँदासम्म पोल्नू । त्यसपछि बाहिर निकाली माटो र छोपिएको पात हटाई वनस्पतिलाई निचोर्नू । वनस्पति सुकेर रस निचोर्न नसकिने भए पानी अथवा तोकिएको द्रव्यमा मिसाएर पिँध्नू । यस्तो रस एक पल (करिब तीन तोला) पिउने गर्नू । यो रसमा मह मिसाउने हो भने एक कर्ष मात्र मिसाउनू । कल्क, चूर्ण वा द्रव जस्ता कुरा स्वरसमा जति हाल्नू भनिएको छ यसमा पनि त्यति नै हाल्नु पर्दछ भनी विद्वानहरू भन्दछन् ।

**सबै किसिमका अतिसारमा पुटपाक**



**तत्कालाकृष्टकुटजत्वचं तण्डुलवारिणा ॥२४॥**
**पिष्टाश्चतुष्पलमितां जम्बूपल्लववेष्टिताम् ।**
**सूत्रेण बद्धां गोधूमपिष्टेन परिवेष्टिताम् ॥२५॥**
**लिप्ताञ्च घनपङ्केन गोमयैर्वह्निना दहेत् ।**
**अङ्गारवर्णां च मृदं दृष्ट्वा वह्नेः समुद्धरेत् ॥२६॥**
**ततो रसं गृहीत्वा च शीतं क्षौद्रयुतं पिबेत् ।**
**जयेत्सर्वानतीसारान्दुस्तरान्सुचिरोत्थितान् ॥२७॥**

ठूलो कुरो (इन्द्रजौ) को रुखको ताजा बोक्रा चार पल लेराई त्यसलाई तुरुन्त चौलानी-पानीमा मिसाएर पिसी गोली बनाउनू । त्यसपछि त्यसलाई जामुनुको पातले बेरी धागोले बाँध्नू । त्यसपछि वरिपरि पहिले गहुँको लेदो पिठोले र त्यसपछि बाक्लो गरी गिलो माटोले लिप्नू । त्यसपछि रातो नुहँदासम्म पोल्नू । अनि माटो र पात हटाई कुनै सफा

कपडामा हालेर त्यो गोलीलाई निचोर्नू । सेलाएपछिको यो रस महसँग मिसाएर पिउनाले अति नै कठिन खालको र धेरै पुरानो आउँ (अतिसार) पनि निको हुन्छ ।

### चामल पखाल्ने विधि

**कण्डितं तण्डुलपलं जलेऽष्टगुणिते क्षिपेत् ।**
**भावयित्वा जलं ग्राह्यं देयं सर्वत्र कर्मसु ॥२८॥**

राम्रोसँग निफनेर केलाइएको एक पल (चालीस ग्राम) चामलमा आठ पल (तीन सय बीस ग्राम) पानी मिसाएर हातले माड्नू, यो चौलानीलाई सबै खालका तोकिएका काममा प्रयोग गर्नू ।

### टटेलोको पुटपाक : सबै खालका अतिसारको ओखती

**अरलूत्वक्कृतश्चैव पुटपाकोऽग्निनदीपनः ।**
**मधुमोचरसाभ्याञ्च युक्तः सर्वातिसारजित् ॥२९॥**



टटेलाको रुखको ताजा बोक्रालाई लेराई तत्काल कुटेर गोली बनाउनू । यसपछि उपरोक्त पुटपाक विधिले पुटपाक गर्नू । रस निकाली मह र  सिमलको खोटोको धुलो मिसाएर पिए सबै खालका अतिसार निको हुन्छ ।

### अतिसारमा प्रयोग गरिने अर्को पुटपाक

**न्यग्रोधादेश्च कल्केन पूरयेद्गौरतित्तिरैः ।**
**निरन्त्रमुदरं सम्यक्पुटपाकेन तत्पचेत् ॥३०॥**
**तत्कल्कस्य रसः क्षौद्रयुक्तः सर्वातिसारनुत् ।**

बर, डुम्री, पीपल, पारीश पीपल र पाखरीको बोक्रालाई धुलो बनाई पानीमा पिँध्नू र गोली बनाउनू । त्यसपछि यसलाई आन्द्राभुँडी निकालिएको सेतो तित्रोको पेटमा हाली पुटपाक गर्नू । अनि गोली निकालेर रस निचोरी मह मिसाएर पिउनू, सबै खालका अतिसार निको हुन्छ ।

अतिसारमा प्रयोग गरिने दारिमको पुटपाक

**पुटपाकेन विपचेत्सुपक्वं दाडिमीफलम् ॥३१॥**
**तद्रसो मधुसंयुक्तः सर्वातीसारनाशनः ।**

अनारको पाकेको फललाई माथि बताइएको पुटपाकको विधिले पुटपाक गर्नू । त्यसपछि पात, माटो आदि निकालेर त्यो दारिमलाई निचोर्नू । यो निचोरिएको रसमा मह मिसाएर पिए सबै खालका अतिसार नाश हुन्छन् ।

वाकवाकी रोगमा पुटपाक

**बीजपूराम्रजम्बूनां पल्लवानि जटाः पृथक् ॥३२॥**
**विपचेत्पुटपाकेन क्षौद्रयुक्तश्च तद्रसः ।**
**छर्दिं निवारयेद् घोरां सर्वदोषसमुद्भवाम् ॥३३॥**



बिमिरो, आँप र जामुनुका पात र जरा लेराई आलोमै पिसेर त्यसको पुटपाक गर्नू । यसरी तयार पारिएको रस महसँग मिसाएर पिउनाले अत्यन्त कडा र अन्य दोष सहितको वाकवाकी लाग्ने रोग पनि निको हुन्छ ।

विभिन्न रोगमा असुरोको पातको पुटपाक

**पिष्टानां वृषपत्राणं पुटपाकरसो हिमः ।**
**मधुयुक्तो जयेद्रक्तपित्तकासज्वरक्षयान् ॥३४॥**

असुरोको ताजा पातको पुटपाक विधिले निकालिएको रसमा मह मिसाएर पिए रक्तपित्त, दम, जरो र क्षयरोग ठिक हुन्छ ।

दम र खोकीमा कण्टकारीको पुटपाक

**पाचेत्क्षुद्रां सपञ्चाङ्गां पुटपाकेन तद्रसः ।**

**पिप्पली चूर्णसंयुक्तः कासश्वासकफापहः ॥३५॥**

ठूलो खालको कण्टकारीको बोटै समेत उखेलेर लेराउनू । यसका जरा, डाँठ, पात, फूल र फल सहित पिँधेर पुटपाक गर्नू । यसरी बनाइएको रसमा पिप्ला मिसाएर पिए खोकी, दम र कफविकार नाश हुन्छ ।

खोकीमा बर्रोको पुटपाक

**बिभीतकफलं किञ्चिद् घृतेनाभ्यज्य लेपयेत् ।**
**गोधूमपिष्टेनाङ्गारैर्विपचेत्पुटपाकवत् ॥३६॥**
**ततः पक्वं समुद्धृत्य त्वचन्तस्य मुखे क्षिपेत् ।**
**कासश्वासप्रतिश्यायस्वरभङ्गाञ्जयेत्ततः ॥३७॥**

बर्रोका गेडालाई हल्का घिउ दलेर त्यसमाथि गहुँको पिठोको लेप दली पुटपाक बनाउनू । त्यसपछि यसलाई निकालेर टुक्रा पारी मुखमा लिएर रस चुस्ने गरे दम, खोकी, पिनास र स्वर बसेको ठिक गर्दछ ।



आउँ परेर हुने छेरपटीमा पुटपाक

**चूर्णं किञ्चिद् घृताभ्यक्तं शुण्ठ्या एरण्डजैर्दलैः ।**
**वेष्टितं पुटपाकेन विपचेन्मन्दवह्निना ॥३८॥**
**तत उद्धृत्य तच्चूर्णं ग्राह्य प्रातः सितान्वितम् ।**
**तेन यान्ति शमं पीडा आमातीसारसम्भवाः ॥३९॥**

सुठोमा अलिकति घिउ मिसाएर गोली बनाउनू । त्यसलाई अँडिरको पातमा बेरेर धागोले बाँधी पुनः त्यसमाथि माटोको लेप लगाउनू । यसपछि पुटपाक गर्नू । पछि निकालेर सुठोलाई दिनहुँ बिहान मिस्रीसँग खानू । यसले आमातिसारले हुने दुःख नाश गर्दछ ।

आमवात रोगमा पुटपाकः

**शुण्ठीकल्कं विनिक्षिप्य रसैरेरण्डमूलजैः ।**
**विपचेत्पुटपाकेन तद्रसः क्षौद्रसंयुतः ॥४०॥**
**आमवातसमुद्भूतां पीडां जयति दुस्तराम् ।**

अरिडको आलो जराको रसमा सुठो मिसाएर गोली बनाई पुटपाकका विधिले रस निकाल्नू । त्यो रसमा मह मिसाएर खाए आमवातको पीडा शान्त हुन्छ । (आमवात : आउँको कारण हुने वातरोग जसमा शरीरका जोर्नीहरू दुख्ने गर्दछन् ।)

अल्काईमा पुटपाक

**सौरणं कन्दमादाय पुटपाकेन पाचयेत् ॥४१॥**
**सतैललवणस्तस्य रसश्चार्शोविकारनुत् ।**

ओलको कन्द लेराएर गोली बनाई पुटपाक गर्नू र रस निचोर्नू । त्यसमा तिलको तेल र सिधेनुन हाली पिउनाले अल्काई रोगका विकार नाश हुन्छन् ।



मुटुको शूलमा पुटपाक

**शरावसम्पुटे दग्धं शृङ्गं हरिणजं पिबेत् ॥४२॥**
**गव्येन सर्पिषा युक्तं हृच्छूलं नाशयेद् ध्रुवम् ।**

कुनै माटाका भाँडामा हरिणका सिङ राखी अर्को माटाको भाँडाले छोपी आगामा तताएर डढाउनू । यो खरानीलाई गाईको घिउ मिसाएर खाने गर्नाले निश्चय नै मुटु सुन्निएको ठिक हुन्छ ।

इति श्रीशार्ङ्गधरसंहितायां मध्यखण्डे स्वरसादिकल्पना नाम प्रथमोऽध्यायः

✷

शार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत पहिलो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-४५३+४२.५=४९५.५

✷

# अथ द्वितीयोऽध्यायः

## दोश्रो अध्याय

### क्वाथकल्पना (काँढापानी वा काँढा)

**पानीयं षोडशगुणं क्षुण्णे द्रव्यपले क्षिपेत् ।**
**मृत्पात्रे क्वाथयेद् ग्राह्यमष्टमांशावशेषितम् ॥१॥**
**तज्जलं पाययेद्धीमान्कोष्णं मृद्वग्निसाधितम् ।**

चालीस ग्राम औषधीलाई छ सय चालीस ग्राम पानीमा हाली माटाको भाँडामा मन्द आँचमा तताउनू । जब अस्सी ग्राम पानी बाँकी रहन्छ तब त्यो माटाको भाँडो झिक्नू र औषधी कपडाले छान्नू । (यसलाई काँढा वा काँढापानी वा क्वाथ भनिन्छ) ।

### काँढापानीका पर्यायवाची नाम

**शृतः क्वाथः कषायश्च निर्यूहः स निगद्यते ॥२॥**

शृत, क्वाथ, कषाय र निर्यूह : यी काँढापानीका पर्यायवाची नाम हुन् ।

### काँढा पिउने समय

**आहाररसपाके च सञ्जाते द्विपलोन्मितम् ।**
**वृद्धवैद्योपदेशेन पिबेत्क्वाथं सुपाचितम् ॥३॥**

खाएको कुरा र त्यसको रस राम्ररी पचेपछि विज्ञ-वैद्यको सल्लाह अनुसार यस्तो काँढा अस्सी ग्राम पिउनू ।

### काँढामा हालिने मिस्री र महको मात्रा

**क्वाथे क्षिपेत्सितामंशैश्चतुर्थाष्टमषोडशैः ।**
**वातपित्तकफातङ्के विपरीतं मधु स्मृतम् ॥४॥**

काँढामा मिस्री हाल्ने हो भने, वातरोगमा काँढाको एक चौथाई, पित्तरोगमा काँढाको आठौँ भाग र कफरोगमा काँढाको सोह्रौँ भाग हाल्नू । मह हाल्ने हो भने यसको उल्टो मात्रामा अर्थात् वातमा सोह्रौँ भाग, पित्तमा आठौँ भाग र कफमा एक चौथाई हाल्नू ।

काँढामा हालिने जीरा आदिको परिमाण

**जीरकं गुग्गुलं क्षारं लवणञ्च शिलाजतु ।**
**हिङ्गु त्रिकटुकञ्चैव क्वाथे प्र(श)ाणोन्मितं क्षिपेत् ॥५॥**

जीरा, गोकुलधूप, क्षार, सिधेनुन, शिलाजित, हिङ र त्रिकटु (सुठो, मरिच र पिप्लाको धुलो) हाल्ने हो भने तीन ग्राम हाल्नू ।

काँढामा हालिने घिउ आदिको परिमाण

**क्षीरं घृतं गुडन्तैलं मूत्रं चान्यद् द्रवन्तथा ।**

**कल्कञ्चूर्णादिकं क्वाथे निक्षिपेत् कर्षसम्मितम् ॥६॥**

दूध, घिउ, सक्खर, तेल, मूत्र आदि जस्ता तरल पदार्थ हाल्ने हो भने बाह्र ग्राम हाल्नू ।

काँढा पकाउँदा छोपेर नपकाउनू

**स(अ)पिधानमुखे पात्रे जलं दुर्जरतां व्रजेत् ।**
**तस्मादावरणं त्यक्त्वा क्वाथादीनां विनिश्चयः ॥७॥** (प्रक्षिप्त श्लोक)

काँढा पकाउँदा छोपेर पकाए त्यो काँढा पचाउन कठिन हुन्छ त्यसैले काँढा पकाउँदा पकाउने भाँडालाई बिर्को आदिले छोप्नु हुँदैन (अथवा च्यादनी आदि जस्ता मुख खुल्ला नभएका भाँडामा काँढा पकाउनु हुँदैन) । काँढा पकाउँदाको यो नियम सबै काँढा पकाउँदा निश्चित रूपमा लागु हुन्छ ।

सबै खालका जरोमा गुर्जोको काँढा

**गुडूचीधान्यकारिष्टरक्तचन्दनपद्मकैः ।**
**गुडूच्यादिगणक्वाथः सर्वज्वरहरः स्मृतः ॥८॥**
**दीपनो दाहहृल्लासतृष्णाच्छर्द्यरुचीर्जयेत् ।**

गुर्जो, धनियाका गेडा, निमवृक्षका बोक्रा, पैयुँका बोक्रा र रक्तचन्दन सहितको काँढा (गुडूच्यादि क्वाथ) ले जठराग्निलाई बाल्दछ र सबै खालको जरो ठिक गर्दछ । यसले वाकवाकी लाग्ने र खान मन नलाग्ने रोग पनि नाश गर्दछ ।

सबै खालको जरोमा सुठो आदिको काँढा

**नागरं देवकाष्ठञ्च धान्यकं बृहतीद्वयम् ॥९॥**
**दद्यात्पाचनकं पूर्वं ज्वरितानां ज्वरापहम् ।** (कुनै प्रतिमा यो श्लोक छैन)

सुठो, देवदारु, धनिया, सानो कण्टकारी र ठूलो कण्टकारीको काँढा खाना पच्नुअघि पिउनाले जरो नाश गर्दछ ।

कण्टकारी आदिको काँढा

**क्षुद्रा किराततिक्तञ्च शुण्ठी छिन्ना च पौष्करम् ॥१०॥**
**कषाय एषां शमयेत्पीतश्चाष्टविधं ज्वरम् ।** (कुनै प्रतिमा यो श्लोक छैन)

ठूलो कण्टकारी, चिराइतो, सुठो, गुर्जो र अँडिरको जराको काँढाले आठ प्रकारका जरो ठिक गर्दछ ।

वातजरोमा गुर्जो आदिको काँढा

**गुडूचीपिप्पलीमूलनागरैः पाचनं स्मृतम् ॥११॥**
**दद्याद्वातज्वरे पूर्णलिङ्गे सप्तमवासरे ।**

गुर्जो, पिप्लाको जरा र सुठोको जराको काँढा : जरोले एक हप्ताको अवधि पार गरेपछि पिउनाले वातज्वर ठिक गर्दछ ।

वातजरोमा साकिनु आदिको काँढा

**शालपर्णी बला द्राक्षा (रास्ना) गुडूची सारिवा तथा ॥१२॥**
**आसां क्वाथं पिबेत् कोष्णं तीव्रवातज्वरच्छिदम् ।**

साकिनु, बलु, अङ्गूर (फ्याक्सेकन्द), गुर्जो र अनन्तमूलको मनतातो काँढाले कडा खालको वातज्वर ठिक हुन्छ ।

वातजरोमा खमारी आदिको काँढा

**काश्मरीसारिवा द्राक्षात्रायमाणाऽमृताभवः ॥१३॥**
**कषायः सगुडः पीतोवातज्वरविनाशनः ।**



खमारी, अनन्तमूल, फ्याक्सेकन्द, मुँडिलो र गुर्जोको काँढामा सक्खर मिसाएर पिए वातज्वर नाश हुन्छ ।

पित्तज्वरमा काफल आदिको काँढा

**कट्फलेन्द्रयवापाठातिक्तामुस्तैः शृतञ्जलम् ॥१४॥**
**पाचनं दशमेऽह्नि स्यात्तीव्रे पित्तज्वरे नृणाम् ।**

काफल, इन्द्रजौ, गानेगुर्जो, कुटकी र मोथेको काँढा कडा खालको पित्तज्वर आएको दश दिन बितेपछि पिउन दिनाले जरो निको हुन्छ ।

पित्तज्वरमा पित्तपापडा आदिको काँढा

**पर्पटो वासकस्तिक्ता कैरातो धन्वयासकः ॥१५॥**
**प्रियङ्गुश्च कृतः क्वाथ एषां शर्करया युतः ।**

**पिपासादाहपित्तास्रयुक्तं पित्तज्वरञ्जयेत् ॥१६॥**

पित्तपापडा, असुरो, कुटकी, चिराइतो, सिस्नु र दहिगुयैंलोको काँढामा सक्खर मिसाएर पिए तिर्खा, डाह र रक्तपित्त सहितको पित्तज्वर निको हुन्छ ।

पित्तज्वरमा अङ्गूर आदिको काँढा

**द्राक्षा हरीतकी मुस्तं कटुकी कृतमालकः ।**
**पर्पटश्च कृतः क्वाथ एषां पित्तज्वरापहः ॥१७॥**
**तृण्मूर्छादाहपित्तासृक्शमनो भेदनः स्मृतः ।**

अङ्गूर, हर्रो, मोथे, कुटकी, राजवृक्ष र पित्तपापडाको काँढाले पित्तज्वर नाश गर्दछ । यसले तिर्खारोग, बेहोस हुने रोग, डाह, पित्तविकार र रक्तविकार नाश गर्नुका साथै दिसा समेत खुकुलो पार्दछ ।

पित्तज्वरमा पित्तपापडाको काँढा



**एकः पर्पटकः श्रेष्ठः पित्तज्वरविनाशनः ॥१८॥**
**किं पुनर्यदि युज्येत चन्दनोशीरबालकैः ।** (प्रक्षिप्त श्लोक)

पित्तपापडा एउटैको काँढाले पित्तज्वर नाश गर्दछ भने यसमा चन्दन, खश र सुगन्धवाल मिसाएपछिको के कुरा गर्नु ?

कफज्वरमा बिमिरोका काँढा

**बीजपूरशिफापथ्यानागरग्रन्थिकैः शृतम् ॥१९॥**
**सक्षारं पाचनं श्लेष्मज्वरे द्वादशवासरे ।**

बिमिरोका जरा, हर्रो, सुठो र पिप्लाको जराको काँढामा जवाखार मिसाएर बाह्र दिनपछि पिउनाले कफज्वर नाश हुन्छ ।

कफज्वरमा चिराइतोको काँढा

**भूनिम्बनिम्बपिप्पल्यः शठी शुण्ठी शतावरी ॥२०॥**
**गुडूची बृहती चेति क्वाथो हन्यात्कफज्वरम् ।**

चिराइतो, नीम, पिप्ला, कपुरहलेदो, सुठो, सुप, गुर्जो र ठूलो कण्टकारीको काँढा पानी पिउनाले कफज्वर निको हुन्छ ।

कफज्वरमा पर्बल आदिको काँढा

**पटोलत्रिफलातिक्ताशठीवासाऽमृताभवः ॥२१॥**
**क्वाथो मधुयुतः पीतो हन्यात्कफकृतं ज्वरम् ।**

पर्बलको डाँठ, हर्रो, बर्रो, अमला, कुटकी, कपुरहलेदो, असुरो र गुर्जोको काँढामा मह मिसाएर पिए कफज्वर नाश हुन्छ ।



वातपित्तज्वरमा काँढा

**पर्पटाब्दामृताविश्वकिरातैः साधितञ्जलम् ॥२२॥**
**पञ्चभद्रमिदं ज्ञेयं वातपित्तज्वरापहम् ।**

पित्तपापडा, नागरमोथे, गुर्जो, सुठो र चिराइतोको संयुक्त नाम पञ्चभद्रक हो । यसको काँढाले वातपित्तज्वर नाश हुन्छ ।

कफवातज्वरोमा काँढा

**क्षुद्रा शुण्ठीगुडूचीनां कषायः पौष्करस्य च ॥२३॥**
**कफवाताधिके पेयो ज्वरे वाऽपि त्रिदोषजे ।**
**कासश्वासारुचिक्(ह)रे पार्श्वशूलविधायिनि ॥२४॥**

ठूलो कण्टकारी, सुठो, गुर्जो र अँडिरको मूल जरोको काँढा पिउनाले कफवातजन्य जरो र त्रिदोषजन्य जरो नाश हुन्छ । यसले खोकी, दम, अरुची र कोखाको शूललाई पनि ठिक गर्दछ ।

वातकफज्वरमा काँढापानी

आरग्वधकणामूलमुस्ततिक्ताभयाकृतः ।
क्वाथः शमयति क्षिप्रं ज्वरं वातकफोद्भवम् ॥२५॥
आमशूलप्रशमनो भेदी दीपनपाचनः ।

राजवृक्ष, पिप्लाको जरा, नागरमोथे, कुटकी र जङ्गीहर्रो मिसाई काँढा बनाएर पिए वातकफज्वर र आमजन्य शूल तुरुन्त निको हुन्छ । यो काँढाले दिसा खोल्दछ, दीपन र पाचन हुन्छ ।

पित्तश्लेष्मज्वरमा काँढापानी



अमृतारिष्टकटुकामुस्तेन्द्रयवनागरैः ॥२६॥
पटोलचन्दनाभ्याञ्च पिप्पलीचूर्णयुक्शृतम् ।
अमृताष्टकमेतच्च पित्तश्लेष्मज्वरापहम् ॥२७॥
छर्द्यरोचकहृल्लासदाहतृष्णानिवारणम् ।

गुर्जो, नीमको बोक्रा, कुटकी, नागरमोथा, इन्द्रजौ, सुठो, पर्बल (पात) र रातोचन्दन मिसाई पकाइएको काँढामा पिप्लाको धुलो मिसाएर पिए पित्तकफज्वर नाश हुन्छ । यसले वाकवाकी, अरुचि, छातीको थकावट, बाडुली, डाह र तिर्खा समेत ठिक गर्दछ ।

पित्तश्लेष्मज्वरमा काँढा

पटोलं चन्दनं मूर्वा तिक्ता पाठाऽमृतागणः ॥२८॥
पित्तश्लेष्मज्वरच्छर्दिदाहकण्डूविषापहः ।

पर्बल (पात), रक्तचन्दन, मरुई लहरो, कटुकी, गानेगुर्जो र गुर्जोको काँढा पकाएर पिए पित्तकफज्वर, वाकवाकी, डाह, शरीर चिलाउने रोग र विषको असर नाश हुन्छ ।

सबैखाले जरोमा कण्टकारी आदिको काँढा

**कण्टकारीद्वयं शुण्ठी धान्यकं सुरदारु च ॥२९॥**
**एभिः शृतं पाचनं स्यात् सर्वज्वरविनाशनम् ।**

सानो र ठूलो कण्टकारी, सुठो, धनिया र देवदारको काँढाले सबै खालका जरो ठिक हुन्छ । यो काँढालाई “पाचन” भनिन्छ ।

सन्निपातज्वरमा दशमूलको काँढा

**शालिपर्णीपृष्ठपर्णीबृहतीद्वयगोक्षुरैः ॥३०॥**
**विल्वाग्निमन्थश्योनाककाश्मरीपाटलायुतैः ।**
**दशमूलमिति ख्यातं क्वथितं तज्जलं पिबेत् ॥३१॥**
**पिप्पलीचूर्णसंयुक्तं वातश्लेष्मज्वरापहम् ।**
**सन्निपातज्वरहरं सूतिकादोषनाशनम् ॥३२॥**
**शोषशैत्यभ्रमस्वेदकासश्वासविकारनुत् ।**
**हृत्कम्पग्रहपार्श्वार्तितन्द्रामस्तकशूलहृत् ॥३३॥**

साकिनु, सतिबयर, ठूलो बिही, सानो बिही, गोखुर, बेल, अरणी, टटेलो, खमारी र पाडरीको जराको “दशमूल” नामक ओखती-समूहको काँढाले पिप्लासँग पिए वातश्लेमज्वर, सन्निपातज्वर, सुत्केरीका रोग, शरीर सुन्निने रोग, सर्दी, भ्रम, पसिना आइरहने रोग, खोकी र दम निको पार्दछ । यसले मुटु काम्ने रोग, ग्रहविकार, कोखा दुख्ने (पार्श्वार्ति), तन्द्रा र टाउकाको शूल ठिक गर्दछ ।

सन्निपातज्वरमा हर्रो आदिका काँढा

**अभयामुस्तधान्याकरक्तचन्दनपद्मकैः ।**

**वासकेन्द्रयवोशीरगुडूचीकृतमालकैः ॥३४॥**
**पाठानागरतिक्ताभिः पिप्पलीचूर्णयुक्शृतम् ।**
**पिबेत्त्रिदोषज्वरजित्पिपासाकासदाहनुत् ॥३५॥**
**प्रलापश्वासतन्द्राघ्नं दीपनं पाचनं परम् ।**
**विण्मूत्रानिलविष्टम्भवमिशोषारुचिच्छिदम् (रुचिं जयेत्) ॥३६॥**

हर्रो, नागरमोथे, धनियाँ, रक्तचन्दन, पैयुँ, असुरो, इन्द्रजौ, खस, गुर्जो, राजवृक्ष, गानेगुर्जो, सुठो र कुटकीको काँढालाई पिप्लाको धुलो मिसाएर पिए सन्निपातज्वर निको हुन्छ । यसले तिर्खा लागिरहने रोग, खोकी र डाह ठिक गर्दछ । बरबराउने रोग, दम र तन्द्रा पनि भगाउँदछ । यो काँढा अति नै दीपन र पाचन हुन्छ । साथै, यसले दिसा, पिसाब र वायु रोकिएको खुलाउँदछ; वाकवाकी, शरीर सुन्निएको र अरुचि पनि नाश गर्दछ ।

सन्निपातज्वरमा अष्टादशाङ्ग काँढा

**किरातकटुकीमुस्ताधान्येन्द्रयवनागरैः ।**

**दशमूलमहादारुगजपिप्पलिकायुतैः ॥३७॥**
**कृतः कषायः पार्श्वार्तिसन्निपातज्वरञ्जयेत् ।**
**कासश्वासवमीहिक्कातन्द्रा हृद्ग्रहनाशनः ॥३८॥**

चिराइतो, कुटकी, नागरमोथे, धनिया, इन्द्रजौ, सुठो, दशमूल, देवदार र गजपिप्पलीको काँढाले कोखाको शूल र सन्निपातज्वर नाश हुन्छ । यसले खोकी, दम, वाकवाकी, बाडुली, तन्द्रा र मुटुदुख्ने रोग पनि नाश गर्दछ ।

सन्निपातज्वर आदिमा पिप्ला आदिको काँढा

**पिप्पलीपिप्पलीमूलचव्यचित्रकनागरैः ।**
**वचासातिविषाऽजाजीपाठावत्सकरेणुकैः ॥३९॥** (प्रक्षिप्त श्लोक)
**किराततिक्तकं मूर्वा सर्षपा मरिचानि च ।**
**कटुकं पुष्करं भार्ङ्गी विडङ्गं कर्कटाह्वयम् ॥४०॥**

**अर्कमूलं बृहत्सिंही श्रेयसी सदुरालभा ।**
**दीप्यकश्चाजमोदा च शुकनासादिहिङ्गुभिः ॥४१॥**
**एतानि समभागानि गणोऽष्टाविंशको मतः ।**
**कषायमुपभुञ्जीत वातश्लेष्मज्वरापहम् ॥४२॥**
**हन्ति वातं तथा शीतं स्वेदजं प्रबलं कफम् ।**
**प्रलापश्चातिनिद्राश्च रोमहर्षारुची तथा ॥४३॥**
**महावातेऽपतन्त्रे च सर्वगात्रे च शून्यताम् ।**
**अयं सर्वज्वरान्हन्ति सन्निपातौँस्त्रयोदश ॥४४॥**

पिप्ला, पिप्लाको जरा, चाँभा, चितु, सुठो, बोझो, उत्तिस, जिरा, गानेगुर्जो, ठूलो कुरो, शीतलचिनी (रेणुका), चिराइतो, कुटकी, मरुई लहरो, सर्सिउँ, मरिच, कटुक (पुनः कटुकी), कूटको जरो, भारङ्गी, कालीकाठ (विडङ्ग), गुनाभा विशेष, आँकको जरा, ठूलो बिही, हर्रो, सिस्नु, ज्वानु, अजमोदा, टटेलो र हिङ बराबर मात्रामा हालिएको ओखतीलाई "अष्टाविंशति गण" भनिन्छ । यसको काँढाले वातकफज्वर नाश गर्दछ । वातविकार, चिसो लागेको, पसिना आइरहने र जमेको कफविकार नाश गर्दछ । बराबराउने रोग, धेरै सुत्ने रोग, रौं ठडिएर सिरिङ सिरिङ हुने रोग, अरुची, पुरानो वातरोग विशेष, अपतन्त्र रोग, शरीर लाटो हुने रोग तथा सबै तेह्र प्रकारका सन्निपातज्वर निको पार्दछ ।

ज्वानु आदिको काँढा

**यवानी पिप्पली वासा तथा वत्सकवल्कलः ।**
**एषां क्वाथं पिबेत् कासे श्वासे च कफजे ज्वरे ॥४५॥**

ज्वानु, पिप्ला, असुरोको पात र ठूलो कुरोको बोक्राको काँढा पिएमा खोकी, दम र कफज्वर नाश हुन्छ ।

काफल आदिको काँढा

**कट्फलाम्बुदभार्ङ्गीभिर्धान्यरोहिषपर्पटैः ।**

**वचा हरीतकीशृङ्गीदेवदारुमहौषधैः ॥४६॥**
**हिक्का (क्वाथ) कासं ज्वरं (कासजरं) हन्ति श्वासश्लेष्मगलग्रहान् ।**

काफल, नागरमोथे, भारङ्गी, धनियाँ, रोहिष झार (नपाए चिराइतो), पित्तपापडा, बोझो, हर्रो, उत्तिस, देवदारु र सुठोको काँढाले खोकी, जरो, दम, कफविकार र घाँटीका रोगहरू ठिक गर्दछ ।

गुर्जो र पित्तपापडाको काँढा

**क्वाथो जीर्णज्वरं हन्ति गुडूच्याः पिप्पलीयुतः ॥४७॥**
**तथा पर्पटजः क्वाथः पित्तज्वरहरः परः ।**
**किं पुनर्यदि युज्येत चन्दनोदीच्यनागरैः ॥४८॥**

गुर्जोको काँढापानीमा पिप्ला मिसाएर खाने गरे पुरानो (धेरै दिनसम्म आउने जरो, जीर्णज्वर) जरो निको हुन्छ । पित्तपापडाको काँढाले पित्तज्वर नाश गर्दछ । अझ यसमा रक्तचन्दन, सुगन्धवाल र सुठो मिसाएर काँढा बनाउने हो भने यो पित्तज्वरका लागि महाओखती हुन्छ ।



जीर्णजरोमा काँढापानी

**निदिग्धिकाऽमृताशुण्ठीकषायं पाययेद्भिषक् ।**
**पिप्पलीचूर्णसंयुक्तं श्वासकासार्दितापहम् ॥४९॥**
**पीनसारुचिवैस्वर्यशूलजीर्णज्वरच्छिदम् ।**

ठूलो बिही, गुर्जो र सुठोको काँढामा पिप्लाको धुलो मिसाएर पिए दम, खोकी, अनुहारको पक्षाघात, पिनास, अरुचि, घाँटी बसेको, शूल र पुरानो जरो नाश गर्दछ ।

सुत्केरी रोगमा काँढापानी

**देवदारु वचा कुष्ठं पिप्पली विश्वभेषजम् ॥५०॥**

कट्फलंमुस्तभूनिम्बतिक्तधान्या हरीतकी ।
गजकृष्णा च दुःस्पर्शा गोक्षुरं धन्वयासकम् ॥५१॥
बृहत्यतिविषा च्छिन्ना कर्कटं कृष्णजीरकम् ।
क्वाथमष्टावशेषं तु प्रसूतां पाययेत्स्त्रियम् ॥५२॥
शूलकासज्वरश्वासमूर्च्छाकम्पशिरोर्त्तिजित् । (प्रक्षिप्त श्लोक)

देवदार, बोझो, कूट, पिप्ला, सुठो, काफल, नागरमोथे, चिराइतो, कटुकी, धनियाँ, हर्रो, चाभा, सानो बिही, गोखुर, सिस्नु, ठूलो बिही, उत्तिस, गुर्जो, गुनाभा (कर्कटशृङ्गी) र कालो जीरा को आठ भागको एक भाग बाँकी रहने गरी पकाइएको काँढा पिउनाले प्रसूति रोग, शूल, खोकी, जरो, दम, बेहोसी, कम्पन, र टाउको दुखेको ठिक हुन्छ ।

शीतज्वरमा काँढापानी

क्षुद्रा धान्यकशुण्ठीभिर्गुडूचीमुस्तपद्मकैः ॥५३॥
रक्तचन्दनभूनिम्बपटोलवृषपौष्करैः ।
कटुकेन्द्रायवारिष्टभार्ङ्गीपर्पटकैः समैः ॥५४॥
क्वाथं प्रातर्निषेवेत सर्वशीतज्वरच्छिदम् ।

ठूलो बिही, धनियाँ, सुठो, गुर्जो, नागरमोथे, पैयुँ, रातोचन्दन, चिराइतो, पर्बलको पात, असुरो, अँडिरको मूल जरो, कटुकी, इन्द्रजौ, नीमको बोक्रा, भारङ्गी र पित्तपापडा बराबर मात्रामा मिसाई बनाइएको काँढा बिहान बिहान पिउने गरे सबै प्रकारका शीतज्वर नाश हुन्छन् ।

विषमज्वरमा काँढापानी

मुस्ता(त)क्षुद्रामृताशुण्ठीधात्रीक्वाथः समाक्षिकः ॥५५॥ पिप्पलीचूर्णसंयुक्तो
विषमज्वरनाशनः ।

नागरमोथे, ठुलो बिही, गुर्जो, सुठो र अमला मिसाएर पकाइएको काँढापानीमा मह र पिप्लाको धुलो मिसाएर खाए विषमज्वर नाश हुन्छ ।

एक दिन बिराएर वा दिनहुँ आउने जरोमा काँढापानी

पटोलत्रिफलानिम्बद्राक्षाशम्याकविश्व(वास)कैः ॥५६॥
क्वाथः सितामधुयुतो जयेदैकाहिकं ज्वरम् ।

पर्बलका पात, त्रिफला, नीमका बोक्रा, दाख, राजवृक्षको गुदी र असुरो मिसाएर पकाइएको काँढापानीमा मह र सक्खर हालेर खाए एक दिन बिराएर आउने वा दिनहुँ आउने जरो निको हुन्छ ।

विभिन्न जरोमा काँढापानी

पटोलेन्द्रयवादारुत्रिफलामुस्तगोस्तनैः ॥५७॥
मधुकामृतवासानां क्वाथं क्षौद्र युतं पिबेत् ।

सन्तते सतते चैव द्वितीयकतृतीयके ॥५८॥
ऐकाहिके वा विषमे दाहपूर्वे नवज्वरे ।

पर्बलका पात, इन्द्रजौ, देवदारु, त्रिफला, नागरमोथे, दाख, जेठीमधु, गुर्जो र असुरो मिसाएर पकाइएको काँढापानीमा मह मिसाएर खाने गरे सधैं आइरहने जरो, दिनमा दुई पटक आउने जरो, दुई दिन बिराएर आउने जरो, तीन दिन बिराएर जरो र एक दिन बिराएर वा दिनहुँ आउने जरो, विषमज्वर, डाह हुनु पहिले आउने जरो र नयाँ जरो ठिक हुन्छ ।

तीन दिन बिराएर आउने जरोमा काँढापानी

गुडूचीधान्यमुस्ताभिश्चन्दनोशीरनागरैः ॥५९॥
कृतं क्वाथं पिबेत्क्षौद्र सितायुक्तं ज्वरातुरः ।
तृतीयज्वरनाशाय तृष्णादाहनिवारणम् ॥६०॥

गुर्जो, धनियाँ, नागरमोथे, रक्तचन्दन, खश र सुठो मिसाई पकाइएको काँढापानीमा मह र मिस्री हालेर पिए तीन दिन बिराएर जरो निको हुन्छ ।

### चार दिन बिराएर जरोमा काँढापानी

**देवदारुशिवावासाशालिपर्णीमहौषधैः ।**
**धात्रीयुतं शृतं शीतं दद्यान्मधुसितायुतम् ॥६१॥**
**चातुर्थिकज्वरे श्वासे कासे मन्दानले तथा ।**

देवदार, जङ्गी हर्रो, असुरो, साकिनु, सुठो र अमला मिसाई पकाइएको काँढापानी सेलाएपछि मह र मिस्री मिसाएर पिए चार दिन बिराएर आउने जरो, दम, खोकी र मन्दाग्निलाई ठिक गर्दछ ।

### रक्तपित्त र ज्वरातिसारमा काँढापानी

**गुडूचीधान्यकोशीरशुण्ठीबालकपर्पटैः ॥६२॥**

**बिल्वप्रतिविषापाठारक्तचन्दनवत्सकैः ।**
**किरातमुस्तेन्द्रयवैः क्वथितं शिशिरं पिबेत् ॥६३॥**
**सक्षौद्रं रक्तपित्तघ्नं ज्वरातीसारनाशनम् ।**

गुर्जो, धनियाँ, खश, सुठो, नेत्रवाला, पित्तपापडा, बेल, उतिस, गानेगुर्जो, रक्तचन्दन, ठूलो कुरो, चिराइतो, नागरमोथे र इन्द्रजौ मिसाएर पकाइएको काँढापानी सेलाएर मह मिसाई खानाले रक्तपित्त र ज्वरातिसार निको हुन्छ ।

### ज्वरातिसारमा काँढापानी

**नागरं कुटजो मुस्तममृताऽतिविषा तथा ॥६४॥**
**एभिः कृतं पिबेत् क्वाथं ज्वरातीसारनाशनम् ।**

सुठो, ठूलोकुरो, नागरमोथे, गुर्जो र उतिस मिसाएर पकाइएको काँढापानी पिउनाले ज्वरातिसार ठिक हुन्छ ।

आमशूलमा काँढापानी

**धान्यवासकबिल्वाब्दनागरैः साधितं जलम् ।।६५।।**
**आमशूलहरं ग्राहि दीपनं पाचनं परम् ।**

धनियाँ, असुरो, बेल, नागरमोथे, र सुठो मिसाएर पकाइएको काँढापानी पिउनाले आमशूल नाश हुन्छ । यो अति नै ग्राही, दीपन र पाचन हुन्छ ।

पाचन र दीपन काँढापानी

**धान्यनागरजः क्वाथः पाचनो दीपनस्तथा ।।६६।।**
**एरण्डमूलयुक्तश्च जयेदामानिलव्यथाम् ।**

धनियाँ र सुठो मिसाएर काँढापानी पकाई पिउनाले पाचन र दीपनको काम गर्दछ । यसमा यदि अँडिरको जरा पनि मिसाउने हो भने यसले आमवात नाश गर्दछ ।



आमातिसार र रक्तशूलमा काँढापानी

**वत्सकातिविषाबिल्वमुस्तबालकमाश्रृतम् ।।६७।।**
**अतीसारं जयेत्सामं चिरजं रक्तशूलजित् ।**

ठूलोकुरो, उतिस, बेल, नागरमोथे र सुगन्धवालको काँढापानीले धेरै दिनको आमातिसार तथा पुरानो रक्तशूल नाश हुन्छ ।

कडा खालको अतिसारमा काँढापानी

**कुटजातिविषापाठाधातकीलोध्रमुस्तकैः ।।६८।।**
**ह्रीबेरदाडिमयुतैः कृतः क्वाथः समाक्षिकः ।**
**पेयो मोचरसेनैव कुटजाष्टकसंज्ञकः ।।६९।।**
**अतीसाराञ्जयेद्वातरक्तशूलामदुस्तरान् ।**

ठूलोकुरो, उतिस, गानेगुर्जो, धँयेराको फूल, लोध, नागरमोथे, सुगन्धवाल र दारिमको बोक्रा मिसाएर पकाइएको काँढापानी मह र सिमलको खोटो मिसाएर पिउनाले डाह, रक्तशूल र आमविकारले युक्त भएको कडा खालको अतिसार ठिक हुन्छ ।

**ह्रीबेरधातकीलोध्रपाठालज्जालुवत्सकैः ॥७०॥**
**धान्यकातिविषामुस्तागुडूचीबिल्वनागरैः ।**
**कृतः कषायः शमयेदतीसारं चिरोत्थितम् ॥७१॥**
**अरोचकामशूलास्रज्वरघ्नः पाचनः स्मृतः ।**

सुगन्धवाल, धँयेराको फूल, लोध, गानेगुर्जो, लज्जावती, ठूलोकुरो, धनियाँ, उतिस, नागरमोथे, गुर्जो, बेल र सुठो मिसाएर पकाइएको काँढापानीले धेरै दिनको अतिसार, अरुचि, आमशूल, रक्तविकार र जरो ठिक गर्दछ । यो पाचन हुन्छ ।

बालकको अतिसार रोगमा काँढापानी



**धातकी बिल्वलोध्राणि बालकं गजपिप्पली ॥७२॥**
**एभिः कृतं शृतं शीतं शिशुभ्यः क्षौद्र संयुतम् ।**
**प्रदद्यादवलेहं वा सर्वातीसारशान्तये ॥७३॥**

धँयेराको फूल, बेल, लोध, सुगन्धवाल र चाभो मिसाएर पकाइएको काँढापानी सेलाएपछि मह मिसाएर बालकलाई पियाउँदा वा चटाउँदा बालकको अतिसार रोग निको हुन्छ ।

वातविकार आदिमा काँढापानी

**शालिपर्णीबलाबिल्वधान्यशुण्ठीकृतं शृतम् (श्रृतः) ।**
**आध्मानशूलसहितां वातजां ग्रहणीं जयेत् ॥७४॥**

साकिनु, बलु, बेल, धनियाँ र सुठो मिसाएर काँढापानी पकाई पिउनाले आध्मान, शूल, वातविकार र ग्रहणीलाई जित्दछ ।

### ग्रहणी रोगमा काँढापानी

**गुडूच्यतिविषाशुण्ठीमुस्तैः क्वाथः कृतो जयेत् ।**
**आमानुषक्तां ग्रहणीं ग्राही पाचनदीपनः ॥७५॥**

गुर्जो, उतिस, सुठो र नागरमोथे मिसाएर पकाइएको काँढापानीले आमविकार सहितको ग्रहणी निको हुन्छ । यो काँढापानी ग्राही, पाचन र दीपन हुन्छ ।

### अतिसारमा काँढापानी

**यवधान्यं पटोलानां क्वाथः सक्षौद्र शर्करः ।**
**योज्यः सर्वातिसारेषु बिल्वाम्रास्थिभवस्तथा ॥७६॥**

जौ (इन्द्रजौ ?), धनियाँ र पर्बलको पात मिसाई पकाइएको काँढापानी मिस्री र मह मिसाएर पिउनाले सबै खालका अतिसार नाश हुन्छ । अथवा बेल र आँपको कोयाको काँढापानी पकाएर खाए पनि सबै खालका अतिसार नष्ट हुन्छन् ।



### कीरा मार्ने काँढापानी

**त्रिफला देवदारुश्च मुस्ता मूषकपर्णिका ।**
**शिग्रुरेतैः कृतः क्वाथः पिप्पलीचूर्णसंयुतः ॥७७॥**
**विडङ्गचूर्णयुक्तश्च कृमिघ्नः कृमिरोगहा ।**

त्रिफला, देवदारु, नागरमोथे, मुसलिन्डी र सैजन मिसाएर पकाइएको काँढापानीमा पिप्ला वा वायुविडङ्गको धुलो मिसाएर खानाले कीरा र किराजन्य रोग निको हुन्छ ।

### कमलपित्त र पाण्डुरोगमा काँढापानी

**फलत्रिकाऽमृतातिक्तानिम्बकैरातवासकैः ॥७८॥**
**जयेन्मधुयुतः क्वाथः कामलां पाण्डुतान्तथा ।**

त्रिफला, गुर्जो, कुटकी, नीमका बोक्रा, चिराइतो र असुरोको पात मिसाएर पकाइएको काँढापानी पिउनाले कमलपित्त तथा पाण्डुरोग नाश हुन्छ ।

पाण्डु आदि रोगमा काँडापानी

**पुनर्नवाऽभयानिम्बदार्वीतिक्तापटोलकैः ॥७९॥**
**गुडूचीनागरयुतैः क्वाथो गोमूत्रसंयुतः ।**
**पाण्डुकासोदरश्वासशूलसर्वाङ्गशोथहा ॥८०॥**

पुनर्नवाको जरो, हर्रो, नीमको बोक्रा, चुत्रो, कुटकी, पर्बलको पात, गुर्जो र सुठो मिसाएर पकाइएको काँढापानी गहुँतसँग मिसाएर पिउनाले पाण्डुरोग, खोकी, पेटका रोग, दम, शूल र शरीरका सबै अङ्गमा हुने सुजन ठिक गर्दछ ।

रक्तपित्त आदि रोगमा काँढापानी

**वासाद्राक्षाऽभयाक्वाथः पीतः सक्षौद्रशर्करः ।**

**निहन्ति रक्तपित्तार्त्तिश्वासकासान्सुदारुणान् ॥८१॥**

असुरो, दाख र हर्रोको काँढापानीमा मह र मिस्री मिसाएर पिउनाले रक्तपित्तको पीडा, दम र पुरानो खोकी नाश गर्दछ ।

**रक्तपित्तं क्षयं कासं श्लेष्मपित्तज्वरन्तथा ।**
**केवलो वासकक्वाथः पीतः क्षौद्रेण नाशयेत् ॥८२॥**

असुरो मात्र हालेर पकाइएको काँढापानीमा मह मिसाएर पिएमा पनि रक्तपित्त, क्षयरोग, खोकी तथा कफजन्य र पित्तजन्य जरो ठिक गर्दछ ।

खोकीमा काँढापानी

**वासाक्षुद्राऽमृताक्वाथः क्षौद्रेण ज्वरकासहा ।**

असुरो, ठुलो बिही (ठूलो कण्टकारी) र गुर्जो मिसाएर पकाइएको काँढापानीमा मह मिसाएर पिउने गरे जरो र खोकी ठिक गर्दछ ।

**कासघ्नः पिप्पलीचूर्णयुक्तः क्षुद्राशृतस्तथा ॥८३॥**

ठूलो बिहीको काँढापानीमा पिप्लाको धुलो मिसाएर पिउने गरे पनि खोकी निको हुन्छ ।

### दम र खोकीमा काँढापानी

**क्षुद्राकुल(लि)त्थवासाभिर्नागरेण च साधितः ।**
**क्वाथः पुष्करचूर्णाप्त(ढ्य)ः श्वासकासौ निवारयेत् ॥८४॥**

ठूलो बिही, गहत, असुरो र सुठो मिसाई पकाइएको काँढापानीमा कूटको जराको धुलो मिसाएर पिउनाले दम र खोकी निको हुन्छ ।

### बाडुलीमा काँढापानी



**रेणुकापिप्पलीक्वाथो हिङ्गुकल्केन संयुतः ।**
**पानादेव हि पञ्चापि हिक्कां नाशयति क्षणात् ॥८५॥**

शीतलचिनी र पिप्लाको काँढापानीमा हिङको धुलो मिसाएर पिउने गरे पाँच प्रकारका बाडुली तुरुन्त ठिक हुन्छ ।

### गृध्रसी रोगमा काँढापानी

**हिङ्गुपुष्करचूर्णाढ्यं दशमूलशृतञ्जयेत् ।**
**गृध्रसीं केवलः क्वाथः शेफालीपत्रजस्तथा ॥८६॥**

दशमूलको काँढापानीमा भुटेको हिङ र कूटको जराको धुलो मिसाएर पिउने गरे गृध्रसी रोग ठिक हुन्छ । अथवा नेवारीका पातको काँढापानीमा भुटेको हिङ र कूटको जराको धुलो मिसाएर पिउने गरे पनि गृध्रसी रोग ठिक हुन्छ ।

वाकवाकी (बान्ता) मा काँढापानी

बिल्वत्वचोगुडूच्या वा क्वाथः क्षौद्रेण संयुतः ।
जयेत्त्रिदोषजां छर्दिं पर्पटः पित्तजान्तथा ॥८७॥

बेलको बोक्रा वा गुर्जोको काँढापानीमा मह मिसाएर पिउने गरे सन्निपातजन्य वाकवाकी नाश हुन्छ । अथवा पित्तपापडाको काँढापानीमा मह मिसाएर पिएमा पित्तजन्य वाकवाकी नाश हुन्छ ।

वातरोगमा काँढापानी

रास्नाऽमृतामहादारुनागरैरण्डजैः शृतम् ।
सप्तधातुगते वाते सामे सर्वाङ्गजे पिबेत् ॥८८॥

फ्याक्सेकन्द, गुर्जो, देवदार, सुठो र अँडिरको जरा मिसाई पकाइएको काँढापानी सात धातुमा मिसिएको वातरोग, आमवात र सबै अङ्गमा व्यापक भएको वातरोगमा पिउनु पर्दछ ।



रास्नागोक्षुरकैरण्डदेवदारु पुनर्नवाः ।
गुडूच्यारग्वधश्चैव क्वाथमेषां विपाचयेत् ॥८९॥
शुण्ठीचूर्णेन संयुक्तं पिबेज्जङ्घाकटीग्रहे ।
पार्श्वपृष्ठोरुपीडायामामवाते सुदुस्तरे ॥९०॥

फ्याक्सेकन्द, गोखुर, अरिड, देवदारु, पुनर्नवा, गुर्जो र राजवृक्षको गुदी मिसाएर पकाइएको काँढापानीमा सुठो मिसाएर कोख, कम्मर र तिघ्राको दुखाईमा तथा आमवातमा पिउनाले यी रोग नाश हुन्छन् ।

रास्ना द्विगुणभागा स्यादेकभागास्ततः परे ।
धन्वयासबलैरण्डदेवदारुशठीवचाः ॥९१॥
वासको नागरं पथ्या चव्या मुस्ता पुनर्नवा ।

गुडूची वृद्धदारुश्च शतपुष्पा च गोक्षुरः ॥९२॥
अश्वगन्धा प्रतिविषा कृतमालः शतावरी ।
कृष्णा सहचरश्चैव धान्यकं बृहतीद्वयम् ॥९३॥
एभिः कृतं पिबेत्क्वाथं शुण्ठीचूर्णेन संयुतम् ।
कृष्णाचूर्णेन वा योगराजगुग्गुलुनाऽथवा ॥९४॥
अजमोदादिना वाऽपि तैलेनैरण्डजेन वा ।
सर्वाङ्गकम्पे कुब्जत्वे पक्षाघातेऽपबाहुके ॥९५॥
गृध्रस्यामामवाते च श्लीपदे चापतानके ।
अण्डवृद्धौ तथाऽध्माने जङ्घाजानुगदार्दिते(गतेऽर्दिते) ॥९६॥
शुक्रामये मेढ्ररोगे वन्ध्यायोन्यामयेषु च ।
महारास्नादिराख्यातो ब्रह्मणा गर्भकारणम् ॥९७॥



फ्याक्सेकन्द दुई तोला तथा सिस्नु, बलु, अरिडको जरा, देवदार, कपुरहलेदो, बोझो, असुरोका पाँचै अङ्ग, सुठो, हरोको बोक्रा, चाभा, नागरमोथे, पुनर्नवा, गुर्जो, त्रिधारा, सुप, गोखुर, अश्वगन्धा, उतिस, राजवृक्षको गुदी, कुरिलो, पिप्ला, पहेंलो कपुरनली, धनिया, ठूलो बिही र सानो बिही सबै एक एक तोला मिसाएर काँढापानी पकाई सुठो वा पिप्लाको धुलो वा योगराजगुग्गुल वा ज्वानुको धुलो वा अँडिरको तेलसँग पिउनाले शरीरका अङ्ग काम्ने रोग, कुप्रिने रोग, पक्षाघात, वातरोगले गर्दा पाखुरा सुक्ने रोग, गृध्रसी, आमवात, हात्तीपाइले, अपतानक, अण्डवृद्धि, आध्मान, तिघ्रा एवं घुँडाका रोग, शुक्र रोग, पुरुष जननेन्द्रियका रोग तथा वन्ध्या स्त्रीका जननेन्द्रिय एवं गर्भाशयका रोग सबै नाश गर्दछ । ब्रह्माले गर्भ स्थापनाका लागि यो महारास्नादि नामक काँढापानीका विषयमा बताएका छन् ।

### विभिन्न वातरोगमा काँढापानी

एरण्डो बीजपूरश्च गोक्षुरो बृहतीद्वयम् ।
अश्मभेदस्तथा बिल्व एतन्मूलैः कृतः शृतः ॥९८॥
एरण्डतैलहिंग्वाढ्यः सयवक्षारसैन्धवः ।

**स्तनस्कन्धकटीमेढ्रहृदयोत्थां व्यथाञ्जयेत् ॥९९॥**

अँडिर, बिमिरो, गोखुर, सानो र ठूलो बिही, पाषाणभेद र बेल यिनको जरा मिसाएर काँढापानी पकाएर अँडिरको तेल, भुटेको हिङ र जवाखार तथा सिधेनुनको धुलो मिसाएर खानाले स्तन, काँध, कम्मर, पुरुष जननेन्द्रिय र छातीमा वातले हुने पीडा नाश हुन्छ ।

वातशूलमा काँढापानी

**नागरैरण्डजः क्वाथः क्वाथ इन्द्रयवस्य वा(च) ।**
**हिङ्गुसौवर्चलोपेतो वातशूलनिवारणः ॥१००॥**

सुठो र अँडिरको (जरा) को अथवा इन्द्रजौको काँढापानीमा हिङ र सुवर्चल नुन मिसाएर पिउनाले वातशूल नष्ट हुन्छ ।

पित्तशूलमा काँढापानी



**त्रिफलारग्वधक्वाथः शर्कराक्षौद्रसंयुतः ।**
**रक्तपित्तहरो दाहपित्तशूलनिवारणः ॥१०१॥**

हर्रो, बर्रो, अमला र राजवृक्षको काँढापानीमा सक्खर र मह मिसाएर पिउनाले रक्तपित्त, डाह र पित्तशूल नाश हुन्छ ।

कफशूलमा काँढापानी

**एरण्डमूलं द्विपलं जलेऽष्टगुणिते पचेत् ।**
**तत् क्वाथो यावशूकाढ्यः पार्श्वहृत् कफशूलहा ॥१०२॥**

अँडिरको जरा अस्सी ग्राममा तीन सय बीस ग्राम पानी हाली काँढापानी पकाउनू । जब आठ भागको एक भाग बाँकी रहन्छ तब झिकेर छानी जवाखार मिसाएर पिउनू । कोखो र मुटुमा हुने कफशूल नाश हुन्छ ।

### मुटुरोगमा दशमूलादिको काँढापानी

**दशमूलकृतः क्वाथः सयवक्षारसैन्धवः ।**
**हृद्रोगगुल्मशूलार्तिकासश्वासांश्च(कासं श्वासं च) नाशयेत् ॥१०३॥**

दशमूलको काँढापानीमा जवाखार र सिधेनुन मिसाएर पिउनाले मुटुका रोग, गुल्म, शूलको पीडा, खोकी र दम नाश गर्दछ ।

### मूत्रकृच्छ्र रोगमा काँढापानी

**हरीतकीदुरालम्भाकृतमालकगोक्षुरैः ।**
**पाषाणभेदसहितैः क्वाथो माक्षिकसंयुतः ॥१०४॥**
**विबन्धे मूत्रकृच्छ्रे च सदाहे सरुजे हितः ।**

सानो खालको हर्रो, सिस्नु, राजवृक्षको गुदी, ओदाने काँडो र पाषाणभेद मिसाएर काँढापानी पकाई महसँग खानाले कब्जियत तथा डाह, पिसाब रोकिने र वायु रोकिने लक्षणको मूत्रकृच्छ्र रोग ठिक हुन्छ ।

### पत्थरी आदिमा काँढापानी

**वीरतरुर्वृक्षवन्दा काशः सहचरत्रयम् ॥१०५॥**
**कुशद्वयं नलो गुन्द्रा बकपुष्पोऽग्निमन्थकः ।**
**मूर्वा पाषाणभेदश्च स्योनाको गोक्षुरस्तथा ॥१०६॥**
**अपामार्गश्च कमलं ब्राह्मी चेति गणो वरः ।**
**वीरतर्वादिरित्युक्तः शर्कराऽश्मरिकृच्छ्रहा ॥१०७॥**
**मूत्राघातं वायुरोगान्नाशयेन्निखिलानपि ।**

खस, मोथे, काँस, सेतो कपुरनली, पहेँलो कपुरनली, कालो कपुरनली, सानो जातको कुश, ठूलो जातको कुश, नर्कट (वा निगालो), नागरमोथे, अगस्तिको फूल, अरणी, मरुई लहरो, पाषाणभेद, टटेलो, ओदाने काँडो, दतिवन, कमल र ब्राह्मीका पात मिसाई बन्ने वीरवर्तकादि

नामक काँढापानी पकाएर पिउनाले मधुमेह, पत्थरी, कृच्छ्ररोग, मुत्राघात र सबै खालका वातविकार नाश गर्दछ ।

**एलामधुकगोकण्ठ(ट)रेणुकैरण्डवासकाः ॥१०८॥**
**कृष्णाऽश्मभेदसहितः(ताः) क्वाथ एषां सुसाधितः ।**
**शिलाजतुयुतः पेयः शर्कराऽश्मरिकृच्छ्रहा ॥१०९॥**

सुकुमेलका गेडा, जेठीमधु, ओदाने काँडो, शीतलचिनीका गेडा, अँडिरको जरा, असुरो, पिप्ला र पाषाणभेद मिसाई काँढापानी पकाएर शिलाजित मिसाई पिउनाले मधुमेह, पत्थरी र मूत्रकृच्छ्र नाश गर्दछ ।

मूत्रकृच्छ्र रोगमा काँढापानी

**समूलगोक्षुरक्वाथः सितामाक्षिकसंयुतः ।**
**नाशयेन्मूत्रकृच्छ्राणि तथा चोष्णसमीरणम् ॥११०॥**



जरा सहितको ओदानेकाँडो लेराई काँढापानी पकाउनू । यो काँढापानीमा मिस्री र मह मिसाएर पिउनू । यसले मूत्रकृच्छ्र (पिसाब पोल्ने र रोकिने रोग) र उष्णवात (गर्मीजन्य रोग) रोग ठिक गर्दछ ।

प्रमेहमा काँढापानी

**वरादार्व्यब्ददारूणां क्वाथः क्षौद्रेण मेहहा ।**
**वत्सको(क) त्रिफला दार्वी मुस्तको बीजकस्तथा ॥१११॥**

त्रिफला, चुत्रो, नागरमोथे र देवदारको काँढापानीमा मह मिसाएर पिउने गरे प्रमेह रोग ठिक हुन्छ । ठूलोकुरो, त्रिफला, चुत्रो, नागरमोथे र बिमिरोको काँढापानी पकाई मह मिसाएर पिउनाले पनि प्रमेह रोग नाश गर्दछ ।

**फलत्रिकाब्ददार्वीणां विशालायाः कृ(श्रृ)तं पिबेत् ।**

निशाकल्कयुतं सर्वं(र्वं) प्रमेहविनिवृत्तये ॥११२॥

त्रिफला, चुत्रो, नागरमोथे र ऐरेलुको काँढापानीमा बेसार मिसाएर पिउनाले सबै किसिमका प्रमेह नाश हुन्छ ।

प्रदर रोगमा काँढापानी

दार्वी रसाञ्जनं मुस्तं भल्लातः श्रीफलं वृषः ।
कैरातश्च पिबेदेषां क्वाथं शीतं समाक्षिकम् ॥११३॥
जयेत् सशूलं प्रदरं पीतः श्वेतासितारुणम् ।

चुत्रो, रसाञ्जन, नागरमोथे, भयायो, बेल, असुरो र चिराइतोको काँढापानी सेलाएर मह मिसाई पिउनाले शूल सहितको पहेँलो, सेतो र कालो प्रदररोग नाश हुन्छ ।

योनिरोग आदिमा काँढापानी



न्यग्रोधप्लक्षकोशाम्रवेतसा बदरी तुणिः ॥११४॥
मधुयष्टी प्रियालु(ल)श्च लोध्रद्वयमुदुम्बरः ।
पिप्पलश्च मधूकश्च तथा पारिसपिप्पलः ॥११५॥
शल्लकी तिन्दुकी जम्बूद्वयमाम्रतरुः शिवा ।
कदम्बककुभौ चैव भल्लातकफलानि च ॥११६॥
न्यग्रोधादिगणक्वाथं यथालाभञ्च कारयेत् ।
अयं क्वाथो महाग्राही व्रण्यो भग्नञ्च साधयेत् ॥११७॥
योनिदोषहरो दाहमेदोमेहविषापहः ।

बरौंका बोक्रा, पाखरीको बोक्रा, फलकपुरका बोक्रा, वेतका बोक्रा, बयरका बोक्रा, टुनीका बोक्रा, जेठीमधु, चिरौंजी, रातो लोध, सेतो लोध, डुम्रीका बोक्रा, पीपलका बोक्रा, महुवाको बोक्रा, पारिसपिप्पलका बोक्रा, साजका बोक्रा, तिन्दु, सानो जामुनु, ठूलो जामुनु (फँडिर) को बोक्रा, आँप, हर्रो, कदमका बोक्रा, खरीको बोक्रा र भलायोको फल यी सबै मिसाएर

काँढापानी पकाई पिउनाले दिसा रोकिएर हुने घाउ, हाड भाँच्चिएको वा मर्केको, योनिका रोग, डाह, बोसोका रोग र विषविकार नाश हुन्छ ।

बोसोका विकारमा काँढापानी

बिल्वोऽग्निमन्थः स्योनाकः काश्मरी पाटला तथा ॥११८॥
क्वाथ एषाञ्चयेन्मेदोदोषं क्षौद्रेण संयुतः ।

बेल, अरणी, टटेलो, खमारी र पाडरी मिसाई पकाइएको काँढापानीमा मह मिसाएर पिउनाले शरीरमा बोसो बढेर हुने दुःख (रोग) नाश हुन्छ ।

क्षौद्रेण त्रिफलाक्वाथः पीतो मेदोहरः स्मृतः ॥११९॥
शीतीभूतन्तथोष्णाम्बु मेदोहृत्क्षौद्र संयुतम् ।

त्रिफलाको काँढापानीमा मह मिसाएर पिउने गरेमा अथवा तातोपानी सेलाए पछि मह मिसाएर पिउने गरेमा शरीरको बोसो घट्दछ ।

पेटका रोगमा काँढापानी

चव्यचित्रकविश्वानां साधितो देवदारुणा ॥१२०॥
क्वाथस्त्रिवृच्चूर्णयुतो गोमूत्रेणोदराञ्जयेत् ।

चाँभा, चितू, सुठो र देवदारको काँढापानीमा सेतो निसोध र गहुँत मिसाएर पिउने गरे पेटका रोग नष्ट हुन्छन् ।

पुनर्नवाऽमृतादारुपथ्यानागरसाधितः ॥१२१॥
गोमूत्रगुग्गुलुयुतः क्वाथः शोथोदरापहः ।

पुनर्नवाको जरा, गुर्जो, देवदारु, हर्रो र सुठो मिसाएर पकाइएको काँढापानीमा गोकुलधूप र गहुँत मिसाएर पिउने गर्नाले सुन्निने खालको पेटको रोग निको हुन्छ ।

### फियो आदिका रोगमा काँढापानी

**पथ्यारोहितकक्वाथं यवक्षारकणायुतम् ॥१२२॥**
**पिबेत्प्रातर्यकृत्प्लीहगुल्मोदरनिवृत्तये ।**

हर्रो र गुराँसको काँढापानीमा पिप्ला र जवाखार मिसाएर बिहान बिहान पिउने गरे कलेजो र फियोका रोग तथा पेटको गुल्मरोग ठिक गर्दछ ।

### सुजनमा काँढापानी

**पुनर्नवा दारुनिशा निशा शुण्ठी हरीतकी ॥१२३॥**
**गुडूची चित्रको भार्ङ्गी देवदारु च तैः शृतः ।**
**पाणिपादोदरमुखप्राप्तं शोफं निवारयेत् ॥१२४॥**

पनर्नवा, चुत्रो, हलेदो, सुठो, हर्रो, गुर्जो, चितूको बोक्रा, भारङ्गी र देवदारु मिसाएर पकाइएको काँढापानी सेलाएपछि पिउने गर्नाले हात, गोडा, पेट, मुख आदि सुन्निएको ठिक हुन्छ ।

### अण्डकोश सुजनमा काँढापानी

**फलत्रिकोद्भवं क्वाथं गोमूत्रेणैव पाययेत् ।**
**वातश्लेष्मकृतं हन्ति शोथं वृषणसम्भवम् ॥१२५॥**

हर्रो बर्रो र अमला (त्रिफला) को काँढापानीमा गहुँत मिसाएर पिउने गर्नाले वातविकार वा कफविकारका कारण सुन्निएको अण्डकोश ठिक हुन्छ ।

**रास्नाऽमृताबलायष्टीगोकण्टैरण्डजः शृतः ।**
**एरण्डतैलसंयुक्तो वृद्धिमन्त्रोद्भवाञ्जयेत् ॥१२६॥**

फ्याक्सेकन्द, गुर्जो, बलु, जेठीमधु र ओदानेकाँडोको जरा मिसाएर पकाइएको काँढापानीमा अँडिरको तेल मिसाएर पिउने गरे आन्धाका कारण हुने अण्डकोश वृद्धि निको हुन्छ ।

### गण्डामाला रोगमा काँढापानी

**काञ्चनारत्वचः क्वाथः शुण्ठीचूर्णेन नाशयेत् ।**
**गण्डमालान्तथा क्वाथः क्षौद्रेण वरुणत्वचः ॥१२७॥**

कोइरालो वृक्षका बोक्राको काँडापानीमा सुठोको धुलो मिसाएर अथवा सिप्लिकानको बोक्राको काँढापानीमा मह मिसाएर पिउने गरे गण्डमाला रोग नाश हुन्छ ।

### हात्तीपाइले रोग र बोसोका रोगमा काँढापानी

**शाखोटवल्कलक्वाथङ्गोमूत्रेण युतं पिबेत् ।**
**श्लीपदानां विनाशाय मेदोदोषनिवृत्तये ॥१२८॥**

हात्तीपाइले रोग र बोसोजन्य रोग निको पार्न खाक्सी वृक्षको बोक्राको काँढापानीमा गहुँत मिसाएर पिउनू ।



### शरीर भित्रका वा गढेका विद्रधिमा काँढापानी

**पुनर्नवावरुणयोः क्वाथोऽन्तर्विद्रधीञ्जयेत् ।**
**तथा शिग्रुभवः क्वाथो हिङ्गुकल्केन(सैन्धव) संयुतः ॥१२९॥**

पुनर्नवा र सिप्लिकान मिसाएर पकाइएको काँढापानी खानाले अथवा सैजनको काँढापानीमा हिङ मिसाएर खाएमा शरीरका भित्री विद्रधि नष्ट हुन्छ ।

### नपाकेको विद्रधिमा काँढापानी

**वरुणादिगणक्वाथमपक्वे मध्यविद्रधौ ।**
**ऊषकादिरजोयुक्तं पिबेच्छमनहेतवे ॥१३०॥**

तल बताइएका वरुणादि गणको काँढापानी तथा ऊषकादि गणका औषधीको धुलो यो काँढापानी मिसाएर पिउनाले नपाकेको विद्रधि रोग ठिक गर्दछ ।

वरुणादिगणको काँढापानी

**वरुणो बकपुष्पश्च बिल्वापामार्गचित्रकाः ।**
**अग्निमन्थद्वयं शिग्रुद्वयञ्च बृहतीद्वयम् ॥१३१॥**
**सैरेयकत्रयं मूर्वा मेषशृङ्गी किरातकः ।**
**अजशृङ्गी च बिम्बी च करञ्जश्च शतावरी ॥१३२॥**
**वरुणादिगणक्वाथः कफमेदोहरः स्मृतः ।**
**हन्ति गुल्मं शिरःशूलन्तथाऽऽभ्यन्तरविद्रधीन् ॥१३३॥**

सिप्लिकानको बोक्रा, अगस्तिको फूल, कमलो बेलको फल, दतिवन, चितू, सानो खालको अरणी, ठूलो खालको अरणी, तीतो सैजन, गुलियो सैजन, ठूलो कण्टकारी, सानो कण्टकारी, पहेँलो फुल्ने कपुरनली, सेतो फुल्ने कपुरनली, कालो फुल्ने कपुरनली, मरुई लहरो, मेषश्रृङ्गी, चिराइतो, भेडासिङ्गी, गोलकाँक्री, कुबेराक्ष र कुरिलोलाई वरुणादि गण भनिन्छ । यसको काँढापानीले कफ र बोसो नाश गर्दछ भनिएको छ । यसले गुल्म, टाउकाको शूल र भित्री विद्रधिलाई ठिक गर्दछ । 

ऊषकादि गण (कुनै प्रतिमा यो श्लोक छैन)

**ऊषकस्तुत्थकं हिङ्गुकाशीसद्वयसैन्धवम् ।**
**सशिलाजतुकृच्छ्राश्मगुल्ममेदः कफापहम् ॥१३४॥**

नुनिलो माटो, शोधन गरिएको निलोतुथो, भुटिएको हिङ, शोधन गरिएको सेतो र पहेँलो फलामको विकार (काशीस), सिधेनुन र शिलाजित यी ओखतीको धुलोको काँढापानी खानाले कृच्छ्ररोग, पत्थरी, गुल्म, बोसोका रोग र कफविकार नाश हुन्छ ।

भगन्दर रोगमा काँढापानी

**खदिरत्रिफलाक्वाथो महिषीघृतसंयुतः ।**
**विडङ्गचूर्णयुक्तश्च भगन्दरविनाशनः ॥१३५॥**

खयर र त्रिफलाको काँढापानीमा भैंसीको घिउ र वायुविडङ्गको धुलो मिसाएर पिउने गरे भगन्दर रोग नाश हुन्छ ।

भिरिङ्गी रोगमा काँढापानी

**पटोलत्रिफलानिम्बकिरातखदिरासनैः ।**
**क्वाथः पीतो जयेत् सर्वानुपदंशान् सगुग्गुलुः ॥१३६॥**

पर्बलको पात, त्रिफला, नीमको बोक्रा, चिराइतो, खयर र विजयसाल मिसाएर पकाइएको काँढापानीमा गोकुलधूप मिसाएर पिउने गरे भिरिङ्गी रोग नाश हुन्छ ।

वातरक्त रोगमा काँढापानी

**अमृतैरण्डवासानां क्वाथ एरण्डतैलयुक् ।**
**पीतः सर्वाङ्गसञ्चारि वातरक्तञ्जयेद् ध्रुवम् ॥१३७॥**



गुर्जो, अँडिरको जरा र असुरो मिसाई पकाइएको काँढापानी अँडिरको तेल मिसाएर पिउनाले सारा शरीरमा घुमिरहरने वातरक्त रोग नाश हुन्छ ।

**पटोलं त्रिफला तिक्ता गुडूची च शतावरी ।**
**एष क्वाथो जयेत् पीतो वातास्रं दाहसंयुतम् ॥१३८॥**

पर्बलको पात, त्रिफला, कुटकी, गुर्जो र कुरिलो मिसाई पकाइएको काँढापानी पिउनाले डाह गर्ने खालको वातरक्त रोग नाश हुन्छ ।

सेतो कुष्ठरोगमा काँढापानी

**क्वाथोऽवल्गुजचूर्णाढ्यो धात्रीखदिरसारयोः ।**
**जयेत् सुशीलितो नित्यं श्वित्रं पथ्याशिनां नृणाम् ॥१३९॥**

अमला र खयर मिसाई पकाइएको काँढापानीमा वा(बा)कुचीको धुलो मिसाएर पिएमा सेतो कुष्ठरोग निको हुन्छ । तर, यस अवधिमा शरीरलाई पथ्य हुने खानपिन गर्नु पर्दछ ।

वातरक्त आदिमा काँढापानी

मञ्जिष्ठा त्रिफला तिक्ता वचा दारुनिशाऽमृता ।
निम्बश्चैषां कृतः क्वाथो वातरक्तविनाशनः ॥१४०॥
पामाकपालिकाकुष्ठरक्तमण्डलजिन् मतः ।

मजिठो, त्रिफला, कुटकी, बोझो, देवदार (वा चुत्रो ?), हलेदो, गुर्जो र नीमको बोक्रा मिसाई काँढापानी पकाएर पिउनाले वातरक्त, भैँसे लुतो विशेष (पामा), दाँतको रोग विशेष (कपालिका), कुष्ठरोग र राता गोला टाटा देखिने छालाको रोग निको हुन्छ भनिएको छ ।

सबै खालका कुष्ठरोगमा काँढापानी

मञ्जिष्ठामुस्तकुटजगुडूचीकुष्ठनागरैः ॥१४१॥

भार्ङ्गीक्षुद्रावचानिम्बनिशाद्वयफलत्रिकैः ।
पटोलकटुकीमूर्वाविडङ्गासनचित्रकैः ॥१४२॥
शतावरीत्रायमाणाकृष्णेन्द्रयववासकैः । भृङ्गराजमहादारुपाठाखदिरचन्दनैः ॥१४३॥
त्रिवृद्वरुणकैरातवाकुचीकृतमालकैः । शाखोटकमहानिम्बकरञ्जातिविषाजलैः ॥१४४॥
इन्द्रवारुणिकानन्तासारिवापर्पटैः समैः ।
एभिः कृतं पिबेत्क्वाथं कणागुग्गुलुसंयुतम् ॥१४५॥
अष्टादशसु कुष्ठेषु वातरक्तार्दिते तथा ।
उपदंशे श्लीपदे च प्रसुप्तौ पक्षघातके ॥१४६॥
मेदोदोषे नेत्ररोगे मञ्जिष्ठादिः प्रशस्यते ।

मजिठो, नागरमोथे, ठूलो कुरोको बोक्रा (वा जरा), गुर्जो, कूट (बुटी), सुठो, भारङ्गी, ठूलो बिही, बोझो, नीमको बोक्रा, हलेदो, चुत्रो, त्रिफला, पर्बलको पात, कुटकी, मरुई लहरो, वायुविडङ्ग, विजयसालका बोक्रा, चितूका बोक्रा, कुरिलो, मुँडिलो, पिप्ला, इन्द्रजौ, असुरो, भृङ्गिराज, देवदारु, गानेगुर्जो, खयर, रक्तचन्दन, सेतो निशोधका बोक्रा, सिप्लिकान, चिराइतो, वाकुची, राजवृक्षको गुदी, खाक्सी, बकाइनु, कुबेराक्ष, उत्तिस, खस, ऐरेलु, सिस्नु, अनन्तमूल र पित्तपापडा बराबर मात्रामा मिसाई काँढापानी पकाएर पिप्ला र गोकुलधूप मिसाएर पिउनाले अठार प्रकारका कुष्ठरोग, वातरक्त तथा भिरिङ्गी, हात्तीपाइले, लाटो खालको पक्षाघात, बोसोका रोग र आँखाका रोग ठिक हुन्छ ।

टाउकाका रोगमा काँढापानी

पथ्याऽक्षधात्रीभूनिम्बनिशानिम्बामृतायुतैः ॥१४७॥
कृतः क्वाथः षडङ्गोऽयं सगुडः शीर्षशूलहृत् ।
भ्रूशङ्खकर्णशूलानि तथाऽधशिरसो रुजम् ॥१४८॥
सूर्यावर्तं शङ्खकञ्च दन्तपातञ्च तद्रुजम् ।
नक्तान्ध्यं पटलं शुक्रं चक्षुःपीडां व्यपोहति ॥१४९॥



हर्रो, बर्रो, अमला, चिराइतो, हलेदो, नीमको बोक्रा र गुर्जो मिसाएर पकाइएको काँढापानीमा गोकुलधूप मिसाएर पिउने गरे टाउकाको शूल, आँखीभुइँ-कञ्चट र कानका शूल, अधा दुखेको, सूर्यावर्त रोग, कञ्चट दुखेको, दाँत हल्लिएर हुने पीडा, सामान्य खालका दन्तशूल, रतन्धो, आँखाका पटलमा लाग्ने रोग, आँखाको फुलो र आँखा दुख्ने रोग निको पार्दछ ।

आँखाका रोग आदिमा काँढापानी

वासाविश्वामृतादार्वीरक्तचन्दनचित्रकैः ।
भूनिम्बनिम्बकटुकापटोलत्रिफलाऽम्बुदैः ॥१५०॥
यवकालिङ्गकुटजैः क्वाथः सर्वाक्षिरोगहा ।
वैस्वर्यं पीनसं श्वासं नाशयेदुरसःक्षतम् ॥१५१॥

असुरो, सुठो, गुर्जो, चुत्रो, रक्तचन्दन, चितुको बोक्रा, चिराइतो, नीमको बोक्रा, कुटकी, पर्बलको पात, त्रिफला, नागरमोथे, जौ, इन्द्रजौ र ठूलोकुरोको बोक्रा : यी सबै मिसाई पकाइएको काँढापानी पिउनाले सबै प्रकारका आँखाका रोग, स्वर बसेको, पिनास, दम र उरक्षत रोग ठिक हुन्छ ।

**अमृतात्रिफलाक्वाथः पिप्पलीचूर्णसंयुतः।**
**सक्षौद्रः शीलितो नित्यं सर्वनेत्रव्यथाञ्जयेत्॥१५२॥**

गुर्जो र त्रिफलाको काँढापानीमा पिप्लाको धुलो र मह मिसाई पिउने गरे सबै खालका आँखाका रोग नाश हुन्छन् ।

घाउ आदि धुने काँढापानी

**अश्वत्थोदुम्बरप्लक्षवटवेतसजं शृतम् ।**
**व्रणशोथोपदंशानां नाशनं क्षालनात् स्मृतम्॥१५३॥**



पीपल, डुम्री, पाखरी, बर्रो र बेतको काँढापानीले धुने गरे घाउ, सुजन र गर्मीका रोगहरु नाश हुन्छन् ।

प्रमथ्याको परिभाषा

**प्रमथ्या प्रोच्यते द्रव्यपलात् कल्कीकृताच्छृतात् ।**
**तोयेऽष्टगुणिते यस्याः पानमाहुः पलद्वयम्॥१५४॥**

एक पल (चालीस ग्राम) औषधीलाई कुटेर वा पिँधेर धुलो पार्नू (सुकेको भए भिजाएर पिस्नू) । त्यसमा आठ गुना पानी हालेर पकाउनू । जब दुई पल (अस्सी ग्राम) पानी बाँकी रहन्छ तब झिक्नू । यसलाई “प्रमथ्या” भनिन्छ । यसको पिउने मात्रा पनि दुई पल (अस्सी ग्राम) हो ।

रक्तातिसारमा प्रमथ्या

**मुस्तकेन्द्रयवैः सिद्धा प्रमथ्या द्विपलोन्मिता ।**

## सुशीता मधुसंयुक्ता रक्तातीसारनाशिनी ॥१५५॥

नागरमोथे र इन्द्रजौ चालीस चालीस ग्राम लिई पिसेर प्रमथ्या बनाई सेलाएपछि मह मिसाएर खानाले रक्तातिसार नाश हुन्छ ।

यवागूको परिभाषा

## साध्यञ्चतुष्पलं द्रव्यञ्चतुःषष्टिपले जले(ऽम्बुनि) ।
## तत्क्वाथेनार्धशिष्टेन यवागूं साधयेद्घनाम् ॥१५६॥

चार पल (एक सय साठी ग्राम) औषधीलाई  हल्का पिसेर त्यसलाई चौसठ्ठी पल (दुई हजार पाँच सय साठी ग्राम) पानीमा हाली पकाउनू । आधा पानी बाँकी भएपछि झिकेर छान्नू । त्यसपछि बताइएका चामल आदि द्रव्य हालेर फेरी पकाउनू । जब लदरो हुन्छ तब झिक्नू । यसलाई "यवागू" भनिन्छ ।

ग्रहणी रोगमा यवागू



## आम्राम्रातकजम्बूत्वक्कषाये विपचेद् बुधः ।
## यवागूं शालिभिर्युक्तां तां भुक्त्वा ग्रहणीं जयेत् ॥१५७॥

आँप, अमारो र जामुनु यी तिनको रुखको (एक सय साठी ग्राम) बोक्रालाई कुटेर मार्सी चामल हाली यवागू बनाउनू । यो खानाले ग्रहणी रोग नाश हुन्छ ।

यूषको परिभाषा

## कल्कद्रव्यपलं शुण्ठी पिप्पली चार्धकार्षिकी ।
## वारिप्रस्थेन विपचेत् स द्रवो यूष उच्यते ॥१५८॥

एक पल (चालीस ग्राम) द्रव्य लिनू । सुठो, पिप्ला आदि जस्ता तिक्खर द्रव्य लिनुपर्दा आधा कर्ष (दश ग्राम) मात्र लिनू । अथवा दुबै मिलाएर दश ग्राम लिनू । यसलाई पिसेर एक सय साठी ग्राम पानीमा हाल्नू र लदरो नहुँदासम्म पकाउनू । यसलाई "यूष" भनिन्छ ।

सन्निपात आदि रोगमा यूष

**कुलत्थयवकोलैश्च मुद्गैर्मूलकग्रन्थि(शुण्ठ)कैः ।
शुण्ठीधान्याकयुक्तैश्च यूषः श्लेष्मानिलापहः ॥१५९॥
सप्तमुष्टिक इत्येष सन्निपातज्वरञ्जयेत् ।
आमवातहरः कण्ठहृद्वक्त्राणां विशोधनः ॥१६०॥**

गहत, जौ, बयर, मुगी, साना मूला, (पिप्लाको जरा), सुठो र धनिया चालीस चालीस ग्राम हाली तयार पारिएको यूषलाई "सप्तमुष्टिक यूष" भनिन्छ । यसले कफविकार, वायुविकार, सन्निपात ज्वर र आमवात नाश गर्दछ । साथै यसले घाँटी, मुटु र मुख शुद्ध समेत पार्दछ ।

अन्य पेय बनाउने विधि

**क्षुण्णं द्रव्यपलं साध्यञ्चतुःषष्टिपलेऽम्बुनि(जले) ।
अर्धशिष्टञ्च तद्देयं पाने भक्तादिसंनि(वि)धौ ॥१६१॥**

चालीस ग्राम औषधीलाई चौसठ्ठी गुना पानीमा हाली उमाल्नू । आधा पानी बाँकी भएपछि झिकेर कपडछान गर्नू । यसलाई खाना खाँदा तिर्खा लाग्दा अलिअलि पिउनू ।

तिर्खा र जरोमा काँढापानी

**उशीरपर्पटोदीच्यमुस्तनागरचन्दनैः ।
जलं शृतं हिमं पेयं पिपासाज्वरनाशनम् ॥१६२॥**

खस, पित्तपापडा, सुगन्धवाल, नागरमोथे, सुठो र रक्तचन्दन सबै मिलाएर चार तोला लिनू । त्यसपछि यसलाई पिसी दुई सय छपन्न तोला जलमा पकाउनू । आधा पानी बचेपछि झिकेर छान्नू । सेलाएपछि जरोमा धेरै तिर्खा लाग्दा अलि अलि गरेर पिउनू । यसले तिर्खा र जरो दुबै नाश हुन्छ ।

जरो आदिमा पिउने तातोपानी

**अष्टमेनांशशेषेण चतुर्थेनाऽर्धकेन वा ।**
**अथवा क्वथनेनैव सिद्धमुष्णोदकं वदेत् ॥१६३॥**

आठ भागको एक भाग वा एक चौथाइ वा आधा बाँकी रहने गरी वा धेरै तताएको पानीलाई तातोपानी भनिन्छ ।

सुत्नेबेलामा तातोपानी पिउनुका फाइदा

**श्लेष्मामवातमेदोघ्नं बस्तिशोधनदीपनम् ।**
**कासश्वासज्वरहरं पीतमुष्णोदकं निशि ॥१६४॥**

रातमा सुत्नुअघि तातो पानी पिउने गरे कफविकार, आमवात, बोसोविकार, खोकी, दम र जरो नाश गर्दछ । साथै यसले तल्लो पेट सफा गर्दै पाचनशक्ति समेत बढाउँदछ ।



आमशूलमा दुग्धपाक विधि

**क्षीरमष्टगुणं द्रव्यात् क्षीरान्नीरञ्चतुर्गुणम् ।**
**क्षीरावशेषं तत्पीतं शूलमामोद्भवञ्जयेत् ॥१६५॥**

जति ओखती हो त्यसको आठ गुना गाईको दूध लिनू । दूधको चार गुना पानी लिनू । सबैलाई मिसाएर दूध मात्र बाँकी रहँदासम्म उमाल्नू । यो दूध पिउनाले आमशूल रोग नाश हुन्छ ।

पुरानो जरोमा पञ्चमूलको दुग्धपाक विधि

**सर्वज्वराणाञ्जीर्णानां क्षीरं भैषज्यमुत्तमम् ।**
**श्वासात् कासाच्छिरःशूलात् पार्श्वशूलात् सपीनसात् ॥१६६॥** (प्रक्षिप्त श्लोक)
**मुच्यते ज्वरितः पीत्वा पञ्चमूलीशृतं पयः ।** (प्रक्षिप्त श्लोक)

लघुपञ्चमूल (वनगहते, सतिबयर, बिही, कण्टकारी र ओदानेकाँडो) का जरालाई कुटेर आठ गुना दूध र दूधको चार गुना पानी हालेर उमाल्नू । दूध मात्र बाँकी भएपछि झिकेर छान्नू । यो दुग्धरस सबै खालका पुराना जरोमा उत्तम ओखती हुन्छ । यसले दम, खोकी, टाउकाको शूल, कोखाको शूल, पिनास र पुरानो जरो नाश गर्दछ ।

दिसापिसाब खुलाउने र कफज्वर नाश गर्ने दुग्धपाक

**त्रिकण्टकबलाव्याघ्रीकुष्ठनागरसाधितम् ॥१६७॥** (प्रक्षिप्त श्लोक)
**वर्चोमूत्रविबन्धघ्नं कफज्वरहरं पयः ।** (प्रक्षिप्त श्लोक)

ओदाने काँडो, बलु, ठूलो बिहीका जराका बोक्रा, कूट र सुठो यी मिसाई पिसेर आठ गुना दूध र दूधको चौबर पानीमा हाली उमाल्नू । दूधमात्र बाँकी भएपछि झिकेर छान्नू । यो दूध पिउनाले दिसापिसाब राम्ररी खुल्दछ तथा कफज्वर नाश गर्दछ ।

अन्नका परिकार : यवागू



**अथान्नप्रक्रियात्रैव प्रोच्यते नातिविस्तरात् ॥१६८॥**
**यवागूः षड्गुणजले सिद्धा स्यात् कृशरा घना ।**
**तण्डुलैर्मुद्गमाषैश्च तिलैर्वा साधिता हिता ॥१६९॥**
**यवागूर्ग्राहिणीबल्या तर्पणी वातनाशिनी ।**

अब संक्षेपमा अन्नका परिकारका बारेमा बताइन्छ । चामल, मुगी र माष वा तिल हालेर वा जेको यवागू बनाउनु छ त्यसलाई छ गुना बढी पानीमा हाली लदरो वा बाक्लो नहुँदासम्म पकाउनू । यसलाई यवागू भनिन्छ । यवागू दुई नाम हुन्छ : पातलो र बाक्लो । यसले दिसा आदि रोक्ने, बल बढाउने, शरीरलाई पुष्ट पार्ने र वायुविकार नाश गर्ने काम गर्दछ ।

विलेपी बनाउने विधि

**विलेपी घनसिक्था स्यात्सिद्धा नीरे चतुर्गुणे ॥१७०॥**
**बृंहणी तर्पणी हृद्या मधुरा पित्तनाशिनी ।**

द्रव्यलाई द्रव्यभन्दा चार गुना बढी पानीमा हाली पकाएर लद्रो (बाक्लो) र टाँसिने भएपछि त्यसलाई विलेपी भनिन्छ । यसले धातु बढाउने, शरीर पुष्ट पार्ने, मुटुलाई फाइदा गर्ने, मिठो र पित्तनाश गर्ने काम गर्दछ ।

### पेया र यूष बनाउने विधि

**द्रवाधिका स्वल्पसिक्था चतुर्दशगुणे जले ॥१७१॥**
**सिद्धा पेया बुधैर्ज्ञेया यूषः किञ्चिद् घनः स्मृतः ।**

द्रव्यलाई चौध गुना पानीमा पकाएर केही लद्रो भएपछि त्यसलाई पेया भनिन्छ । पेयाभन्दा केही बाक्लोलाई यूष भनिन्छ ।

### पेया र यूषको गुण

**पेया लघुतरा ज्ञेया ग्राहिणी धातुपुष्टिदा ॥१७२॥**
**यूषो बल्यस्ततः कण्ठ्यो लघुपाकः कफापहः ।**



पेया अति नै पचाउन हलुका हुन्छ, यसले दिसा रोक्दछ र धातुलाई पुष्ट पार्दछ । यूष बलदायक, घाँटीका लागि फाइदाजनक, पचाउन हलुका र कफनाशक हुन्छ ।

### भात पकाउने विधि

**जले चतुर्दशगुणे तण्डुलानाञ्चतुष्पलम् ॥१७३॥**
**विपचेत् स्रावयेन् मण्डं स भक्तो मधुरो लघुः ।**

एक सय साठी ग्राम राम्ररी केलाईतुल्याई गरिएको चामल चौध गुना बढी पानीमा हालेर पकाउनू । छड्कन थालेपछि माड निकाल्नू । यस्तो भात मिठो र पचाउन हलुका हुन्छ ।

### माड निकाल्ने विधि

**नीरे चतुर्दशगुणे सिद्धो मण्डस्त्वसिक्थकः ॥१७४॥**

**शुण्ठीसैन्धवसंयुक्तः पाचनो दीपनः परः (स्मृतः) ।**

राम्ररी केलाइतुल्याइ गरिएको चामललाई चौध गुना बढी पानीमा हाली पकाउनू । चामल पाकेपछि माड निकाल्नू । यसलाई शुद्ध माड भनिन्छ । यो माडमा सुठो र सिधेनुन मिसाएर पिउनाले अन्न पच्दछ र पाचकाग्नि बाल्दछ ।

अष्टगुण माड

**धान्यत्रिकटुसिन्धूत्थमुद्गतण्डुलयोजितः ॥१७५॥**
**भृष्टश्च हिङ्गुतैलाभ्यां स मण्डोऽष्टगुणः स्मृतः ।**
**दीपनः प्राणदो वस्तिशोधनो रक्तवर्धनः ॥१७६॥**
**ज्वरजित् सर्वदोषघ्नो मण्डोऽष्टगुण उच्यते ।**

धनिया, सुठो, मरिच, पिप्ला, सिधेनुन, मुगी, चामल, हिङ र तेल मिलाई चौध गुना पानीमा पकाइएको माडलाई अष्टगुण माड भनिन्छ । पहिला तेलमा हिङ मिलाउनू । त्यसमा मुगी चालीस ग्राम र चामल अस्सी ग्राम हाली भुट्नू । यसपछि अरु कुरा हाली नखारिने गरी भुट्नू र पानी हाल्नू । जब चामल पाक्दछ तब निकाल्नू र कपडछान गर्नू । यसरी छानिएको माड पिउनाले पाचकाग्नि बलेर प्राणमा तेज आउँदछ । यसले तल्लो पेट प्रशोधन भई रगत बढाउँदछ । जरो र त्रिदोष नाश गर्दछ । यसलाई आठ गुन भएको माड भनिन्छ ।



वाट्य माड

**सुकण्डितैस्तथा भृष्टैर्वाट्यमण्डो यवैर्भवेत् ॥१७७॥**
**कफपित्तहरः कण्ठ्यो रक्तपित्तप्रसादनः ।**

राम्रो खालको जौलाई राम्ररी केलाई भुट्नू । त्यसपछि भुस निकालेर फाली दानालाई चौध गुना पानीमा हाली पकाउनू । अनि त्यो पानी छानेर पिउनू । यसलाई वाट्यमाड भनिन्छ । यो माड पिउनाले कफविकार र पित्तविकार नाश हुन्छ । घाँटीका लागि लाभदायक हुन्छ र रक्तपित्त ठिक गर्दछ ।

**धानको लाजाको माड**

**लाजैर्वा तण्डुलैर्भृष्टैर्लाजमण्डः प्रकीर्तितः ॥१७८॥**
**श्लेष्मपित्तहरो ग्राही पिपासाज्वरजिन्मतः ।**

धानको लाजालाई चौध गुना पानीमा हाली पकाउनू । यसपछि यसको निकालिएको माडलाई धान्यमाड भनिन्छ । यो माड पिउनाले कफविकार, पित्तविकार, कब्जियत, अतिसार र जरोमा लाग्ने तिर्खा नाश हुन्छ ।

इति श्रीदामोदरसूनुशार्ङ्गधरेण विरचितायां संहितायां मध्यखण्डे चिकित्सास्थाने क्वाथादिकल्पना नाम द्वितीयोऽध्यायः

✷

शार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत दोश्रो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-४९५.५+१७८.५=६७४

✷

# अथ तृतीयोऽध्यायः

## तेश्रो अध्याय

### फाण्ट

**क्षुण्णे द्रव्यपले सम्यग्जलमुष्णं विनिक्षिपेत् ।**
**मृत्पात्रे कुडवोन्मानन्ततस्तु स्रावयेत् पटात् ॥१॥**
**स स्याच्चूर्णद्रवः फाण्टस्तन्मानं द्विपलोन्मितम् ।**
**सितामधुगुडादींश्च क्वाथवत्तत्र निक्षिपेत् ॥२॥**

एक पल ओखतीलाई राम्ररी कुट्नू । सोह्र तोला पानी कुनै भाँडामा हाली तताउनू । उम्लेपछि कुटिएको ओखती हाली राम्ररी पकाउनू । यसपछि त्यो पानीलाई निकाली कपडछान गर्नू । यसलाई फाण्ट वा चूर्णद्रव भनिन्छ । यो फाण्ट अस्सी ग्राम पिउने गर्नु पर्दछ । यसमा मह, मिस्री, खुँदो, सक्खर आदि हाल्ने बताइएको भए जसरी र जति काँढापानी पकाउँदा हाल्ने बताइएको छ त्यसरी र त्यति नै हाल्नू ।



### वातपित्तज्वरमा फाण्ट

**मधूकपुष्पं मधुकञ्चन्दनं सपरूषकम् ।**
**मृणालं कमलं लोध्रं ग(क)म्भारी नागकेशरम् ॥३॥**
**त्रिफलां सारिवां द्राक्षां लाजान् कोष्णे जले क्षिपेत् ।**
**सितामधुयुतः पेयः फाण्टो वाऽसौ हिमोऽथवा ॥४॥**
**वातपित्तज्वरं दाहं तृष्णामूर्च्छाऽरतिभ्रमान् ।**
**रक्तपित्तं मदं हन्यान्नात्र कार्या विचारणा ॥५॥**

महुवाको फूल, जेठीमधु, रक्तचन्दन, फाल्सा, कमलको डाँठ, लोध, खमारी, नागकेसर, त्रिफला, अनन्तमूल, दाख र लाजा : यी सबै ओखती चालीस चालीस ग्राम लिनू । यसपछि एक सय साठी ग्राम पानी तताउनू । पानी उम्लिएपछि सबै ओखती हाली चलाई चलाई पकाउनू । माडजस्तो केही लदरो भएपछि झिकी छान्नू । यसलाई मधूकादि फाण्ट भनिन्छ

। यो फाण्टलाई खुँदो र मह मिसाएर पिउनाले वातपित्तज्वर, डाह, तिर्खा, बेहोसी, अरुची, भ्रम, रक्तपित्त र मदात्यय नाश गर्दछ । यसमा शङ्का नगर्नू । (यी ओखती रातमा पानीमा भिजाएर बिहान छानी पिउनुलाई हिमविधि भनिन्छ । यसले पनि फाण्टकै जस्तो फाइदा गर्दछ) ।

जरो आदिमा आँप आदिको पातको फाण्ट

**आम्रजम्बूकिसलयैर्वटशुङ्गप्ररोहकैः ।**
**उशीरेण कृतः फाण्टः सक्षौद्रो ज्वरनाशनः ॥६॥**
**पिपासाच्छर्द्यतीसारान्मूर्च्छाञ्जयति दुस्तराम् ।**

आँप, जामुनु र बरोंका कोमल पात अनि खसको पूर्वोक्त विधिले फाण्ट बनाई पिए जरो, तिर्खा, वाकवाकी, अतिसार र अती कडा मूर्छाको रोग नाश गर्दछ ।

डाह आदिमा महुवाको फाण्ट



**मधूकपुष्पगम्भारीचन्दनोशीरधान्यकैः ॥७॥**
**द्राक्षया च कृतः फाण्टः शीतः शर्करया युतः ।**
**तृष्णापित्तहरः प्रोक्तो दाहमूर्च्छाभ्रमाञ्जयेत् ॥८॥**

महुवाको फूल, खमारी, रक्तचन्दन, खस, धनियाँ र दाखको फाण्टले तिर्खा, पित्तरोग, डाह, बेहोसी र भ्रम नाश गर्दछ ।

मन्थ

**मन्थोऽपि फाण्टभेदः स्यात्तेन चात्रैव कथ्यते ।**

मन्थ पनि फाण्टकै एक प्रकार भएकोले यसका बारेमा पनि यहीँ बताइन्छ ।

मन्थ बनाउने तरिका

**जले चतुष्पले शीते क्षुण्णं द्रव्यपलं क्षिपेत् ॥९॥**
**मृत्पात्रे मन्थयेत् सम्यक् तस्माच्च द्विपलं पिबेत् ।**

चालीस ग्राम ओखतीलाई राम्ररी कुट्नू । यसपछि एउटा माटाको भाँडामा एक सय साठी ग्राम चिसो पानी हाली भर्नू । यसमा कुटेको ओखती हाल्नू । त्यसपछि घोल्नू । जब धेरै फिँज आउँदछ तब त्यसलाई झिकेर छान्नू । यसलाई मन्थ भनिन्छ । यो मन्थ अस्सी ग्राम पिउने गर्नू ।

मदात्ययमा मन्थ

**खर्जूरदाडिमीद्राक्षातिन्तिडीकाम्लिकामलैः ॥१०॥**
**सपरूषैः कृतो मन्थः सर्वमद्यविकारनुत् ।**

खजुर (छोकडा), दारिम, दाख, चुक अमिलो, अमिली, अमला र फाल्सा (मेवा विशेष) सबै मिलाएर चालीस ग्राम लिनू । यसको पूर्वोक्त विधिले बनाइएको मन्थले सबै खालका नशा नष्ट हुन्छ ।



वाकवाकीमा मन्थ

**क्षौद्रयुक्ता मसूराणां सक्तवो दाडिमाम्भसा ॥११॥**
**मथिता वारयन्त्याशु छर्दिं दोषत्रयोद्भवाम् ।**

धुलो (वा बोक्रा) सहितको मुसुरो भुटी पिँधेर पिठो बनाउनू । यसपछि पाकेको अनारका दाना निचोरी त्यसमा त्यो मसुरोको पिठो र मह मिसाई पिउनू । यसले त्रिदोषजन्य वाकवाकी निको हुन्छ ।

तिर्खा आदिमा जौको सातुको मन्थ

**प्लावितैः शीतनीरेण सघृतैर्यवसक्तुभिः ॥१२॥**

**नातिसान्द्रद्रवो मन्थस्तृष्णादाहास्रपित्तहा ।**

बोक्रा सहितको जौ भुटी पिँधेर त्यसलाई चिसो पानीमा धेरै पातलो वा धेरै बाक्लो नहुने गरी घोल्नू । त्यसपछि बेस्सरी मथ्नू । यसमा घिउ मिसाएर पिउनाले तिर्खा, डाह र रक्तपित्त नाश हुन्छ । (अन्य पुस्तकमा त्रिदोषजन्य वाकवाकी नाश गर्दछ भन्ने श्लोक छ) ।

इति श्रीदामोरसूनुना शार्ङ्गधरेण विरचितायां संहितायां मध्यखण्डे चिकित्सास्थाने फाण्टादिकल्पनाध्यायस्तृतीयः

✷

शार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत तेश्रो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-६७४+१२.५=६८६.५

✷

# अथ चतुर्थोऽध्यायः
## चौथो अध्याय

### हिम वा शीत काँढापानी

**क्षुण्णं द्रव्यपलं सम्यक् षड्भिर्नीरपलैः प्लुतम् ।**
**निशोषितं हिमः स स्यात्तथा शीतकषायकः ॥१॥**
**तन्मानं फाण्टवज्ज्ञेयं सर्वत्रैष विनिश्चयः ।**

चालीस ग्राम ओखतीलाई कुटी दुई सय चालीस ग्राम पानीमा हाली घोलेर कुनै माटाका भाँडामा बेलुकी भिजाउनू । बिहान उठी त्यो पानी छानेर अस्सी ग्राम पिउनू । यस्तो पानीलाई हिम वा शीत-काँढा भनिन्छ ।

### रक्तपित्तमा शीत-काँढा



**आम्रं जम्बूञ्च ककुभं चूर्णीकृत्य जले क्षिपेत् ॥२॥**
**हिमन्तस्य पिबेत् प्रातः सक्षौद्रं रक्तपित्तजित् ।**

आँप, जामुनु र खरीको चालीस चालीस ग्राम बोक्रा धुलो बनाई पूर्वोक्त विधिले शीत-काँढा बनाई महसँग पिउनाले रक्तपित्त नाश हुन्छ ।

### तिर्खा आदिमा शीत-काँढा

**मरिचं मधुयष्टी च काकोदुम्बरपल्लवाः ॥३॥**
**नीलोत्पलं हिमस्तज्जस्तृष्णाच्छर्दिनिवारणः ।**

कालो मरिच, जेठीमधु, खोस्रेटोको कलिला पात र नीलकमल चालीस चालीस ग्राम कुटेर शीत-काँढा बनाई पिउनाले तिर्खा र वाकवाकी निको हुन्छ ।

वातपित्तज्वर आदिमा शीत-काँढा

**नीलोत्पलं बला द्राक्षा मधूकं मधुकन्तथा ॥४॥**
**उशीरं पद्मकञ्चैव काश्मरी च परूषकम् ।**
**एष शीतकषायश्च वातपित्तज्वराञ्जयेत् ॥५॥**
**सप्रलापभ्रमच्छर्दिमोहतृष्णानिवारणः ।**

नीलकमल, बलुको बोक्रा, दाख, महुवा, जेठीमधु, खस, पैयुँ, खमारी र फाल्सा (मेवा विशेष)को पूर्वोक्त विधिले शीत-काँढा बनाई पिउनाले वातपित्तज्वर, बरबराउने समस्या, भ्रम, वाकवाकी, बेहोसी र तिर्खा नाश गर्दछ ।

जीर्णज्वरमा शीत-काँढा

**अमृताया हिमः पेयो जीर्णज्वरहरः स्मृतः ॥६॥**

गुर्जोको शीत-काँढाले पुरानो जरो नाश गर्दछ भनिएको छ ।



रक्तपित्तज्वरमा शीत-काँढा

**वासायाश्च हिमः कासं रक्तपित्तज्वराञ्जयेत् ।**

असुरोको शीत-काँढाले रक्तपित्तज्वर नाश हुन्छ ।

शरीर भित्रको डाहा र तिर्खामा शीत-काँढा

**प्रातः सशर्करः पेयो हिमो धान्याकसम्भवः ॥७॥**
**अन्तर्दाहन्तथा तृष्णाञ्जयेत् स्रोतोविशोधनः ।**

धनियाँको शीत-काँढामा सक्खर मिसाएर पिउनाले शरीरभित्रको डाह, तिर्खा नाश गर्नुका साथै मूत्र आदि मलमार्गलाई सफा पार्दछ ।

**रक्तपित्त आदिमा धनियाँ आदिको शीत-काँढा**

## धान्याकधात्रीवासानां द्राक्षापर्पटयोर्हिमः ॥८॥
## रक्तपित्तज्वरं दाहं तृष्णां शोषञ्च नाशयेत् ।

धनियाँ, अमला, असुरो, दाख र पित्तपापडाको शीतकाँढाले रक्तपित्तज्वर, डाह, तिर्खा र क्षयरोग नाश गर्दछ ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां संहितायां
मध्यखण्डे चिकित्सास्थाने हिमकल्पनाऽध्यायश्चतुर्थः

✷

शार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत चौथो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-६८६.५+८.५=६९५

✷

# अथ पञ्चमोऽध्यायः

## पाँचौं अध्याय

### कल्क (लेप)

द्रव्यमार्द्रं शिलापिष्टं शुष्कं वा सजलं भवेत् ।
प्रक्षेपावापकल्कास्ते तन्मानं कर्षसम्मितम् ॥१॥
कल्के मधु घृतन्तैलं देयं द्विगुणमात्रया ।
सितागुडौ समौ दद्याद् द्रवा देयाश्चतुर्गुणाः ॥२॥

गिलो औषधीलाई अचार पिँधे जसरी राम्ररी पिँध्नू । सुक्खा औषधी भए पानी मिसाएर पिँध्नू । यसलाई कल्क भनिन्छ । यसलाई एक कर्ष (बीस ग्राम) खाने गर्नु पर्दछ । कल्कलाई प्रक्षेप वा आवाप पनि भनिन्छ । यदि कल्कमा मह, घिउ र तेल हाल्नु छ भने कल्कको दोबर हाल्नू । खुँदो वा सखर हाल्ने भए कल्क समान हाल्नू । दूध, पानी आदि पातला कुरा हाल्नुपर्ने भए कल्कको चौबर हाल्नू ।



### पाण्डुरोग आदिमा बर्धमानपिप्पली कल्क

त्रिवृद्ध्या पञ्चवृद्ध्या वा सप्तवृद्ध्याऽथवा कणाः ।
पिबेत्पिष्ट्वा दशदिनन्तास्तथैवापकर्षयेत् ॥३॥
एवं विंशद्दिनैः सिद्धं पिप्पलीवर्द्धमानकम् ।
अनेन पाण्डुवातास्रकासश्वासारुचिज्वराः ॥४॥
उदरार्शः क्षयश्लेष्मवाता नश्यन्त्युरोग्रहाः ।

आज तीन, पाँच वा सात; भोली छ, दश वा चौध गर्दै बढाउँदै पिप्लाको कल्क बनाउँदै जानू । त्यो कल्कलाई दूध वा पानीमा मिसाएर खाने गर्नू । फेरी जुन क्रमले बढाइएको त्यही क्रममा घटाउँदै दश दिनसम्म खानू । यसरी बीस दिनसम्म पिप्लाको कल्क खानुलाई वर्धमानपीपल भनिन्छ । यसले पाण्डु, वातरक्त, खोकी, दम, अरुची, जरो, पेटका रोग, अल्काई, क्षयरोग, कफविकार, वातविकार र उरोग्रह (उदावर्त ?) रोग नाश गर्दछ ।

खटिरा आदिमा नीमको कल्क

**लेपान्निम्बदलैः कल्को व्रणशोधनरोपणः ॥५॥**
**भक्षणाच्छर्दिकुष्ठानि पित्तश्लेष्मकृमीञ्जयेत् ।**

नीमको पातलाई पानी मिसाई राम्ररी कल्क बनाउनू । यो घाउमा दल्नाले वा यसको गोली बनाएर घाउमा बाँध्नाले घाउ सफा भएर भरिन्छ । यो कल्क खानाले वाकवाकी, कुष्ठरोग तथा पित्तविकार र कफविकारले हुने पेटका कीरा मार्दछ ।

गृध्रसी रोगमा कल्क

**महानिम्बजटाकल्को गृध्रसीनाशनः स्मृतः ॥६॥**

बकाइनुको जरालाई पानीमा पिँधेर कल्क बनाई पिउनाले गृध्रसी रोग नाश हुन्छ ।



विषमज्वर र वायुरोगमा कल्क

**शुद्धः कल्को रसोनस्य तिलतैलेन मिश्रितः ।**
**वातरोगाञ्जयेत् तीव्रान् विषमज्वरनाशनः ॥७॥**

लसुनको कल्कमा तिलको तेल मिसाएर पिउनाले डरलाग्दो वायुरोग तथा विषमज्वर नाश हुन्छ ।

वातरोगमा कल्क

**पक्वकन्दरसोनस्य गुलिका निस्तुषीकृता ।**
**पाटयित्वा च मध्यस्थं दूरीकुर्यात्तदङ्कुरम् ॥८॥**
**तदुग्रगन्धनाशाय रात्रौ तक्रे विनिक्षिपेत् ।**
**अपनीय च तन्मध्याच्छिलायां पेषयेत्ततः ॥९॥**
**तन्मध्ये पञ्चमांशेन चूर्णमेषां विनिक्षिपेत् ।**

सौवर्चलं यवानीञ्च भर्जितं हिङ्गुसैन्धवम् ॥१०॥
कटुत्रिकं जीरकञ्च समभागानि चूर्णयेत् ।
एकीकृत्य ततः सर्वं कल्कं कर्षप्रमाणतः ॥११॥
खादेदग्निबलापेक्षी ऋतुदोषाद्यपेक्षया ।
अनुपानन्ततः कुर्यादिरण्डशृतमन्वहम् ॥१२॥
सर्वाङ्गैकाङ्गजं वातमर्दितञ्चापतन्त्रकम् ।
अपस्मारमथोन्मादमूरुस्तम्भञ्च गृध्रसीम् ॥१३॥
उरःपृष्ठकटीपार्श्वकुक्षिपीडां कृमीञ्जयेत् ।
अजीर्णमातपं रोषमतिनीरं पयो गुडम् ॥१४॥
रसोनमश्नन्पुरुषस्त्यजेदेतन्निरन्तरम् ।
मद्यं मांसन्तथाऽम्लञ्च रसं सेवेत नित्यशः ॥१५॥

उत्तम खालको लसुनको एक पोटी (एउटा ?) लेराई त्यसको बाहिरी बोक्रो छोडाउनू । अनि लसुनको गन्ध हटाउन रातभर मोहीमा डुबाएर राख्नू । बिहान लोहोरोले पिँधेर कल्क बनाउनू । त्यसपछि सौँचर नुन, ज्वानु, भुटेको हिङ, सिधेनुन, सुठो, कालो मरिच, पिप्ला र जीराको धुलो कल्कको पाँच भागको एक भाग मिसाउनू । अरिडको जराको काँढापानी पकाई यो कल्क चालीस ग्राम त्यो पानीसँग खानू । यसरी खाँदा ऋतु र आफ्नो शक्तिको ख्याल राख्नू । यसले सबै अङ्गका वातरोग, कुनै एक अङ्गको वातरोग, मुख टेढो भएको, पक्षाघात (अर्दित वात), धनुष्टङ्कार (धनुर्वात), छारेरोग, उन्माद रोग, घुँडाको जोर्नी नचल्ने रोग, वातरोग, गृध्रसी, छाती–ढाड–कम्मर र कोखको शूल र पेटका किरा नाश गर्दछ । यो ओखती खाँदा पचाउन कठिन हुने खानपिन, घाममा बस्ने कार्य, रिसाउने काम, धेरै पानी पिउने काम, दूध र सक्खर बार्नु पर्दछ । यसबेला मद्यपान, मांसभक्षण र अमिलो रस खानु यतिखेर पथ्य हुन्छ ।



घुँडा शिथिल हुँदाको कल्क

पिप्पली पिप्पलीमूलं भल्लातकफलानि च ।
एतत्कल्कश्च सक्षौद्र ऊरुस्तम्भनिवारणः ॥१६॥

पिप्ला, पिप्लाको जरा र भलायोको फललाई पानीमा पिँधी कल्क बनाएर महसँग खानाले घुँडा शिथिल भएको ठिक हुन्छ ।

### खाना पच्ने बेलामा पेटमा हुने शूल वा दुखाईमा कल्क

**विष्णुक्रान्ताजटाकल्कः सिताक्षौद्रघृतैर्युतः ।**
**परिणामभवं शूलं नाशयेत् सप्तभिर्दिनैः ॥१७॥**

अपराजिताको जराको कल्कमा खुँदो, मह र घिउ मिसाएर खाए खाना पच्ने बेलामा पेटमा हुने शूल वा दुखाई सात दिनमा नाश हुन्छ ।

**शुण्ठीतिलगुडैः कल्कं दुग्धेन सह योजयेत् ।**
**परिणामभवं शूलमामवातञ्च नाशयेत् ॥१८॥**



सुठो र तिल बराबर मात्रामा लिई त्यति (यी दुई) नै बराबर सक्खर लिनू र कल्क बनाउनू । यसलाई चौबर मात्राको गाई दूधमा मिसाई पिउनू । यसले पनि खाना पच्ने बेलामा पेटमा हुने शूल वा दुखाई तथा आमवात नाश गर्दछ ।

### रगत बहने अल्काईमा कल्क

**अपामार्गस्य बीजानां कल्कस्तण्डुलवारिणा ।**
**पीतो रक्तार्शसां नाशं कुरुते नात्र संशयः ॥१९॥**

दतिवनका गेडाको कल्कलाई चौलानी पानीमा मिसाएर पिउने गरे रगत बहने खालको अल्काई रोग ठिक हुन्छ ।

### रगत मिसिएको पातलो दिसा हुने रोगमा कल्क

**बदरीमूलकल्केन तिलकल्कश्च योजितः ।**
**मधुक्षारयुतः कुर्याद् रक्तातीसारनाशनम् ॥२०॥**

बयरको जराको कल्क र तिलको कल्क बेग्लाबेग्लै बनाई मिसाउनू । अनि त्यसमा मह मिसाई गाईको अथवा बाख्रीको दूधसँग पिउनाले रगत मिसिएको पातलो दिसा हुने रोग ठिक हुन्छ ।

### रगत कम हुँदा र क्षयरोगमा कल्क

**कूष्माण्डकरसोपेतां लाक्षां कर्षद्वयं पिबेत् ।**
**रक्तक्षयमुरोघातं क्षयरोगञ्च नाशयेत् ॥२१॥**

चालीस ग्राम लाहाको कल्कलाई चौबर कुभिण्डाको रससँग मिसाएर खानाले रगतको कमी तथा छाती दुख्ने खालको क्षयरोग नाश हुन्छ ।

### मासिक धर्म गडबढी भई रगत धेरै जाने स्त्रीरोगमा कल्क

**तण्डुलीयजटाकल्कः सक्षौद्रः सरसाञ्जनः ।**

**तण्डुलोदकसम्पीतो रक्तप्रदरनाशनः ॥२२॥**

लुँडे सागको जराको कल्कमा मह र रसाञ्जन मिसाई चानगुना चौलानी पानीसँग पिउनाले मासिक धर्म गडबढी बढी रगत धेरै जाने स्त्रीरोग ठिक हुन्छ ।

### विषको असर आदिमा कल्क

**अङ्कोटमूलकल्कश्च सक्षौद्रस्तण्डुलाम्बुना ।**
**अतीसारहरः प्रोक्तस्तथा विषहरः स्मृतः ॥२३॥**

अम्फीफलको जराको कल्कमा मह मिसाई चौलानीसँग पिउनाले अतिसार र विषको असर ठिक गर्दछ ।

### सर्पको विषमा कल्क

**वन्ध्याकर्कोटिकामूलं पाटलाया जटा तथा ।**

**घृतेन बिल्वमूलं वा द्विविधं नाशयेद्विषम् ॥२४॥**

फल नफल्ने खालको चठेलको जरा, पाडरीको जरा र बेलको जरामध्ये जे पाइन्छ त्यसको कल्कमा घिउ मिसाएर पिउनाले नाग र सर्पको विष नाश हुन्छ ।

### दीपन र पाचनका लागि कल्क

**अभयासैन्धवकणाशुण्ठीकल्कस्त्रिदोषहा ।**
**पथ्यासैन्धवशुण्ठीभिः कल्को दीपनपाचनः ॥२५॥**

जङ्गी हर्रो, सिधेनुन, पिप्ला र सुठोको धुलोलाई पानी मिसाएर कल्क बनाई पिउनाले त्रिदोष नाश हुन्छ । सानो हर्रो, सिधेनुन र सुठोको कल्कले पाचन र दीपनको काम गर्दछ ।

### पेटका कीरा मार्ने कल्क

**त्रिवृत्पलाशबीजानि पारसीकयवानिका ।**

**कम्पिल्लकं विडङ्गञ्च गुडश्च समभागकः ॥२६॥**
**तक्रेण कल्कमेतेषाम्पिबेत् कृमिगणापहम् ।**

सेतो निशोध, पलाँशका गेडा, पारसिक ज्वानु, कम्पिल्लक र वायुविडङ्गको धुलो बनाई यति नै सक्खर मिसाएर कल्क बनाउनू । यसलाई तक्रमा मिसाएर पिउनाले पेटमा परेका कीरा मर्दछन् ।

### रगत बहने अल्काईमा कल्क

**नवनीततिलैः कल्को जेता रक्तार्शसां स्मृतः ॥२७॥**
**नवनीतसितानागकेशरैश्चापि तद्विधः ।**

नौनी र तिलको कल्क अथवा नागकेसर, मिस्री र नौनीको कल्क पिउनाले अल्काईबाट रगत बहन बन्द हुन्छ ।

**कब्जियतमा कल्क**

## पीतो मसूरयूषेण कल्कः शुण्ठीशलाटुजः ॥२८॥
## जयेत् सङ्ग्रहणीं तद्वत् तक्रे बृहतीभवः ।

सुठो र सानो काँचो बेलको गुदीको कल्क, मसुरोको काँढापानीसँग पिउनाले कब्जियत रोग नाश हुन्छ ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां संहितायां मध्यखण्डे
चिकित्सास्थाने कल्ककल्पनाऽध्यायः पञ्चमः

✷

शार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत पाँचौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्या:-६९५+२८.५=७२३.५

✷

# अथ षष्ठोऽध्यायः

## छैटौं अध्याय

### चूर्ण (धुलो ओखती)
### धुलो ओखतीको लक्षण

**अत्यन्तशुष्कं यद् द्रव्यं सुपिष्टं वस्त्रगालितम् ।**
**तत्स्याच्चूर्णं रजः क्षोदस्तन्मात्रा कर्षसम्मिता ॥१॥**

अत्यन्त सुकेको ओखती कुटेर वा पिँधेर कपडामा छानेपछि त्यसलाई “चूर्ण” वा धुलो भनिन्छ । यसलाई “रज” र “क्षोद” पनि भनिन्छ । यसको सामान्य खाने मात्रा एक कर्ष ( बीस ग्राम) हो ।

### धुलो ओखतीमा मिसाइने सक्खर आदिको मात्रा

**चूर्णे गुडः समो देयः शर्करा द्विगुणा भवेत् ।**

**चूर्णेषु भर्जितं हिंगु देयं नोत्क्लेदकृद्भवेत् ॥२॥**

ओखतीको यस्तो धुलोमा सक्खर मिसाउने हो भने ओखती बराबर मिसाउनू । हिङ हाल्नु पर्दा घिउमा भुटेको हिङ हाल्नु अमन गर्दैन ।

### धुलो ओखतीको मात्रा

**लिहेच्चूर्णं द्रवैः सर्वैर्घृताद्यैर्द्विगुणोन्मितैः ।**
**पिबेच्चतुर्गुणैरेव चूर्णमालोडितं द्रवैः ॥३॥**

धुलो ओखतीमा घिउ, मह आदि मिसाउनु पर्दा धुलोभन्दा दोबर हाली मिसाउनू । दूध, गहुँत, पानी आदि पातला पदार्थमा घोलेर खानु पर्दा भने धुलोभन्दा चौबर पानीमा घोलेर खानू ।

धुलो ओखतीको रोग अनुसारको मात्रा

**चूर्णावलेहगुटिकाकल्कानामनुपानकम् ।**
**वातपित्तकफातङ्के त्रिद्व्येकपलमाहरेत् ॥४॥**

धुलो, लेदो, गोली र कल्कमा जेजस्ता अनुपान बताइएका छन् ती पित्तरोग हुँदा तीन पल (एक सय बीस ग्राम) लिनू । वातरोगमा दुई पल (अस्सी ग्राम लिनू) । कफरोगमा एक पल (चालीस ग्राम लिनू) । यसरी खाँदा ओखती राम्ररी शरीरमा फैलन्छ ।

अनुपानको आवश्यकता

**यथा तैलञ्जले क्षिप्तं क्षणेनैव प्रसर्पति ।**
**अनुपानबलादङ्गे तथा सर्पति भेषजम् ॥५॥**

जसरी पानीमा तेलको थोपा हाल्दा सरर चारैतिर फैलन्छ, त्यसरी अनुपानका प्रभावले शरीरमा ओखती फैलन्छ । 

धुलो ओखतीमा अन्य रस हाल्ने मात्रा

**द्रवेण यावता सम्यक्चूर्णं सर्वं प्लुतं भवेत् ।**
**भावनायाः प्रमाणन्तु चूर्णे प्रोक्तं भिषग्वरैः ॥६॥**

धुलो ओखतीमा कागती आदि वा अरु कुनै वनस्पतिको रस मिसाई पकाउनु पर्दा जबसम्म धुलो डुब्दैन तबसम्म रस हाल्नू । यसरी सबै खालका धुलो ओखतीका बारेमा बताइयो ।

सबै किसिमका जरोमा प्रयोग गरिने धुलो ओखती

**आमलञ्चित्रकः पथ्या पिप्पली सैन्धवन्तथा ।**
**चूर्णितोऽयं गणो ज्ञेयः सर्वज्वरविनाशनः ॥७॥**
**भेदी रुचिकरः श्लेष्मजेता दीपनपाचनः ।**

अमला, चितूको बोक्रा, हर्रो, पिप्ला र सिधेनुन बराबर मात्रामा पिँधेर खाने गरे सबै खालका जरो नाश हुन्छ । यो धुलोले दिसा खुलाउँदछ, रुची जगाउँदछ र कफविकार नाश गर्दछ । यो दीपन र पाचन गुणको हुन्छ ।

खोकी आदिमा पिप्लाको धुलो

**मधुना पिप्पलीचूर्णं लिहेत्कासज्वरापहम् ॥८॥**
**हिक्काश्वासहरं कण्ठ्यं प्लीहघ्नं बालकोचितम् ।**

पिप्लाको धुलो एक महिनासम्म महसँग मिसाएर चाट्ने गरे खोकी, जरो, बाडुली र दम नाश गर्दछ । यो घाँटीका लागि फाइदाजनक, फियोका रोग नाशक र बालकका लागि अति उपयोगी हुन्छ ।

प्रमेह आदिमा त्रिफलाको धुलो

**एका हरीतकी योज्या द्वौ च योज्यौ बिभीतकौ ॥९॥**

**चत्वार्यामलकान्येव त्रिफलैषा प्रकीर्तिता ।**
**त्रिफला मेहशोथघ्नी नाशयेद्विषमज्वरान् ॥१०॥**
**दीपनी श्लेष्मपित्तघ्नी कुष्ठहन्त्री रसायनी ।**
**सर्पिर्मधुभ्यां संयुक्ता सर्वनेत्रामयाञ्जयेत् ॥११॥**

एउटा हर्रो, दुई वटा बर्रो र चारवटा अमलाको धुलोको मिश्रणलाई त्रिफला भनिन्छ । यो खानाले प्रमेह, सुजन र विषमज्वर नाश गर्दछ । यसमा दीपन गुण हुन्छ । यसले कफविकार, पित्तविकार र कुष्ठरोग नास गर्दछ । यसले रोग नाश गर्दै बुढ्यौली आउन दिँदैन । घिउ र मह असमान भागमा मिसाई खानाले आँखाका सबै रोग नाश हुन्छन् । (घिउ र मह बराबर खाँदा शरीरलाई बेफाइदा गर्दछ) ।

कफविकार आदिमा धुलो ओखती

**पिप्पली मरिचं शुण्ठी त्रिभिस्त्र्यूषणमुच्यते ।**

**दीपनं श्लेष्ममेदोघ्नं कुष्ठपीनसनाशनम् ॥१२॥**
**जयेदरोचकं सामं मेहगुल्मगलामयान् ।**

पिप्ला, कालो मरिच र सुठोको सम्मिश्रणलाई त्र्युषण भनिन्छ । यो धुलामा दीपन गुण हुन्छ । यसले कफविकार, बोसोविकार, कुष्ठरोग र पिनास नाश गर्दछ । अरुची, आमविकार, प्रमेह, गुल्म र घाँटीका रोग ठिक गर्दछ ।

अरुची आदिमा पञ्चकोलको धुलो ओखती

**पिप्पलीचव्यविश्वाह्वपिप्पलीमूलचित्रकैः ॥१३॥**
**पञ्चकोलमिति ख्यातं रुच्यं पाचनदीपनम् ।**
**आनाहप्लीहगुल्मघ्नं शूलश्लेष्मोदरापहम् ॥१४॥**

पिप्ला, चाँभा, सुठो, पिप्लाको जरा र चितूको बोक्राको धुलो सम्मिश्रणलाई पञ्चकोल भनिन्छ । यो रुचिकर, पाचन र दीपन हुन्छ । यसले आनाह, फियोजन्य रोग, गुल्म, शूल, कफविकार र पेटका रोग ठिक गर्दछ ।



त्रिगन्ध र चतुर्जात चूर्णका गुण

**त्रिगन्धमेलात्वक्पत्रैश्चतुर्जातं सकेशरम् (रैः)।**
**त्रिगन्धं सचतुर्जातं रूक्षोष्णं लघु पित्तकृत् ॥१५॥**
**वर्ण्यं रुचिकरं तीक्ष्णं पित्त(विष)श्लेष्मामयाञ्जयेत् ।**

सुकुमेल, दालचिनी र तेजपातको सम्मिश्रणलाई त्रिगन्ध भनिन्छ । यसमा केसर मिसाएपछि त्यसलाई चतुर्जात भनिन्छ । यी दुबै रुखा, गर्मी गर्ने, पचाउन सहज र सामान्य पित्त बढाउने गुणका हुन्छन् । यो धुलोले वर्णमा निखार लेराउँदछ र रुची बढाउँदछ । यो तिक्खर स्वादको हुनुका साथै पित्त (विष) विकार र कफविकार नाशक हुन्छ ।

वालवालिकाको ज्वरातिसारमा धुलो ओखती

**कृष्णारुणामुस्तकशृङ्गिकाणां तुल्येन चूर्णेन समाक्षिकेण ॥१६॥**

**ज्वरातिसारः प्रशमं प्रयाति सश्वासकासः सवमिः शिशूनाम् ।** (कुनै प्रतिमा यो श्लोक छैन)

पिप्ला, उत्तिस, नागरमोथे र गुनाभा बराबर मिसाई बनाइएको धुलो महमा मिसाएर बालकलाई चटाउने गर्नाले दम, खोकी , वाकवाकी र जरो सहितको छेरपटी (ज्वरातिसार) ठिक गर्दछ ।

जीवनीयगणको धुलो ओखती

**काकोली क्षीरकाकोली जीवकर्षभको तथा ॥१७॥**
**मेदा चान्या महामेदा जीवन्ती मधुकन्तथा ।**
**मुद्गपर्णी माषपर्णी जीवनीयो गणस्त्वयम् ॥१८॥**
**जीवनीयो गणः स्वादुर्गर्भसन्धानकृद् गुरुः ।**
**स्तन्यकृद् बृंहणो वृष्यः स्निग्धः शीतस्तृषापहः ॥१९॥**
**रक्तपित्तं क्षायं शोषं ज्वरदाहानिलाञ्जयेत् ।**



कल्छे लहरो, दूधे कल्छे लहरो, जीवक, ऋषभक, खिरौंलो, ठूलो खिरौंलो, हर्रो, जेठीमधु, वनमुगी र वनमाषको समूहलाई जीवनीय गण भनिन्छ । यसको धुलो स्वादिलो हुन्छ । यसले गर्भ स्थापना गर्दछ । यो पचाउन कठिन हुन्छ । यसले स्तनमा दूध बढाउँदछ, शरीरलाई पुष्ट पार्दछ, ग्राम्यधर्ममा आनन्द दिन्छ, यो चिल्लो र शीतल हुन्छ, यसले तिर्खा, रक्तपित्त, क्षयरोग, सुजन, जरो, डाह र वायुविकार नाश गर्दछ ।

अष्टवर्गको धुलो ओखती

**द्वे मेदे द्वे च काकोल्यौ जीवकर्षभकौ तथा ॥२०॥**
**ऋद्धिवृद्धी च तैः सर्वैरष्टवर्ग उदाहृतः ।**
**अष्टवर्गो बुधैः प्रोक्तो जीवनीयसमो गुणैः ॥२१॥**

खिरौंलो, ठूलो खिरौंलो, कल्छे लहरो, दूधे कल्छे लहरो, जीवक, ऋषभक, ऋद्धि र वृद्धिको सम्मिश्रणलाई अष्टवर्ग भनिन्छ । यसका गुण जीवनीय गणका गुण समान हुन्छन् ।

### पाँच थरी नुन

सिन्धु सौवर्चलञ्चैव विडं सामुद्रिकं गुडम् ।
एकद्वित्रिचतुः पञ्चलवणानि क्रमाद्विदुः ॥२२॥
तेषु मुख्यं सैन्धवं स्यादनुक्ते तत्प्रयोजयेत् ।
सैन्धवाद्यं रोमकान्तं ज्ञेयं लवणपञ्चकम् ॥२३॥
मधुरं सृष्टविण्मूत्रं स्निग्धं सूक्ष्मं बलापहम् ।
वीर्योष्णं दीपनं तीक्ष्णं कफपित्तविवर्धनम् ॥२४॥

सिधे, सौंचर, विड, समुद्री र साँभर यी पाँच नुनमध्ये पहिलोलाई लवण; पहिलो र दोश्रोलाई द्विलवण; पहिलो, दोश्रो र तेश्रोलाई त्रिलवण; पहिलो, दोश्रो, तेश्रो र चौथोलाई चतुर्थलवण तथा पाँचै थरी लवणलाई पञ्चलवण भनिन्छ । यी पाँच थरी नुनमध्ये सिधेनुन उत्तम हुन्छ । अतः जहाँ नाम नतोकी नुन मात्र भनिएको हुन्छ त्यहाँ सिधेनुन प्रयोग गर्नु पर्दछ । यो लवणपञ्चक मिठो हुन्छ । यसमा मलमूत्र राम्ररी विसर्जन हुन्छन् । यसले चिल्लो र सूक्ष्म भई मललाई खुकुलो पार्दछ । यो उष्णवीर्यको हुनाले पाचकाग्निलाई बाल्दछ , तिक्खर भएको हुनाले कफविकार र पित्तविकार नाश गर्दछ ।



### क्षार

स्वर्जिका यावशूकश्च क्षारयुग्ममुदाहृतम् ।
ज्ञेयौ वह्निसमौ क्षारौ स्वर्जिकायावशूकजौ ॥२५॥
क्षाराश्चान्येऽपि गुल्मार्शोग्रहणीरुक्छिदः सराः ।
पाचनाः कृमिपुंस्त्वघ्नाः शर्कराऽश्मरिनाशनाः ॥२६॥

सज्जीखार र यवखार अग्नि समान पाचक हुन्छ भनी थाहा पाउनू । यी दुई क्षारलाई क्षारयुग्म भनिन्छ । अन्य क्षारले गुल्म, अल्काई र कब्जियत नाश गर्दछ । दिसा खुलाउने बनी पाचकाग्निलाई बाल्दछ । यसले कीरा, पुरुषत्व, मधुमेह र पत्थरी पनि नाश गर्दछ ।

सबै खालका जरोको ओखती : सुदर्शन चूर्ण

त्रिफला रजनीयुग्मं कण्टकारीयुगं सठी ।
त्रिकटु ग्रन्थिकं मूर्वा गुडूची धन्वयासकः ॥२७॥
कटुका पर्पटो मुस्तं त्रायमाणा च बालकम् ।
निम्बः पुष्करमूलञ्च मधुयष्टी च वत्सकम् ॥२८॥
यवानीन्द्रयवो भार्ङ्गी शिग्रुबीजं सुराष्ट्रजा(कम्) ।
वचा त्वक्पद्मकोशीरं चन्दनातिविषाबलाः ॥२९॥
शालपर्णी पृष्ठपर्णी विडङ्गं तगरन्तथा ।
चित्रको देवकाष्ठञ्च (दारुश्च) चव्यं पत्रं पटोलजम् ॥३०॥
जीवकर्षभकौ चैव लवङ्गं वंशलोचना ।
पुण्डरीकञ्च काकोली पत्रकं जातिपत्रकम् ॥३१॥
तालीसपत्रञ्च तथा समभागानि चूर्णयेत् ।



सर्वचूर्णस्य चार्धांशं किरातं निक्षिपेत् सुधीः ॥३२॥
एतत्सुदर्शनन्नाम चूर्णं दोषत्रयापहम् ।
ज्वरांश्च निखिलान्हन्यान्नात्र कार्या विचारणा ॥३३॥
पृथग्द्वन्द्वागन्तुजाँश्च धातुस्थान् विषमज्वरान् ।
सन्निपातोद्भवाँश्चापि मानसानपि नाशयेत् ॥३४॥
शीतज्वरैकाहिकादीन् मोहं तन्द्रां भ्रमं तृषाम् ।
श्वासं कासञ्च पाण्डुञ्च हृद्रोगं हन्ति कामलाम् ॥३५॥
त्रिकपृष्ठकटीजानुपार्श्वशूलनिवारणम् ।
शीताम्बुना पिबेद्धीमान्सर्वज्वरनिवृत्तये ॥३६॥
सुदर्शनं यथा चक्रं दानवानां विनाशनम् ।
तद्वज्ज्वराणां सर्वेषामिदं चूर्णं प्रणाशनम् ॥३७॥

त्रिफला, हलेदो, चुत्रो, ठूलो बिही, कण्टकारी, सुठो, त्रिकटु, पिप्लाको जरा, मरुई लहरो, गुर्जो, सिस्नु, कुटकी, पित्तपापडा, नागरमोथे, मुँडिलो, सुगन्धवाल, नीमका बोक्रा, चाभा, जेठीमधु, ठूलोकुरो, ज्वानु, इन्द्रजौ, भारङ्गी, सैजनका गेडा, गोपीचन्दन, बोभ्को, दालचिनी, पैयुँ, रक्तचन्दन, उत्तिस, बलु, साकिनु, सतिबयर, वायुविडङ्ग, तगर, चितू, देवदारु, चाँभा विशेष, पर्बलका पात, जीवक, ऋषभक, ल्वाङ, वंशलोचन, सेतोकमल, कल्छे लहरो, तेजपात, जाइफल र लोठसल्लो बराबर मिसाएर धुलो बनाउनू । जति हुन्छ त्यसमा विद्वानले आधा चिराइतोको धुलो मिसाउनू । यसलाई त्रिदोष नाश गर्ने "सुदर्शन चूर्ण" भनिन्छ । यसले सबै खालका जरो नाश गर्दछ, दोमन गर्नै पर्दैन । बेग्लै आउने, दुईवटा दोष मिलेर आउने, आगन्तुक, धातुजन्य, विषम, सन्निपात र मानसिक जरो यसले नाश गर्दछ । शीतज्वर, एक दिन बिराएर आउने आदि जरो; मोह, उँग, भ्रम, तिर्खा, दम, खोकी, पाण्डुरोग, मुटुरोग र कमलपित्त यसले नाश गर्दछ । कण्डेउलो-ढाड-कमर-घुँडा र कोखाको शूल यसले ठिक गर्दछ । सबै खालका जरो नाश गर्न विद्वानले यो धुलोलाई चिसो पानीसँग खानू । जसरी सुदर्शन चक्रले दानवहरूको विनाश गर्दछ त्यसरी नै यो सुदर्शन चूर्णले सबै खालका जरो विनाश गर्दछ ।



दिसा खुलाउने चूर्ण

**कासश्वासज्वरहरा(री) त्रिफला पिप्पलीयुता ।**
**चूर्णिता मधुना लीढा भेदिनी चाग्निबोधिनी ॥३८॥**

त्रिफलामा पिप्ला मिसाएर बनाइएको चूर्णले महसँग मिसाएर खाँदा दिसा खुलस्त पार्दछ, पाचक अग्निलाई बाल्दछ अनि दम, खोकी र जरो निको पार्दछ ।

जरोमा काफल आदिको चूर्ण

**कट्फलं मुस्तकं तिक्ता शुण्ठी शृङ्गी च पौष्करम् ।**
**चूर्णमेषाञ्च मधुना शृङ्गवेररसेन वा ॥३९॥**
**लेह्यं ज्वरहरं कण्ठ्यं कासश्वासारुचीर्जयेत् ।**
**वायुं छर्दिं तथा शूलं (वायुशूलं तथा छर्दिं) क्षयं चैव व्यपोहति ॥४०॥**

काफल, नागरमोथे, कुटकी, सुठो, कर्कटशृङ्गी (गुनाभा) र कमलको जराको चूर्णले मह वा अदुवाको रससँग मिसाएर खाँदा जरो नाश गर्दछ । यसले घाँटीलाई फाइदा गर्नुका साथै खोकी, दम र अरुची समेत नाश गर्दछ । साथै वातविकार, वाकवाकी, शूल र क्षयरोग ठिक गर्दछ ।

शूल आदिमा चूर्ण

**कट्फलं पौष्करं शृङ्गी मुस्ता त्रिकटुकं शठी ।**
**समस्तान्येकशो वाऽपि सूक्ष्मचूर्णानि कारयेत् ॥४१॥**
**आर्द्रकस्वरसक्षौद्रैर्लिह्यात्कफविनाशनम् ।**
**शूलानिलारुचिच्छर्दिकासश्वासक्षयापहम् ॥४२॥**

काफल, कमलको जरा, गुनाभा, नागरमोथे, त्रिकटु र कपुरहलेदोलाई बेग्लाबेग्लै वा मिसाएर कुटी धुलो बनाएर अदुवाको रस वा महसँग खाने गर्नाले कफविकार, शूल, वातविकार, अरुची, वाकवाकी, खोकी, दम र क्षयरोग नाश गर्दछ ।



दम, खोकी आदिमा चूर्ण

**कट्फलं पौष्करं कृष्णा शृङ्गी च मधुना सह ।**
**श्वासकासज्वरहरः श्रेष्ठो लेहः कफान्तकृत् ॥४३॥**

काफल, कमलको जरा, पिप्ला र गुनाभाको चूर्णमा मह मिसाएर खाए दम, खोकी र जरो नाश हुन्छ ।

बालरोगमा चूर्ण

**शृङ्गीं प्रतिविषां कृष्णां चूर्णितां मधुना लिहेत् ।**
**शिशोः कासज्वरच्छर्दिशान्त्यै वा केवला विषा (केवलां विषाम्) ॥४४॥**

गुनाभा, उत्तिस र पिप्लाको चूर्ण अथवा उत्तिस मात्रैको चूर्ण महसँग मिसाई चटाउनाले बालकको खोकी, जरो र वाकवाकी ठिक हुन्छ ।

जवाखार आदिको चूर्ण बालकको खोकीमा

यवक्षारविषाशृङ्गीमागधीपौष्करोद्भवम् ।
चूर्णं क्षौद्रयुतं लीढं पञ्चकासाञ्जयेच्छिशोः ॥४५॥ (प्रक्षिप्त श्लोक)

जवाखार, उत्तिस, गुनाभा, पिप्ला र चाभोको चूर्णलाई महसँग मिसाएर चटाउनाले बालकको पाँच किसिमको खोकी निको हुन्छ ।

आमातिसारमा चूर्ण

शुण्ठीप्रतिविषाहिङ्गुमुस्ताकुटजचित्रकैः ।
चूर्णमुष्णाम्बुना पीतमामातीसारनाशनम् ॥४६॥

सुठो, उत्तिस, हिङ, नागरमोथे, इन्द्रजौ र चितूको बोक्राको धुलो यसको चौबर पानीसँग पिउनाले आमातिसार नाश हुन्छ ।



हरीतकी प्रतिविषा सिन्धु सौवर्चलं वचा ।
हिङ्गु चेति कृतञ्चूर्णं पिबेदुष्णेन वारिणा ॥४७॥
आमातीसारशमनं ग्राहि चाग्निप्रबोधनम् ।

हर्रो, उत्तिस, सिधेनुन, सौँचर नुन, बोझो र भुटिएको हिङको चूर्ण तातोपानीसँग खानाले आमातिसार नाश हुन्छ । यो ग्राही हुन्छ र यसले पाचकाग्नि बल्दछ ।

पक्वातिसारमा चूर्ण

मुस्तमिन्द्रयवं बिल्वं लोध्रं मोचरसन्तथा ॥४८॥
धातकीं चूर्णयेत्तक्रगुडाभ्यां पाययेत् सुधीः ।
सर्वातीसारशमनं निरुणद्धि प्रवाहिकाम् ॥४९॥
लघुगङ्गाधरं नाम चूर्णं सङ्ग्राहकं परम् ।

नागरमोथे, इन्द्रजौ, बेल, लोध, सिमलको खोटो र धँयेराको फूल मिसाई धुलो बनाएर तक्र र सक्खरमिसाई त्योसँग पिउनाले सबै प्रकारका अतिसार ठिक गर्दछ र प्रवाहिका रोगलाई भगाउँदछ । यो चूर्णलाई "लुघुगङ्गाधर चूर्ण" भनिन्छ । यो अति नै कब्जियत गराउने गुणको हुन्छ ।

प्रवाहिका आदिमा वृद्धगङ्गाधर चूर्ण

**मुस्तारलुकशुण्ठीभिर्धातकीलोध्रबालकैः ॥५०॥**
**बिल्वमोचरसाभ्याञ्च पाठेन्द्रयववत्सकैः ।**
**आम्रबीजं प्रतिविषा लज्जालुरिति चूर्णितम् ॥५१॥**
**क्षौद्र तण्डुलपानीयैः पीतैर्याति प्रवाहिका ।**
**सर्वातिसारग्रहणी प्रशमं याति वेगतः ॥५२॥**
**वृद्धगङ्गाधरं चूर्णं सरिद्वेगविबन्धकम् (सरिद्वगस्य रोधकम्) ।**

नागरमोथे, टटेलो, सुठो, धँयेरो, लोध, सुगन्धवाल, बेल, सिमलको खोटो, गानेगुर्जो, इन्द्रजौको बोक्रा, आँपको कोया, उत्तिस र लज्जालु : यी ओखतीको धुलो बनाई चौलानी पानीमा मह मिसाएर त्यसँग खानाले प्रवाहिका, सबै खालका अतिसार र कब्जियत चाँडै ठिक गर्दछ । यो धुलोलाई वृद्धगङ्गाधर चूर्ण भनिन्छ । यसले नदी समान वेगिलो अतिसारलाई पनि नाश गर्दछ ।



अतिसारमा ज्वानुको धुलो

**अजमोदा मोचरसं सशृङ्गवेरं सधातकी कुसुमम् ॥५३॥**
**गोदधिमथितेन युतं (मथितयुक्तं) गङ्गामपि वाहिनीं रुन्ध्यात् ।**

ज्वानु, सिमलको खोटो, अदुवा र धँयेराको फूलको धुलो पानी नहाली जमाइएको गाईको दहीमा मिसाएर खानाले गङ्गासमान वेगिलो छेरपटी पनि निको हुन्छ ।

कब्जियतमा मरीच आदिको चूर्ण

**तक्रेण यः पिबेन्नित्यं चूर्णं मरिचसम्भवम् ।।५४।।**
**चित्रसौवर्चलोपेतं ग्रहणी तस्य नश्यति । उदरप्लीहमन्दाग्निगुल्मार्शोनाशनं भवेत् ।।५५।।**

कालो मरिच, चित्र (चितू ?) को बोक्रा र सौंचर नुनको धुलो तक्रसँग मिसाएर दिनहुँ खाने गरे कब्जियत, फियोका रोग, कमजोर पाचकाग्नि, गुल्म र अल्काई नाश हुन्छ ।

गुल्म आदि रोगमा कपित्थाष्टक चूर्ण

**अष्टौ भागाः कपित्थस्य षड्भागा शर्करा मता ।**
**दाडिमं तिन्तिडीकञ्च श्रीफलं धातकी तथा ।।५६।।**
**अजमोदा पिप्पली च प्रत्येकं स्युस्त्रिभागिकाः ।**
**मरिचं जीरकं धान्यं ग्रन्थिकं बालकन्तथा ।।५७।।**

**सौवर्चलं यवा(मा)नी च चातुर्जातं सचित्रकम् ।**
**नागरं चैकभागाः स्युः प्रत्येकं सूक्ष्मचूर्णितम् ।।५८।।**
**कपित्थाष्टकसंज्ञं स्याच्चूर्णमेतद्गलामयान् ।**
**अतीसारं क्षयं गुल्मं ग्रहणीञ्च व्यपोहति ।।५९।।**

कैथ आठ भाग; मिस्री छ भाग; अनारका दाना, अमिली, बेलको गुदी, धँयेराको फूल, ज्वानु र पिप्ला सबै तीन तीन भाग; कालो मरिच, जीरा, धनियाँ, पिप्लाको जरा, सुगन्धवाल, सौंचरनुन, ज्वानु, चतुर्जातक, चितूको बोक्रा र सुठो सबै एक एक भाग मिसाई बनाइएको धुलोलाई कपित्थाष्टक चूर्ण भनिन्छ । यो खानाले घाँटीका रोग, अतिसार, क्षयरोग, गुल्म र कब्जियत नाश हुन्छ ।

वातजन्य ग्रहणी रोगमा चूर्ण

**(पिप्पली बृहती व्याघ्री यवक्षारकलिङ्गकाः ।**

**चित्रकं सारिवा पाठा शटी लवणपञ्चकम् ॥६०॥**
**तच्चूर्णं पाययेद्दध्ना सुरयोष्णाम्बुनाऽपि वा ।**
**मारुतग्रहणीदोषशमनं परमं हितम् ॥६१॥** : प्रक्षिप्त श्लोक)

पिप्ला, ठूलो बिही दुई भाग, जवाखार, इन्द्रजौ, चितूको बोक्रा, सिस्नु, गानेगुर्जो, कपुरहलेदो र पाँथ थरी नुनको धुलो बनाई दही, मद्य वा तातोपानीसँग खानाले वातजन्य ग्रहणी रोगमा अत्यन्त फाइदा गर्दछ ।

जरो आदिमा दाडिमाष्टक चूर्ण

**दाडिमी द्विपला ग्राह्या खण्डा चाष्ट पलानि वा (खण्डाद्दशपलानि च) ।**
**त्रिगन्धस्य पलञ्चैकं त्रिकटु स्यात्पलत्रयम् ॥६२॥**
**एतदेकीकृतं सर्वं चूर्णं स्याद्दाडिमाष्टकम् ।**
**रुचिकृद्दीपनं कण्ठ्यं ग्राहि कासज्वरापहम् ॥६३॥**



अस्सी ग्राम (सानो) दारिमका दाना, मिस्री तीन सय बीस ग्राम, त्रिगन्ध चालीस ग्राम र त्रिकटु एक सय बीस ग्राम मिसाई दारिमाष्टक नामक चूर्ण बनाउनू । यो चूर्ण खानाले मुखमा भोक जाग्दछ, पाचकाग्नि बल्दछ, घाँटीलाई लाभ गर्दछ, ग्राही हुन्छ तथा खोकी र जरो नाश गर्दछ ।

अतिसार आदिमा बृहद्दाडिमाष्टक चूर्ण

**दाडिमस्य पलान्यष्टौ शर्करायाः पलाष्टकम् ।**
**पिप्पली पिप्पलीमूलं यवा(मा)नी मरिचन्तथा ॥६४॥**
**धान्यकञ्जीरकं शुण्ठी प्रत्येकं पलसम्मितम् ।**
**कर्षमात्रा तुगाक्षीरी त्वक्पत्रैलाश्च केशरम् ॥६५॥**
**प्रत्येकं कोलमात्राः स्युस्तच्चूर्णं दाडिमाष्टकम् ।**
**अतीसारं क्षयं गुल्मं ग्रहणीं च गलग्रहम् ॥६६॥**
**मन्दाग्निं पीनसं कासं चूर्णमेतद्व्यपोहति ।**

दाडिमका दाना तीन सय बीस ग्राम; मिस्री तीन सय बीस ग्राम; पिप्ला, पिप्लाको जरा, ज्वानु, कालो मरिच, धनियाँ, जीरा र सुठो हरेक चालीस चालीस ग्राम; वंशलोचन बीस ग्राम; दालचिनी, अलैंची र नागकेशर छ छ ग्राम लिई मिसाएर धुलो बनाउनू । यसलाई वृहद्दाडिमाष्टक भनिन्छ । यो खानाले अतिसार, क्षयरोग, गुल्म, ग्रहणी, घाँटीका रोग, मन्दाग्नि, पिनास र खोकी ठिक हुन्छ ।

अरुचीमा तालीसादि चूर्ण

**तालीसं मरिचं शुण्ठी पिप्पली वंशरोचना ॥६७॥**
**एकद्वित्रिचतुःपञ्चकर्षैर्भागान्प्रकल्पयेत् ।**
**एलात्वचोस्तु कर्षार्धं प्रत्येकं भागमावहेत् ॥६८॥**
**मृतं वङ्गं मृतं ताम्रं समभागानि कारयेत् ।**
**द्वात्रिंशत् कर्षतुलिता प्रदेया शर्करा बुधैः ॥६९॥**
**तालीसाद्यमिदं चूर्णं रोचनं पाचनं स्मृतम् ।**
**कासश्वासज्वरहरं छर्द्यतीसारनाशनम् ॥७०॥**
**शोषाध्मानहरं प्लीहाग्रहणीपाण्डुरोगजित् ।**
**पक्त्वा च शर्कराञ्चूर्णं क्षिपेत् स्याद् गुटिका ततः ॥७१॥**

लोठसल्लो बीस ग्राम, मरिच चालीस ग्राम, सुठो साठी ग्राम, पिप्ला असी ग्राम, वंशलोचन सय ग्राम; अलैंची र दालचिनी दुबै ८.४६ ग्राम; राङ भस्म र ताम्र भस्म दुवै १६० ग्राम र मिस्री ६४० ग्राम : यी सबै मिसाई धुलो बनाएर बनाइने तालिस चूर्ण मिस्रीसँग खानाले यो रुचिवर्धक, पाचक तथा खोकी, दम, जरो, वाकवाकी, अतिसार, क्षयरोग, आध्मान, फियोका रोग, ग्रहणी र पाण्डुरोग नाशक हुन्छ । अथवा यो चूर्णलाई मिस्रीको चास्नीमा हाली गोली बनाएर खाए पनि समान गुणको हुन्छ ।

अरुची आदि रोगमा लवङ्गादि चूर्ण

**लवङ्गं शुद्धकर्पूरमेलात्वङ्नागकेशरम् ।**

जातीफलमुशीरञ्च नागरं कृष्णजीरकम् ॥७२॥
कृष्णागरुस्तुगाक्षीरी मांसी नीलोत्पलं कणा ।
चन्दनं तगरं बालं कङ्कोलञ्चेति चूर्णयेत् ॥७३॥
समभागानि सर्वाणि सर्वेभ्योऽर्धा सिता भवेत् ।
लवङ्गाद्यमिदञ्चूर्णं राजार्हं वह्निदीपनम् ॥७४॥
रोचनं तर्पणं वृष्यं त्रिदोषघ्नं बलप्रदम् ।
हृद्रोगं कण्ठरोगञ्च कासं हिक्काञ्च पीनसम् ॥७५॥
यक्ष्माणं तमकं श्वासमतीसारमुरःक्षतम् ।
प्रमेहारुचिगुल्मादीन् ग्रहणीमपि नाशयेत् ॥७६॥

ल्वाङ, शुद्ध कपुर, अलैंची, दालचिनी, नागकेसर, जाइफल, खस, सुठो, कालोजीरा, कालोधूपी, वंशलोचन, जटामसी, नीलकमल, पिप्ला, रक्तचन्दन, तगर, सुगन्धवाल र फलकपुर बराबर मात्रामा मिसाई धुलो बनाएर यसमा आधा मिस्री मिसाउनू । यो चूर्णलाई लवङ्गादि चूर्ण भनिन्छ । यो चूर्ण राजाहरूलाई खुवाउन योग्य हुन्छ । यसले पेटको अग्नि बाल्दछ, रुची बढाउँदछ, शरीर पुष्ट पार्दछ, रतिशक्ति बढाउँदछ, त्रिदोष नाश गर्दछ, बल बढाउँदछ, मुटुरोग-घाँटीका रोग-खोकी-बाडुली-पिनास-क्षयरोग-दम विशेष-अतिसार-छातीका घाउ-प्रमेह-अरुचि-गुल्म र ग्रहणी नाश गर्दछ ।

ग्रहणी आदि रोगमा जाइफल आदिको चूर्ण

जातीफललवङ्गैलापत्रत्वङ्नागकेशरैः ।
कर्पूरचन्दनतिलत्वक्क्षीरीतगरामलैः ॥७७॥
तालीसपिप्पलीपथ्यास्थूलजीरकचित्रकैः ।
शुण्ठीविडङ्गमरिचैः समभागविचूर्णितैः ॥७८॥
यावन्त्येतानि सर्वाणि कुर्याद्भङ्गाञ्च तावतीम् ।
सर्वचूर्णसमा देया शर्करा च भिषग्वरैः ॥७९॥
कर्षमात्रन्ततः खादेन् मधुना प्लावितं सुधीः ।

अस्य प्रभावाद् ग्रहणीकासश्वासारुचिक्षयाः ॥८०॥
वातश्लेष्मप्रतिश्यायाः प्रशमं यान्ति वेगतः ।

जाइफल, ल्वाङ, अलैंची, तेजपात, दालचिनी, नागकेसर, कपूर, रक्तचन्दन, तिल, वंशलोचन, तगर, अमला, लोठसल्लो, पिप्ला, हर्रो, कालोजीरा, चितूको बोक्रा, सुठो, वायुविडङ्ग र कालो मरिच बराबर मात्रामा मिसाई यसमा यति नै बारबर शुद्ध भाङ मिलाउनू । फेरी धुलो बनाई धुलो बराबर मिस्री मिसाउनू । यो धुलो दिनहुँ बीस ग्राम महसँग खानाले ग्रहणी, खोकी, दम, अरुची, क्षयरोग, वातविकार, कफविकार र पिनास चाँडै ठिक गर्दछ ।

बान्ता आदिमा महाखाण्डव चूर्ण

मरिचं नागपुष्पाणि तालीसं लवणानि च ॥८१॥
प्रत्येकमेकभागाः स्युः पिप्पलीमूलचित्रकैः ।
त्वक्कणा तिन्तिडीकञ्च जीरकञ्च द्विभागकम् ॥८२॥
धान्याम्लवेतसौ विश्वभद्रैलाबदराणि च ।
अजमोदा जलधरः प्रत्येकं स्युस्त्रिभागिकाः ॥८३॥
सर्वौषधिचतुर्थांशं दाडिमस्य फलं भवेत् ।
द्रव्येभ्यो निखिलेभ्यश्च सिता देयाऽर्धमात्रया ॥८४॥
महाखाण्डवसंज्ञं स्याच्चूर्णमेतत्सुरोचनम् ।
अग्निदीप्तिकरं हृद्यं कासातीसारनाशनम् ॥८५॥
हृद्रोगकण्ठजठरमुखरोगप्रणाशनम् ।
विषूचिकान्तथाऽऽध्मानमर्शोगुल्मकृमीनपि ॥८६॥
छर्दिं पञ्चविधां श्वासञ्चूर्णमेतद्व्यपोहति ।

कालोमरिच, नागकेसर, अमिली, लोठसल्लो, सिधेनुन, सौंचरनुन, विड्नुन र समुद्रीनुन एक एक भाग; पिप्लाको जरो, चितू, दालचिनी, पिप्ला, अमिलीको बोक्रा र जीरा दुई दुई भाग; धनियाँ, अम्लवेत, सुठो, (भद्र ?), अलैंची, बयर, ज्वानु र नागरमोथे तीन तीन भाग र यी सबैको एक चौथाई दारिमका दाना लिई चूर्ण बनाउनू । त्यसमा आधा मिस्री मिसाउनू ।

यसलाई महाखाण्डव चूर्ण भनिन्छ । यो चूर्ण खानाले रुची जगाउँदछ, पाचकाग्नि बाल्दछ, मनोहर हुन्छ, खोकी-अतिसार-मुटुका रोग-घाँटीका रोग-पेटका रोग-मुखका रोग-हैजा-आध्मान-अल्काई- गुल्म-पेटका कीरा-पाँच प्रकारका वाकवाकी र दम निको पार्दछ ।

पेटका रोग आदिमा नारायण चूर्ण

चित्रकं त्रिफला व्योषं जीरकं हपुषा वचा ॥८७॥
यवानी पिप्पलीमूलं शतपुष्पाऽजगन्धिका ।
अजमोदा शठी धान्यं विडङ्गं स्थूलजीरकम् ॥८८॥
हेमाह्वा पौष्करं मूलं क्षारौ लवणपञ्चकम् ।
कुष्ठञ्चेति समांशानि विशाला स्याद् द्विभागिका ॥८९॥
त्रिवृत् त्रिभागा विज्ञेया दन्त्या भागत्रयं भवेत् ।
चतुर्भागा शातला स्यात्सर्वाण्येकत्र चूर्णयेत् ॥९०॥
पाचनं स्नेहनाद्यैश्च स्निग्धकोष्ठस्य रोगिणः ।

दद्याच्चूर्णं विरेकाय सर्वरोगप्रणाशनम् ॥९१॥
हृद्रोगे पाण्डुरोगे च कासे श्वासे भगन्दरे ।
मन्देऽग्नौ (मन्दाग्नौ) च ज्वरे कुष्ठे ग्रहण्याञ्च गलग्रहे ॥९२॥
दद्याद्युक्तानुपानेन तथाऽऽध्माने सुरादिभिः ।
गुल्मे बदरनीरेण विड्भेदे दधिमस्तुना ॥९३॥
उष्णाम्बुभिरजीर्णे च वृक्षाम्लैः परिग(क)र्तिषु ।
उष्ट्रीदुग्धेनोदरेषु तथा तक्रेण वा गवाम् ॥९४॥
प्रसन्नया वातरोगे दाडिमाम्भो(बु)भिरर्शसि ।
द्विविधे च विषे दद्याद् घृतेन विषनाशनम् ॥९५॥
चूर्णं नारायणं नाम दुष्टरोगगणापहम् ।

चितूको बोक्रा, त्रिफला, त्रिकटु, हपुषा, बोझो, ज्वानु, पिप्लाको जरा, सुप, बाबरी, अजमोदा (ज्वानु विशेष), कपुरहलेदो, धनिया, वायुविडङ्ग, मुङ्ग्रेलो, चाँप, कमलको जरा, सज्जीखार,

जवाखार, पाँच थरी नुन र कूट यी बराबर मात्रामा (एक एक तोला) लिई यसमा सानो ऐरेलुको जरा दुई भाग (दुई तोला); निशोध तीन तोला, अजयपाल तीन तोला, हात्तीकाने चार तोला मिसाई धुलो बनाउनू । यसपछि यो धुलो पाचन वा स्नेहन विधिको उपचार पछि पेट चिल्लो हुने रोगीलाई दिसा लगाउन खान दिएमा सबै रोग नाश हुन्छन् । हृदयरोग, पाण्डु, खोकी, दम, भगन्दर, कमजोर पाचनशक्ति, जरो, कुष्ठ, ग्रहणी र गलगाँडमा यो धुलो अनुपानसँग खानू । आध्मान रोगमा मद्यसँग खानू । गुल्मरोगमा बयरको काँढापानीसँग, कब्जियतमा दहि वा मस्तुसँग, अजीर्णमा तातोपानीसँग, मलद्वारमा कातरेको जसरी रोग्ने परिगर्ति रोगमा अमिलीपानीसँग, जलोदर आदि पेटका रोगमा उँटको दूधसँग वा गाईको तक्रसँग, वातविकारमा मद्यसँग, अल्काईमा दारिमको रससँग र दुबै किसिमका विषमा घिउसँग खानाले विषको असर रोग नाश हुन्छ । सबै खराब रोग नाश गर्ने यो चूर्णलाई नारायण चूर्ण भनिन्छ ।

अजीर्ण आदि रोगमा हपुषा आदिको चूर्ण

**हपुषा त्रिफला चैव त्रायमाणा च पिप्पली ।।९६।।**
**हेमक्षीरी त्रिवृच्चैव शातला कटुका वचा ।**
**नीलिनी सैन्धवं कृष्णं लवणञ्चेति चूर्णयेत् ।।९७।।**
**उष्णोदकेन मूत्रेण दाडिमत्रिफलारसैः ।**
**तथा मांसरसेनापि यथायोग्यं पिबेन्नरः ।।९८।।**
**अजीर्णे प्लीह(ह्नि) गुल्मेषु शोफार्शोविषमाग्निषु ।**
**हलीमकामलापाण्डुकुष्ठाध्मानोदरेष्वपि ।।९९।।**

हपुषा, त्रिफला, मुँडिलो, पिप्ला, हेमक्षीरी (स्यालकाने ?), सेतो निसोध, हात्तीकाने, कुटकी, बोझो, नीर, सिधेनुन र कालोनुन बराबर मात्रामा मिसाई तातोपानी वा गहुँत वा अनाररस वा त्रिफलाको काँढापानी वा जङ्गली जनावरको मासुको रससँग क्षमता हेरी खानू । यसले अजीर्ण, फियोका रोग, गुल्म, सुजन, अल्काई, पेटको अग्निमा हुने गडबढी, हलीमक, कमलपित्त, पाण्डु, कुष्ठ र आध्मान आदि पेटका रोग नाश गर्दछ ।

### शूल आदि रोगमा पञ्चसम चूर्ण

**शुण्ठी हरीतकी कृष्णा त्रिवृत्सौवर्चलन्तथा ।**
**समभागानि सर्वाणि सूक्ष्मचूर्णानि कारयेत् ॥१००॥**
**ज्ञेयं पञ्च समञ्चूर्णमेतच्छूलहरं परम् ।**
**आध्मानजठरार्शोघ्नमामवातहरं स्मृतम् ॥१०१॥**

सुठो, हर्रो, पिप्ला, सेतो निसोध र सौंचर नुन बराबर मिसाएर राम्ररी धुलो बनाउनू । यसलाई पञ्चसम चूर्ण भनिन्छ । यो खानाले शूल, आध्मान, कमजोर पाचन शक्ति, अल्काई र आमजन्य वातरोग नाश गर्दछ ।

### आध्मान आदि रोगमा पिप्ला आदिको चूर्ण

**कर्षमात्रा भवेत्कृष्णा त्रिवृता स्यात्पलोन्मिता ।**
**खण्डात्पलञ्च विज्ञेयं चूर्णमेकत्र कारयेत् ॥१०२॥**
**कर्षोन्मितं लिहेदेतत्क्षौद्रेणाध्माननाशनम् ।**
**गाढविट्कोदरकफान्पित्तशूलञ्च नाशयेत् ॥१०३॥**

बीस ग्राम पिप्ला, सेतो निसोध चालीस ग्राम र मिस्री चालीस ग्राम मिसाएर धुलो बनाउनू । यो बीस ग्राम महसँग खाने गर्नाले आध्मान, कब्जियत, पेटका रोग, कफविकार, पित्तविकार र शूलरोग नाश हुन्छ ।

### कलेजो आदिको रोगमा चूर्ण

**लवणत्रितयं क्षारौ शतपुष्पाद्वयं वचा ।**
**अजमोदाऽजगन्धा च हपुषा जीरकद्वयम् ॥१०४॥**
**मरिचं पिप्पलीमूलं पिप्पली गजपिप्पली ।**
**हिङ्गुश्च हिङ्गुपत्री च शठी पाठोपकुञ्चिका ॥१०५॥**
**शुण्ठीचित्रकचव्यानि विडङ्गञ्चाम्लवेतसम् ।**

दाडिमं तिन्तिडीकञ्च त्रिवृद्दन्ती शतावरी ॥१०६॥
इन्द्रवारुणिका भार्ङ्गी देवदारु यवानिका ।
कुस्तुम्बुरुस्तुम्बुरूणि पौष्करं बदराणि च ॥१०७॥
शिवा चेति समांशानि चूर्णमेकत्र कारयेत् । भावयेदार्द्रकरसैर्बीजपूररसैस्तथा ॥१०८॥
तत्पिबेत्सर्पिषा जीर्णमद्येनोष्णोदकेन वा ।
कोलाम्भसा वा तक्रेण दुग्धेनौष्ट्रेण मस्तुना ॥१०९॥
यकृत्प्लीहकटीशूलगुदकुक्षिहृदामयान् ।
अर्शोविष्टम्भमन्दाग्निगुल्मप्लीहोदराणि च ॥११०॥
हिक्काध्मानश्वासकासाञ्जयेदेतान्न संशयः ।
एतैरेवौषधैः सम्यग्घृतं वा साधयेद्भिषक् ॥१११॥

सिधेनुन, सौंचरनुन, विड्नुन, सज्जिखार, जवाखार, सुप, मुङ्ग्रेलो, बोझो, ज्वानु, हपुषा, सेतो जीरा, कालो जीरा, कालो मरिच, पिप्लाको जरा, पिप्ला, चाभा, भुटेको हिङ, जिम्बु, कपुरहलेदो, गानेगुर्जो, सुकुमेल, सुठो, चितू, चाँभा विशेष, वायुविडङ्ग, अम्लवेत, दारिम, चुक अमिलो, सेतो निशोध, अजयपाल, कुरिलो, धनियाँ, टिमुर, कमलको जरा, बयर र हर्रो बराबर मिसाएर धुलो बनाउनू । यसपछि यो धुलोलाई अदुवाको रसमा एकपटक र बिमिरोको रसमा भिजाएर एक पटक पकाउनू (पुट दिनू) । यसपछि सुकाउनू । यसलाई घिउ वा पुरानो मद्य वा तातोपानी वा बयरको काँढापानी वा गाईको तक्र वा उँटको दूध वा मस्तुमध्ये जे रोगीलाई पथ्य अनुपान हुन्छ त्योसँग खान दिनू । यसले कलेजोका रोग, फियोका रोग, कम्मरको शूल, मलद्वारका रोग, कोखको शूल, मुटुका रोग, अल्काई, कब्जियत, कमजोर पाचनशक्ति, गुल्म, वातरोग विशेष (अष्ठीला), पेटका रोग, बाडुली, आध्मान, दम र खोकी नाश हुन्छ, शङ्का मान्नु पर्दैन । अथवा यो ओखतीका घिउ हालेर काँढापानी पकाउनू, यसले पनि माथि बताए अनुसार नै लाभ दिन्छ ।



शूल आदिमा धनियाँ आदिको चूर्ण

तुम्बुरूणि त्रिलवणं यवानी पुष्कराह्वयम् ।

यवक्षाराभयाहिङ्गुविडङ्गानि समानि च ॥११२॥
त्रिवृत् त्रिभागा विज्ञेया सूक्ष्मचूर्णानि कारयेत् ।
पिबेदुष्णेन तोयेन यवक्वाथेन वा पिबेत् ॥११३॥
जयेत् सर्वाणि शूलानि गुल्माध्मानोदराणि च ।

धनियाँ वा टिमुर, सिधेनुन, सौँचर नुन, विड् नुन, ज्वानु, कमलको जरा (चाभा ?), जवाखार, हर्रो, भुटेको हिङ र वायुविडङ्ग बराबर मिसाई त्यसमा सेतो निशोध तीन भाग हालेर धुलो बनाउनू । यसलाई तातोपानी वा जौको काँढापानीसँग खानाले सबै प्रकारका शूल, गुल्म, आध्मान र पेटका रोग नाश हुन्छ ।

गुल्म आदि रोगमा चितू आदिको चूर्ण

चित्रको(कं) नागरं हिङ्गु पिप्पली पिप्पलीजटा ॥११४॥
चव्याजमोदा मरिचं प्रत्येकं कर्षसम्मितम् ।
स्वर्जिका च यवक्षारः सिन्धु सौवर्चलं बिडम् ॥११५॥
सामुद्रकं रोमकञ्च कोलमात्राणि कारयेत् ।
एकीकृत्याखिलञ्चूर्णं भावयेन्मातुलुङ्गजैः ॥११६॥
रसैर्दाडिमजैर्वाऽपि शोषयेदातपेन च ।
एतच्चूर्णं जयेद्गुल्मं ग्रहणीमामजां रुजम् ॥११७॥
अग्निञ्च कुरुते दीप्तं रुचिकृत्कफनाशनम् ।

चितूको बोक्रा, सुठो, हिङ, पिप्ला, पिप्लाको जरा, चाँभा, ज्वानु र मरि सबै बीस बीस ग्राम तथा सज्जिखार, यवाखार, सिधेनुन, सौँचर नुन, विड् नुन, सुमद्री नुन र रोमक नुन छ छ ग्राम लिनू । अनि सबै मिसाएर धुलो बनाउनू । यसपछि बिमिरो रसले भिजाउनू अथवा दारिमको रसले भिजाउनू र सुकाउनू । यो चूर्ण खानाले गुल्म, ग्रहणी र आमजन्य रोग नाश हुन्छ । यसले पाचकाग्नि बाल्दछ, रुची बढाउँदछ र कफविकार नाश गर्दछ ।

मन्दाग्निमा वडवानल चूर्ण

**सैन्धवं पिप्पलीमूलं पिप्पलीचव्य चित्रकम् ॥११८॥**
**शुण्ठी हरीतकी चेति क्रमवृद्धा विचूर्णयेत् (क्रमवृद्धानि चूर्णयेत्) ।**
**वडवानलनामैतच्चूर्णं स्यादग्निदीपनम् ॥११९॥**

सिधेनुन, पिप्लाको जरा, पिप्ला, चाँभा, चितु, सुठो र हर्रो क्रमशः एक एक भाग बढी लिएर धुलो बनाउनू । यो वडवानल नामक चूर्णले जठराग्निलाई बाल्दछ ।

आमवातमा ज्वानु आदिको चूर्ण

**अजमोदा विडङ्गानि सैन्धवं देवदारु च ।**
**चित्रकः पिप्पलीमूलं शतपुष्पा च पिप्पली ॥१२०॥**
**मरिचञ्चेति कर्षांशं प्रत्येकं कारयेद् बुधः ।**
**कर्षास्तु पञ्च पथ्याया दश स्युर्वृद्धदारुकात् ॥१२१॥**

**नागराच्च दशैव स्युः सर्वाण्येकत्र चूर्णयेत् ।**
**पिबेत्कोष्णजलेनैव चूर्णं श्वयथुनाशनम् ॥१२२॥**
**आमवातरुजं हन्ति सन्धिपीडाञ्च गृध्रसीम् ।**
**कटिपृष्ठगुदस्थाञ्च जङ्घयोश्च रुजञ्जयेत् ॥१२३॥**
**तूनीप्रतूनीविश्वाचीकफवातामयाञ्जयेत् ।**
**समेन वा गुडेनास्य वटकान्कारयेत्सुधीः(द्भिषक्) ॥१२४॥**

ज्वानु, वायुविडङ्ग, सिधेनुन, देवदारु, चितु, पिप्लाको जरा, सुप, पिप्ला र कालो मरिच एक एक कर्ष, हर्रो पाँच कर्ष, त्रिधारा दश कर्ष र सुठो दश कर्ष मिसाई धुलो बनाई छान्नू । यो धुलो तातोपानीसँग खानाले वा धुलो बराबर सक्खर मिसाएर गोली बनाएर खानाले सुजन, आमवात, जोर्नीको दुखाई, गृध्रसी, कम्मर-ढाड-मलद्वार र तिघ्राका रोग, तूनी-प्रतूनी (?)-विश्वाची, कफविकार र वातविकार नाश गर्दछ ।

दम आदि रोगमा सुठो आदिको धुलो

**(शुण्ठी सौवर्चलं हिङ्गु दाडिमञ्चाम्लवेतसम् ।**
**चूर्णमुष्णाम्बुना पेयं श्वासहृद्रोगशान्तये ॥१२५॥** : प्रक्षिप्त श्लोक)

सुठो, सौँचर नुन, भुटेको हिङ, दारिमका दाना र अम्लवेतको चूर्ण तातोपानीसँग खाए दम र मुटुका रोग नाश हुन्छन् ।

शूल आदि रोगमा हिङ आदिको चूर्ण

**हिङ्ग्वुग्रगन्धाबिडविश्वकृष्णाकुष्ठाभयाचित्रकयावशूकम् ।**
**पिबेत् ससौवर्चलपुष्कराह्वं हिमाम्भसा शूलहृद्रोगशान्तये ॥१२६॥** (यो श्लोक कुनै प्रतिमा छैन)

हिङ, बोझो, विड्नुन, सुठो, पिप्ला, कूट, हर्रो, चितूको बोक्रा, जवाखार, सौँचरनुन र चाभाको चूर्ण चिसोपानीसँग खानाले शूल र मुटुका रोग नाश हुन्छ ।



**हिङ्गु पाठाऽभया धान्यं दाडिमश्चित्रकः शठी ।**
**अजमोदा त्रिकटुकं हपुषा चाम्लवेतसम् ॥१२७॥**
**अजगन्धा तिन्तिडीकञ्जीरकं पौष्करं वचा ।**
**चव्यं क्षारद्वयं पञ्च लवणानि विचूर्णयेत् ॥१२८॥**
**प्राग्भोजनस्य मध्ये वा चूर्णमेतत्प्रयोजयेत् ।**
**पिबेद्वा जीर्णमद्येन तक्रेणोष्णोदकेन वा ॥१२९॥**
**गुल्मे वातकफोद्भूते विड्(हृद्)ग्रहेऽष्ठीलिकासु च ।**
**हृद्बस्तिपार्श्वशूलेषु शूले च गुदयोनिजे ॥१३०॥**
**मूत्रकृच्छ्रे तथाऽऽनाहे पाण्डुरोगेऽरुचौ तथा ।**
**हिक्कायां यकृति प्लीह्नि कासे श्वासे गलग्रहे ॥१३१॥**
**ग्रहण्यर्शोविकारेषु चूर्णमेतत्प्रशस्यते ।**

भावितं मातुलुङ्गस्य बहुशः स्वरसेन वा ॥१३२॥
कुर्याच्च गुटिकाः पथ्या(वह्नीः) वातश्लेष्मामयापहाः ।

भुटेको हिङ, गानेगुर्जो, हर्रो, धनियाँ, अनारदाना, चितूको बोक्रा, कपूरहलेदो, ज्वानु, त्रिकटु, हपुषा, अम्लवेत, ज्वानु विशेष, अमिली, जीरा, अमलतास (?), बोभ्रो, चाँभा, सज्जिखार, जवाखार र पाँच प्रकारका नुन मिसाएर पिँधी बनाइएको चूर्ण खाना खानु अघि, खाना खाँदा बीचमा, धेरै पुरानो मद्यसँग अथवा गाईको तक्रसँग वा तातोपानीसँग खाए वात र कफले हुने गुल्म, मुटुका रोग, अष्ठीला, मुटु-तल्लो पेट-कोख र मलद्वारको शूल, मूत्रकृच्छ्र, आनाह, पाण्डु, अरुची,  बाडुली, कलेजोका रोग, फियोका रोग, खोकी, दम, गलग्रह, ग्रहणी र अल्काई नाश हुन्छ । यो धुलोलाई बिमिरोको रसमा भिजाएर गोली बनाई  खाए वात एवं कफजन्य रोग नाश हुन्छ ।

अरुची आदिमा यवानीखाण्डव चूर्ण

यवा(मा)नी दाडिमं शुण्ठी तिन्तिडीकाम्लवेतसौ ॥१३३॥

बदराम्लश्च कुर्वीत चतुःशाणमितानि च ।
सार्धद्विशाणं मरिचं पिप्पली दशशाणिका ॥१३४॥
त्वक्सौवर्चलधान्याकं जीरकं द्विद्विशाणकम् ।
चतुःषष्टिमितैः शाणैः शर्करामत्र योजयेत् ॥१३५॥
चूर्णितं सर्वमेकत्र यवानीखाण्डवाभिधम् ।
चूर्णं जयेत्पाण्डुरोगं हृद्रोगं ग्रहणीं ज्वरम् ॥१३६॥
छर्दिशोषातिसारांश्च प्लीहानाहविबन्धताम् ।
अरुचिं शूलमन्दाग्निं अर्शा(मर्शो)जिह्वागलामयान् ॥१३७॥

ज्वानु, अनारदाना, सुठो, अमिली, अम्लवेत र काँचो बयर यी सबै बाह्र बाह्र ग्राम; कालो मरिच ६.५ ग्राम; पिप्ला तीस ग्राम; दालचिनी, सौंचर नुन, धनिया र जीरा छ छ ग्राम तथा मिस्री एक सय बयान्नब्बे ग्राम मिसाई धूलो बनाउनू । यो चूर्णलाई यवानीखाण्डव चूर्ण भनिन्छ । यो खानाले पाण्डु, मुटुका रोग, ग्रहणी, जरो, बान्ता, क्षयरोग, अतिसार, फियोका

रोग, आनाह, कब्जियत, अरुची, शूल, मन्दाग्नि, अल्काई तथा जिभ्रो र घाँटीका रोग नाश गर्दछ ।

खोकी आदिमा मिस्री आदिको चूर्ण

सितोपला षोडश स्यादष्टौ स्याद्वंशरोचना ।
पिप्पली स्याच्चतुष्कर्षा स्यादेला च द्विकार्षिकी ॥१३८॥
एकः कर्षस्त्वचः कार्यश्चूर्णयेत्सर्वमेकतः ।
सितोपलादिकञ्चूर्णं मधुसर्पिर्युतं लिहेत् ॥१३९॥
श्वासकासक्षयहरं हस्तपादाङ्गदाहजित् ।
मन्दाग्निं शून्यजिह्वत्वं पार्श्वशूलमरोचकम् ॥१४०॥
ज्वरमूर्ध्वगतं रक्तं पित्तमाशु व्यपोहति ।

मिस्री छ सय चालीस ग्राम, वंशलोचन तीन सय बीस ग्राम, पिप्ला अस्सी ग्राम, अलैंची चालीस ग्राम र दालचिनी बीस ग्राम जम्मा पारी मिसाएर धुलो बनाउनू । यसलाई सितोपलादि चूर्ण भनिन्छ । यो चूर्ण मह र घिउसँग खाने गर्नाले दम, खोकी, क्षयरोग, हात गोडा र अन्य अङ्ग पोल्ने, कमजोर पाचन शक्ति, लाट्टिएको जिभ्रो, कोखाको शूल, अरुची, जरो र शरीरका माथ्ला अङ्गबाट रगत बहने रक्तपित्त रोगलाई तुरुन्त ठिक गर्दछ ।

गुल्म आदि रोगमा लवणभास्कर चूर्ण

समुद्र लवणं कार्यमष्टकर्षमितं बुधैः ॥१४१॥
पञ्चसौवर्चलं ग्राह्यं बिडं सैन्धवधान्यके(कात्) ।
पिप्पली पिप्पलीमूलं कृष्णजीरकपत्रकम् ॥१४२॥
नागकेशरतालीसमम्लवेतसकन्तथा ।
द्विकर्षमात्राण्येतानि प्रत्येकं कारयेद् बुधः ॥१४३॥
मरिचं जीरकं विश्वमेकैकं कर्षमात्रकम् ।
दाडिमंस्याच्चतुष्कर्षं त्वगेला चार्धकार्षिकी (त्वगेले चार्धकार्षिके) ॥१४४॥

**बीजपूररेसेनैव भावित सप्तवारकम् ।** (यो आधा श्लोक कुनै प्रतिमा छैन)।
**एतच्चूर्णीकृतं सर्वं लवणं भास्कराभिधम् ॥१४५॥**
**शाणप्रमाणं देयन्तु मस्तुतक्रसुरासवैः ।**
**वातश्लेष्मभवं गुल्मं प्लीहानमुदरं क्षयम् ॥१४६॥**
**अर्शांसि ग्रहणीं कुष्ठं विबन्धं (विविधं) च भगन्दरम् ।**
**शोफं शूलं श्वासकासावामवातञ्च हृद्रुजम् ॥१४७॥**
**मन्दाग्निं नाशयेदेतद् दीपनं पाचनं परम् ।**
**सर्वलोकहितार्थाय भास्करेणोदितं पुरा ॥१४८॥**

बुद्धिमानले समुद्री नुन एक सय साठी ग्राम; सौंचर नुन सय ग्राम; विड् नुन, सिधे नुन, धनियाँ, पिप्ला, पिप्लाको जरा, कालो जीरा, तेजपात, नागकेसर, लोठसल्लो र अम्लवेत सबै चालीस चालीस ग्राम; कालो मरीच, जीरा र सुठो सबै बीस बीस ग्राम; दारिमका दाना अस्सी ग्राम तथा दालचिनी र अलैंची दश दश ग्राम जम्मा पारी मिसाएर कुटी धुलो बनाउनू । यो धुलोलाई बिमिरोको रसमा सात पटक भिजाउनू । यसलाई लवणभास्कर चूर्ण भनिन्छ । यो रोग अनुसार अनुपानसँगै मस्तु, तक्र, सुरा वा आसवसँग तीन तीन ग्राम खान दिनाले वातविकार र कफविकारले हुने गुल्मरोग; फियोका रोग, पेटका रोग, क्षयरोग, अल्काई, ग्रहणी, कुष्ठ, कब्जियत, भगन्दर, सुजन, शूल, दम, खोकी, आमवात, मुटुका रोग र मन्दाग्निलाई नाश गर्दछ । यो अति नै दीपन र पाचन हुन्छ । यो चूर्णका बारेमा लोककल्याणका लागि परापूर्वकालमा सूर्यले बताएका थिए ।

वाकवाकी आदिमा सुकुमेल आदिको चूर्ण

**एलाप्रियङ्गुमुस्तानि कोलमज्जा च पिप्पली ।**
**श्रीचन्दनन्तथा लाजा लवङ्गं नागकेशरम् ॥१४९॥**
**एतच्चूर्णीकृतं सर्वं सिताक्षौद्र युतं लिहेत् ।**
**वातपित्तकफोद्भूतां छर्दिं हन्त्यतिवेगतः ॥१५०॥**

सुकुमेलका गेडा, दहीगुर्‍यैँलोको फूल, नागरमोथे, बेलको गुदी, पिप्ला, सेतोचन्दन, लाजा, ल्वाङ र नागकेसर जम्मा पारी कुटेर धुलो बनाउनू । यो धुलो मह र मिस्रीसँग खानाले त्रिदोषजन्य वाकवाकी अति छिटो नाश गर्दछ ।

### कुष्ठ आदि रोगमा पञ्चनिम्ब चूर्ण

मूलं पत्रं फलं पुष्पं त्वचं निम्बात्समाहरेत् ।
सूक्ष्मचूर्णमिदं कुर्यात्पलैः पञ्चदशोन्मितैः (पलपञ्चदशोन्मितम्) ॥१५१॥
लोहभस्महरीतक्यौ चक्रमर्दकचित्रकौ ।
भल्लातकविडङ्गानि शर्करामलकं निशा ॥१५२॥
पिप्पली मरिचं शुण्ठी वाकुची कृतमालकः ।
गोक्षुरश्च पलोन्मानमेकैकं कारयेद् बुधः ॥१५३॥
सर्वमेकीकृतं चूर्णं भृङ्गराजेन भावयेत् ।
अष्टभागावशिष्टेन खदिरासनवारिणा ॥१५४॥
भावयित्वा च संशुष्कं (संशोष्य) कर्षमात्रं ततः पिबेत् ।
खदिरासनतोयेन सर्पिषा पयसाथवा ॥१५५॥
मासेन सर्वकुष्ठानि विनिहन्ति रसायनम् ।
पञ्चनिम्बमिदञ्चूर्णं सर्वरोगप्रणाशनम् ॥१५६॥

नीमका पाँचै अङ्ग छ सय ग्राम मिसाएर धुलो बनाउनू । यसमा लोहभस्म, हर्रो, ताप्रेका गेडा, चितूको बोक्रा, भलायो, वायुविडङ्ग, मिस्री, अमला, हलेदो, पिप्ला, मरिच, सुठो, बकुची, राजवृक्षको गुदी र ओदानेकाँडो यी सबै चालीस चालीस ग्राम मिसाई धुलो बनाउनू । अनि दुबैथरी धुलो मिसाउनू । यो धुलोलाई भृङ्गिराजको रस हालेर सुकाउनू । त्यसपछि खयरको बोक्राको काँढापानीमा भिजाएर फेरी सुकाउनू । यो चालीस चालीस ग्राम खयरकै काँढापानीसँग अथवा विजयसालको काँढापानीसँग अथवा गाईको घिउसँग अथवा गाईको दूधसँग खाने गर्नाले एक महिनामै सबै खालका कुष्ठरोग नाश हुन्छ । सबै रोग नाश गर्ने यो चूर्णलाई पञ्चनिम्ब चूर्ण भनिन्छ ।

### यौन क्षमता वृद्धिका लागि कुरिलो आदिको चूर्ण

**शतावरी गोक्षुरश्च बीजञ्च कपिकच्छुजम् ।**
**गाङ्गेरुकी चातिबला बीजमिक्षुरकोद्भवम् ॥१५७॥**
**चूर्णितं सर्वमेकत्र गोदुग्धेन पिबेन्निशि ।**
**न तृप्तिं याति नारीभिर्नरश्चूर्णप्रभावतः ॥१५८॥**

कुरिलो, ओदाने काँडो (गोखुर), काउछोका गेडा, गुनालु (बलु विशेष) का बोक्रा, अतिबला (बलु जातको झार विशेष) का गेडा र तालमखाना यी बराबर मात्रामा मिसाई धुलो बनाएर रातमा गाईको दूधसँग बीस ग्राम खाए यो धुलोको प्रभावले धेरै स्त्रीभोगबाट पनि सन्तुष्टी पाइन्न ।

### यौन क्षमता बढाउन अश्वगन्धा आदिको चूर्ण

**अश्वगन्धा दशपला तन्मात्रो वृद्धदारकः ।**

**चूर्णीकृत्योभयं विद्वान्घृतभाण्डे निधापयेत् ॥१५९॥**
**कर्षैकं पयसा पीत्वा नारीभिर्नैव तृप्यति ।**
**अगत्वा प्रमदां भूयाद्वलीपलितवर्जितः ॥१६०॥**

अश्वगन्धा चार सय ग्राम र त्रिधारा चार सय ग्राम मिसाई धुलो बनाएर घिउको भाँडामा राख्नू । यसबाट बीस ग्राम निकाली गाईको दूधसँग खाए धेरै स्त्रीभोगबाट पनि सन्तुष्टी हुँदैन । ग्राम्यधर्म छाडी यो ओखती खाने हो भने छाला चाउरी पर्ने र कपाल फुल्ने जस्ता समस्या हटी मानिस जवान जस्तो देखिन थाल्दछ । व्याख्या: त्रिधाराको दुईवटा अर्थ हुन्छ । तीन पाटे सिउँडी र तीनपाटे गुँदि झार । यहाँ गुँदि झारलाई बताउन खोजिएको हो । यो मोथेजस्तै जस्तै हुन्छ । यो प्रयोजनका लागि अश्वगन्धाको कन्द र त्रिधाराको बीज प्रयोग गर्नुपर्ने देखिन्छ । यो त्रिधारा नामक झार कतै भेट्नु भयो भने यसका पात मा अरिडको तेल दलेर हल्का सेकाई अण्डकोषका बाँधे सुन्निएको बस्दछ समेत भनिएको पाइन्छ ।

### यौन क्षमता बढाउन मुसलीकन्द आदिको चूर्ण

(मुसलीकन्दचूर्णं तु गुडूचीसत्त्वसंयुतम् ।
वानरीगोक्षुराभ्याञ्च शाल्मलीशर्करामलैः ॥१६१॥
आलोड्य घृतदुग्धेन पाययेत्कामवर्धनम् । : प्रक्षिप्त श्लोक)

सेतो मुसलीकन्द, भित्री गुदी सहितको गुर्जो, काउछोका गेडा, ओदानेकाँडो, सिमलको (खोटो), मिस्री र अमला बराबर मात्रामा लिई मिसाएर धुलो बनाउनू । यो धुलोलाई गाईको दूधमा घिउ मिसाई पिउने गरे धातु वृद्धि भई कामशक्ति बढाउँदछ ।

### पाण्डु आदि रोगमा चितू आदिको चूर्ण

चित्रकं त्रिफलामुस्तं विडङ्गं त्र्यूषणानि च ॥१६२॥
समभागानि कार्याणि नव भागा हतायसः ।
एतदेकीकृतश्चूर्णं मधुसर्पिर्युतं लिहेत् ॥१६३॥

गोमूत्रमथवा तक्रमनुपाने प्रशस्यते ।
पाण्डुरोगञ्जयत्युग्रं हृद्रोगञ्च भगन्दरम् ॥१६४॥
शोथकुष्ठोदरार्शांसि मन्दाग्निमरुचिं कृमीन् ।

चितुको बोक्रा, त्रिफला, नागरमोथे, वायुविडङ्ग, सुठो, कालोमरिच र पिप्ला बराबर मात्रामा मिसाई धुलो बनाएर यति नै लोहभस्म मिसाउनू । यो धूलो मह र घिउसँग वा गहुँतसँग अथवा गाईको तक्रसँग खानाले अत्यन्त कठिन खालको पाण्डुरोग, त्रिदोष, भगन्दर, सुजन, कुष्ठ, पेटका रोग, अल्काई, मन्दाग्नि, अरुची र पेटका कीरा नाश गर्दछ ।

### शिघ्रपतनको ओखती अकरकराको चूर्ण

आकारकरभः शुण्ठी कङ्कोलं कुङ्कुमं कणा ॥१६५॥
जातीफलं लवङ्गञ्च चन्दनञ्चेति कार्षिकान् ।
चूर्णानि मानतः कुर्यादहिफेनं पलोन्मितम् ॥१६६॥

**सर्वमेकीकृतश्चूर्णं माषैकं मधुना लिहेत् ।**
**शुक्रस्तम्भकरश्चूर्णं पुंसामानन्दकारकम् ॥१६७॥**
**नारीणां प्रीतिजननं सेवेत निशि कामुकः ।**

आकारकरभ (अकरकरा नामक बुटी विशेष), सुठो, फलकपूर, केसर, पिप्ला, जाइफल, ल्वाङ र रक्तचन्दन बीस बीस ग्राम लिई त्यसमा चालीस ग्राम अफिम मिसाई धुलो बनाउनू । यो धुलो १.४१ ग्राम महसँग रातमा खाने गर्नाले धातु स्तम्भन (वीर्यको शीघ्र पतन नभई) भई पुरुषलाई ग्राम्यधर्ममा आनन्द दिन्छ र स्त्रीप्रति अनुराग बढ्दछ ।

**दाँत बलियो बनाउने दन्तमञ्जन**

**बकुलत्वग्भवश्चूर्णं घर्षयेद्दन्तपङ्क्तिषु ॥१६८॥**
**वज्रादपि दृढीभूता दन्ताः स्युश्चला ध्रुवम् ।** (यो श्लोक कुनै प्रतिमा छैन)

मौलसिरी वा बोलसिरीका बोक्राको धुलोले दाँत माझ्ने गरे हल्लिएको दाँत पनि वज्रजस्तै बलियो हुन्छ, यसमा शङ्के नगर्नू ।



इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां संहितायां
मध्यखण्डे चिकित्सास्थाने चूर्णकल्पनाऽध्यायः षष्ठः

✷

शार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत छैटौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-७२३.५+१६८.५=८९२.५

✷

# अथ सप्तमोऽध्यायः

## सातौं अध्याय

ओखतीको गोली (टिकिया) का पर्यायवाची नाम

**वटकाश्चाथ कथ्यन्ते तन्नाम गुटिका वटी ।**
**मोदको वटिका पिण्डी गुडो वर्तिस्तथोच्यते ॥१॥**

गुटिका, वटी, मादक, वटिका, पिण्डी, गुड र वर्ति : यी औषधीका गोलीका पर्यायवाची नामहरू हुन् ।

पकाएर गोली बनाउने विधि

**लेहवत्साध्यते वह्नौ गुडो वा शर्कराऽथवा (तथा) ।**
**गुग्गुलं वा (गुग्गुलुर्वा) क्षिपेत्तत्र चूर्णं तन्निर्मिता वटी ॥२॥**



लेह (चाटिने पदार्थ) जसरी नै सक्खर वा खुँदो वा गोकुलधूप पकाई त्यसमा ओखतीको धुलो मिसाएर गोली बनाउनु पर्दछ ।

नपकाई गोली बनाउने विधि

**कुर्यादवह्निसिद्धेन क्वचिद् गुग्गुलुना वटी (वटीम्)।**
**द्रवेण मधुना वाऽपि गुटिकाङ्कारयेद् बुधः ॥३॥**

नपकाई गोली बनाउने हो भने गोकुलधूपलाई शुद्ध पारी धुलो बनाएर त्यसमा ओखती धुलो मिसाई घोटेर गोली बनाउनु पर्दछ । यदि पानी, मह, दूध आदि तरल पदार्थमा ओखतीको धुलो आलि मोलेर गोली बनाउनु पर्दछ ।

गोली बनाउँदा मिस्री आदि हाल्ने मात्रा

**सिता चतुर्गुणा देया वटीषु द्विगुणो गुडः ।**

चूर्णाच्चूर्णसमः कार्यो गुग्गुलुर्मधु तत्समम् ।।४।।
द्रवञ्च द्विगुणन्देयं मोदकेषु भिषग्वरैः ।

मिस्री हाली गोली बनाउने भए ओखतीको चौबर मिस्री हाल्नू । सक्खर वा खुँदो हाल्ने भए ओखतीको दोबर हाली गोली बनाउनू । गोकुलधूप र मह दुवै हालेर गोली बनाउने भए दुवै ओखती बराबर हाल्नू । पानी आदि तरल पदार्थ हाली गोली बनाउने भए धओखतीको दोबर हाली बनाउनू ।

ओखतीको गोली खाने सामान्य मात्रा

कर्षप्रमाणा तन्मात्रा बलं दृष्ट्वा प्रयुज्यताम् (ते) ।।५।।

सामान्यतः एक कर्ष अर्थात् बीस ग्राम ओखती गोली खाने मात्रा हो । रोग र रोगीको अवस्था हेरी वैद्यले मात्रा निर्धारण गर्नु पर्दछ ।

विभिन्न रोगमा बाहुशालगुड नामको ओखती



इन्द्रवारुणिका मुस्तं शुण्ठी दन्ती हरीतकी ।
त्रिवृच्छटी(ठी) विडङ्गानि गोक्षुरश्चित्रकस्तथा ।।६।।
तेजोह्वा च द्विकर्षाणि पृथग्द्रव्याणि कारयेत् ।
सूरणस्य पलान्यष्टौ वृद्धदारु चतुष्पलम् ।।७।।
चतुःपलं स्याद्भल्लातः क्वाथयेत् सर्वमेकतः ।
जलद्रोणे चतुर्थांशं गृह्णीयात् क्वाथमुत्तमम् ।।८।।
क्वाथ्यद्रव्यात्त्रिगुणितं गुडं क्षिप्त्वा पुनः पचेत् ।
सम्यक् पक्वञ्च विज्ञाय चूर्णमेतत् प्रदापयेत् ।।९।।
चित्रकस्त्रिवृता दन्ती तेजोह्वा पलिकाः पृथक् ।
पृथक् त्रिपलिकाः कार्या व्योषैलामरिच(मलक)त्वचः ।।१०।।
निक्षिपेन्मधु शीते च तस्मिन् प्रस्थप्रमाणतः ।

**एवं सिद्धो भवेच्छ्रीमान् बाहुशालगुडः शुभः(डाऽभिधः) ॥११॥**
**जयेदर्शांसि सर्वाणि गुल्मं वातोदरन्तथा ।**
**आमवातं (आढ्यवात) प्रतिश्यायं ग्रहणी(महान्तं) क्षयपीनसान् ॥१२॥**
**हलीमकं पाण्डुरोगं प्रमेहञ्च रसायनम् ।**

ऐरेलु, नागरमोथे, सुठो, अजयपाल, हर्रो, सेतो निशोध, कपुरहलेदो, वायुविडङ्ग, ओदानेकाँडो, चितूको बोक्रा र चाभा : यी सबै दुई दुई कर्ष (चालीस, चालीस ग्राम); ओल आठ पल (तीन सय बीस ग्राम); त्रिधारा चार पल (एक सय साठी ग्राम) र भलायो चार पल (एक सय साठी ग्राम) लिनू । यी सबै मिसाएर कुटी धुलो पारेर एक्काईसदेखि पच्चीस लिटर पानीमा पकाउनू । एक चौथाई पानी बाँकी नहुँदासम्म मन्द आँचमा पकाई रहनू । फेरी ओखतीको तेबर सक्खर हाली पुनः पकाउनू । राम्ररी पाकेपछि निम्न औषधीहरूको धुलो हाल्नू । चितुको बोक्रा, सेतो निशोध, अजयपाल र चाभाको धुलो यी चालीस चालीस ग्राम; सुठो, मरिच, पिप्ला, अलैंची, मरिच र दालचिनी साठी साठी ग्राम धुलो पारी त्यसमा मिसाउनू । यसपछि त्यो सेलाएपछि एक सय साठी ग्राम मह मिसाउनू । यसरी बाहुशालगुड नामक असल ओखती तयार हुन्छ । यो खानाले सबै प्रकारका अल्काई, गुल्म, वातोदर, आमवात, रुघा, ग्रहणी, क्षयरोग, पिनास हलीमक, पाण्डु र प्रमेह नाश हुन्छ । यो गुड एक रसायनी हो ।

खोकी आदिमा मरिच आदिको गोली

**मरिचं कर्षमात्रं स्यात्पिप्पली कर्षसम्मिता ॥१३॥**
**अर्धकर्षो यवक्षारः कर्षयुग्मञ्च दाडिमम् ।**
**एतच्चूर्णीकृतं युञ्ज्यादष्टकर्षगुडेन हि ॥१४॥**
**शाणप्रमाणां गुटिकां कृत्वा वक्त्रे वि(वक्त्रेण)धारयेत् ।**
**अस्याः प्रभावात्सर्वेऽपि कासायान्त्येव सङ्क्षयम् ॥१५॥**

मरिच बीस ग्राम, पिप्ला बीस ग्राम, जवाखार दश ग्राम र दारिमका बोक्रा चालीस ग्राम मिसाई धुलो बनाएर एक सय साठी ग्राम सक्खर मिसाउनू । अनि तीन तीन ग्रामका गोली बनाउनू । यो गोली मुखमा लिई चुस्नाले सबै जातका खोकी नाश गर्दछ, कुनै शङ्का छैन ।

तमक आदि रोगमा ओखती

**व्याघ्रीजीरकधात्रीणां चूर्णं मधुयुतं लिहेत् । ऊर्ध्ववातमहाश्वासतमकैर्मुच्यते क्षणात् ॥१६॥** (प्रक्षिप्त श्लोक)

ठूलो कण्टकारी (बिही), जीरा र अमलाको धुलो मह मिसाएर चाट्नाले ऊर्ध्ववात, च्यापेको दम र सामान्य दम तुरुन्त नाश हुन्छ ।

दम र खोकीमा हर्रो आदिको गोली

**गुडशुण्ठीशिवामुस्तैर्गुटिकां धारयेन्मुखे ।**
**श्वासकासेषु सर्वेषु केवलं वा बिभीतकम् (बिभीतं वापि केवलम्) ॥१७॥**

सुठो, हर्रो र नागरमोथेको धुलोमा दोबर सक्खर मिसाई गोली बनाउनू । यो गोली मुखमा राखी चुस्नाले सबै खालका दम र खोकी निको हुन्छ । अथमा बर्रोको बोक्रा मात्र (वा यसको उपरोक्त विधिले बनाइएको गोली) मुखमा लिई चुस्नाले पनि दम र खोकी निको हुन्छ ।



तिर्खा लाग्दा अमला आदिको गोली

**आमलं कमलं कुष्ठं लाजाश्च वटरोहकम् (:) ।**
**एतच्चूर्णस्य मधुना गुटिकां धारयेन्मुखे ॥१८॥**
**तृष्णां प्रवृद्धां हन्त्येषा मुखशोषञ्च दारुणम् ।**

अमला, कमल, कूट, लाजा र बर्रोका मुनाको धुलो मह मिसाएर गोली बनाउनू । यो मुखमा राखेर चुस्नाले च्यापच्यापी मुख सुक्ने र अति तिर्खा लाग्ने रोग ठिक हुन्छ ।

सन्निपातज्वरमा सञ्जीवनी गुटिका

**विडङ्गं नागरं कृष्णा पथ्यामलबिभीतकम् ॥१९॥**
**वचा गुडूची भल्लातं सविषञ्चात्र योजयेत् ।**

**एतानि समभागानि गोमूत्रेणैव पेषयेत् ॥२०॥**
**गुञ्जाभा गुटिका कार्या दद्यादार्द्रकजै रसैः ।**
**एकामजीर्णगुल्मेषु द्वे विषूच्याञ्च (प्र) दापयेत् ॥२१॥**
**तिस्रश्च सर्पदष्टे तु चतस्रः सान्निपात(ति)के ।**
**वटी सञ्जीवनी नाम्ना सञ्जीवयति मानवम् ॥२२॥**

वायुविडङ्ग, सुठो, पिप्ला, हर्रो, अमला, बर्रो, बोझो, गुर्जो, भलायो र शुद्ध पारिएको वत्सनाभ बराबर मात्रामा लिई गहुँतमा पिसी एक एक रत्तीका गोली बनाउनू । यसलाई अजीर्णरोग र गुल्मरोगमा अदुवाको रससँग एक गोली, हैजामा दुई गोली, सर्पको विष नाश गर्न तीन गोली र सन्निपातमा चार गोली खानू । यो गोलीले मानिसलाई जीवनदान दिने हुनाले यसलाई सञ्जीवनी गुटिका भनिन्छ ।

पिनास आदिमा व्योषादिगुटिका

**व्योषाम्लवेतसं चव्यं तालीसं चित्रकस्तथा (च्चित्रकं तथा) ।**
**जीरकं तिन्तिडीकञ्च प्रत्येकं कर्षभागिकम् ॥२३॥**
**त्रिसुगन्धं त्रिशाणं स्याद्गुडः स्यात्कर्षविंशतिः ।**
**व्योषादिगुटिका साम(सेयं)पीनसश्वासकासजित् ॥२४॥**
**रुचिस्वरकरा(री) ख्याता प्रतिश्यायप्रणाशिनी ।**

सुठो, कालोमरिच, पिप्ला, अम्लवेत, चाभा, लोठसल्लो, चितू, जीरा र अमिलीको बोक्रा सबै बीस बीस ग्राम लिनू । दालचिनी, अलैंची र तेजपात यी नौ नौ ग्राम लिनू । सर्ब मिसाएर धुलो बनाई चार सय ग्राम सक्खर मिसाउनू र गोली बनाउनू । यो व्योषादिगुटिकाले आमविकार, पिनास, दम र खोकी नाश गर्दछ । रुचि जगाउँदछ, स्वर खुलाउँदछ र पुरानो रुघा नाश गर्दछ ।

विभिन्न रोगमा सक्खर मिसाएर बनाइने गुटिका

**आमेषु सगुडां शुण्ठीमजीर्णे(र्णे) गुडपिप्पलीम् ॥२५॥**

**कृच्छ्रे जीरगुडं दद्यादर्शःसु च(स) गुडाभयाम् ।**

आमविकार वा आउँमा सुठो मिसाएर, अजीर्णमा पिप्लाको धुलो मिसाएर, कृच्छ्र (पिसाब रोकिने) रोगमा जीराको धुलो मिसाएर र अल्काईमा हर्रोको धुलो मिसाएर सक्खरका ससाना गोली बनाई चुस्ने गर्नाले धेरै लाभ गर्दछ ।

अल्काईमा त्रिधारा आदिको गोली

**वृद्धदारुकभल्लातशुण्ठीचूर्णेन योजितः ॥२६॥**
**मोदकः सगुडो हन्यात्षड्विधार्शःकृतां रुजम् ।**

त्रिधारा, भलायो र सुठो बराबर लिई धुलो बनाएर त्यसको दोबर सक्खर मिसाई गोली बनाउनू । यो खानाले छ प्रकारका अल्काई नाश हुन्छन् ।

अल्काईमा सूरणवटक



**शुष्कसूरणचूर्णस्य भागान् द्वात्रिंशदाहरेत् ॥२७॥**
**भागान्षोडश चित्रस्य शुण्ठ्या भागचतुष्टयम् ।**
**द्वौ भागौ मरिचस्यापि सर्वाण्येकत्र कार(चूर्ण)येत् ॥२८॥**
**गुडेन पिण्डि(ढ)कां कुर्यादर्शसां नाशनीं पराम् ।**

सुकेको ओल बत्तीस तोला, चितूको बोक्रा सोह्र तोला, सुठो चार तोला र कालोमरिच दुई तोला मिसाई धुलो पारेर धुलो बराबर सक्खर मिसाई गोली बनाउनू । यो सूरणवटक नामक गोली दिनहुँ खानाले छ प्रकारका अल्काई नष्ट हुन्छन् ।

अल्काईमा बृहत्सूरणवटक

**सूरणो वृद्धदारुश्च भागैः षोडशभिः पृथक् ॥२९॥**
**मुसलीचित्रकौ ज्ञेयावष्टभागमितौ पृथक् ।**
**शिवा बिभीतकी धात्री विडङ्गं नागरं कणा ॥३०॥**

भल्लातः पिप्पलीमूलं तालीसञ्च पृथक्पृथक् ।
चतुर्भागप्रमाणानि त्वगेला मरिचन्तथा ॥३१॥
द्विभागमात्राणि पृथक् ततस्त्वेकत्र चूर्णयेत् ।
द्विगुणेन गुडेनाथ वटकान् धा(का)रयेद् बुधः ॥३२॥
प्रबलाग्निकरा ह्येतास्तथाऽर्शोनाशनाः परम् ।
ग्रहणीं वातकफजां श्वासं कासं क्षयामयम् ॥३३॥
प्लीहानं श्लीपदं शोथं हिक्कां मेहं (प्रमेहं च) भगन्दरम् ।
निहन्युः पलितं वृष्या तथा (वृध्यास्तथा) मेध्या रसायनाः ॥३४॥

ओल र त्रिधारा सोह्र सोह्र तोला, मुसलीकन्द र चितूको बोक्रा आठ आठ तोला, हर्रो, बर्रो, अमला, वायुविडङ्ग, सुठो, पिप्ला, भलायो, पिप्लाको जरा र लोठसल्लो सबै चार चार तोला तथा दालचिनी, अलैंची, कालो मरिच दुई दुई तोला जम्मा पारी कुटेर धुलो पार्नू , कूल धुलोमा दोबर सक्खर मिसाउनू र गोली बनाउनू । यो गोली खानाले जठराग्नि बल्दछ; अल्काई, वातजन्य एवं कफजन्य ग्रहणी, दम, खोकी, क्षयरोग, फियोका रोग, हात्तीपाइले, सुजन, बाडुली, प्रमेह, भगन्दर र कपाल फुल्ने रोग नाश हुन्छ । यो गोलीले स्त्रीगमनको चाहना गराउँदछ, बुद्धि बढाउँदछ र बुढ्यौली पनि भगाउँदछ ।

कमलपित्त आदि रोगमा मण्डूरवटकः

त्रिफला त्र्यूषणञ्चव्यं पिप्पलीमूलचित्रकौ ।
दारु माक्षिकधातुश्च दार्वी मुस्तं विडङ्गकम् ॥३५॥
प्रत्येकं कर्षमात्राणि सर्वा द्विगुणितन्तथा ।
मण्डूरञ्चूर्णयेत् सर्वं (चूर्णयेच्छुद्धं) गोमूत्रेऽष्टगुणे क्षिपेत् ॥३६॥
पक्त्वा च वटकान्कृत्वा दद्यात्तक्रानुपानतः ।
कामलापाण्डुमेहार्शः शोथकुष्ठकफामयान् ॥३७॥
ऊरुस्तम्भमजीर्णञ्च प्लीहानं नाशयेदपि ।

हर्रो, बर्रो, अमला, सुठो, मरिच, पिप्ला, चाभा, पिप्लाको जरा, चितूको बोक्रा, देवदारु, स्वर्णमाक्षिकको भस्म, दालचिनी, चुत्रो, नागरमोथे र वायुविडङ्ग एक एक तोला मिसाएर धुलो बनाउनू । यसमा फलामको किट (मण्डूर ?) र गहुँत आठ गुना हाली पकाएर बाक्लो बनाउनू । जब गोली बनाउन योग्य हुन्छ तब झिकेर गोली बनाउनू । यो गोलीलाई तक्रसँग खानाले आँखामा हुने कमलवायु (आँखा पहेँलो हुने एक रोग) नाश हुन्छ । साथै पाण्डु, प्रमेह, अल्काई, सुजन, कुष्ठ, कफविकारले गर्दा घुँडा नचल्ने रोग, अजीर्ण र फियोका रोग नाश हुन्छन् ।

धातुगत जरोमा पिप्लाको लड्डू

(क्षौद्राद् द्विगुणितं सर्पिर्घृताद् द्विगुणपिप्पली ॥३८॥
सिता द्विगुणिता तस्याः क्षीरं देयञ्चतुर्गुणम् ।
चातुर्जातं क्षौद्रतुल्यं पक्त्वा कुर्याच्च मोदकान् ॥३९॥
धातुस्थाँश्च ज्वरान्सर्वान् श्वासं कासञ्च पाण्डुताम् ।
धातुक्षयं वह्निमान्द्यं पिप्पलीमोदको जयेत् ॥४०॥ : प्रक्षिप्त श्लोक)



महको दुई गुना घिउ, घिउको दुई गुना पिप्ला, पिप्लाको दुई गुना मिस्री, मिस्रीको चार गुना दूध तथा महजति दालचिनी, तेजपात, अलैंचीका गेडा र नागकेशरको धुलो लिनू । यी मिसाएर पकाउनू र लड्डू बनाउनू । दिनको एउटा एउटा लड्डू खाने गरे धातुजन्य जरो, दम, खोकी, पाण्डु, धातुक्षय र मन्दाग्निलाई नाश गर्दछ ।

प्रमेह आदि रोगमा चन्द्रप्रभा (कपुर) वटी

चन्द्रप्रभा वचा मुस्तं भूनिम्बामृतदारुकम् ।
हरिद्राऽतिविषा दार्वी पिप्पलीमूलचित्रकौ ॥४१॥
धान्यकं त्रिफलञ्चव्यं विडङ्गं गजपिप्पली ।
व्योषं माक्षिकधातुश्च द्वौ क्षारौ लवणत्रयम् ॥४२॥
एतानि शाणमात्राणि प्रत्येकं कारयेद् बुधः ।
त्रिवृद्दन्ती पत्रकञ्च त्वगेला वंशरोचना ॥४३॥

प्रत्येकं कर्षमात्रञ्च (त्राणि) कुर्यादेतानि बुद्धिमान् ।
द्विकर्षं हतलोहं स्याच्चतुःकर्षा सिता भवेत् ॥४४॥
शिलाजत्वष्टकर्षं स्यादष्टौ कर्षाश्च गुग्गुलोः ।
एभिरेकत्र संक्षुण्णैः कर्तव्या गुटिका शुभा ॥४५॥
चन्द्रप्रभेति(भादि) विख्याता सर्वरोगप्रणाशिनी ।
प्रमेहान् विंशतिं कृच्छ्रं मूत्राघातन्तथाऽश्मरीम् ॥४६॥
विबन्धाऽऽनाहशूलानि मेहनं ग्रन्थिमर्बुदम् ।
अण्डवृद्धिं तथा पाण्डुं कामलाञ्च हलीमकम् ॥४७॥
अन्त्रवृद्धिं कटीशूलं श्वासं कासं विचर्चिकाम् ।
कुष्ठान्यर्शांसि कण्डूञ्च प्लीहोदरभगन्दरे(रम्) ॥४८॥
दन्तरोगं नेत्ररोगं स्त्रीणामार्तवजां रुजम् ।
पुंसां शुक्रगतान्दोषान्मन्दाग्निमरुचिन्तथा ॥४९॥
वायुं पित्तं कफं हन्याद् बल्या वृष्या रसायनी ।
चन्द्रप्रभायां कर्षस्तु चतुःशाणो विधीयते ॥५०॥

कपुर, बोझो, नागरमोथा, चिराइतो, गुर्जो, देवदारु, हलेदो, उत्तिस, चुत्रो, पिप्लाको जरा, चितूको बोक्रा, धनियाँ, हर्रो, बर्रो, अमला, चाभा, वायुविडङ्ग, गजपिप्पली, सुठो, कालोमरिच, पिप्ला, स्वर्णमाक्षिक भस्म, सज्जीखार, जवाखार, सिधेनुन, सौंचर नुन र विडनुन यी सबै तीन तीन ग्राम लिनू । सेतो निशोध, अजयपाल, तेजपात, दालचिनी, अलैंचीका गेडा र वंशलोचन सबै २२.५६, २२.५६ ग्राम लिनू । यि सबै मिसाई धुलो बनाउनू । अनि यसमा लोहभस्म दुई तोला, मिस्री चार तोला, शिलाजित आठ तोला र गोकुलधूप आठ तोला पिँधेर मिसाई १२, १२ ग्रामको गोली बनाउनू । यहाँ कर्ष भन्नाले चार शाण हो भनी जान्नू । यस्तो ओखतीलाई चन्द्रप्रभा भनिन्छ । यसले सबै रोग नाश गर्दछ भनी प्रसिद्ध छ । बीस प्रकारका प्रमेहका रोग मुत्रकृच्छ्र, मुत्राघात, पत्थरी, कब्जियत, आध्मान, शूल, प्रमेहजन्य खटिरा, अण्डकोशको सुजन, पाण्डु, कमलपित्त, हलीमक, आन्द्राको सुजन, कम्मरको दुखाई, दम, खोकी, लुतो, कुष्ठ, अल्काई, दाद, फियोका रोग, भगन्दर, दाँतका रोग, आँखाका रोग, स्त्रीको रजोधर्म सम्बन्धी रोग, पुरुषका वीर्यसम्बन्धी रोग, मन्दाग्नि,

अरुची र त्रिदोष जस्ता सबै रोग यसले नाश गर्दछ । यो चन्द्रप्रभा नामक गोली बलदायक, रतिउत्साह वर्धक र रसायनी हुन्छ ।

गुल्म आदि रोगमा काङ्कायनगुटिका

**यवा(मा)नी जीरकं धान्यं मरिचं गिरिकर्णिका ।**
**अजमोदोपकुञ्ची च चतुःशाणाः पृथक्पृथक् ॥५१॥**
**हिङ्गु षट्शाणिकं कार्यं क्षारौ लवणपञ्चकम् ।**
**त्रिवृच्चाष्टमितैः शाणैः प्रत्येकं कल्पयेत्सुधीः ॥५२॥**
**दन्ती शटी(ठी) पौष्करञ्च विडङ्गं दाडिमं शिवा ।**
**चित्रोऽम्लवेतसः शुण्ठी शाणैः षोडशभिः पृथक् ॥५३॥**
**बीजपूररसेनैषां गुटिकां कारयेद् बुधः ।**
**घृतेन पयसा मद्यैरम्लैरुष्णोदकेन वा ॥५४॥**
**पिबेत्काङ्कायनप्रोक्तां गुटिकां गुल्मनाशिनीम् ।**

**मद्येन वातिकं गुल्मं गोक्षीरेण च पैत्तिकम् ॥५५॥**
**मूत्रेण कफगुल्मञ्च दशमूलैस्त्रिदोषजम् ।**
**उष्ट्रीदुग्धेन नारीणां रक्तगुल्मं निवार(विनाश)येत् ॥५६॥**
**हृद्रोगं ग्रहणीं शूलं क्रिमीनर्शांसि नाशयेत् ।** (यो श्लोकार्ध कुनै प्रतिमा छैन)

ज्वानु, जीरा, धनियाँ, कालोमरिच, अपराजिता, अजमोदा र कालो जीरा यी सबै चार चार शाण (१२, १२ ग्राम) लिनू । भुटेको हिङ छ शाण (१८ ग्राम) लिनू । जवाखार, सज्जीखार, पाँच थरी नुन र सेतो निशोध आठ आठ शाण (२४, २४ ग्राम) लिनू । अजयपाल, कपुरहलेदो, अरिडको मूल जरो, वायुविडङ्ग, दारिमको बोक्रा, हर्रो, चितुको बोक्रा, अम्लवेत र सुठो सोह्र सोह्र शाण (४८, ४८ ग्राम) लिनू । यसपछि सबैलाई धुलो बनाउनू । यो धुलोलाई विद्वान्‌ले बिमिरोको रस हाली गोली बनाउनू । अनि यो गोली घिउ, दूध, अमिलो मद्य वा तातोपानीसँग खानू । काङ्कायनगुटिका नामक यो गोलीले गुल्म नाश गर्दछ । यो गोली मद्यसँग खाए वायुजन्य गुल्म नाश हुन्छ । गाईको दुधसँग खाए पित्तजन्य गुल्म नाश हुन्छ । गहुँतसँग खाए कफजन्य गुल्म नाश हुन्छ । दशमूलको काँढापानीसँग खाए सन्निपातजन्य

गुल्म नाश हुन्छ । उँटको दूधसँग खाए स्त्रीको पाठेघरमा हुने रक्तगुल्म नाश हुन्छ । अन्य यथायोग्य अनुपानसँग खानाले मुटुका रोग, ग्रहणी, शूल, किरा र अल्काई जस्ता सबै रोग नाश हुन्छ । यसले मुटुका रोग, ग्रहणी, शूल, कीरा र अल्काई नाश गर्दछ ।

वातरोग आदिमा योगराजगुग्गुलु

**नागरं पिप्पलीमूलं पिप्पली चव्यचित्रकौ ॥५७॥**
**भृष्टं हिंग्वजमोदं(दा) च सर्षपो जीरकद्वयम् ।**
**रेणुकेन्द्रयवाः पाठा विडङ्गं गजपिप्पली ॥५८॥**
**कटुकाऽतिविषा भार्ङ्गी वचा मूर्वा(र्वे) त्रिभागतः ।**
**प्रत्येकं शाणिकानि स्युर्द्रव्याणीमानि विंशतिः ॥५९॥**
**द्रव्येभ्यः सकलेभ्यश्च त्रिफला द्विगुणा भवेत् ।**
**एभिश्चूर्णीकृतैः सर्वैः समो देयश्च गुग्गुलुः ॥६०॥**
**वङ्गं रौप्यञ्च नागञ्च लोहसारन्तथाऽभ्रकम् ।**

**मण्डूरं रससिन्दूरं प्रत्येकं पलसम्मितम् ॥६१॥**
**गुडपाकसमं कृत्वा इमं दद्याद्यथोचितम् ।**
**एकपिण्डं ततः कृत्वा धारयेद् घृतभाजने ॥६२॥**

सुठो, पिप्लाको जरा, पिप्ला, चाभा, चितूको बोक्रा, भुटेको हिङ, ज्वानु, सर्सिउँ, जीरा, कालो जीरा, शीतलचिनी, इन्द्रजौ, गानेगुर्जो, वायुविडङ्ग, चाभा विशेष (गजपिप्पली), कुटकी, उत्तिस, भारङ्गी, बोझो र मरुई लहरो : यी सबै बीस प्रकारका ओखती एक एक शाण (तीन तीन ग्राम) लिनू । यो सबैको दुई गुना त्रिफला लिनू । यसपछि यो सबै मिसाएर धुलो बनाउनू । जति हुन्छ त्यति नै गोकुलधूप पिसेर धुलो बनाई खुँदो जस्तो हुने गरी पकाउनू । यसपछि पहिलेको धुलो मिसाउनू । यसपछि राङभस्म, रतजभस्म, नागेश्वर भस्म, फलामको सारभस्म, अभ्रक, फलामको किटभस्म र रससिन्दुर : यी सबै एक एक पल (चालीस चालीस ग्राम) यसमा मिसाउनू । सबैलाई खुँदो पकाए जसरी पकाई एउटै गोली (डल्लो) बनाउनू । यसलाई घिउ हालिएको चिल्लो भाँडोमा हालेर राख्नू ।

गुटिकाः शाणमात्रास्तु कृत्वा ग्राह्या यथोचिताः ।
गुग्गुलुर्योगराजोऽयं त्रिदोषघ्नो रसायनः ॥६३॥
मैथुनाहारपानानां त्यागो नैवात्र विद्यते ।
सर्वान्वातामयान्कुष्ठानर्शांसि ग्रहणीगदम् ॥६४॥
प्रमेहं वातरक्तञ्च नाभिशूलं भगन्दरम् ।
उदावर्तं क्षयं गुल्ममपस्मारमुरोग्रहम् ॥६५॥
मन्दाग्निश्वासकासाँश्च नाशयेदरुचिन्तथा ।
रेतोदोषहरः पुंसां रजोदोषहरः स्त्रियाम् ॥६६॥
पुंसामपत्यजनको वन्ध्यानां गर्भदस्तथा ।
रास्नादिक्वाथसंयुक्तो विविधं हन्ति मारुतम् ॥६७॥
काकोल्यादिशृतान् पित्तं कफमारग्वधादिना ।
दार्वीशृतेन मेहाँश्च गोमूत्रेण च पाण्डुताम् ॥६८॥
मेदोवृद्धिञ्च मधुना कुष्ठं निम्बशृतेन वा ।
छिन्नाक्वाथेन वातास्रं शोथं शूलं कणाशृतात् ॥६९॥
पाटलाक्वाथसहितो विषं मूषकजञ्जयेत् ।
त्रिफलाक्वाथसहितो नेत्रार्तिं हन्ति दारुणाम् ॥७०॥
पुनर्नवादेः क्वाथेन हन्यात्सर्वोदरान्यपि ।

यसपछि ससाना एक शाण (तीन ग्राम) का गोली बनाई खाने गर्नू । यो गोलीलाई योगराजगुग्गुलु भनिन्छ । यसले त्रिदोष नाश गर्दछ । यो रसायनी हुन्छ । यो खाँदा मैथुन, खान, पिन आदि केही बार्नु पर्दैन । यसले सबै खालका वातका रोग, कुष्ठरोग, अल्काई, ग्रहणी, प्रमेह, वातरक्त, नाभिको शूल, भगन्दर, उदावर्त, क्षयरोग, गुल्म, छारेरोग, कोखाका शूल, मन्दाग्नि, दम, खोकी र अरुची नाश गर्दछ । पुरुषको वीर्य धातुका दोष नाश गर्दछ भने स्त्रीका रजोदोष नाश गर्दछ । पुरुषको धातु वृद्धि गर्दछ र पुत्र (सन्तान) दिन्छ, बाँझी स्त्रीलाई गर्भ दिन्छ । फ्याक्सेकन्द आदिको काँढापानीसँग खानाले अनेक थरी वातरोग नाश गर्दछ । कल्छे लहरोको काँढापानीसँग खानाले पित्तजन्य रोग नाश गर्दछ । राजवृक्षको

गुदीको काँढापानीसँग खानाले कफविकार नाश गर्दछ । चुत्रोको काँढापानीसँग खाए प्रमेह नाश गर्दछ । गहुँतसँग खाए पाण्डुरोग नाश गर्दछ । बोसो बढेर धेरै मोटाएको मानिसले यसलाई महसँग खानू । नीमको बोक्राको काँढापानीसँग खानाले कुष्ठरोग नाश हुन्छ । वातरक्त रोगमा गुर्जोको काँढापानीसँग खानू । शूल र सुजनमा पिप्लाको काँढापानीसँग खानू । मुसाको विष नाश गर्नुपर्दा पाडरीको काँढापानीसँग खानू । आँखाका कडा रोगमा त्रिफलाको काँढापानीसँग खानू । यसलाई पेटका सबै खालका रोगमा पुनर्नवाको काँढापानीसँग खानू ।

### वातरक्त आदि रोगमा कैशोरगुग्गुल

त्रिफलायास्त्रयः प्रस्थाः प्रस्थैका चामृता भवेत् ॥७१॥
सङ्कुट्य लोहपात्रे तु सार्धद्रोणाम्बुना पचेत् ।
जलमर्धशृतं ज्ञात्वा गृह्णीयाद्वस्त्रगालितम् ॥७२॥
क्वाथे क्षिपेच्छुद्धं गुग्गुलुं प्रस्थसम्मितम् ।
पुनः पचेदयः पात्रे दर्व्या सङ्घट्टयेन्मुहुः ॥७३॥

सान्द्रीभूतञ्च तं ज्ञात्वा गुडपाकसमाकृतिम् ।
चूर्णीकृत्य ततस्तत्र द्रव्याणीमानि निक्षिपेत् ॥७४॥
त्रिफलाऽर्धपला(द्विपला) ज्ञेया गुडूची पलिका मता ।
षडस्रं त्र्यूषणं प्रोक्तं विडङ्गानां पलार्धकम् ॥७५॥
दन्ती कर्षमिता कार्या त्रिवृत्कर्षमिता स्मृता ।
ततः पिण्डीकृतं सर्वं घृतपात्रे विनिक्षिपेत् ॥७६॥

हर्रो, बर्रो, अमला र गुर्जो एक एक प्रस्थ (एक सय साठी ग्राम) लिई फलामको कराईमा अढाई द्रोण (करिब अठार लिटर) पानीमा पकाउनू । आधा पानी बाँकी भएपछि अर्को भाँडामा कपडाले छानी हाल्नू । यसमा राम्ररी कुटेर धुलो पारिएको एक प्रस्थ (करिब १२ किलो) गोकुलधूप मिसाउनू । अनि फलामको भाँडामा फलामकै पन्यूले चलाउँदै खुँदोजस्तो लदरो बनाउनू । खुँदोजस्तै लदरो भएको जानेपछि निम्न ओखतीको धुलो यसमा मिसाउनू । हर्रो, बर्रो, अमला र गुर्जोको धुलो एक एक पल (करिब चालीस चालीस ग्राम);

सुठो, मरिच र पिप्ला षडस्र (छ अक्ष वा कर्ष वा एक सय बीस ग्राम); वायुविडङ्ग आधा पल (बीस ग्राम); अजयपाल एक कर्ष (बीस ग्राम) र सेतो निशोध एक कर्ष । यसपछि मोलेर ठूलो गोली बनाई घिउको भाँडामा राख्नू ।

**गुटिकाः शाणिका कार्या (शाणमात्रेण) युञ्ज्याद् दोषाद्यपेक्षया ।**
**अनुपानैर्भिषग्दद्यात्कोष्णं नीरं पयोऽथवा ॥७७॥**
**मञ्जिष्ठादिशृतं वाऽपि युक्तियुक्तमतः परम् ।**
**जयेत् सर्वाणि कुष्ठानि वातरक्तं त्रिदोषजम् ॥७८॥**
**सर्वव्रणानि गुल्मानि प्रमेहपिडिकास्तथा ।**
**प्रमेहोदरमन्दाग्निकासश्वयथुपाण्डुजान् ॥७९॥**
**हन्ति सर्वामयान्नित्यमुपयुक्तो रसायनम् ।**
**कैशोरकाभिधानोऽयं गुग्गुलुः कान्तिकारकः ॥८०॥**
**वासादिना नेत्रगदान्गुल्मादीन्वरुणादिना ।**
**क्वाथेन खदिरस्यापि व्रणकुष्ठानि नाशयेत् ॥८१॥**
**अम्लं तीक्ष्णमजीर्णञ्च व्यवायं (व्यायामं) श्रममातपम् ।**
**मद्यं रोषं त्यजेत्सम्यग्गुणार्थी पुरसेवकः ॥८२॥**

यसपछि तीन तीन ग्रामका ससाना गोली बनाई रोग अनुसार उपयोग गर्नू । रोगको अवस्था हेरी वैद्यले अनुपानमा तातोपानी अथवा दूध अथवा मजिठोको काँढापानी आवश्यकता हेरी दिनू । यसले सबै खालका कुष्ठ र त्रिदोषजन्य वातरक्त रोग निको हुन्छ । सबै खालका घाउखटिरा, गुल्म, प्रमेहजन्य पिलो, प्रमेह, पेटका रोग, मन्दाग्नि, खोकी, सुजन र पाण्डु जस्ता सबै रोग नाश गर्दछ । यो उपयुक्त रसायनी हो । कैशोरगुग्गुल नामको यो ओखतीले कान्ति प्रदान गर्दछ । यो गोली असुरो आदिको काँढापानीसँग खानाले आँखाका रोग, सिप्लिकान आदिको काँढापानीसँग खानाले गुल्मरोग तथा खयर आदिको काँढापानीसँग खानाले खटिरा र कुष्ठरोग नाश गर्दछ । यो ओखती खाँदा अमिलो, तिक्खर र अजीर्ण हुने खालका खानपिन गर्न हुन्न । मैथुन, परिश्रम, घाम ताप्ने काम, मद्यपान र रिसाउन हुँदैन । जसले यी नियम पालना गरी यो गोली खान्छ उसलाई फाइदा गर्दछ पालना नगर्नेलाई हानी हुन्छ ।

### त्रिफला आदिको गोली भगन्दर आदि रोगमा

**त्रिपलं त्रिफलाचूर्णं कृष्णाचूर्णं पलोन्मितम् ।**
**गुग्गुलुः पञ्चपलिकं क्षोदयेत्सर्वमेकतः ॥८३॥**
**ततस्तु गुटिकां कृत्वा प्रयुञ्ज्याद्वह्न्यपेक्षया ।**
**भगन्दरं गुल्मशोथावर्शांसि च विनाशयेत् ॥८४॥**

हरो, बर्रो, अमला र पिप्ला एक पल (चालीस ग्राम) बटुली धुलो बनाउनू । यसपछि शुद्ध पारिएको गोकुलधूप पाँच पल (दुई सय ग्राम) मा कुटी पिसी मिसाएर गोली बनाउनू । रोगीको पाचनशक्ति विचार गरी यो गोली खान दिनू । यसले भगन्दर, गुल्म, सुजन र अल्काई नाश गर्दछ ।

### ओदानेकाँडोको गोली प्रमेह आदिमा

**अष्टाविंशतिसङ्ख्यानि पलान्यानीय गोक्षुरात् ।**
**विपचेत्षड्गुणे नीरे क्वाथो ग्राह्योऽर्द्धशेषितः ॥८५॥**
**ततः पुनः पचेत्तत्र पुटं सप्तपलं क्षिपेत् ।**
**गुडपाकसमाकारं ज्ञात्वा तत्र विनिक्षिपेत् ॥८६॥**
**त्रिकटु त्रिफला मुस्तं चूर्णितं पलसप्तकम् ।**
**ततः पिण्डीकृतस्यास्य गुटिकामुपयोजयेत् (मुखयोजिता) ॥८७॥**
**हन्यात्प्रमेहं कृच्छ्रञ्च प्रदरं मूत्रघातकम् ।**
**वातास्रं वातरोगाँश्च शुक्रदोषं तथाऽश्मरीम् ॥८८॥**

ओदानेकाँडो अठ्ठाईस पल (एक किलो एक सय बीस ग्राम) बटुली धुलो पारेर यसको छ गुना बढी जलमा पकाउनू । जब पानी आधा हुन्छ तब शुद्ध पारिएको गोकुलधूपको सात पल (दुई सय अस्सी ग्राम) मिसाउनू । अनि फेरी यसलाई खुँदो पकाए जसरी पकाउनू । जब बाक्लो हुन्छ तब सुठो, कालो मरिच, पिप्ला, हर्रो, बर्रो, अमला र नागरमोथे सबै दुई दुई (अस्सी अस्सी ग्राम) मिसाई कुटेर बनाइएको धुलो यसमा मिसाएर एउटा डल्लो बनाउनू ।

अनि यसका ससाना गोली बनाउनू । यो गोली खानाले प्रमेह, कृच्छ्र, प्रदर, मूत्राघात, वातरक्त, वातविकार, शुक्रका रोग र पत्थरी नाश गर्दछ ।

प्रमेहमा चन्द्रकलागुटिका

एलासकर्पूरसितासधात्रीजातीफलं गोक्षुरशाल्मलीत्वक् ।
सूतेन्द्रवङ्गायसभस्म सर्वमेतत्समानं परिभावयेच्च ॥८९॥
गुडूचिकाशाल्मलिकाकषायैर्निष्कार्धमात्रा मधुना ततश्च ।
बद्धा गुटी चन्द्रकला तु नाम्ना मेहेषु सर्वेषु च योजनीया ॥९०॥
(यो श्लोक केही प्रतिमा छैन)

अलैंचीका गेडा, शुद्ध कपूर, मिस्री, अमला, जाइफल, ओदानेकाँडो, काँढा हुने सिमलको बोक्रा, रससिन्दूर (एक ओखती), राङभस्म र लोहभस्म बराबर मात्रामा लिई धुलो पारेर गुर्जो र सिमलको बोक्राको काँढापानीमा पकाई बाक्लो भएपछि छ, छ ग्राम (निष्कार्ध) का गोली बनाउनू । यो चन्द्रकला नामक गोलीलाई महसँग खानाले सबै खालका प्रमेह रोग नाश हुन्छन् ।



कुष्ठ आदि रोगमा त्रिफलाको लड्डू

त्रिफलाऽष्टपला कार्या भल्लातञ्च चतुष्पलम् ।
बाकुचीं पञ्चपलिका विडङ्गानाञ्चतुष्पलम् ॥९१॥
हतलोहं त्रिवृच्चैव गुग्गुलुश्च शिलाजतु ।
एकैकं पलमात्रं स्यात्पलार्द्धं पौष्करं भवेत् ॥९२॥
चित्रकस्य पलार्धं स्यात् त्रिशाणं मरिचं भवेत् ।
नागरं पिप्पली मुस्ता त्वगेलापत्रकुङ्कुमम् ॥९३॥
शाणोन्मितं स्यादेकैकं चूर्णयेत् सर्वमेकतः ।
ततस्तत् प्रक्षिपेच्चूर्णं पक्वखण्डे च तत्समे ॥९४॥
मोदकान् पलिकान् कृत्वा प्रयुञ्जीत यथोचितम् ।
हन्युः सर्वाणि कुष्ठानि त्रिदोषप्रभवामयान् ॥९५॥

भगन्दरप्लीहगुल्मान् जिह्वातालुगलामयान् ।
शिरोऽक्षिभ्रूगतान् रोगान् मन्यात्पृष्ठगतानपि ॥९६॥
प्राग्भोजनस्य देयं स्यादधःकायस्थिते गदे ।
भेषजं भक्तमध्ये च रोगे जठरसंस्थिते ॥९७॥
भोजनस्योपरि ग्राह्यमूर्ध्वजत्रुगदेषु च ।

हर्रो, बर्रो र अमला आठ आठ पला; भलायो चार पल; बकुची पाँच पल; वायुविडङ्ग चार पल; लोहभस्म, सेतो निशोध, गोकुलधूप र शिलाजित सबै एक एक पल; कमलको जरा ( अरिड जरा ?) आधा पल; चितुको बोक्रा आधा पल; मरिच तीन शाण; सुठो, पिप्ला, नागरमोथे, दालचिनी, अलैंची, तेजपात र नागकेसर एक एक शाण लिएर सबै मिसाई धुलो बनाउनू । यति नै बराबर मिस्री पानीमा हाली पकाउनू । लदरो भएपछि निकाली दुई दुई पलका लड्डू बनाउनू । त्यसपछि यथोचित प्रयोग गर्नू । यसले सबै प्रकारका कुष्ठ रोग, त्रिदोषजन्य भगन्दर, फियोका रोग, गुल्म, जिभ्रोका रोग, तालुका रोग, घाँटीका रोग, टाउकाका रोग, आँखाका रोग, आँखीभुइँका रोग, गर्धनका रोग र ढाडका रोग सबै नाश हुन्छन् । शरीरका तल्लो भागका रोग भए बिहान खाना खानु अघि दिनू । पेटका रोगमा खाना खाँदा सँगै खान दिनू । छातीभन्दा माथिका रोगमा खाना खाएपछि यो लड्डू खान दिनू ।



गण्डमाला आदि रोगमा कोइरालो आदिको गोली

काञ्चनारत्वचो ग्राह्यं पलानां दशकं बुधः ॥९८॥
त्रिफला षट्पला कार्या त्रिकटु स्यात्पलत्रयम् ।
पलैकं वरुणं कुर्यादेलात्वक्पत्रकन्तथा ॥९९॥
एकैकं कर्षमात्रं स्यात् सर्वाण्येकत्र चूर्णयेत् ।
यावच्चूर्णमिदं सर्वं तावन् मात्रस्तु गुग्गुलुः ॥१००॥
सङ्कुट्य सर्वमेकत्र पिण्डं कृत्वा च धारयेत् ।
गुटिकाः शाणिकाः कार्याः (शाणमात्रेण) प्रातर्ग्राह्या यथोचितम् ॥१०१॥
गण्डमालाञ्जयत्युग्रामपचीमर्बुदानि च ।

ग्रन्थीन्व्रणाँश्च गुल्माँश्च कुष्ठानि च भगन्दरम् ॥१०२॥
प्रदेयश्चानुपानार्थं क्वाथो मुण्डानिकाभवः ।
क्वाथः खदिरसारस्य पथ्याक्वाथोष्णकञ्जलम् ॥१०३॥

बुद्धिमानले कोइरालोको बोक्रा दश पल, हर्रो दुई पल, बर्रो दुई पल, अमला दुई पल, सुठो तीन पल, मरिच तीन पल, पिप्ला तीन पल, सिप्लिकान एक पल, अलैंची एक कर्ष, दालचिनी एक कर्ष र तेजपात एक कर्ष लिई कुटेर धुलो बनाउनू । यो धुलोमा यति नै बराबरको शुद्ध बनाइएको गोकुलधूप मिसाउनू । फेरी कुटेर ठूलो डल्लो बनाई अनि एक एक शाणका गोली बनाउनू । बिहान बिहान मुण्डी झार वा खयरको काँढापानीसँग वा तातोपानीसँग एक एक गोली खान दिनाले यसले च्यापेको गण्डमाला रोग, अपच, अर्बुद, गाँठारोग, घाउ, गुल्म, कुष्ठ र भगन्दर रोग नाश गर्दछ ।

धातु बढाउन माष आदिको लड्डू

निस्तुषं माषचूर्णं स्यात् तथा गोधूमसम्भवम् ।

निस्तुषं यवचूर्णं शालितण्डुलजन्तथा ॥१०४॥
सूक्ष्मञ्च पिप्पलीचूर्णं पलिकान्युपकल्पयेत् ।
एतदेकीकृतं सर्वं भर्जयेद्गोघृतेन च ॥१०५॥
अर्धमात्रेण सर्वेभ्यस्ततः खण्डं समं क्षिपेत् ।
जलञ्च द्विगुणं दत्त्वा पाचयेत्तं शनैः शनैः ॥१०६॥
ततः पक्वं समुद्धृत्य वृत्तान्कुर्वीत मोदकान् ।
भुक्त्वा सायं पलैकञ्च पिबेत्क्षीरं चतुर्गुणम् ॥१०७॥
वर्जनीयौ विशेषेण क्षाराम्लौ द्वौ रसावपि ।
कृत्वैवं रमयेन्नारीर्बह्वीर्न क्षीयते नरः ॥१०८॥

बोक्रा नभएको माषको पिठो, गहुँको पिठो, बोक्रा नभएको जौको पिठो र चामलको पिठो सबै एक एक पल लिनू । यी सबैलाई गाईको शुद्ध घिउ हाली कराहीमा मन्द आँचमा भुट्नू । यसपछि सक्खर बराबर लिई दोब्बर पानीमा पकाउनू । यसपछि एक एक पलका लड्डू

बनाउनू । यो लड्डू राती खाएर त्यसपछि यसको चार गुना दूध पिउनू । यो औषधी सेवन गर्ने अवधिका अमिलो र क्षारयुक्त पदार्थ पटक्कै नखानू । यसो गर्नाले मानिस धेरै स्त्रीभोगबाट पनि कमजोर हुँदैन ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां संहितायां मध्यखण्डे
चिकित्सास्थाने वटककल्पना नाम सप्तमोऽध्यायः

✷

शार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत सातौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-८९२.५+१०८=१,०००.५

✷

# अथाष्टमोऽध्यायः

## आठौं अध्याय

### अवलेह

#### अवलेहको लक्षण, नाम र मात्रा

**क्वाथादीनां पुनः पाकाद् घनत्वं सा रसक्रिया ।**
**सोऽवलेहश्च लेहः स्यात् तन्मात्रा स्यात् पलोन्मिता ॥१॥**

काँढापानी, फाण्ट आदिलाई पुनः पकाएर बाक्लो बनाएपछि जेजस्तो रस बन्दछ त्यसलाई अवलेह वा लेह भनिन्छ । अवलेहको सामान्यतया एक पल (चालीस ग्राम) मात्रा हो ।

#### अवलेहमा हाल्ने मिस्री आदिको मात्रा

**सिता चतुर्गुणा कार्या चूर्णाच्च द्विगुणो गुडः ।**
**द्रवश्चतुर्गुणं दद्यादिति सर्वत्र निश्चयः ॥२॥**

अवलेहमा मिस्री हाल्नु पर्दा चौबर, सक्खर हाल्नु पर्दा दोबर तथा दूध, मूत्र आदि तरल पदार्थ हाल्नु पर्दा चौबर हाल्नु पर्दछ । यही नै सबैतिरको विधि हो ।

#### अवलेह पाके नपाकेको परीक्षा

**सुपक्वे तन्तुमत्त्वं स्यादवलेहोऽप्सु मज्जति ।**
**खरत्वं पीडिते मुद्रागन्धवर्णरसोद्भवः ॥३॥**

अवलेह राम्ररी पाक्यो कि पाकेन त भनी जाँच्न अवलेहमा लस्सा बसेको छ छैन हेर्नु पर्दछ । राम्ररी पाकेको अवलेह पानीमा डुब्दछ । यसलाई औंलाले थिच्दा कडा र चिल्लो हुन्छ । यसबाट अर्कै खालको बास्ना आउँदछ, यसमा अर्कै खालको रङ देखिन्छ र अर्कै खालको रस उत्पन्न हुन्छ ।

अवलेहसँगै खाइने तरल पदार्थ (अनुपान)

दुग्धमिक्षुरसो यूषः पञ्चमूलकषायजः(जम्) ।
वासाक्वाथो यथायोग्यमनुपानं प्रशस्यते ॥४॥

दूध वा उखुको रस वा पञ्चमूलको काँढापानी वा असुरोको काँढापानी अवलेह खाने विरामीलाई अवस्था हेरी यथायोग्य अनुपान गराउनु पर्दछ ।

खोकी, दम आदिमा कण्टकारीको अवलेह

कण्टकारीं तुलां नीरद्रोणे पक्त्वा कषायकम् ।
पादशेषं गृहीत्वा च तस्मिँश्चूर्णानि दापयेत् ॥५॥
पृथक्पलानि चैतानि गुडूचीचव्यचित्रकाः ।
मुस्तं कर्कटशृङ्गी च त्र्यूषणं धन्वयासकः ॥६॥
भार्ङ्गी(र्गी) रास्ना शटी चैव शर्करा पलविंशतिः ।

प्रत्येकञ्च पलान्यष्टौ प्रदद्याद् घृततैलयोः ॥७॥
पक्त्वा लेहत्वमानीय शीते मधुपलाष्टकम् ।
चतुष्पलन्तु(त्व)गाक्षीर्याः पिप्पलीनाञ्चतुष्पलम् ॥८॥
क्षिप्त्वा निदध्यात्सुदृढे मृण्मये भाजने शुभे ।
लेहोऽयं हन्ति हिक्काऽर्तिंश्वासकासानशेषतः ॥९॥

चार सय तोला कण्टकारीलाई अलिअलि कुटेर एक हजार चौबीस तोला पानीमा हाली एक चौथाई पानी बाँकी नहुँदासम्म पकाउनू । यसपछि यसलाई छानेर निम्न ओखती मिसाउनू । गुर्जो, चाभा, चितूका बोक्रा, नागरमोथे, गुनाभा, सुठो, मरिच, पिप्ला, सिस्नु, भारङ्गी, फ्याक्सेकन्द र कपुरहलेदोको धुलो चार चार तोला मिसाउनू । खुँदो अस्सी तोला र अस्सी तोला तथा घिउ र तेल बत्तीस तोला हाल्नू । यी सबै हालेर पकाई बाक्लो भएपछि झिकेर सेलाउनू । यसपछि बत्तीस तोला मह तथा सोह्र सोह्र तोला वंशलोचन र पिप्लाको धुलो मिसाउनू र मोल्नू । यसपछि सफा खालको बलियो माटाको भाँडामा हाली राम्ररी राख्नू । यो अवलेह दिनहुँ खानाले बाडुलीको पीडा, दम र खोकी पुरै निको पार्दछ ।

च्यवनप्राश

पाटलाऽरणिकाश्मर्यबिल्वारलुकगोक्षुराः ।
पर्ण्यौ बृहत्यौ पिप्पल्यः शृङ्गी द्राक्षाऽमृताऽभया ॥१०॥
बला भूम्यामली वासा ऋद्धिर्जीवन्तिका शठी ।
जीवकर्षभकौ मुस्तं पौष्करं काकनासिका ॥११॥
मुद्गपर्णी माषपर्णी विदारी च पुनर्नवा ।
काकोल्यौ कमलं मेदे सूक्ष्मैलाऽगरुचन्दनम् ॥१२॥
एकैकं पलसम्मानं स्थूलचूर्णितमौषधम् ।
एकीकृत्य बृहत्पात्रे पञ्चामलशतानि च ॥१३॥
पचेद् द्रोणजले क्षिप्त्वा ग्राह्यमष्टांश(ष्टाव)शेषितम् ।
ततस्तु तान्यामलानि निष्कुलीकृत्य वाससा ॥१४॥
दृढहस्तेन सम्पीड्य क्षिप्त्वा तत्र ततो घृतम् ।
पलसप्तमितं तानि किञ्चिद्भृष्ट्वाऽल्पवह्निना ॥१५॥
ततस्तत्र क्षिपेत् क्वाथं खण्डं चार्धतुलोन्मितम् ।
लेहवत्साधयित्वा च चूर्णानीमानि दापयेत् ॥१६॥
पिप्पली द्विपला देया तुगाक्षीरी चतुष्पला ।
प्रत्येकञ्च त्रिशाणः(णं) स्युस्त्वगेलापत्रकेसराः(रम्) ॥१७॥
ततस्त्वेकीकृते तस्मिन्क्षिपेत्क्षौद्रञ्च षट्पलम् ।
इत्येतच्च्यवनप्रोक्तं च्यवनप्राशसंज्ञितम् ॥१८॥
लेहं वह्निबलं दृष्ट्वा खादेत्क्षीणो रसायनम् ।
बालवृद्धक्षतक्षीणा नारीक्षीणाँश्च शोषिणः ॥१९॥
हृद्रोगिणः स्वरक्षीणा ये नरास्तेषु युज्यते ।
कासं श्वासं पिपासाञ्च वातास्रमुरसो ग्रहम् ॥२०॥
वातपित्तं शुक्रदोषं मूत्रदोषञ्च नाशयेत् ।

**मेधां स्मृतिं स्त्रीषु हर्षं कान्तिं वर्णप्रसन्नताम् ॥२१॥**
**अस्य प्रयोगादाप्नोति नरो जीर्णविवर्जितः ।**

पाडरी, अरणी, खमारी, बेलको जरा, ऐरेलु, ओदानेकाँडो, साकिनु, सतिबयर, ठूलो बिही, सानो बिही, पिप्ला, पिप्लाको जरा, चाभा, उत्तिस, दाख, गुर्जो, हर्रो, बलु, भुइँअमला, असुरो, ऋद्धि, जिवन्तिका, सेतोहलेदो, जीवक, ऋषभक, नागरमोथे, अरिडको मूल जरो वा कमलको जरो, कौवाठोरी, वनमुगी, वनमाष, भुइँकुभिण्डो वा बिराले लहरो, पुनर्नवा, कल्छे लहरो, दूधे कल्छे लहरो, कमल, खिरौंलो, ठूलो खिरौंलो, सुकुमेल, धूपी र रक्तचन्दन : यी सबै ओखती चार चार तोला जम्मा पारी अलिअलि कुट्नू । यसपछि ठूला खालका अमला पाँच सय वटा ठूलो भाँडोमा हाली, त्यसमा एक हजार चौबीस तोला पानी हालेर उसिन्नू । जब पानी आठ भागको एक भाग बाँकी रहन्छ तब अमला निकाल्नू । अमला ताछ्नू र एउटा भाँडोको मुखमा बलियोसँग सफा कपडा बाँधी त्यो अमला त्यसमाथि हातले बेस्सरी घोट्नू । त्यसपछि कपडाले छानिएको अमलाको लेदोमा अठ्ठाईस तोला घिउ हाली मन्द आँचमा हल्का भुट्नू । यसपछि पहिले तयार पारिएका ओखतीको काँढापानी र २.४ कि.ग्रा. खुँदो मिसाउनू । अनि बाक्लो नहुँदासम्म पकाउनू । बाक्लो भएपछि आठ तोला पिप्लाको धुलो, सोह्र तोला वंशलोचन; दालचिनी, अलैंची र तेजपातको धुलो नौ नौ ग्राम हाली राम्ररी चलाउनू । यो अवलेहलाई जम्मा पारी फेरी त्यसमा चौबीस तोला मह मिसाउनू । यसपछि च्यवनऋषिले बताएको च्यवनप्राश नामक अवलेह तयार हुन्छ । यो दुब्लाएका मानिसका लागि रसायनी हुन्छ । पचाउने क्षमता हेरी यो अवलेह खानु पर्दछ । बालक, वृद्ध, घाउले पीडित, (पछि) नपुंसक बनेका, सुकेनासका रोगी, मुटुका रोगी र स्वर बसेका मानिसका लागि यो अवलेह उपयुक्त हुन्छ । यसले खोकी, दम, तिर्खा, वातरक्त, छातीका रोग, वातविकार, पित्तविकार, वीर्यका दोष र मूत्रका रोग नाश गर्दछ । यो अवलेह खाने गर्नाले पुरुषको बुद्धि, सम्झनाशक्ति, स्त्रीरमणको चाहना, शरीरको चमक, शरीरको वर्ण र मनको सन्तोष प्राप्त हुन्छ । यो खानेलाई अजीर्ण हुँदैन ।



रक्तपित्त आदिमा कुभिण्डोको अवलेह

**निष्कुलीकृत्य कूष्माण्डखण्डात् पलशतं पचेत् ॥२२॥**
**निक्षिप्य द्वितुलं नीरमर्धशिष्टञ्च गृह्यते ।**

तानि कूष्माण्डखण्डानि पीडयेद् दृढवाससा ॥२३॥
आतपे शोषयेत्किञ्चिच्छूलाग्रैर्बहुशो व्यधेत् ।
क्षिप्त्वा ताम्रकटाहे च दद्यादष्टपलं घृतम् ॥२४॥
तेन किञ्चिद्भर्जयित्वा पूर्वोक्तं तज्जलं क्षिपेत् ।
खण्डं (खण्डात्) पलशतं दत्त्वा सर्वमेकत्र पाचयेत् ॥२५॥
सुपक्वे पिप्पली शुण्ठी जीरकं द्विपलं पृथक् ।
पृथक्पलार्धं धान्याकं पत्रैलामरिचं त्वचम् ॥२६॥
चूर्णीकृत्य क्षिपेत्तत्र घृतार्धं क्षौद्रमावपेत् ।
खादेदग्निबलं दृष्ट्वा रक्तपित्ती क्षय(यी)ज्वरी ॥२७॥
शोषतृष्णाभ्रम(वमि)च्छर्दिश्वासकासक्षतातुरः ।
कूष्माण्डकावलेहोऽयं बालवृद्धेषु युज्यते ॥२८॥
उरःसन्धानकृद्वृष्यो बृंहणो बलकृन्मतः ।



पाकेको कुभिण्डोको बाहिरी बोक्रा खुर्केर तथा भित्रका गेडा निकालेर चार किलो (सय पल) बीचको गुदीलाई ससाना टुक्रा पार्नू । यसलाई नौ दशमलव छ लिटर पानीमा हाली उमाल्नू । जब आधा पानी बाँकी रहन्छ तब झिकी पानी निथारेर एकतिर राख्नू । त्यसपछि कुभिण्डोलाई एउटा सफा कपडामा बाँधेर पानी निचोर्नू । हल्का आगोमा तताएर फेरी हल्का पानी सुकाउनू र झिरले धेरै पटक घोप्नू (खुँड्नू)। त्यसपछि त्यो कुभिण्डाका टुक्रालाई कुनै तामाको भाँडामा तीन सय बीस ग्राम (आठ पल) घिउमा मन्द आँचमा भुट्नू । यसपछि यो भुटेको कुभिण्डोलाई पहिले निचोरेर राखेको यसैको रसमा हाली चार किलो मिस्री मिसाएर पकाउनू । पाकेपछि पिप्ला, सुठो र जीरा अस्सी अस्सी ग्राम तथा धनियाँ, तेजपात, मरिच र दालचिनी बीस बीस ग्राम लिई धुलो बनाएर त्यो पकाईको कुभिण्डोमा मिसाउनू । यसपछि एक सय साठी ग्राम मह मिसाउनू । यसरी कूष्माण्ड अवलेह तयार हुन्छ । यो अवलेहलाई रोगीले आफ्नो क्षमता अनुसार खानू । यो खानाले रक्तपित्त, क्षयरोग, जरो, सुकेनास, तिर्खा, भ्रम, वाकवाकी, दम, खोकी र उरक्षत रोग नाश गर्दछ । यो अवलेह वालक र वृद्धका लागि उपयोगी हुन्छ । यो अवलेहले छातीमा आउने अन्नका रसलाई शुद्ध बनाउँदछ । यसले स्त्री-प्रसङ्गको चाहना उत्पन्न गर्दछ, वीर्यवर्धक र पौष्टिक हुन्छ ।

अल्काई रोगमा कुभिण्डो र ओलको अवलेह

**युक्त्या कूष्माण्डखण्डस्य शूरणं विपचेत्सुधीः ॥२९॥**
**अर्शसां मूढवातानां मन्दाग्नीनाञ्च युज्यते ।**

कुभिण्डो र ओललाई घिउमा भुटेर दोबर मिस्री मिसाई पकाएर अवलेह तयार पार्नू । यो खानाले अल्काई र अपानवायु रोकिने रोग (मूढवात) नाश हुन्छ एवं जठराग्नि बल्दछ ।

क्षयरोगमा अगस्तिको अवलेह

**हरीतकीशतं भद्रं यवानामाढकन्तथा ॥३०॥**
**पलानि दशमूलस्य विंशतिञ्च नियोजयेत् ।**
**चित्रकः पिप्पलीमूलमपामार्गः शटी(ठी) तथा ॥३१॥**
**कपिकच्छूः शङ्खपुष्पी भार्ङ्गी च गजपिप्पली ।**
**बला पुष्करमूलञ्च पृथग्द्विपलमात्रया ॥३२॥**
**पचेत् पञ्चाढके नीरे यवैः स्विन्नैः शृतन्नयेत् ।**
**तच्चाभयाशतं दद्यात्क्वाथे तस्मिन्विचक्षणः ॥३३॥**
**सर्पिस्तैलाष्टपलकं क्षिपेद्गुडतुलान्तथा ।**
**पक्त्वा लेहत्वमानीय सिद्धे शीते पृथक्पृथक् ॥३४॥**
**क्षौद्रञ्च पिप्पलीचूर्णं दद्यात् कुडवमात्रया ।**
**हरीतकीद्वयं खादेत्तेन लेहेन नित्यशः ॥३५॥**
**क्षयं कासं ज्वरं श्वासं हिक्कार्शोऽरुचिपीनसान् ।**
**ग्रहणीं नाशयेत्ये(दे)ष वलीपलितनाशनः ॥३६॥**
**बलवर्णकरः पुंसामवलेहो रसायनम् ।**
**विहितोऽगस्त्यमुनिना सर्वरोगप्रणाशनः ॥३७॥**



ठूलो जातका हर्रो सय वटा र जौ तीन दशमलव सात तीन किलो (एक आढक) लिनू । पहिला जौलाई कुटेर चार गुना पानीमा हाली पकाउनू । एक चौथाई पानी बाँकी भएपछि

झिकेर छान्नू । छोक्रा फाल्नू । यसपछि दशमूल बीस पल (चार सय ग्राम); चितू, पिप्लाको जरा, दतिवन, कपुरहलेदो, काउछो, शङ्खपुष्पी, भारङ्गी, चाभा, बलु र अरिडको मूल जरा वा कमलको जरा सबै अस्सी अस्सी ग्राम लिई पिँधेर धुलो बनाउनू । यसमा करिब बीस लिटर (पाँच आढक) पानी हाली पकाउनू । एक चौथाई पानी बाँकी भएपछि झिकेर छान्नू । यसलाई पहिलेको जौको पानीमा मिसाउनू । अनि हर्रो हाल्नू, घिउ र तिलको तेल दुवै तीन सय बीस ग्राम हाल्नू । चार दशमलव आठ किलो मिस्री हाल्नू । अनि फेरी पकाउनू । बाक्लो भएपछि झिक्नू । सेलाएपछि पिप्लाको धुलो र मह दुवै सोह्र सोह्र तोला हाल्नू । यो अगस्त्य ऋषिले बताएको अवलेहलाई अगस्त्यहरीतकी भनिन्छ । यसमा दुई वटा हर्रो मिसाएर खानाले क्षयरोग, खोकी, जरो, दम, बाडुली, अल्काई, अरुची, पिनास र ग्रहणी नाश हुन्छ । यसले छाला चाउरी पर्ने र कपाल फुल्ने समस्या हराउँदछ । पुरुषमा बल र कान्ति बढाउँदछ । यो अवलेह रसायनी हुनाले सबै रोग नाश गर्दछ ।

अल्काई आदि रोगमा ठूलोकुरोको अवलेह

कुटजत्वक्तुलां द्रोणे जलस्य विपचेत् सुधीः ।

कषायं पादशेषं च गृह्णीयाद्वस्त्रगालितम् ॥३८॥
त्रिंशत्पलं गुडस्यात्र दत्त्वा च विपचेत् पुनः ।
सान्द्रत्वमागतं ज्ञात्वा(दृष्ट्वा) चूर्णानीमानि दापयेत् ॥३९॥
रसाञ्जनं मोचरसं त्रिकटु त्रिफलान्तथा ।
लज्जालुं चित्रकं पाठां बिल्वमिन्द्रयवं त्वचम(त्वचाम्, वचा) ॥४०॥
भल्लातकं प्रतिविषां विडङ्गानि च बालकम् ।
प्रत्येकं पलसंमानं घृतस्य कुडवन्तथा ॥४१॥
सिद्धशीते ततो दद्यान्मधुनः कुडवन्तथा ।
जयेदेषोऽवलेहस्तु सर्वाण्यर्शांसि वेगतः ॥४२॥
दुर्नामप्रभवान्रोगानतीसारमरोचकम् ।
ग्रहणीं पाण्डुरोगञ्च रक्तपित्तञ्च कामलाम् ॥४३॥
अम्लपित्तन्तथा शोथं कार्श्यं चैव प्रवाहिकाम् ।

**अनुपाने प्रयोक्तव्यमाजं तक्रं पयो दधि ॥४४॥**
**घृतं जलं वा जीर्णे च पथ्यभोजी भवेन्नरः ।**

ठूलोकुरोको बोक्रा एक तुला लिई कुटेर एक द्रोण पानीमा पकाउनू । एक चौथाई पानी बाँकी भएपछि झिकेर कपडाले छान्नू । यसमा तीस पल मिस्री हालेर फेरी पकाउनू । जब लद्रो हुन थाल्दछ तब निम्न ओखतीको धुलो हाल्नू । रसाञ्जन, सिमलको खोटो, त्रिकटु, त्रिफला, लज्जावती, चितू, गानेगुर्जो, बेल, इन्द्रजौ, दालचिनी, भलायो, उत्तिस, वायुविडङ्ग र सुगन्धवाल सबै एक एक पल हाल्नू । एक कुडव घिउ हाल्नू । जब चिसो हुन्छ तब एक कुडव मिसाउनू । यो अवलेहले सबै खालका अल्काई चाँडै निको पार्दछ । यसले अल्काई र अल्काईका कारण हुने भगन्दर जस्ता रोग, अतिसार, अरुची, ग्रहणी, पाण्डु, रक्तपित्त, कमलपित्त, अम्लपित्त, सुजन, दुब्लोपन र प्रवाहिका रोग नाश गर्दछ । यो अवलेह बाख्रीको तक्र, दूध, दही, घिउ वा जलसँग खानू । ओखती नपच्दासम्म पथ्य खानपिन गर्नू ।

अतिसार आदिमा ठूलोकुरो आदिको अवलेह

**कुटजत्वक्तुलामार्द्रां द्रोणनीरे विपाचयेत् ॥४५॥**
**पादशेषं शृतं नीत्वा चूर्णान्येतानि दापयेत् ।**
**लज्जालुर्धातकी बिल्वं पाठा मोचरसस्तथा ॥४६॥**
**मुस्तं प्रतिविषा चैव प्रत्येकं स्यात् पलं पलम् ।**
**ततस्तु विपचेद्भूयो यावद्दर्वीप्रलेपनम् ॥४७॥**
**जलेन छागदुग्धेन पीतो मण्डेन वा जयेत् ।**
**सर्वातिसारान्घोराँस्तु नानावर्णान्सवेदनान् ॥४८॥**
**असृग्दरं समस्तञ्च सर्वार्शांसि प्रवाहिकाम् ।**

ठूलोकुरोको बोक्रा एक तुला लिई कुटेर धुलो बनाई एक द्रोण पानीमा हालेर पकाउनू । पानी एक चौथाई बाँकी भएपछि झिक्नू र कपडाले छान्नू । यसपछि लज्जावती, धयैँराको फूल, बेल, गानेगुर्जो, सिमलको खोटो, नागरमोथे र उत्तिसको धुलो एक एक पल हाली बाक्लो नहुँदासम्म पुनः पकाउनू । बाक्लो भएपछि अवलेह तयार हुन्छ । यो अवलेहलाई पानी वा बाख्रीको दूध वा माडसँग खानाले अती दुख्ने र अनेक कारणका तथा अति पुराना अतिसार

नाश गर्दछ । स्त्रीका सबै खालका प्रदर रोग, सबै खालका अल्काई र प्रवाहिका समेत नाश गर्दछ ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां संहितायां मध्यखण्डे
चिकित्सास्थाने अवलेहकल्पना नामाष्टमोऽध्यायः

✷

शार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत आठौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्या:-१,०००.५+४८.५=१,०४८.५

✷

# अथ नवमोऽध्यायः

## नवौँ अध्याय

### स्नेह कल्पना
### घिउ र तेल

**कल्काच्चतुर्गुणीकृत्य घृतं वा तैलमेव वा ।**
**चतुर्गुणे द्रवे साध्यं तस्य मात्रा पलोन्मिता ॥१॥**

ओखतीको धुलो वा लेदोभन्दा चौबर घिउ वा तेल लिई त्यो घिउ वा तेलको चौबर दूध, गहुँत आदि तरल पदार्थ मिसाई तरल पदार्थ सुकेर घिउ वा तेल (र ओखती) मात्र बाँकी नभएसम्म आगोमा पकाउनू । यस्तो घिउ वा तेल सामान्यतः एक पल (चालीस ग्राम) खानू ।

### स्नेह बनाउने प्रयोजनका लागि काँढापानी पकाउने विधि

**निक्षिप्य क्वाथयेत्तोयं क्वाथ्यद्रव्याच्चतुर्गुणम् ।**

**पादशिष्टं गृहीत्वा च स्नेहं तेनैव साधयेत् ॥२॥**

पहिले ओखतीलाई चौबर पानीमा हाली उमाल्नू । एक चौथाई पानी बाँकी भएपछि झिक्नू । यसमा घिउ वा तेल हाली फेरी पकाउनू । जब पानी सुकेर घिउ वा तेल मात्र बाँकी रहन्छ तब स्नेह तयार भो भनी जान्नू ।

### नरम ओखतीको काँढापानी बनाउँदा हाल्नुपर्ने पानीको मात्रा

**चतुर्गुणं मृदुद्रव्ये कठिनेऽष्टगुणञ्जलम् ।**
**तथा च मध्यमे द्रव्ये दद्यादष्टगुणं पयः ॥३॥**
**अत्यन्तकठिने द्रव्ये नीरं षोडशिकं मतम् ।**

गुर्जो आदि नरम खालका ओखतीमा ओखतीको चार गुना र राजवृक्ष, दशमूल आदि कडा खालका ओखतीमा ओखतीको आठ गुना पानी हाली काँढापानी पकाउनू । अती नै कडा खालका ओखती भए सोह्र गुना पानी हालेर पकाउनू भनिएको छ ।

**कर्षादितः पलं यावत् क्षिपेत् षोडश(शि)कं जलम् ।।४।।**
**तदूर्ध्वं कुडवं यावद्भवेदष्टगुणं पयः ।**
**प्रस्थादितः क्षिपेन्नीरं खारीं यावच्चतुर्गुणम् ।।५।।**

अथवा एक कर्ष (बीस ग्राम) देखि एक पल (चालीस ग्राम) सम्मको ओखतीको काँढापानी पकाउनु पर्दा सोह्र गुना; एक पलभन्दा बढी कुडव (सोह्र तोला) सम्मको ओखतीमा आठ गुना र एक कुडवभन्दा बढी अर्थात् प्रस्थ (एक सय साठी ग्राम) देखि खारी (करिब एक सय सन्तान्नब्बे किलो) सम्म ओखतीमा चौबर पानी हाली काँढापानी पकाउनू ।

काँढापानीमा हालिने ओखतीको धुलोको मात्रा

**अम्बुक्वाथरसैर्यत्र पृथक्स्नेहस्य साधनम् ।**
**कल्कस्यांशं तत्र दद्याच्चतुर्थं षष्ठमष्टमम् ।।६।।**

पानीमा मात्र स्नेह बनाइने भए स्नेहको एक चौथाई, काँढापानीमा स्नेह बनाइने भए स्नेहको छ भागको एक भाग, मासुको रसमा स्नेह बनाइने भए स्नेहको आठ भागको एक भाग ओखतीको धुलो वा लेप हाल्नू ।

दूध आदिमा स्नेह बनाउँदाको मात्रा

**दुग्धे दध्नि रसे तक्रे कल्को देयोऽष्टमांशकः ।**
**कल्कस्य सम्यक्पाकार्थं तोयमत्र चतुर्गुणम् ।।७।।**

दूध, दही तथा अरु केही ओखतीको रसमा स्नेह बनाइने भए स्नेहको आठ भागको एक भाग ओखती मिसाउनू । स्नेह राम्ररी पाक्नका लागि यसमा स्नेहको चौबर पानी हाल्नू ।

स्नेह पकाउँदा धेरै थरी ओखती मिसाउँदाको मात्रा

**द्रवाणि यत्र स्नेहेषु पञ्चादीनि भवन्ति हि ।**
**तत्र स्नेहसमान्याहुर्यथापूर्वं चतुर्गुणम् ।।८।।**

यदि पाँच प्रकारका भन्दा बढी तरल पदार्थ मिसाएर स्नेह पकाउने हो भने सबै तरल पदार्थ स्नेहसँग बराबर मात्रामा लिनू । पाँचभन्दा कम भए चौबर लिनू ।

एक थोक मात्र तरल पदार्थमा स्नेह पकाउने विधि

**द्रव्येण केवलेनैव स्नेहपाको भवेद्यदि ।**
**तत्राम्बुपिष्टः कल्कः स्याज्जलञ्चात्र चतुर्गुणम् ॥९॥**

एक थोक तरल पदार्थ मात्र हालेर स्नेह पकाउने हो भने ओखतीलाई पानीमा पिँधेर स्नेहको चौबर पानी हाली पकाउनू ।

काँढापानीमा स्नेह पकाउने विधि

**क्वाथेन केवलेनैव पाको यत्रेरितः क्वचित् ।**
**क्वाथ्यद्रव्यस्य कल्कोऽपि तत्र स्नेहे प्रयुज्यते ॥१०॥**



काँढापानीमा मात्रै स्नेह पकाउने भए ओखतीलाई पानीमा पिँधी स्नेहमा हाल्नू र स्नेहको चौबर पानी हाली पकाउनू ।

ओखती नहाली स्नेह पकाउने विधि

**कल्कहीनस्तु यः स्नेहः स साध्यः केवले द्रवे ।**

ओखती नहाली स्नेह पकाउने भए पानी मात्र हाली पकाउनू ।

फूलको धुलोको स्नेह पकाउने विधि

**पुष्पकल्कस्तु यः स्नेहस्तत्र तोयञ्चतुर्गुणम् ॥११॥**
**स्नेहे स्नेहाष्टमांशश्च पुष्पकल्कः प्रयुज्यते ।**

फूलको धुलो हाली स्नेह पकाउने भए स्नेहको चौबर पानी हाली पकाउनू । यसमा स्नेहको आठ भागको एक भाग फूलको ओखती हाल्नु पर्दछ ।

स्नेह पाकेको लक्षण

वर्तिवत् स्नेहकल्कः स्याद्यदाङ्गुल्याविमर्दितः ॥१२॥
शब्दहीनोग्निनिक्षिप्तः स्नेहः सिद्धो भवेत् तदा ।

जब स्नेह दुई औंलाले च्यापेर छाम्दा च्याटच्याट लाग्ने (भिजाएका बत्तीजस्तै) हुन्छ, जब स्नेह आगोमा पर्दा च्यारच्यार आवाज आउँदैन तब त्यो स्नेहलाई पाकेको मानिन्छ ।

घिउ तेलमा पकाउँदा स्नेह पाके नपाकेको हेर्ने विधि

यदा फेनोद्गमस्तैले फेनशान्तिश्च सर्पिषि ॥१३॥
गन्धवर्णरसोत्पत्तिः स्नेहः सिद्धस्तदा भवेत् ।



तेलमा पकाउँदा फिँज आएपछि र घिउमा पकाउँदा फिँज उठेर हराएपछि, बास्ना आउन थालेपछि, रातो आदि रङको भएपछि, गुलियो आदि स्वाद आउन थालेपछि स्नेह पाकेको भनी थाहा हुन्छ ।

स्नेह पकाउने विधि र लक्षण

स्नेहपाकस्त्रिधा प्रोक्तो मृदुर्मध्यः खरस्तथा ॥१४॥
ईषत् सरसकल्कस्तु स्नेहपाको मृदुर्भवेत् ।
मध्यपाकस्य सिद्धिश्च कल्के नीरसकोमले(लः) ॥१५॥
ईषत् कठिनकल्कश्च स्नेहपाको भवेत् खरः ।
तदूर्ध्वं दग्धपाकः स्याद्दाहकृन्निष्प्रयोजनः ॥१६॥

स्नेह हल्का, मध्यम र कडा गरी तीन प्रकारले पकाइन्छ । जुन स्नेहमा हालिएको ओखतीको चिसोपन केही बाँकी रहन्छ वा ओखती पूरै सुक्दैन त्यसलाई हल्का स्नेह-पाक भनिन्छ । जुन स्नेहमा हालिएको ओखती नरम हुनाले त्यसमा पानीको अंश अलिकति पनि बाँकी रहँदैन

त्यसलाई मध्यम स्नेह-पाक भनिन्छ । जुन स्नेहमा हालिएको ओखती डढेर र स्नेह समेत डढ्द्छ यस्तो स्नेहलाई कडा-पाक स्नेह भनिन्छ । यस्तो डढेको स्नेहले डाह गर्दछ र प्रयोजनहीन हुन्छ ।

नपाकेको स्नेहका गुण

**आमपाकश्च निर्वीर्यो वह्निमान्द्यकरो गुरुः ।**

राम्ररी नपाकेको स्नेहले तागत दिँदैन, जठराग्निलाई कमजोर पार्दछ र पचाउन कठिन हुन्छ ।

मध्यम-पाकको स्नेह

**नस्यार्थं स्यान्मृदुः पाको मध्यमः सर्वकर्मसु ॥१७॥**
**अभ्यङ्गार्थं खरः प्रोक्तो युञ्ज्यादेवं यथोचि(हि)तम् ।**

मध्यम-पाकको स्नेह नस हाल्न योग्य हुन्छ । सबै काममा यसैलाई प्रयोग गर्नु पर्दछ । कडा-पाकको स्नेह भने शरीरमा दल्न मात्र प्रयोग गर्नु पर्दछ ।



स्नेह बनाउने समय

**घृततैलगुडादींश्च साधयेन्नैकवासरे ॥१८॥**
**प्रकुर्वन्त्युषिता ह्येते विशेषाद्गुणसञ्चयम् ।**

ओखती आदि बटुलेर लेराएर त्यही दिन घिउ, तेल, सक्खर आदिको स्नेह नबनाउनू । एकरात भिजाएर अर्को दिन बनाउनू । स्नेह-पाक विधिका बारेमा बताइयो । अब पहिले घिउको र त्यसपछि तेलको स्नेह आदि बनाउने विधि बताइन्छ ।

घिउका स्नेहहरू
फियोको रोग आदिमा पिप्ला आदिको स्नेह

**पिप्पलीपिप्पलीमूलचव्यचित्रकनागरैः ॥१९॥**
**ससैन्धवैश्च पलिकैर्घृतप्रस्थं विपाचयेत् ।**

क्षीरं चतुर्गुणं दत्त्वा तद् घृतं प्लीहनाशनम् ॥२०॥
विषमज्वरं मन्दाग्निहरं रुचिकरं परम् ।

पिप्ला, पिप्लाको जरा, चाभा, चितू, सुठो र सिधेनुन एक एक पल लिई धुलो पारेर एक प्रस्थ गाईको घिउमा मिसाउनू । अनि घिउभन्दा चार गुना बढी पानी मिसाएर गाईको दूध मिसाउनू । अनि पकाउनू । राम्ररी ओखती पाकोस् भन्नका लागि घिउको चौबर पानी हालेर पकाउनू । जब घिउमात्र बाँकी रहन्छ तब झिकी छान्नू । यो खानाले फियोका रोग, विषमज्वर र मन्दाग्नि नाश हुन्छ तथा रुची जगाउँदछ ।

अतिसार र ग्रहणी रोगमा अमिली आदि र घिउको स्नेह

पिप्पली पिप्पलीमूलं चित्रको हस्तिपिप्पली ॥२१॥
श्वदँष्ट्रा नागरं धान्यं पाठा बिल्वं यवानिका ।
द्रव्यैश्च पलिकैरेतैश्चतुःषष्टिपलं घृतम् ॥२२॥
घृताच्चतुर्गुणं दद्याच्चाङ्गेरीस्वरसं बुधः(धैः) ।
तथा चतुर्गुणं दत्त्वा दधिसर्पिर्विपाचयेत् ॥२३॥
शनैः शनैर्विपक्वञ्च (र्विपक्तव्यं) चाङ्गेरीघृतमुत्तमम् ।
तद् घृतं कफवातघ्नं ग्रहण्यर्शोविकारनुत् ॥२४॥
हन्त्यानाहं गुदभ्रंशं मूत्रकृच्छ्रं प्रवाहिकाम् ।

पिप्ला, पिप्लाको जरा, चितू, चाभा, ओदानेकाँडो, सुठो, धनियाँ, गानेगुर्जो, बेल र ज्वानु दुई दुई पल लिनू । यसलाई धुलो बनाउनू । यसपछि चौसठ्ठी पल घिउमा यसलाई मिसाउनू । अनि घिउको चौबर अमिलीको रस र दहीको छोक्रा हाली मन्द आँचमा पकाउनू । जब घिउ मात्र बाँकी रहन्छ तब झिकी छान्नू । यसलाई चाङ्गेरीघृत भनिन्छ । यो खानाले कफविकार, वायुविकार, ग्रहणी र अल्काईका विकार नाश हुन्छ । आनाह, गुदभ्रंश, मूत्रकृच्छ्र र प्रवाहिका नाश गर्दछ ।

## अतिसार आदि रोगमा मसुरादि घृत

मसूराणां पलशतं नीरद्रोणे विपाचयेत् ॥२५॥
पादशेषं शृतं नीत्वा दत्त्वा बिल्वपलाष्टकम् ।
घृतप्रस्थं पचेत्तेन सर्वातीसारनाशनम् ॥२६॥
ग्रहणीं भिन्नविट्कां(कं) च नाशयेच्च प्रवाहिकाम् ।

सय पल मसुरोलाई एक द्राण पानीमा हाली पकाउनू । एक चौथाई पानी बाँकी भएपछि झिकेर छान्नू । यो रसमा आठ पल बेलको धुलो र एक प्रस्थ घिउ हाली पुनः पकाउनू । जब घिउ मात्र बाँकी रहन्छ तब छानी उत्तम भाँडामा हाली राख्नू । यो घिउ खानाले सबै खालका अतिसार, ग्रहणी, दिसा गोटा पर्ने रोग र प्रवाहिका नाश गर्दछ ।

## रक्तपित्त आदि रोगमा कामदेवघृत

अश्वगन्धा तुलैका स्यात् तदर्धो गोक्षुरः स्मृतः ॥२७॥

बालाऽमृता शालिपर्णी विदारी च शतावरी ।
पुनर्नवाऽश्वत्थशुण्ठी काश्मर्यास्तु फलान्यपि ॥२८॥
पद्मबीजं माषबीजं दद्याद्दशपलं पृथक् ।
चतुर्द्रोणाम्भसा पक्त्वा पादशेषं श्रृतन्नयेत् ॥२९॥
जीवनीयगणः कुष्ठं पद्मकं रक्तचन्दनम् ।
पत्रकं पिप्ली द्राक्षा कपिकच्छुफलं तथा ॥३०॥
नीलोत्पलं नागपुष्पं सारिवे द्वे बले तथा ।
पृथक् कर्षसमा भागाः शर्करायाः पलद्वयम् ॥३१॥
रसश्च पौण्ड्रकेक्षूणामाढकैकं समाचरेत् ।
घृतस्य चाढकं दत्त्वा पाचयेन्मृदुनाऽग्निना ॥३२॥
घृतमेतन्निहन्त्याशु रक्तपित्तमुरःक्षतम् ।
हलीमकं पाण्डुरोगं वर्णभेदं स्वरक्षयम् ॥३३॥

वातरक्तं मूत्रकृच्छ्रं पार्श्वशूलञ्च कामलाम् ।
शुक्रक्षयमुरोदाहं कार्श्यमोजः क्षयन्तथा ॥३४॥
स्त्रीणां चैवाप्रजातानां गर्भदं शुक्रदं नृणाम् ।
कामदेवघृतं नाम हृद्यं बल्यं रसायनम् ॥३५॥
(यसमा पुस्तक नै पिच्छे फरक फरक श्लोक पाइन्छ)

अश्वगन्धा एक तुला, ओदानेकाँडो त्यसको आधा अनि चितूको बोक्रा, गुर्जो, साकिनु, बिराले लहरा, कुरिलो, पुनर्नवा, अश्वत्थ (पीपल, पिप्लाको जरा ?), सुठो, खमारीका फल, कमलका गेडा र माषका गेडा दश दश पल लिएर धुलो बनाई चार द्रोण पानीमा काँढापानी पकाउनू । जब एक चौथाई पानी बाँकी हुन्छ तब भिकेर छान्नू । अनि यसमा जीवनीयगणका ओखती, कूट, पैयुँ, रक्तचन्दन, तेजपात, पिप्ला, दाख, काउछोको गेडा, नीलकमल, नागकेशर, कालो र सेतो सिस्नु तथा दुई थरीका बलु (?) यी सबै एक एक कर्ष कुटेर धुलो बनाई काँढापानी पकाएर अघिको काँढा पानीमा मिसाउनू । यसमा दुई पल मिस्री हाल्नू । उखुको रस र घिउ एक एक आढक हाल्नू । अनि मन्द आँचमा पकाउनू । घिउ मात्र बाँकी भएपछि भिकेर छान्नू । यो घिउले रक्तपित्त, उरक्षत, हलीमक, पाण्डु, वर्णभेद (?), स्वर बसेको, वातरक्त, मूत्रकृच्छ्र, कोखाको शूल, कमलपित्त, शुक्रको क्षय, पेट पोल्ने वा दुख्ने रोग, दुब्लोपन, तेजक्षय, स्त्रीका गर्भजन्य रोग र पुरुषका शुक्रजन्य रोग निको हुन्छ । यो कामदेवघृत नामक स्नेह मनोहर एवं वीर्य र बल वर्धक तथा रसायनी हुन्छ ।

अपस्मार आदि रोगमा पानीयकल्याणक घृत

त्रिफला द्वे निशे कौन्ती सारिवे द्वे प्रियङ्गुका ।
शालिपर्णी पृष्ठिपर्णी देवदार्व्येलवालुकम् ॥३६॥
नतं विशाला दन्ती च दाडिमं नागकेशरम् ।
नीलोत्पलैला मञ्जिष्ठा विडङ्गं कुष्ठपद्मकम् ॥३७॥
जातिपुष्पं चन्दनञ्च तालीसं बृहती तथा ।
एतैः कर्षसमैः कल्कैर्जलं दत्त्वा चतुर्गुणम् ॥३८॥
घृतप्रस्थं पचेद्धीमानपस्मारे ज्वरे क्षये ।

**उन्मादे वातरक्ते च कासे मन्दानले तथा ॥३९॥**
**प्रतिश्याये कटीशूले तृतीयक चतुर्थके ।**
**मूत्रकृच्छ्रे विसर्पे च कण्डूपाण्ड्वामये तथा ॥४०॥**
**विषद्वये प्रमेहेषु सर्वथैवोपयुज्यते ।**
**वन्ध्यानां पुत्रदं भूतयक्षरक्षोहरं स्मृतम् ॥४१॥**

हर्रो, बर्रो, अमला, हलेदो, चुत्रो, कालो अनन्तमूल, सेतो अनन्तमूल, दहीगुयैँलो वा कागुनु (?), साकिनु, सतिबयर, देवदारु, देवीसरो, तगर, ऐरेलु, अजयपाल, दारिम, नागकेशर, नीलकमल, अलैँची, मजिठो, वायुविडङ्ग, कूट, पैयुँ, जाइफल, रक्तचन्दन, लोठसल्लो र ठूलो बिही : यी ओखती एक एक कर्ष जम्मा पारी कुटेर धुलो बनाउनू । धुलोको चौबर पानीमा काँढा पानी पकाउनू । एक चौथाई पानी बाँकी भएपछि झिकेर छान्नू र एक प्रस्थ घिउ हालेर पुनः पकाउनू । घिउमात्र बाँकी भएपछि झिक्नू र छान्नू । यो घिउले छारेरोग, अपस्मार, जरो, क्षयरोग, उन्माद, वातरक्त, खोकी, मन्दाग्नि, प्रतिश्याय, कम्मरको शूल, तीन दिन बिराएर आउने जरो, चार दिन बिराएर आउने जरो, मुत्रकृच्छ्र, विसर्प, लुतो, पाण्डु, स्थावर विष, जङ्गम विष र प्रमेह आदि सबै रोग नाश हुन्छन् । यो घिउले बाँझी स्त्रीलाई पनि पुत्र (सन्तान) दिन्छ । यसले भूत, यक्ष आदिका बाधाहरू पनि नाश हुन्छन् ।



कुष्ठ आदि रोगमा गुर्जोको घृत

**अमृताक्वाथकल्काभ्यां सक्षीरं विपचेद् घृतम् ।**
**वातरक्तञ्जयत्याशु कुष्ठञ्जयति दुस्तरम् ॥४२॥**

गुर्जोको धुलाको काँढापानी पकाउनू । एक चौथाई पानी बाँकी भएपछि झिक्नू र छान्नू । त्यो पानीमा पानीको एक चौथाई घिउ र घिउको एक चौथाई गुर्जोको धुलो हाल्नू । घिउको चौबर दूध हाल्नू । यसपछि पुनः घिउमात्र बाँकी नहुँदासम्म पकाउनू । अनि झिकेर छान्नू । यो घिउ खानाले वातरक्त र कुष्ठरोग चाँडै निको हुन्छ ।

कुष्ठ आदि रोगमा महातिक्तकघृत

**सप्तच्छदः प्रतिविषा श्यामाकः कटुरोहिणी ।**

पाठा मुस्तमुशीरञ्च त्रिफला पर्पटस्तथा ॥४३॥
पटोलनिम्बमञ्जिष्ठाः पिप्पली पद्मकं शठी ।
चन्दनं धन्वयासश्च विशाले द्वे निशे तथा ॥४४॥
गुडूची सारिवे द्वे च मूर्वा वासा शतावरी ।
त्रायन्तीन्द्रयवायष्टीभूनिम्बश्चाक्षभागिकाः ॥४५॥
घृतञ्चतुर्गुणं दद्यात् घृतादामलकीरसः ।
द्विगुणः सर्पिषश्चात्र जलमष्टगुणं भवेत् ॥४६॥
तत्सिद्धं पाययेत्सर्पिर्वातरक्तेषु सर्वथा ।
कुष्ठानि रक्तपित्तञ्च रक्तार्शांसि च पाण्डुताम् ॥४७॥
हृद्रोगगुल्मवीसर्पप्रदरान् गण्डमालिकाम् ।
क्षुद्ररोगाञ्ज्वरांश्चैव महातिक्तमिदञ्जयेत् ॥४८॥

छतिउन, उत्तिस, सामाधान, पिर्रे, गानेगुर्जो, नागरमोथे, खस, हरो, बर्रो, अमला, पित्तपापडा, पर्बलका पात, नीमका बोक्रा, मजिठो, पिप्ला, पैयुँ, कपुरहलेदो, रक्तचन्दन, सिस्नु, ऐरेलु, हलेदो, चुत्रो, गुर्जो, कालो अनन्तमूल, सेतो अनन्तमूल, मरुई लहरो, असुरो, कुरिलो, मुँडिलो, इन्द्रजौ, जेठीमधु र चिराइतो : यी सबै एक एक कर्ष जम्मा पारी कुटेर धुलो बनाउनू । धुलो वा कल्कको चोबर घिउ हाल्नू । घिउको दोबर अमलाको रस र आठ गुना पानी हाल्नू । यसलाई मन्द आँचमा पकाउनू । जब घिउ मात्र बाँकी हुन्छ तब झिकेर छानी उत्तम भाँडामा हालेर राख्नू । यो घिउ खानाले अवश्य नै वातरक्त रोग नाश हुन्छ । यो महातिक्तधृत खानाले कुष्ठ, रक्तपित्त, रगत बहने वा रक्तजन्य अल्काई, पाण्डु, मुटुका रोग, गुल्म, विसर्प, प्रदर, गण्डमाला, अन्य सानातिना रोग र जरो नाश गर्दछ ।



कुष्ठ आदि रोगमा कासीसाद्यघृत

कासीसं द्वे निशे मुस्तं हरितालं मनः शिलाम् ।
कम्पिल्लकं गन्धकञ्च विडङ्गं गुग्गुलुन्तथा ॥४९॥
सिक्थकं मरिचं कुष्ठं तुत्थकं गौरसर्षपान् ।

**रसाञ्जनञ्च सिन्दूरं श्रीवासं रक्तचन्दनम् ।।५०।।**
**अ(इ)रिमेदं निम्बपत्रं करञ्जं सारिवां वचाम् ।**
**मञ्जिष्ठां मधुकं मांसीं शिरीषं लोध्रपद्मकम् ।।५१।।**
**हरीतकीं प्रपुन्नाटश्चूर्णयेत् कार्षिकान् पृथक् ।**
**ततश्च चूर्णमालोड्य त्रिंशत्पलमिते घृते ।।५२।।**
**स्थापयेत्ताम्रपात्रे च घर्मे सप्तदिनानि च (वधि) ।**
**अस्याभ्यङ्गेन कुष्ठानि दद्रुपामाविचर्चिकाः ।।५३।।**
**शूकदोषा विसर्पाश्च विस्फोटा वातरक्तजाः ।**
**शिरःस्फोटोपदंशाश्च नाडीदुष्टव्रणानि च ।।५४।।**
**शोथो भगन्दरश्चैव लूताः शाम्यन्ति देहिनाम् ।**
**शोधनं रोपणञ्चैव सवर्णकरणं घृतम् ।।५५।।**

पुष्पकासिस (उपधातु विशेष), हलेदो, चुत्रो, नागरमोथे, हरिताल, मनशिला, कम्पिल्लक, गन्धक, वायुविडङ्ग, गोकुलधूप, मैन, कालोमरिच, कूट, तुथो, सेतो सर्सिउँ, रसाञ्जन, सिन्दूर, तार्पिनको तेल (श्रीवास), रक्तचन्दन, गनाउने खयरको बोक्रा, नीमको पात, कुबेराक्षका गेडा, अनन्तमूल, बोझो, मजिठो, जेठीमधु, जटामसी, शिरीषको बोक्रा, लोध, पैयुँ, हर्रो र ताप्रेका गेडा : यी सबै ओखती एक एक कर्ष लिनू । सबैलाई कुटीपिसी धुलो बनाउनू । यसपछि तीस पल घिउमा यो धुलो घोली कुनै तामाका भाँडामा हाली सात दिनसम्म घाममा सुक्न दिनू । अनि पूर्ववर्त पकाई घिउ बनाउनू । यसपछि यो घिउलाई शरीरमा दल्नाले कुष्ठ, दाद, पामा, लुतो, शूकदोष, विसर्प, विस्फोट, वातरक्त, टाउकाका खटिरा, उपदंश, जरो गढेका खटिरा, खराब खटिरा, सुजन, भगन्दर र माकुरोले मुत्दा शरीरमा उठ्ने फोका नाश हुन्छन् । यो घिउले घाउखटिरा शुद्ध पारी भर्दछ र छालाको चमकलाई पहिलेको जस्तै बनाउँदछ ।



घाउखटिरामा जात्यादिघृत

**जातीनिम्बपटोलाश्च(लं च) द्वे निशे कटुरोहिणी ।**
**मञ्जिष्ठा मधुकं सिक्थं करञ्जोशीरसारिवाः ।।५६।।**

तुत्थञ्च विपचेत्सम्यक्कल्कैरेभिर्घृतं बुधः ।
अस्य लेपात्प्र(द्वि)रोहन्ति सूक्ष्मनाडीव्रणा अपि ॥५७॥
मर्माश्रिताः क्लेदिनश्च गम्भीराः सरुजो व्रणाः ।

चमेलीका पात, नीमका पात, पर्बलका पात, हलेदो, चुत्रो, कुटकी, मजिठो, जेठीमधु, मैन, कुबेराक्ष, खस, अनन्तमूल र नीलोतुथो : यी सबै एक एक कर्ष बटुली पिँधेर धुलो बनाउनू । धुलोको चौबर घिउमा धुलो मिसाई एक दिन घाममा रहन दिनू । यसपछि आगोमा पकाएर पूर्ववत् घिउ बनाउनू । यो घिउ दल्नाले नसासम्म गढेका घाउ, मर्मस्थलका घाउ तथा पीप बग्ने, गिलो र दुख्ने खालका डरलाग्दा घाउ निको हुन्छ ।

पेटका रोगमा बिन्दुघृत

चित्रकः(कं) शङ्खिनी पथ्या कम्पिल्लस्त्रिवृतायुगम् ॥५८॥
वृद्धदारुश्च शम्याको दन्ती दन्तीफलन्तथा ।
कोशातकी देवदाली नीलिनी गिरिकर्णिका ॥५९॥

सातला पिप्पलीमूलं विडङ्गं कुटकी तथा ।
हेमक्षीरी च विपचेत् कल्कैरेभिः पिचून्मितैः ॥६०॥
घृतप्रस्थं स्नुहीक्षीरे षट्पले तु पलद्वयम् ।
अर्कक्षीरस्य मतिमाँस्तत्सिद्धं गुल्मकुष्ठनुत् ॥६१॥
हन्ति शूलमुदावर्तं शोथाध्मानं भगन्दरम् ।
शमयत्युदराण्यष्टौ निपातं बिन्दुसङ्ख्यया ॥६२॥
गोदुग्धेनोष्ट्रदुग्धेन कौलत्थेन शृतेन वा ।
उष्णोदकेन वा पीत्वा बिन्दुवेगैर्विरिच्यते ॥६३॥
एतद्बिन्दुघृतं नाम नाभिलेपाद्धि रेचयेत् ।

चितूका बोक्रा, शङ्खपुष्पी, हर्रो, कम्पिल्लक, सेतो निशोध, कालो निशोध, त्रिधारा, राजवृक्षको गुदी, अजयपालका जरा, पिप्ला, पाटे घिरौंलो, भुसे घिरौंलो, नीर, अपराजिता, हात्तीकाने, पिप्लाको जरा, वायुविडङ्ग, कुटकी र हेमक्षीरी (चुक अमिलो?) : यी सबै एक एक

जम्मा पारी धुलो बनाएर एक प्रस्थ घिउमा मिसाई सिउँडीको दूध छ पल तथा आँकको दूध दुई पल मिसाउनू । यो मिश्रणलाई राम्ररी पकाउनका लागि घिउको चौबर पानीमा हाली मन्द आँचमा पकाउनू । जब घिउ मात्र बाँकी हुन्छ तब झिकी छान्नू र कुनै उत्तम भाँडामा हाली राख्नू । यसलाई बिन्दुघृत भनिन्छ । यो खानाले गुल्म, कुष्ठ, शूल, उदावर्त, सुजन, आध्मान, भगन्दर र आठ प्रकारका पेटका रोग नाश हुन्छ । योसँग रोग र रोगीको अवस्था हेरी गाई वा उँटको दूध वा गहतको काँढापानी वा तातोपानी पिउन दिनु पर्दछ । यो घिउ जति थोपा हालेर खाइन्छ त्यति नै दिसा लाग्दछ । यो घिउ नाइटोमा दले मात्र पनि दिसा लाग्दछ ।

आँखाका रोगमा त्रिफला आदिको घृत

त्रिफलाया रसप्रस्थं प्रस्थं वासारसोद्भवम् ॥६४॥
भृङ्गराजरसप्रस्थं प्रस्थमाजं पयः स्मृतम् ।
दत्त्वा तत्र घृतप्रस्थं कल्कैः कर्षमितैः पृथक् ॥६५॥
त्रिफला पिप्पली द्राक्षा चन्दनं सैन्धवं बला ।

काकोली क्षीरकाकोली मेदा मरिचनागरम् ॥६६॥
शर्करा पुण्डरीकञ्च कमलञ्च पुनर्नवा ।
निशायुग्मञ्च मधुकं सर्वै रेभिर्विपाचयेत् ॥६७॥
नक्तान्ध्यं नकुलान्ध्यञ्च कण्डूं पिल्लन्तथैव च ।
नेत्रस्रावञ्च पटलं तिमिरञ्चाजकञ्जयेत् ॥६८॥
अन्येऽपि प्रशमं यान्ति नेत्ररोगाः सुदारुणाः ।
त्रैफलं घृतमेतद्धि पाने नस्यादि सूचितम् ॥६९॥

हर्रो, बर्रो र अमलाको रस एक एक प्रस्थ दिनू । रस नपाए यिनलाई आठ गुना पानीमा पकाई एक चौथाई बाँकी भएको काँढापानी लिनू । यसलाई पनि रस नै भनिन्छ । असुरोको रस एक प्रस्थ, भृङ्गिराजको रस एक प्रस्थ, बाख्रीको दुध एक प्रस्थ र घिउ एक प्रस्थ हाली घोल्नू । यसमा हर्रो, बर्रो, अमला, पिप्ला, दाख, सेतो चन्दन, सिधेनुन, बलु, कल्छे लहरो, दूधे कल्छे लहरो, खिरौंलो, कालो मरिच, सुठो, मिस्री, सेतो कमल, कमल, पुनर्नवा, हलेदो र चुत्रो दुई

दुई कर्ष लिनू । सबैलाई धुलो बनाई एक प्रस्थ घिउमा हाली मन्द आँचमा घिउ तयार पार्नू । तयार भएपछि झिकेर छान्नू । यसलाई त्रिफलाघृत भनिन्छ । यो खानाले रतन्धो, नकुलान्ध, आँखा चिलाउने, पिल्लम्, आँखाबाट पानी बगिरहने, आँखाका पलकमा हुने रोग, धमिलो देखिने आँखाको रोग र अजक रोग (?) नाश हुन्छ । यसबाहेकका सानाठूला आँखाका रोग पनि यसले ठिक गर्दछ । यो घिउ नाकमा नस हाल्न पनि उपयोगी हुन्छ ।

घाउखटिरा आदिमा गौर्यादि घृत

**द्वे हरिद्रे स्थिरा मूर्वा सारिवा चन्दनद्वयम् ।**
**मधुपर्णी च मधुकपद्मकेशरपद्मकम् ॥७०॥**
**उत्पलोशीरमेदाभिस्त्रिफलापञ्चवल्कलैः ।**
**कल्कैः कर्षमितैरेतैर्घृतप्रस्थं विपाचयेत् ॥७१॥**
**विसर्पलूताविस्फोटविषकीटव्रणापहम् ।**
**गौर्याद्यमिति विख्यातं सर्पिर्विषहरं परम् ॥७२॥**



हलेदो, चुत्रो, साकिनु, मरुई लहरो, अनन्तमूल, सेतो चन्दन, रक्तचन्दन, गुर्जो, जेठीमधु, कमलकेशर, पैयुँ, चन्द्रकमल, खस, खिरौंलो, हर्रो, बर्रो, अमला, बर्रोका बोक्रा, पिपलको बोक्रा, पाखरीको बोक्रा, डुम्रीको बोक्रा र बेत वा शिरीषको बोक्रा : यी सबै ओखती एक एक कर्ष लिनू । सबैलाई कुटेर धुलो पारी धुलोको चौबर पानीमा मिसाउनू । यसमा एक प्रस्थ घिउ हाली घिउ बाँकी नहुँदासम्म पकाउनू । तयार भएपछि झिकेर छान्नू । यो घिउ खानाले विसर्प, माकुराले पिसाब गर्दा आउने विमिरा, विस्फोट, विषदोष, कीराले टोकेको र घाउखटिरा निको हुन्छ । गौर्याद्य नामक यो घिउ खानाले मुख्यतः विषविकार नाश हुन्छ ।

टाउकाका रोगमा मयूरघृत

**बलामधुकरास्नाभिर्दशमूलफलत्रिकैः ।**
**पृथग्द्विपलिकैरेभिर्द्रोणनीरेण पाचयेत् ॥७३॥**
**मयूरं पक्षपित्तान्त्रयकृत्पादास्यवर्जितम् ।**
**पादशेषं शृतं नीत्वा क्षीरं दत्त्वा च तत्समम् ॥७४॥**

घृतप्रस्थं पचेत्सम्यग्जीवनीयैः पिचून्मितैः ।
तत्सिद्धं शिरसः पीडां मन्याग्रीवा(पृष्ठ)ग्रहन्तथा ॥७५॥
अर्दितं कर्णनासाऽक्षिजिह्वागलरुजो जयेत् ।
पाने नस्ये तथाऽभ्यङ्गे कर्णपूरेषु युज्यते ॥७६॥
हेमन्तकालशिशिरवसन्तेषु च शस्यते ।

बलुको बोक्रा, जेठीमधु, फ्याक्सेकन्द (वा गाईतिहारे ?), दशमूल र त्रिफला दुई दुई पल मिलाई कुटेर एक द्रोण पानीमा हाल्नू । यसमा मयुरको प्वाँख, पित्त, कलेजो, खुट्टा, टाउको आदि बाहेकको शुद्ध मासु लिनू । दूध काँढा जति नै लिनू । घिउ एक प्रस्थ लिनू । अनि जीवनीय गणका ओखती पनि यसमा हाल्नू । सबै मिसाउनू । अनि घिउमात्र बाँकी नहुँदासम्म मन्द आँचमा पकाउनू । पाकेपछि झिकेर छान्नू । यो घिउ खाने, नस हाल्ने, शरीरमा दल्ने आदि विषयमा रोग हेरी निर्णय गर्नू । यो घिउ हेमन्त, शिशिर र वसन्त ऋतुमा खानाले टाउको दुखेको ठिक हुन्छ । गर्धन र घाँटी नचल्ने, मुख बाङ्गिएको, कानको शूल तथा आँखा, जिब्रो र घाँटीका रोग निको हुन्छ । यसलाई मयूरघृत भनिन्छ ।



बाँझोपनमा फलघृत

त्रिफला मधुकं कुष्ठं द्वे निशे कटुरोहिणी ॥७७॥
विडङ्गं पिप्पली मुस्ता विशाला कट्फलं वचा ।
द्वे मेदे द्वे च काकोल्यौ सारिवे द्वे प्रियङ्गुका ॥७८॥
शतपुष्पा हिङ्गु रास्ना चन्दनं रक्तचन्दनम् ।
जातीपुष्पं तुगाक्षीरी कमलं शर्करा तथा ॥७९॥
अजमोदा च दन्ती च कल्कैरेतैश्च कार्षिकैः ।
जीवद्वत्सैकवर्णाया घृतप्रस्थञ्च गोः क्षिपेत् ॥८०॥
चतुर्गुणेन पयसा पचेदारण्यगोमयैः ।
सुतिथौ पुष्यनक्षत्रे मृद्भाण्डे ताम्रजे तथा ॥८१॥
ततः पिबेच्छुभदिने नारी वा पुरुषोऽथवा ।

एतत्सर्पिर्नरः पीत्वा स्त्रीषु नित्यं वृषायते ॥८२॥
पुत्रानुत्पादयेद्धीमान्वन्ध्याऽपि लभते सुतम् ।
अनायुषं या जनयेद्या च सूता पुनः स्थिता ॥८३॥
पुत्रं प्राप्नोति सा नारी बुद्धिमन्तं शतायुषम् ।
एतत्फलघृतं नाम भ(भा)रद्वाजेन भाषितम् ॥८४॥
अनुक्तं लक्ष्मणामूलं क्षिपेत्तत्र चिकित्सकः ।

हर्रो, बर्रो, अमला, जेठीमधु, कूट, हलेदो, चुत्रो, कटुकी, वायुविडङ्ग, पिप्ला, नागरमोथे, ऐरेलु, काफल, बोभ्को, खिरौंलो, ठूलो खिरौंलो, कल्छे लहरो, दूधे कल्छे लहरो, कालो अनन्तमूल, सेतो अनन्तमूल, कागुनो, सुप, हिङ, फ्याक्सेकन्द, सेतो चन्दन, रातो चन्दन, जाइफल, वंशलोचन, कमल, मिस्री, ज्वानु र अजयपाल एक एक कर्ष लिनू र कुटी धुलो बनाउनू । बाच्छो जीवित भएकी र एउटै रङ्की गाईको घिउ एक प्रस्थ लिनू । त्यसका त्यो ओखती धुलो मिसाउनू । राम्ररी पकाउनका लागि घिउको चौबर दूध हाल्नू । यी सबैलाई कुनै तामाको अथवा माटाको भाँडामा हाली शुभ तिथी वा पुष्य नक्षत्र परेका दिनमा गुइँठा बालेर मन्द आँचमा पकाउनू । घिउ मात्र बाँकी बचेपछि झिकेर छान्नू । यसलाई फलघृत भनिन्छ । यो विधि भारद्वाज ऋषिले बताएका हुन् । यसलाई शुभ दिनमा पुरुष वा स्त्रीलाई खुवाउनू । पुरुषलाई खुवाए कामशक्ति बढी स्त्रीसँग नित्य रमण गर्दछ । उसका पुत्र पनि बुद्धिमान हुन्छन् । बाँझी स्त्रीले सेवन गरे गर्भ बस्दछ । सन्तान जन्मदै मर्दै गर्ने स्त्रीले खाए जन्मने बालक बुद्धिमान भई सय वर्ष बाँच्दछ । यहाँ नबताए पनि वैद्यले यसमा लक्ष्मणकन्द मिसाउनू ।



विषमज्वर आदिमा पञ्चतिक्तघृत

वृषनिम्बाऽमृताव्याघ्रीपटोलानां श्रृतेन च ॥८५॥
कल्केन पक्वं सर्पिस्तु निहन्याद्विषमज्वरान् ।
पाण्डुं कुष्ठं विसर्पञ्च कृमीनर्शांसि नाशयेत् ॥८६॥

असुरो, नीमका पात, गुर्जो, ठूलो बिही र पर्बलका पातको काँढा पानी पकाई काँढापानीमा त्यसको चौबर घिउ हाल्नू । अनि मन्द आँचमा पूर्वो भ्क विधि ले घिउ बनाउनू । तयार

भएपछि भिकेर छान्नू । यो खानाले विषमज्वर, पाण्डु, कुष्ठ, विसर्प, किरा र अल्काई नाश हुन्छ ।

योनिका रोगमा लघुफलघृत

**सहाचरे द्वे त्रिफलां (त्रिफलां द्वे सहचरे) गुडूचीं सपुनर्नवाम् ।**
**शुकनासां हरिद्रे द्वे रास्नां मेदां शतावरीम् ॥८७॥**
**कल्कीकृत्य घृतप्रस्थं पचेत् क्षीरे चतुर्गुणे ।**
**तत् सिद्धं पाययेन्नारीं योनिशूलनिपीडिताम् ॥८८॥**
**पीडिता चलिता या च निःसृता विवृता च या ।**
**पित्तयोनिश्च विभ्रान्ता षण्ढयोनिश्च या स्मृता ॥८९॥**
**प्रपद्यन्ते हि ताः स्थानं गर्भं गृह्णन्ति चासकृत् ।**
**एतत् फलघृतं नाम योनिदोषहरं परम् ॥९०॥**



पहेँलो फूल फुल्ने कपूरनली, सेतो फूल फुल्ने कपूरनली, हर्रो, बर्रो, अमला, गुर्जो, पुनर्नवा, टटेलो, हलेदो, चुत्रो, फ्याक्सेकन्द, खिरौँलो र कुरिलो समान मात्रामा (सम्भवतः एक एक कर्ष वा बीस बीस ग्राम) लिई कुटेर धुलो बनाउनू । एक प्रस्थ (एक सय साठी ग्राम) घिउमा यो कुटेको धुलो मिसाउनू । गाईको दूध र पानी घिउको चौबर हाल्नू । त्यसपछि मन्द आँचमा यसलाई पकाउनू । घिउमात्र बाँकी भएपछि भिकेर छान्नू । यो घिउ जननेन्द्रियमा शूल हुने स्त्रीलाई खान दिनू । जुन स्त्रीको जननेन्द्रिय ग्राम्यधर्म आदिका कारण दुखेको छ अनि जुन स्त्रीको जननेन्द्रिय यताउता सरेको छ उनलाई खान दिनू । जुन स्त्रीको जननेन्द्रियको मुख ठूलो भएको छ उनलाई खान दिनू । पित्तविकार भएको, प्रफुल्ल नहुने र नपुंसक (बच्चा नहुने) जननेन्द्रिय हुने स्त्रीले यो घिउ खाएमा जननेन्द्रिका सबै रोग नाश भई गर्भधारण गर्दछे । यो घिउलाई लघुफलघृत भनिन्छ र यो विशेषतः स्त्रीका जननेन्द्रिय सम्बन्धी रोग नाश गर्न उत्तम मानिएको छ ।

तेल खण्ड

विषमज्वर आदिमा लाहा आदिको तेल

**लाक्षाढकं क्वाथयित्वा जलस्य चतुराढकैः ।**

चतुर्थांशं शृतन्नीत्वा तैलप्रस्थे विनिक्षिपेत् ॥९१॥
मस्त्वाढकञ्च गोदध्नस्तत्रैव विनियोजयेत् ।
शतपुष्पामश्वगन्धां हरिद्रां देवदारु च ॥९२॥
कटुकां रेणुकां मूर्वां कुष्ठञ्च मधुयष्टिकाम् ।
चन्दनं मुस्तकं रास्नां पृथक्कर्षप्रमाणतः ॥९३॥
चूर्णयित्तत्र निक्षिप्य साधयेन्मृदुवह्निना ।
अस्याभ्यङ्गात्प्रशाम्यन्ति सर्वेऽपि विषमज्वराः ॥९४॥
कासश्वासप्रतिश्यायत्रिकपृष्ठग्रहास्तथा ।
वातं पित्तमपस्मारमुन्मादं यक्षराक्षसान् ॥९५॥
कण्डूं शूलञ्च दौर्गन्ध्यं गात्राणां स्फुरणं जयेत् ।
पुष्टगर्भा भवेदस्य गर्भिण्यभ्यङ्गतो भृशम् ॥९६॥

(बयर वा इन्द्रजौको) लाहा एक आढकलाई चार आढक पानीमा पकाई एक चौथाई पानी बाँकी भएपछि झिकेर छान्नू । यो रसमा तिलको तेल एक प्रस्थ हाल्नू । गाईको दहीको पानी (मस्तु) एक आढक हाल्नू । अनि सुप, अश्वगन्धा, हलेदो, देवदारु, कटुकी, शीतलचिनी, मरुई लहरो, कूट, जेठीमधु, सेतो चन्दन, नागरमोथे र फ्याक्सेकन्द सबै एक एक कर्ष लिई धुलो बनाएर त्यसैमा हाल्नू । यसपछि मन्द आँचमा यसलाई पकाउनू । जब तेलमात्र बाँकी रहन्छ तब झिकेर छान्नू । यो तेल मालिश गर्नाले सबै खालका विषमज्वर नाश हुन्छ । यसले खोकी, दम, पिनास, कण्डेउलोको शूल, ढाडको शूल, वातविकार, पित्तविकार, छारेरोग, उन्माद (पागलपन) रोग, यक्ष एवं राक्षस आदिले दिने पीडा, शरीर चिलाउने रोग, शूल, शरीर गनाउने रोग र शरीर फरफराउने रोग नाश गर्दछ । गर्भवती स्त्रीले पनि यो तेल दलेर मालिश गर्न सक्दछे, यसले गर्भलाई पुष्ट पार्दछ ।



सबै प्रकारको जरोमा अङ्गारतैल

मूर्वा लाक्षा हरिद्रे द्वे मञ्जिष्ठा सेन्द्रवारुणी ।
बृहती सैन्धवं कुष्ठं रास्ना मांसी शतावरी ॥९७॥
आरनालाढके तत्र तैलप्रस्थं विपाचयेत् ।

तैलमङ्गारकं नाम सर्वज्वरविमोक्षणम् ॥९८॥

मरुई लहरो, लाहा, हलेदो, चुत्रो, मजिठो, ऐरेलुको जरा, ठूलो बिही, सिधेनुन, कूट, फ्याक्सेकन्द, जटामसी र कुरिलो एक एक कर्ष लिई कुटेर धुलो पार्नू र एक आढक काँजी र एक प्रस्थ तिलको तेलमा हाली पूर्व विधिले तेल पकाउनू । यसलाई अङ्गारक तेल भनिन्छ । यो दल्नाले सबै खालको जरो नाश हुन्छन् ।

वात आदि रोगमा नारायण तेल

अश्वगन्धां बलां बिल्वं पाटलां बृहतीद्वयम् ।
श्वदंष्ट्राऽतिबले(अदंष्ट्रातिबला) निम्बं स्योनाकञ्च पुनर्नवाम्(पुनर्नवा) ॥९९॥
प्रसारिणीमग्निमन्थं कुर्याद्दशपलं पृथक् (भिषक्) ।
चतुर्द्रोणे जले पक्त्वा पादशेषं शृतं नयेत् ॥१००॥
तैलाढकेन संयोज्यं(ज्य) शतावर्या रसाढकम् ।
क्षिपेत्तत्र च गोक्षीरं तैलात्तस्माच्चतुर्गुणम् ॥१०१॥
शनैर्विपाचयेदेभिः कल्कैर्द्विपलिकैः पृथक् ।
कुष्ठैलाचन्दनं मूर्वा वचामांसीससैन्धवैः ॥१०२॥
(कुष्ठैलाचन्दनबलामांसीशैलेयसैन्धवैः) ।
अश्वगन्धावचारास्नाशतपुष्पेन्द्रदारुभिः ।
पर्णीचतुष्टयेनैव तगरेण च साधयेद् ॥१०३॥
तत्तैलं नावनेऽभ्यङ्गे पाने बस्तौ च योजयेत् ।
पक्षाघातं हनुस्तम्भं मन्यास्तम्भं कटि(गल)ग्रहम् ॥१०४॥
खल्लत्वं बधिरत्वञ्च गतिभङ्गं गल(कटि)ग्रहम् ।
गात्रशोषेन्द्रियध्वंसावसृक्शुक्रज्वरक्षयान् ॥१०५॥
अन्ड(न्त्र)वृद्धिं कुरण्डञ्च दन्तरोगं शिरोग्रहम् ।
पार्श्वशूलञ्च पाङ्गुल्यं बुद्धिहानिं च गृध्रसीम् ॥१०६॥
अन्यांश्च विषमान्वाताञ्जयेत्सर्वाङ्गसंश्रयान् ।

**अस्य प्रभावाद्वन्ध्याऽपि नारी पुत्रं प्रसूयते ॥१०७॥**
**मर्त्यो गजो वा तुरगस्तैलाभ्यङ्गात्सुखी भवेत् ।**
**यथा नारायणो देवो दुष्टदैत्यविनाशनः ॥१०८॥**
**तथैव वातरोगाणां नाशनं तैलमुत्तमम् ।**

अश्वगन्धा, बलुको बोक्रा, बेलको फल, पाडरी, ठूलो बिही, सानो बिही, ओदानेकाँडो, अतिबला (साना, ठूला दुबै), नीमको बोक्रा, टटेलो, पुनर्नवा, बिरी र अरणी सबै ओखती दश दश पल लिनू । कुटी धुलो बनाएर चार द्रोण पानीमा पकाएर एक चौथाई पानी बाँकी भएपछि झिकी छान्नू । यो रसमा एक आढक तिलको तेल, कुरिलोको रस एक आढक र गाईको दूध चार आढक हाल्नू । यसमा निम्न ओखती मिसाएर मन्द आँचमा बिस्तारै पकाउनू : कूट, अलैंची, सेतोचन्दन, मरुई लहरो, बोझो, जटामसी, सिधे नुन, अश्वगन्धा, बोझो, फ्याक्सेकन्द, सुप, देवदारु, साकिनु, सतिबयर, चाल्ने सिस्नु, वनमुगी र तगर : यी सबै ओखती दुई दुई पल धुलो बनाई मिसाउनू । मन्द आँचमा पकाई तेलमात्र बाँकी भएपछि झिक्नू र छान्नू । यो तेल नस हाल्न, दल्न, पिउन र वस्तिकर्ममा प्रयोग गर्नू । यसले पक्षाघात, हनुस्तम्भ, मन्यास्तम्भ, कम्मर नचल्ने रोग, तालु खुइलने रोग, बहिरोपन, हिँड्ला लडखडाउने रोग, गलगाँड, शरीरको शोष, इन्द्रिय-शक्ति नाश भएको अवस्था, रक्तविकार, शुक्र नाश भएको अवस्था, जरो, क्षयरोग, अण्डकोश सुन्निएको, एक अण्डकोश सुन्निने रोग (जहरवात), दाँतका रोग, टाउकाका रोग, कोखाको शूल, लङ्गडोपन, बुद्धिनाश, गृध्रसी तथा शरीरका अङ्गमा हुने वातजन्य अन्य सबै रोग यो तेलका प्रभावले नाश हुन्छन् । यो तेलका प्रभावले बाँझी स्त्रीले पनि सन्तान जन्माउँदछे । मानिस, हात्ती, घोडा सबै यो तेल दल्नाले वातरोग निको भई सुखी हुने छन् । जसरी नारायण भगवान् दानवको संहार गर्नु हुन्छ त्यसरी नै यो नारायण तेलले सबै खालका वातरोगलाई नाश गर्दछ ।



शरीर काम्नेरोगमा वारुणी तेल

**वारुण्या ह्यौत्तरं मूलं कुट्टितन्तु पलत्रयम् ॥१०९॥**
**पलद्वादशकं तैलं क्षणं वह्नौ विपाचितम् ।**
**निष्कत्रयं भक्तयुक्तं सेवेतास्माद्विनश्यति ॥११०॥**
**हस्तकम्पः शिरःकम्पः कम्पो मन्याशिराभवः ।**

ऐरेलुको उत्तर दिशाको जरो तीन पल (एक सय बीस ग्राम) लेराई कुटेर बाह्र पल (चार सय अस्सी ग्राम) तिलको तेलमा हाली पकाउनू । जब एक चौथाई तेल बाँकी रहन्छ तब झिकी छान्नू । यो तेल रोगको अवस्था तथा शारीरिक क्षमता हेरी तीन निष्क (३६ ग्रामसम्म) भातसँग खाने गर्नाले हात काम्ने, टाउको काम्ने, गर्दन काम्ने जस्ता काम्ने वातरोग ठिक हुन्छ ।

### वात आदि रोगमा बलाद्य तेल

**बलामूलकषायेण दशमूलशृतेन च ॥१११॥**
**कुलत्थयवकोलानां क्वाथेन पयसा तथा ।**
**अष्टाष्टभागयुक्तेन भागमेकञ्च तैलकम्(तः) ॥११२॥**
**गणेन जीवनीयेन शतावर्येन्द्र दारुणा ।**
**मञ्जिष्ठाकुष्ठशैलेयतगरागरुसैन्धवैः ॥११३॥**
**वचापुनर्नवामांसीसारिवाद्वयपत्रकैः ।**
**शतपुष्पाऽश्वगन्धाभ्यामेलया च विपाचयेत् ॥११४॥**
**गर्भार्थिनीनां नारीणां पुंसां च क्षीणरेतसाम् ।**
**व्यायामक्षीणगात्राणां सूतिकानाञ्च युज्यते ॥११५॥**
**राजयोग्यमिदन्तैलं सुखिनाञ्च विशेषतः ।**
**बलातैलमिति ख्यातं सर्ववातामयापहम् ॥११६॥**



बलुको जरा आठ प्रस्थ कुटी धुलो बनाएर बत्तीस प्रस्थ पानीमा एक थौथाई पानी बाँकी नहुँदासम्म पकाउनू । यसलाई एउटा भाँडामा छानेर राख्नू । यसपछि दशमूल आठ प्रस्थ बत्तीस प्रस्थ पानीमा हाली एक चौथाई बाँकी नहुँदासम्म पकाउनू । यसपछि यसलाई पनि झिकेर छान्नू र एउटा भाँडामा राख्नू । यसपछि गहत, जौर बयरका गेडा सबै आठ आठ प्रस्थ पिँधेर धुलो बनाई बत्तीस प्रस्थ पानीमा पकाई एक चौथाई बाँकी नहुँदासम्म पकाउनू र पाकेपछि झिकेर छान्नू । यसपछि यी सबै काँढापानी मिसाउनू । यसमा गाई दुध आठ प्रस्थ र तिलको तेल एक प्रस्थ हाल्नू । नि जीवनीय गणको ओखती, कुरिलो, देवदारु, मजिठो,

कूट, शिलाकुङ्कुम, तगर, सिधेनुन, बोझ्हो, पुनर्नवा, जटामसी, कालो अनन्तमूल, सेतो अनन्तमूल, तेजपात, सुप, अश्वगन्धा र अलैंची सबैको धुलो तेलको एक चौथाई जम्मा पारी धुलो बनाएर त्यो काँढापानीमा हाल्नू । यसपछि तेल मात्र बाँकी नहुँदासम्म मन्द आँचमा पकाउनू । तयार भएपछि झिकेर छान्नू । यो तेललाई गर्भ चाहने स्त्रीले तथा वीर्य क्षीण भएका पुरुषले शरीरमा दल्नू । धेरै टाढा ओहोरदोहोर गर्नाले शरीर खिइएका मानिसले एवं सुत्केरी स्त्रीले यो तेल दल्ने गर्नू । यो तेल विशेषतः राजा, सुख चाहने मानिस र महाजनहरूका लागि उपयुक्त हुन्छ । यो बलातेलले सबै खालका वातरोग नाश गर्दछ ।

वातजन्य तथा कफजन्य रोगमा प्रसारिणी तेल

**प्रसारिणीपलशतं जलद्रोणे विपाचयेत् (जलद्रोणेन पाचयेत्) ।**
**पादशिष्टः शृतो ग्राह्यस्तैलं दधि च तत्समम् ॥११७॥**
**काञ्जिकञ्च समं तैलात् क्षीरं तैलाच्चतुर्गुणम् ।**
**तैलात्तथाष्टमांशेन सर्वकल्कानि योजयेत् ॥११८॥**
**मधुकं पिप्पलीमूलं चित्रकः सैन्धवं वचा ।**
**प्रसारिणी देवदारु रास्ना च गजपिप्पली ॥११९॥**
**भल्लातः शतपुष्पा च मांसी चैभिर्विपाचयेत् ।**
**एतत्तैलवरं पक्वं वातश्लेष्मामयाञ्जयेत् ॥१२०॥**
**कौब्जं खञ्जत्वपङ्गत्वे (पङ्गुत्वखञ्जत्वे) गृध्रसीमर्दितन्तथा ।**
**हनुपृष्ठशिरोग्रीवाकटिस्तम्भञ्च नाशयेत् ॥१२१॥**
**अन्यांश्च विषमान्वातान्सर्वानाशु व्यपोहति ।**



सय पल बिरीलाई धुलो पारी एक द्रोण जलमा काँढापानी पकाउनू । एक चौथाई बाँकी भएपछि झिकेर छान्नू । त्यो पानी जति नै सबै तिलको तेल, दही र काँजी हाल्नू । अनि तेलको चौबर गाईको दूध हाल्नू । अनि तेलको आठ भागको एक भाग हुने गरी निम्न ओखतीको धुलो मिसाउनू । जेठीमधु, पिप्लाको जरा, चितुको बोक्रा, सिधेनुन, बिरी, देवदारु, फ्याक्सेकन्द वा गाईतिहारे, चाभा, भलायो, सुप र जटामसी । अनि पुनः तेलमात्र बाँकी नहुँदासम्म पकाउनू र बेला भएपछि झिकेर छान्नू । यो तेलले शरीर मालिश गर्नाले

वातविकार र कफविकार नाश हुन्छ । वातका कारण हुने कुप्रोपन, वातका कारण हुने लङ्गडोपन, गृध्रसी, चिउँडो-ढाड-टाउको-गर्धन र कम्मर अड्किने रोग ठिक गर्दछ । अरु पनि वातजन्य रोगहरू सबै यो तेलले नाश गर्दछ ।

वातविकारका अनेक रोगमा माषादि तेल

माषा यवातसी क्षुद्रा मर्कटी च कुरण्टकः ॥१२२॥
गोकण्टष्टुण्टुकश्चैषां कुर्यात् सप्तपलं पृथक् ।
चतुर्गुणाम्बुना पक्त्वा पादशेषं शृतं नयेत् ॥१२३॥
कार्पासास्थीनि बदरं शणबीजं कुलत्थकम् ।
पृथक्चतुर्दशपलं चतुर्गुणजले पचेत् ॥१२४॥
चतुर्थांशावशिष्टञ्च गृह्णीयात्क्वाथमुत्तमम् ।
प्रस्थैकं छागमांसस्य चतुःषष्टिपले जले ॥१२५॥
निक्षिप्य पाचयेद्धीमान्पादशेषं रसं (श्रृतं) नयेत् ।

तैलप्रस्थे ततः क्वाथान् सर्वानेतान् विनिक्षिपेत् ॥१२६॥
कल्कैरेभिश्च विपचेदमृताकुष्ठनागरैः ।
रास्नापुनर्नवैरण्डैः पिप्पल्या शतपुष्पया ॥१२७॥
बलाप्रसारिणीभ्याञ्च मांस्या कटुकया तथा ।
पृथगर्धपलैरेतैः साधयेन्मृदुवह्निना ॥१२८॥
हन्यात्तैलमिदं शीघ्रं ग्रीवास्तम्भापबाहुकौ ।
अर्धाङ्गशोषमाक्षेपमूरुस्तम्भापतानकौ ॥१२९॥
शाखाकम्पं शिरःकम्पं विश्वाचीमर्दितन्तथा ।
माषादिकमिदन्तैलं सर्ववातविकारनुत् ॥१३०॥

माष, जौ, आलसका गेडा, ठूलो बिही, काउछोका गेडा, पहेँलो कपुरनली (वा पहेँलो कटसरैया), ओदानेकाँडो र टटेलो सबै सात सात पल जम्मा पारी कुटेर धुलो बनाउनू र धुलोको चौबर पानी हाली पकाउनू । पानी एक चौथाई बाँकी भएपछि झिकेर छान्नू र एउटा

भाँडामा राख्नू । यसपछि कपासका गेडा, बयरको गुदी, सनपाटका गेडा र गहत सबै चौध चौध पल जम्मा पारी कुटेर धुलो बनाई पहिले जस्तै चार गुना बढी पानीमा पकाई एक चौथाई पानी बाँकी भएपछि झिकेर छान्नू र अर्को भाँडामा राख्नू । यसपछि एक प्रस्थ बोकाको मासुमा चौसठ्ठी पल पानी हालेर उमाल्नू र यो पनि एक चौथाई पानी बाँकी भएपछि झिकेर छान्नू । अब एक प्रस्थ तिलको तेलमा माथिका सबै काँढापानी हाल्नू । अनि यसमा गुर्जो, कूट, सुठो, फ्याक्सेकन्द, पुनर्नवा, अरिडको जरा, पिप्ला, सुप, बलुको बोक्रा, बिरी, जटामसी र कुटकी सबै आधा आधा पल जम्मा पारी कुटेर हाल्नू । पुनः मन्द आँचमा तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । अनि झिकेर छान्नू र एउटा भाँडामा राख्नू । यो तेल दल्नाले गर्दन नचल्ने रोग (ग्रीवास्तम्भ), अपबाहुक रोग, शरीरका आधा अङ्ग सुक्ने रोग, आक्षेप रोग, ऊरुस्तम्भ रोग, अपतानक रोग, कुनै अङ्ग थरथर गरेर काम्ने रोग, टाउको काम्ने रोग, विश्वाची रोग तथा अन्य सबै खालका वातजन्य रोगहरू यो माषादिक तेल दल्नाले ठिक हुन्छ ।

वात आदि रोगमा शतावरी तेल

**शतावरी बलायुग्मं पर्ण्यौ गन्धर्वहस्तकः ।**
**अश्वगन्धा श्वदंष्ट्रश्च बिल्वः काशः कुरण्टकः ॥१३१॥**
**एतान् सार्धपलान्भागान्कल्कयेच्च विपाचयेत् ।**
**चतुर्गुणेन नीरेण पादशेषं शृतं नयेत् ॥१३२॥**
**नियोज्य तैलप्रस्थञ्च क्षीरप्रस्थं विनिक्षिपेत् ।**
**शतावरीरसप्रस्थं(थे) जलप्रस्थञ्च योजयेत् ॥१३३॥**
**शतावरी देवदारु मांसी तगरचन्दनम् ।**
**शतपुष्पा बला कुष्ठमेला शैलेयमुत्पलम् ॥१३४॥**
**ऋद्धिर्मेदा च मधुकं काकोली जीवकस्तथा ।**
**एषां कर्षसमैः कल्कैस्तैलं गोमयवह्निना ॥१३५॥**
**पचेत्तेनैव तैलेन स्त्रीषु नित्यं वृषायते ।**
**(पचेत्तन्मूर्धतैलेन नरः स्त्रीषु वृषायते)**
**नारी च लभते पुत्रं योनिशूलञ्च नश्यति ॥१३६॥**

**अङ्गशूलं शिरःशूलं कामलां पाण्डुतां गरम् ।**
**गृध्रसीं प्लीहशोषाँश्च मेहान्दण्डापतानकम् ॥१३७॥**
**सदाहं वातरक्तञ्च वातपित्तगदार्दितम् ।**
**असृग्दरं तथाध्मानं रक्तपित्तञ्च नश्यति ॥१३८॥**
**शतावरीतैलमिदं कृष्णाऽऽत्रेयेण भाषितम् ।**
**"ॐ नारायण्यै स्वाहा" उत्तराभिमुखो भूत्वा खनेत्खदिरशङ्कुना ।**
**"ॐ सर्वव्याधिनाशिन्यै स्वाहा" इत्युत्पाटनमन्त्रः । "ॐ कुमारजीविन्यै स्वाहा" इति पाचनमन्त्रः ।**

कुरिलो, दुई किसिमका बलु (बलु र अतिबला), दुई किसिमका पर्णी शालपर्णी (साकिनु) र पृष्ठपर्णी (सतिबयर), अरिडको जरा, अश्वगन्धा, ओदानेकाँडो, बेलको जरा, काँशको जरा र पहेँलो कटसरैया यी बै ओखती एक पल आधा एक पल आधा (डेढ डेड पल) जम्मा पारी कुटी धुलो पारेर धुलोको चौबर पानीमा हाली पकाउनू । एक चौथाई पानी बाँकी भएपछि झिकेर छान्नू र एउटा भाँडामा राख्नू । यो रसमा एक प्रस्थ तिलको तेल, एक प्रस्थ गाईको दूध, एक प्रस्थ कुरिलोको रस र एक प्रस्थ पानी मिसाउनू । यसपछि कुरिलो, देवदारु, जटामसी, तगर, सेतो चन्दन, सुप, बलु, कूट, अलैंची, शिलाकुङ्कुम, चन्द्रकमल, ऋद्धि (विकल्पमा गिठो), खिरौंलो (विकल्पमा जेठीमधु), जेठीमधु, कल्छे लहरो (विकल्पमा अश्वगन्धा) र कर्कटशृङ्गी विशेष (विकल्पमा गिठो), यी सबै ओखती एक एक कर्ष जम्मा पारी कुटेर धुलो बनाई त्यो रसमा मिसाउनू । अनि गुइँठाको रापको मन्द आँचमा यसलाई तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । अनि झिकेर छान्नू र एउटा भाँडामा हाल्नू । यो शतावरी तेल दल्नाले पुरुष आनन्दले नित्य स्त्री-भोग गर्न सक्षम हुन्छ । स्त्रीले शरीरमा दल्नाले पुत्रप्राप्ति हुन्छ । यसले स्त्री जननेन्द्रियको शूल, अन्य अङ्गका शूल, टाउकाको शूल, कमलपित्त, पाण्डुरोग, गृध्रसी, फियोका रोग, सुकेनास, प्रमेह, दण्डापतानक नामक वातरोग विशेष, डाह हुने वातरक्त, वातपित्तज्वर, प्रदररोग, आध्मान र रक्तपित्त रोग नाश हुन्छ । यो तेलका बारेमा कृष्णात्रेय ऋषिले बताएका हुन् । कुरिलो लेराउँदा वनमा गई उत्तरतिर फर्केर नमस्कार गरी "ॐ नारायण्यै स्वाहा" भन्दै खयरको किलोले कुरिलोको जरा खोस्रनू । "ॐ सर्वव्याधिनाशिन्यै स्वाहा" भन्दै नमस्कार गरी उखेल्नू र लेराएपछि "ॐ कुमारजीविन्यै स्वाहा" भन्दै नमस्कार गरी पकाउनू ।

### अल्काई आदि रोगमा कासीस आदिको तेल

**कासीसं लाङ्गली कुष्ठं शुण्ठी कृष्णा च सैन्धवम् ॥१३९॥**
**मनःशिलाश्वमारश्च विडङ्गं चित्रको वृषः (द्रुमः) ।**
**दन्ती कोशातकीबीजं हेमाह्वा हरितालकम् ॥१४०॥**
**कल्कैः कर्षमितैरेतैस्तैलप्रस्थं विपाचयेत् ।**
**सुधार्क(स्नुह्यर्क)पयसी दद्यात्पृथग्द्विपलसंमिते ॥१४१॥**
**चतुर्गुणं गवां मूत्रं दत्त्वा सम्यक्प्रसाधयेत् ।**
**कथितं खरनादेन तैलमर्शोविनाशनम् ॥१४२॥**
**क्षारवत्पातयत्येतदर्शांस्यभ्यङ्गतो भृशम् ।**
**वलीर्न दूषयत्येतत्क्षारकर्मकरं स्मृतम् ॥१४३॥**

हिराकसी, लाङ्गली, कूट, सुठो, पिप्ला, सिधेनुन, मनशिला, सेतो करवीर, वायुविडङ्ग, चितूको बोक्रा, असुरो, अजयपाल, पाटेघिरौंलोका गेडा, चाँप र हरिताल : यी सबै ओखती एक एक कर्ष जम्मा पारी कुटेर धुलो एक प्रस्थ तोरीको तुलमा हाल्नू । सिउँडी र आँकको एक एक कर्ष तथा तेलको चौबर गहुँत हाली तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । बेला भएपछि झिकेर छान्नू । खरनाद नामका ऋषिले बताएको यो तेल अल्काईमा क्षार हालेजसरी भित्रसम्म पुग्नेगरी हाल्ने हो भने ठिक हुन्छ । यो तेल दल्नाले मलद्वार भित्रका मासुका लुन्द्रा वा पोका कुनै पीडा नदिई जरैदेखि झर्दछ । यसले क्षारले जसरी मलद्वारको मुजा पनि बिगार्दैन ।



### वातरक्तमा पिण्डतेल

**मञ्जिष्ठासारिवासर्जयष्टीसिक्थैः पलोन्मितैः ।**
**पिण्डाख्यं साधयेत्तैलमभ्यङ्गात् वातरक्तनुत् ॥१४४॥**

मजिठो, अनन्तमूल, सालधूप, जेठीमधु र मैन सबै एक एक पल जम्मा पार्नू । यसलाई धुलो पारी यसको चौबर अरिडको तेल र यसको चौबर पानी हालेर पकाउनू । तेलमात्र बाँकी भएपछि झिकेर छान्नू । यो मलमले वातरक्त रोग नाश हुन्छ ।

कुष्ठरोगमा सर्सिउँको तेल

**अर्कपत्ररसे पक्वं हरिद्रा कल्कसंयुतम् ।**
**नाशयेत्सार्षपं तैलं पामां कच्छूं विचर्चिकाम् ॥१४५॥**

पहिला हलेदो कुटेर चार गुना सर्सिउँको तेलमा हाल्नू । तेलको चौबर हुनेगरी आँकको पातको काँढापानी हाल्नू । त्यसपछि तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । बेला भएपछि झिकेर छान्नू । यो तेल लगाउनाले पामा नामक भैँसे लुतो, लुतो र विर्चिका नामक रोग नाश हुन्छ ।

कुष्ठ आदि रोगमा मरिच आदिको तेल



**मरिचं हरितालञ्च त्रिवृतं रक्तचन्दनम् ।**
**मुस्तं मनःशिला मांसी द्वे निशे देवदारु च ॥१४६॥**
**विशाला करवीरञ्च कुष्ठमर्कपयस्तथा ।**
**तथैव गोमयरसं कुर्यात् कर्षमितान्पृथक् ॥१४७॥**
**विषं चार्धपलं देयं प्रस्थञ्च कटुतैलकम् ।**
**गोमूत्रं द्विगुणं दद्याज्जलञ्च द्विगुणं भवेत् ॥१४८॥**
**मरिचाद्यमिदं तैलं सिध्मकुष्ठहरं परम् (सिद्धं कुष्ठव्रणापहम्) ।**
**जयेत् कुष्ठानि सर्वाणि पुण्डरीकं विचर्चिकाम् ॥१४९॥**
**पामां सिध्मानि (श्वित्राणि) रक्तञ्च कण्डूं कच्छूं प्रणाशयेत् ।**

कालोमरिच, हरिताल, सेतो निशोध, रक्तचन्दन, नागरमोथे, मनशलि, जटामासी, हलेदो, चुत्रो, देवदारु, ऐरेलुको जरा, करवीरको जरा, कूट, आँकको दूध र गोबरको रस सबै एक एक कर्ष बटुल्नू । प्रशोधिन गरिएको वच्छनाग विष आधा पल र उल्लेखित ओखती पिसेर एक

प्रस्थ सर्सिउँको तेलमा हाल्नू । तेलको दोबर गहुँ र दोबर नै पानी हाल्नू अनि तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । यसपछि झिकेर छान्नू । यो तेलले दुबी आदि सबै कुष्ठरोग राम्ररी ठिक गर्दछ । पुण्डरीक, विचर्चिका, पामा, दुबी, रक्तकुष्ठ, दाद, लुतो आदि नाश हुन्छ ।

खटिरामा त्रिफला आदिको तेल

त्रिफलाऽरिष्टभूनिम्बं द्वे निशे रक्तचन्दनम् ॥१५०॥
एतैः सिद्धमरूंषीणां तैलमभ्यञ्जने हितम् ।

हर्रो, बर्रो, अमला, नीमको बोक्रा, चिराइतो, हलेदो, चुत्रो र रक्तचन्दन बराबर मात्रामा जम्मा पारी धुलो बनाउनू । धुलोको चौबर तिलको तेल र पानी हाली तेल मात्र बाँकी नहुँदासम्म पकाउनू । त्यसपछि झिकेर छान्नू । शरीरमा खटिरा आइरहे यो तेलले सबै खटिरा नाश हुन्छ ।

कपाल फुलेकोमा नीमका गेडाको तेल



भावयेन्निम्बबीजानि भृङ्गराजरसेन हि ॥१५१॥
तथासनस्य तोयेन तत्तैलं हन्ति नस्यतः ।
अकालपलितं सद्यः पुंसां दुग्धान्नभोजिनाम् ॥१५२॥

भृङ्गिराजको काँढापानी पकाउनू र छानेर एउटा भाँडामा राख्नू । त्यसपछि विजयसालको काँढापानी पकाउनू र छानी भृङ्गिराजको काँढापानीमा मिसाउनू । यसमा नीमका गेडा भिजाई त्यो गेडाको यन्त्रमा हाली पेलेर तेल निकाल्नू । यो तेलको नस हाल्नाले (लगाउने होइन) र सो नस हाल्ने अवधिभर गाईको दूध र भात मात्र खाने गर्नाले बेला नभई फुलेको कपाल तुरुन्त भमराजस्तै कालो हुन्छ ।

कपाल आदि झरेकोमा जेठीमधुको तेल

यष्टीमधुकक्षीराभ्यां नवधात्रीफलैः शृतम् ।
तैलं नस्यकृतं कुर्यात्केशाञ्श्मश्रूणि सर्वशः (सङ्घशः) ॥१५३॥

जेठीमधु र ताजा अमला बराबर मिसाएर पिस्नू । जतिहुन्छ त्यसको चौबर तिलको तेल, तेलको चौबर गाईको दूध र तेलको चौबर नै पानीमा त्यो ओखती हालेर तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । यसपछि झिकेर छान्नू । यो तेलको नस लिने गर्नाले (लगाउने होइन) खुइलेका टाउकाका कपाल, दाह्री र जुँगा पुनः पलाउँदछ र झर्न पनि बन्द हुन्छ ।

कपाल झर्ने रोग विशेषमा कुबेराक्षको तेल

**करञ्जश्चित्रको जाती करवीरश्च पाचितम् ।**
**तैलमेभिर्द्रुतं हन्यादभ्यङ्गादिन्द्रलुप्तकम् ॥१५४॥**

कुबेराक्षको बोक्रा, चितूको बोक्रा, चमेलीका पात र करवीरको जरा बराबर लेराई पिस्नू । यो जति हुन्छ त्यसको चौबर तिलको तेलमा यो मिसाउनू । यसमा तेलको चौबर पानी हालेर पकाउनू । तेलमात्र बाँकी भएपछि झिकेर छान्नू । यो तेल इन्द्रलुप्त रोग हुने मानिसले लगाउनाले तुरुन्त रौं वा कपाल झर्न बन्द हुन्छ ।

कपाल कालो बनाउन आदिमा नेवारीको तेल



**नीलिका केतकीकन्दं भृङ्गराजः कुरण्टकः ।**
**तथाऽर्जुनस्य पुष्पाणि बीजकात्कुसुमान्यपि ॥१५५॥**
**कृष्णास्तिलाश्च तगरं समूलं कमलन्तथा ।**
**अयोरजः प्रियङ्गुश्च दाडिमत्वग्गुडूचिका ॥१५६॥**
**त्रिफला पद्मपङ्कश्च कल्कैरेभिः पृथक्पृथक् ।**
**कर्षमात्रः पचेत्तैलं त्रिफलाक्वाथसंयुतम् ॥१५७॥**
**भृङ्गराजरसेनैव सिद्धं केशस्थिरीकृतम् ।**
**अकालपलितं हन्ति दारुणं चोपजिह्विकाम् ॥१५८॥**

नेवारीका पात, क्यात्तुकेको जरा, भृङ्गिराज, पहेँलो कटसरैया (वा पहेँलो कपुरनली ?), खरीका फूल, विजयसालका फूल, कालो तिल, तगर, जरा सहितको कमल, फलामको धुलो, दहीगुयैँलोको फूल, दारिमको बोक्रा, गुर्जो, हर्रो, बर्रो, अमला र कमलको फूलभित्रको सेतो

वा पहेँलो रसिलो वस्तु : यी सबै एक एक कर्ष बटुल्नू । अनि कुटेर धुलो बनाउनू । जति हुन्छ त्यसको चौबर तिलको तेलमा यो धुलो हाल्नू । यसपछि यसमा त्रिफलाको र भृङ्गिराजको काँढापानी चार गुना हाल्नू । यसपछि तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । अनि झिकेर छान्नू । यो तेल कपालमा दल्नाले कपाल बलियो भएर बस्दछ, झर्दैन । उमेर नपुगी फुलेको कपाल यो तेल लगाउनाले कालो हुन्छ । कडा खालको रुद्रघण्टी वा किलकिले सम्बन्धी रोग पनि यसले नाश गर्दछ ।

उमेर नपुगी कपाल फुल्दा आदिमा भृङ्गराज तेल

**भृङ्गराजरसेनैव लोहकिट्टं फलत्रिकम् ।**
**सारिवाञ्च पचेत्कल्कैस्तैलं दारुणनाशनम् ॥१५९॥**
**अकालपलितं कण्डूमिन्द्रलुप्तञ्च नाशयेत् ।**

फलामको किट, हर्रो, बर्रो, अमला र अनन्तमूल बराबर मिसाएर पिस्नू । यसको चौबर तिलको तेल र तिलको तेलको चौबर भृङ्गिराजको रसमा यो ओखती हालेर तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । यसपछि झिकेर छान्नू । यो तेल टाउकामा दल्नाले कडा खालका रोग पनि निको हुन्छ । सानै उमेरमा कपाल फुलेमा यसले कालो बनाउँदछ । टाउको चिलाउन बन्द हुन्छ । कपाल आदि झर्ने रोगमा यसले झर्न बन्द गर्दछ र कपाल आदि उमार्दछ ।

मुख, दाँत आदि रोगमा अरिमेदादि तेल

**अ(इ)रिमेदत्वचं क्षुण्णां पचेच्छतपलोन्मिताम् ॥१६०॥**
**जलद्रोणे ततः क्वाथं गृह्णीयात्पादशेषितम् ।**
**तैलस्यार्धाढकं दत्त्वा कल्कैः कर्षमितैः पचेत् ॥१६१॥**
**अ(इ)रिमेदलवङ्गाभ्यां गैरिकागरुपद्मकैः ।**
**मञ्जिष्ठालोध्रमधुकैर्लाक्षान्यग्रोधमुस्तकैः ॥१६२॥**
**त्वग्जातीफलकर्पूरकङ्कोलखदिरैस्तथा ।**
**पतङ्गधातकीपुष्पसूक्ष्मैलानागकेशरैः(केशरम्) ॥१६३॥**
**कट्फलेन च संसिद्धं तैलं मुखरुजञ्जयेत् ।**

प्रदुष्टमांसं पलितं शीर्णदन्तञ्च सौषिरम् ॥१६४॥
शीतादं दन्तहर्षं (श्यावदन्तं प्रहर्षं) च विद्रधिं कृमिदन्तकम् ।
दन्तस्फुरणदौर्गन्ध्ये(ध्यं) जिह्वाताल्वोष्ठजां रुजम् ॥१६५॥

गनाउने वा कालो खयरको बोक्रा सय पल लेराई कुटेर एक द्रोण पानीमा हाली एक चौथाई पानी बाँकी नहुँदासम्म उमाली झिकेर छान्नू । यसमा आधा आढक तिलको तेल तथा कालो खयरको बोक्रा, ल्वाङ, गेरु, धूपी, पैयुँ, मजिठो, लोध, जेठीमधु, लाहा, बर्रो, नागरमोथे, दालचिनी, जाइफल, कपूर, फलकपूर, खयर, चन्दन विशेष, धयैँराको फूल, सुकुमेल, नागकेसर र काफल एक एक कर्ष बटुली कुटेर त्यहीँ मिसाउनू र पुनः तेल मात्र बाँकी नहुँदासम्म पकाउनू । तयार भएपछि झिकी छान्नू । यो तेल मुखका रोगमा, दाँतका गिजा सड्दा, दाँत हल्लँदा, दाँतमा प्वाल परी दुख्दा, गिजा सुन्निएर रातो हुँदा, गिजामा खटिरा आउँदा, दाँत कीराले खाँदा, दाँतमा प्वाल परी फोहोर बग्दा, दाँत फुट्दा, दाँत गनाउँदा तथा जिब्रो, तालु र ओठका रोगमा यसले लाभ गर्दछ ।

नसासम्म गढेका खटिरा, घाउ आदिमा चमेली आदिको तेल



(जातीनिम्बपटोलानां नक्तमालस्य पल्लवाः ।
सिक्थं समधुकं कुष्ठं द्वे निशे कटुरोहिणी ॥१६६॥
मञ्जिष्ठापद्मकं लोध्रमभया नीलमुत्पलम् ।
तुत्थकं सारिवाबीजं नक्तमालस्य दापयेत् ॥१६७॥
एतानि समभागानि पिष्ट्वा तैलं विपाचयेत् ।
नाडीव्रणे समुत्पन्ने स्फोटके कच्छुरोगिषु ॥१६८॥
सद्यः शस्त्रप्रहारेषु दग्धविद्धेषु चैव हि ।
नखदन्तक्षते देहे व्रणे दुष्टे प्रशस्यते ॥१६९॥ : प्रक्षिप्त श्लोक)

चमेली, नीम, पर्बल र कुबेराक्षका नरम नरम पात वा मुना; मैन, जेठीमधु, कूट, हलेदो, चुत्रो, पिर्रे, मजिठो, पैयुँ, लोध, हर्रो, नील कमल, नीलोतुथो, अनन्तमूल र कुबेराक्षका गेडा यि सबै जम्मा पारी बराबर (एक एक तोला) मात्रामा मिसाई कुटेर एक प्रस्थ तिलको तेलमा

हाली तेलको चौबर पानी हालेर पकाउनू र तेलमात्र बाँकी भएपछि झिकी छान्नू । यो तेल दल्नाले भित्र नसासम्म गहिरिएको घाउ, खटिरा हतियारले बनाएको घाउ, पोलेको घाउ, नङ-दाँत आदिले बनाएको घाउ आदि सबै खराब घाउखटिरा ठिक हुन्छ ।

कानको शूलमा हिङ आदिको तेल

**हिङ्गुतुम्बुरुशुण्ठीभिः कटुतैलं विपाचयेत् ।**
**तस्य पूरणमात्रेण कर्णशूलं प्रणश्यति ॥१७०॥**

हिङ, धनिया र सुठो बराबर लिई धुलो पारेर यसको चौबर सर्सिउँको तेलमा तेलको चौबर पानी हालेर तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । अनि झिकेर छान्नू । यो तेल कानमा हाल्नाले कर्णशूल नाश हुन्छ ।

बहिरोपनमा बेल आदिको तेल

**बालबिल्वानि गोमूत्रे पिष्ट्वा तैलं विपाचयेत् ।**

**साजक्षीरञ्च नीरञ्च बाधिर्यं हन्ति पूरणात् ॥१७१॥**

बेलका कमला (नछिप्पिएका) फललाई गहुँतमा पिँधी लेदो बनाउनू । लेदोको चौबर तिलको तेल र तेलको चौबर पानी मिसाई तेल मात्र बाँकी नहुँदासम्म मन्द आँचमा पकाउनू । त्यसपछि झिकेर छान्नू । यो तेल कानमा हाल्नाले बहिरोपन नाश हुन्छ ।

कानका रोगमा क्षारतेल

**बालमूलकशुण्ठी(ङ्गा)नां क्षारः क्षारयुतं(गं) तथा ।**
**लवणानि च पञ्चैव हिङ्गु शिग्रु महौषधम् ॥१७२॥**
**देवदारु वचा कुष्ठं शतपुष्पा रसाञ्जनम् ।**
**ग्रन्थिकं भद्रमुस्तञ्च कल्कैः कर्षमितैः पृथक् ॥१७३॥**
**तैलं प्रस्थञ्च विपचेत्कदलीबीजपूरयोः ।**
**रसाभ्यां मधुसूक्तेन चातुर्गुण्यमितेन च ॥१७४॥**

**पूयस्रावं कर्णनादं शूलं बधिरतां कृमीन् ।**
**अन्याँश्च कर्णजान्रोगान्मुखरोगाँश्च नाशयेत् ॥१७५॥**

कलिला मूलाको खार, सज्जीखार, जवाखार, पाँच थरीका नुन, हिङ, सैजनको बोक्रा, सुठो, देवदारु, बोझो, कूट, सुप, रसाञ्जन, पिप्लाको जरा र नागरमोथे एक एक कर्ष जम्मा पारी कुटेर धुलो बनाउनू । यो धुलोलाई धुलोको चौबर तिलको तेल र तिलको तेलको चौबर पानीमा मिसाई तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । तयार भएपछि झिकेर छान्नू । यो तेल कानमा हाल्नाले कानबाट पीप बहन छाड्दछ, कान बज्न बन्द हुन्छ, कानको शूल ठिक हुन्छ, बहिरोपन नाश हुन्छ, कानका कीरा नष्ट हुन्छ । यस बाहेक कानमा हुने अन्य रोग र मुखका रोग समेत यसबाट ठिक हुन्छ ।

### मधुशुक्त

**जम्बीराणां फलरसः प्रस्थैकः कुढवोन्मितम् ।**
**माक्षिकं तत्र दातव्यं पलैका पिप्पली स्मृता ॥१७६॥**

**एतदेकीकृतं सर्वं मृद्भाण्डे च निधापयेत् ।**
**वचाम्भो मधुसंयुक्तं श्रृङ्गवेरगुडान्वितम् ॥१७७॥**
**धान्यराशौ त्रिरात्रिस्थं मधुशुक्तमुदाहृतम् ।**

एक प्रस्थ ज्यामिरको रस, मह एक कुडव र एक पल पिप्लाको धुलो सबै मिसाएर एउटा माटाको भाँडोमा हाल्नू । बोझो, मह, अदुवा र सक्खर समेत हालिएको र धानभित्र तीन रातसम्म गाडिएको यस्तो पेयलाई मधुशुक्त भनिन्छ ।
(कुनै प्रतिमा यी श्लोक छैनन्)

### गानेगुर्जो आदिको तेल पिनासमा

**पाठा द्वे च निशे मूर्वा पिप्पली जातिपल्लवैः ॥१७८॥**
**दन्त्या च तैलं संसिद्धं नस्यं स्याद्दुष्टपीनसे ।**

गानेगुर्जोको जरा, हलेदो, चुत्रो, मरुई लहरो, पिप्ला, चमेलीका मुना र अजयपाल बराबर मात्रामा बटुली धुलो बनाएर धुलोको चौबर तिलको तेल अनि तेलको चौबर पानी मिसाएर तेल मात्र बाँकी नहुँदासम्म पकाउनू । बेला भएपछि झिक्नू र छान्नू । यो तेलको नस हाल्नाले पुरानो खालको पिनास पनि ठिक हुन्छ ।

पिनासमा ठूलो बिही आदिको तेल

**व्याघ्रीदन्तीवचाशिग्रुतुलसीव्योषसैन्धवैः ॥१७९॥**
**कल्कैश्च (कफस्य) पाचनं तैलं पूतिनासा(सो)गदापहम् ।**

ठूलो बिही, अजयपालको जरा, बोझो, सैजनको बोक्रा, तुलसीका पात, सुठो, कालो मरिच, पिप्ला र सिधेनुन बराबर मात्रामा जम्मा पारी कुटेर धुलो बनाउनू । धुलोको चौबर तिलको तेल र तिलको तेलको चौबर पानी मिसाई तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । बेला भएपछि झिकेर छान्नू । यो तेलको नस हाल्नाले पाकेको पिनास ठिक हुन्छ ।

हाच्छिउँमा कूट आदिको तेल



**कुष्ठंबिल्वकणाशुण्ठीद्राक्षाकल्ककषायवत् ॥१८०॥**
**साधितं तैलमाज्यं वा नस्यात्क्षवथुनाशनम् ।**

कूट, बेलका कमला फल, पिप्ला, सुठो र दाख बराबर मात्रामा जम्मा पारी कुटेर धुलो बनाउनू । धुलोको चौबर तिलको तेल र तिलको तेलको चौबर पानी हाली तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । तयार भएपछि झिकेर छान्नू । यो तेल नाकमा हाल्नाले हाच्छिउँ आइरहने रोग ठिक हुन्छ ।

नाकका खटिरा वा नाकभित्र पलाएको मासुमा ध्वाँसो आदिको तेल

**गृहधूमकणादारुक्षारनक्ताह्वसैन्धवैः ॥१८१॥**
**सिद्धं शिखरिबीजैश्च तैलं नासार्शसां हितम् ।**

चुलो माथिको ध्वाँसो, पिप्ला, देवदारु, जवाखार, कुबेराक्षाको बोक्रा, सिधेनुन र गुनाभाका गेडा बराबर जम्मा पारी कुटेर धुलो बनाउनू । धुलोको चौबर तिलको तेल र तेलको चौबर पानीमा हाली तेलमात्र बाँकी नहुँदासम्म पकाउनू । तयार भएपछि झिकेर छान्नू । यो तेलको नस हाल्नाले नाक भित्र पलाएको मासु झर्दछ ।

कुष्ठ आदि रोगमा सिउँडी आदिको तेल

**वज्रीक्षीरं रविक्षीरं द्रवं धत्तूरचित्रकम् ॥१८२॥**
**महिषीविड्भवं द्रावं सर्वांशं तिलतैलकम् ।**
**पचेत्तैलावशेषञ्च गोमूत्रेऽथ चतुर्गुणे ॥१८३॥**
**तैलावशेषं पक्त्वा च तत्तैलं प्रस्थमात्रकम् ।**
**गन्धकाग्निशिलातालं विडङ्गातिविषाविषम् ॥१८४॥**
**तिक्तकोशातकीकुष्ठवचामांसीकटुत्रयम् ।**
**पीतदारु च यष्ट्याह्वं स्वर्जिकाक्षारजीरकम् ॥१८५॥**
**देवदारु च कर्षांशं चूर्णं तैले विनिक्षिपेत् ।**
**वज्रतैलमिति ख्यातमभ्यङ्गात्सर्वकुष्ठनुत् ॥१८६॥**



धारे सिउँडीको दूध, आँकको दूध, धतुरोको रस, चितुको रस र भैंसीको गोबरको रस बराबर मात्रामा जम्मा पारी सबै रस बराबर तिलको तेल हाली मन्द आँचमा पकाउनू । तेलमात्र बाँकी भएपछि तेलको चौबर तिलको तेल हाल्नू र पुनः पकाउनू । पुनः तेलमात्र बाँकी भएपछि झिकेर छान्नू । अनि यसमा गन्धक, चितूको बोक्रा, मनशिला, हरिताल, वायुविडङ्ग, उत्तिस, विष (?), काल्तोरी, कूट, बोझो, जटामसी, सुठो, कालोमरिच, पिप्ला, चुत्रो, जेठीमधु, सज्जीखार, जीरा र देवदारु एक एक कर्ष जम्मा पारी कुटेर धुलो बनाउनू र त्यो तेलमा मिसाउनू । यो तेल दल्नाले सबै खालका कुष्ठरोग निको हुन्छ ।

रौं उखेल्न वा हटाउन करवीर आदिको तेल

**करवीरशिखादन्ती त्रिवृत्कोशातकीफलम् ।**

रम्भाक्षारोदके तैलं प्रशस्तं लोमशातनम् ॥१८७॥

करवीर (कँडेल) को जरा, अजयपालको जरा, सेतो निशोध र तितो तोरी (काल्तोरी) बराबर जम्मा पारी पिँधेर यसको चौबर तिलको तेलमा मिसाउनू । त्यसपछि केराको जरा डढाई तेलको क्षार बनाउनू । त्यो क्षारलाई पनि त्यसैमा हाली चौबर पानीमा हाली पकाउनू । तेलमात्र बाँकी भएपछि झिकेर छान्नू । यो तल शरीरको जुन भागमा रौँ हटाउनू पर्ने हुन्छ त्यहाँ दल्नाले रौँ उखेलिएर झर्दछ ।

चन्दनादि तेल

(चन्दनाम्बुनखैर्याभ्यं यष्टीशैलेयपद्मकम् ।
मञ्जिष्ठा सरलं दारु सेव्यैलं पूतिकेसरम् ॥१८८॥
पत्रकैलं मुरा मांसी कङ्कोलं वनिताम्बुदम् ।
हरिद्रा सारिवा तिक्ता लवङ्गागरुकुङ्कुमम् ॥१८९॥
त्वग्रेणुनलिका चेति तैलं मस्तु चतुर्गुणम् ।
लाक्षारससमं सिद्धं ग्रहघ्नं बलवर्धनम् ॥१९०॥
अपस्मारज्वरोन्मादकृत्यालक्ष्मीविनाशनम् ।
आयुःपुष्टिकरञ्चैव वशीकरणमुत्तमम् ॥१९१॥
विशेषात्क्षयरोगघ्नं रक्तपित्तहरं परम् । : प्रक्षिप्त श्लोक)



चन्दन, मोथे, नखी, जेठीमधु, शिलाकुङ्कुम, कमल, मजिठो, सल्लो, देवदार, उशीरका जरा, अलैंची, नागकेसर, तेजपात, सुकुमेल, कालो जटामसी, जटामसी, फलकपुर, दहीगुर्यैंलो, नागरमोथे, हलेदो, अनन्तमूल, मरुई लहरो, ल्वाङ, सालधूप, केसर, दालचिनी, शीतलचिनी र नीलकमललाई यसको चौबर मस्तुमा लाहा समेत हाली तयार पारिएको तेलले ग्रहबाधा नाश गर्दछ र बल बढाउँदछ । अपस्मार, जरो, उन्माद, कृत्यादोष र अलक्ष्मी नाश गर्दछ । यसले आयु बढाउँदछ र वशीकरण गर्दछ । विशेषतः यसले क्षयरोग र रक्तपित्त नाश गर्दछ ।

वचातैल

(वचां शठीं हरिद्रे द्वे देवदारुमहौषधी ॥१९२॥
हरीतकीमतिविषामुस्तमैन्द्रयवान्समान् ।
एतान्दशपलान्भागाँश्चतुर्द्रोणेऽम्भसः पचेत् ॥१९३॥
चक्रमर्दरसैस्तैलं कटुकं मृदुनाऽग्निना ।
पादशेषे विनिक्षिप्य सिन्दूरमवतारयेत् ॥१९४॥
एतत्तैलं निहन्त्याशु गण्डमालां सुदारुणम् । : प्रक्षिप्त श्लोक)

बोझो, कपुरहलेदो, हलेदो, चुत्रो, देवदार, सुठो, हर्रो, उत्तिस, नागरमोथे र इन्द्रजौ दश दश पल लिएर चार द्रोण पानीमा पकाउनू । पकाउँदा यसमा ताप्रे र सर्सिउँको तेल हालेर मन्द आँचमा पकाउनू । एक चौथाइ बाँकी भएपछि सिन्दूर हालेर झिक्नू । यो तेलले कडा खालको गण्डमाला रोग पनि चाँडै निको हुन्छ ।

नेवारीको तेल



(निर्गुण्डीस्वरसे तैलं लाङ्गलीमूलकल्कितम् ॥१९५॥
तैलं नस्यान्निहन्त्याशु गण्डमालां सुदारुणम् । : प्रक्षिप्त श्लोक)

नेवारीको रस र हलहलेको जरा मिसाएर तयार पारिएको तेलले पनि कडा खालको गण्डमाला चाँडै निको हुन्छ ।

धतुरोको तेल

(धत्तूररसमादाय हयमारान्तिकारसम् ॥१९६॥
भृङ्गराजरसश्चैव सारिणी निम्बपत्रकम् ।
शोभाञ्जनश्चित्रकश्च अश्वगन्धाप्रसारिणी ॥१९७॥
शिरीषः कुटजोऽनन्ता शाल्मली नक्तपत्रकम् ।
रविप्रियो महानिम्बो डिण्डिघोषा महेरणा ॥१९८॥

बला ज्योतिष्मती चैव श्यामाकश्चक्रमर्दकः ।
एतैस्तु रसमादाय तैलतुल्यञ्च दीयते ॥१९९॥
देवदारु हरिद्रे द्वे मांसी कुष्ठं सचन्दनम् ।
मरिचं त्रिवृता दन्ती हरितालं मनःशिला ॥२००॥
कम्पिल्लको गन्धकश्च खदिरः पिप्पली वचा ।
रसाञ्जनञ्च सिन्दूरं श्रीवासो रक्तचन्दनम् ॥२०१॥
इरिमेदस्तथा तुम्बी मञ्जिष्ठा सिन्धुवारकः ।
करवीरजटा रास्ना विश्वा श्रेष्ठा च पौष्करम् ॥२०२॥
शठी तालीसपत्रं च प्रियङ्गु रेणुका तथा ।
चातुर्जातकमञ्जीरं कङ्कोलञ्जातिपत्रिका ॥२०३॥
ज्योतिष्मती च पलिका विषस्य द्विपलं भवेत् ।
आढकं कटुतैलस्य गोमूत्रञ्च चतुर्गुणम् ॥२०४॥
मृत्पात्रे लोहपात्रे च शनैर्मृद्वग्निना पचेत् ।
मज्जाश्रितं त्वग्गतञ्च वातं चास्थिगतन्तथा ॥२०५॥
ऊरुग्रहं चाढ्यवातं कृच्छ्रं दण्डापतानकम् ।
कुब्जत्वञ्चाथ शोथञ्च पक्षाघातं तथार्दितम् ॥२०६॥
हनुस्तम्भं शिरकम्पं मूर्च्छितं दृष्टिविभ्रमम् ।
अपस्मारं तथोनमादं तथाचैवाऽपतन्त्रकम् ॥२०७॥
आक्षेपकं चास्थिभग्नं सन्धिभग्नञ्च नाशयेत् । : प्रक्षिप्त श्लोक)

धतुरोको रस, करवीरको रस, अन्तिक(?) को रस, भृङ्गिराजको रस, निलीवा, नीमका पात, सैजन, चितू, अश्वगन्धा, बिरी, शिरिष, इन्द्रजौ, अनन्तमूल, सिमल, कमलको पात (नक्तपत्र, कञ्जपत्र), रातो कमल, नीम वा बकाइनु, रातो अँडिर, साज, बलु, मालकागुनु, सामाधान र ताप्र बराबर मात्रामा लिई को रस निकाल्नू । यसमा देवदार, हलेलो, चुत्रो, जटामसी, कूट, सेतो चन्दन, मरिच, सेतो निशोध, अजयपाल, हरिताल, मनशिला, कम्पिल्लक, गन्धक, खयर, पिप्ला, बोझो, रसाञ्जन, सिन्दूर, गोकुलधूप, रक्तचन्दन,

इरिमेद् (गनाउने खयर ?), तुम्बे लौका, मजिठो, सिवाँली, करवीरको जरा, फ्याक्सेकन्द, सुठो, त्रिफला, अँडिरको मूल जरो, कपुरहलेदो, तालिसपत्र, दहीगुर्यैंलो, शीतलचिनी, चतुर्जातक, अञ्जीर, फलकपुर, जाइफल र मालकागुनु सबै एक एक पल तथा कमलको गानु दुई पल लिनू । सर्सिउँको तेल एक आढक र गहुँत त्यसको चार गुना लिनू । यी सबै मिसाई कुनै माटाको अथवा फलामको भाँडामा मन्द् आँचमा पकाउनू । यो तेलले मासीमा हुने, छालामा हुने र हाडमा हुने वातरोग; ऊरुग्रह (?), ऊरुस्तम्भ, कृच्छ्र, दण्डापतानक नामक वातरोग, कुप्रोपन, सुजन, पक्षाघात, अर्दित, हनुस्तम्भ, टाउको काम्ने रोग, बेहोसी, दृष्टिभ्रम, अपस्मार, उन्माद, अपतन्त्र, आक्षेपक, हाड मर्केको वा भाँचिएको र जोर्नी खुस्केको ठिक गर्दछ ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां संहितायां चिकित्सास्थाने
घृततैलकल्पना नाम नवमोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत नवौँ अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-१,०४८.५+२०७.५=१,२५६

✷

# अथ दशमोऽध्यायः

## दशौँ अध्याय

### आसव र अरिष्ट

**द्रवेषु चिरकालस्थं द्रव्यं यत् सन्धितं भवेत् ।**
**आसावारिष्टभेदैस्तु प्रोच्यते भेषजोचितम् ॥१॥**

कुनै भाँडामा हालिउको जल आदि तरल पदार्थमा ओखतीलाई भिजाएर त्यो भाँडाको मुख बन्द गरी एक महिना वा पन्ध्र दिनसम्म रहन दिनाले उत्तम ओखती तयार हुन्छ । यस्तो ओखती आसव, अरिष्ट आदि विभिन्न प्रकारको हुन्छ । यसका बारेमा बताइन्छ ।

### आसव र अरिष्टमा भिन्नता र खाने मात्रा

**यदपक्वौषधाम्बुभ्यां सिद्धं मद्यं स आसवः ।**
**अरिष्टः क्वाथसाध्यः स्यात्तयोर्मानं प(ज)लोन्मितम् ॥२॥**



नपकाई वा नतताई पूर्वोक्त विधिले तयार पारिने ओखती (मद्य) लाई “आसव” भनिन्छ । काँढापानी पकाएर त्यसमा पूर्वो विधिले तयार पारिने ओखतीलाई “अरिष्ट” भनिन्छ । मात्रा नतोकिएको अवस्थामा यसको सेवन गर्ने मात्रा एक पल (चालीस ग्राम) हुन्छ ।

### नतोकिएका स्थानमा अरिष्टमा जल आदि हाल्ने मात्रा

**अनुक्तमानारिष्टेषु द्रवद्रोणे तुलां गुडम् ।**
**क्षौद्रं क्षिपेद्गुडादर्धं प्रक्षेपं दशमांशिकम् ॥३॥**

जुन अरिष्ट बनाउँदा पानी कति हाल्ने भनी बताइएको छैन, त्यहाँ जल आदि तरल पदार्थ एक द्रोण (दश दशमलव दुई चार लिटर), मिस्री वा सक्खर एक तुला (चार दशमलब आठ किलो) र मिस्रीको आधा मह हाल्नु पर्दछ । ओखतीको धुलो हाल्नुपर्दा मिस्री जति हालिएको हो त्यसको दश भागको एक भाग हाल्नु पर्दछ ।

### शीतरस सीधु र पक्वरस सीधु

**ज्ञेयः शीतरसः सीधुरपक्वमधुरद्रवैः ।**
**सिद्धः पक्वरसः सीधुः सम्पक्वमधुरद्रवैः ॥४॥**

उखु आदि गुलिया पदार्थको काँचो रसमा उल्लेखित विधिले बनाइएको मद्यलाई "शीतरस सीधु" भनिन्छ । पकाइएका यस्ता रसमा बनाइएका मद्यलाई "पक्वरस सीधु" भनिन्छ ।

### सुरा र कादम्बरी

**परिपक्वान्नसन्धानसमुत्पन्नां सुरां जगुः ।**
**सुरामण्डः प्रसन्नः स्यात्ततः कादम्बरी घनः ॥५॥**

चामल अदि अनाजलाई उमालेर यन्त्र मार्फत निकालिने वा बनाइने मद्यलाई "सुरा" भनी बताइएको छ । सुराको बाक्लो भागलाई "कादम्बरी" भनिन्छ ।



### जगल, मेदक, पुक्कस र किण्वक

**तदधो जगलो ज्ञेयो मेदको जगलाद् घनः ।**
**पुक्कसो हृतसारः स्यात्सुराबीजञ्च किण्वकम् ॥६॥**

कादम्बरीको पिँधमा हुने तरल भागलाई "जगल" भनिन्छ । जगलमा हुने बाक्लो भागलाई "मेदक" भनिन्छ । मेदकको सार निकालिएको भागलाई "पुक्कस" भनिन्छ । सुराबीजलाई "किण्वक" भनिन्छ ।

### वारुणी र सूक्त

**यत्तालखर्जूररसैः सन्धिता सा हि वारुणी ।**
**कन्दमूलफलादीनि सस्नेहलवणानि च ॥७॥**
**यत्र द्रवेऽभिषूयन्ते तच्छूक्तमभिधीयते ।**

ताडी वा खयरको रसबाट आगोमा पकाई यन्त्र मार्फत निकालिने रसलाई “वारुणी” भनिन्छ । कन्दमूल, फलफूल आदिलाई उमालेर तेल आदि चिल्लो कुरा मिसाई जल, सिरप आदिमा हालिने कुरालाई “सूक्त” भनिन्छ ।

चुक्र

**विनष्टमम्लतां यातं मद्यं वा मधुरद्रवः(वम्) ॥८॥**
**विनष्टः सन्धितो यस्तु तच्चुक्रमभिधीयते ।**

अमिलो नभएका वा नआएका, गुलिया पदार्थलाई भाँडामा भरी बलियोसँग पूरै मुख बन्द गरेर सिल लगाई एक महिना वा पन्ध्र दिन राख्दा बन्ने मद्यलाई “चुक्र” भनिन्छ ।

गुडसूक्त

**गुडाम्बुना सतैलेन कन्दमूलफलैस्तथा ॥९॥**
**सन्धितं चाम्लतां यातं गुडशुक्तं तदुच्यते ।**

**एवमेवेक्षुशुक्तं स्यान्मृद्वीकासम्भवं तथा ॥१०॥**

सक्खर, पानी, तेल, कन्दमूल र फलफूललाई कुनै भाँडामा हाली त्यसको मुख बन्द गरेर सिल लगाई एक महिना वा पन्ध्र दिन राख्नू । जब अमिलो हुन्छ तब त्यसलाई “गुडसूक्त” भनिन्छ । यसैगरी अङ्गुर र उखुको सूक्त बनाउनु पर्दछ ।

तुषाम्बु र सौवीर

**तुषाम्बु सन्धितं ज्ञेयमामैर्विदलितैर्यवैः ।**
**यवैस्तु निस्तुषैः पक्वैः सौवीरं सन्धितं भवेत् ॥११॥**

काँचो जौलाई भुटी कुनै भाँडामा पानी सहित भरेर पूरै मुख सिल गरी केही दिन राख्दा हुने पदार्थलाई “तुषाम्बु” भनिन्छ । बोक्रा निकालिएको जौलाई पकाई पूर्वोक्त तरिकाले तयार पारिने पेयलाई “सौवीर” भनिन्छ ।

### काञ्जिक र शण्डाकी

कुल्माषधान्यमण्डादि सन्धितं काञ्जिकं विदुः ।
शण्डाकी सन्धिता ज्ञेया मूलकैः सर्षपादिभिः ॥१२॥

गहत, चामल आदिको माडलाई सुठो, रायो, जीरा, हिङ, सिधेनुन, बेसार, पानी आदि हाली तीन वा चार दिनसम्म उपरोक्त विधिले राखेर बनाइने पदार्थलाई "काञ्जिक" भनिन्छ । मस्ला कोरी काञ्जिक जसरी तयार पारिने पदार्थलाई "शण्डाकी" भनिन्छ भनी जान्नू ।

### रक्तपित्त आदि रोगमा उशीरासव

उशीरं बालकं पद्मं काश्मरीं नीलमुत्पलम् ।
प्रियङ्गुं पद्मकं लोध्रं मञ्जिष्ठां धन्वयासकम् ॥१३॥
पाठां किराततिक्तञ्च न्यग्रोधोदुम्बरं शठीम् ।
पर्पटं पुण्डरीकञ्च पटोलं काञ्चनारकम् ॥१४॥
जम्बूशाल्मलिनिर्यासं प्रत्येकं पलसम्मितान् ।
भागान्सुचूर्णितान्कृत्वा द्राक्षायाः पलविंशतिम् ॥१५॥
धातकीं षोडशपलाञ्जलद्रोणद्वये क्षिपेत् ।
शर्करायास्तुलां दत्त्वा क्षौद्रस्यैकतुलान्तथा ॥१६॥
मासैकं स्थापयेद्भाण्डे मांसीमरिचधूपिते ।
उशीरासव इत्येष रक्तपित्तनिवारणः(विनाशनः) ॥१७॥
पाण्डुकुष्ठप्रमेहार्शः कृमिशोथहरस्तथा ।

खस, सुगन्धवाल, रक्तकमल, खमारी, नीलकमल, दहिगुयैँलो, पैयुँ, लोध, मजिठो, सिस्नु, गानेगुर्जो, चिराइतो, कटुकी, बरोँका बोक्रा, डुम्रीका बोक्रा, कपुरहलेदो, पित्तपापडा, सेतो कमल, पर्बलका पात, कोइरालोका बोक्रा, जामुनाका बोक्रा र सिमलको खोटो यी सबै एक एक पल बटुली धुलो पारी बीस पल अङ्गूर र धयैँराको फूल सोह्र पल धुलो पारी दुई द्रोण पानीमा भिजाउनू र एक तुला सक्खर अनि एक तुला मह हाल्नू । यसपछि जटामसी र

मरिचको धूप बाली त्यो भाँडोलाई सिल लगाई मुख बन्द गरेर एक महिनासम्म राख्नू । अनि मुख खोली झिकेर छान्नू यसलाई "उशीरासव" भनिन्छ । यो पिउनाले रक्तपित्त, पाण्डु, कुष्ठ, प्रमेह, अल्काई, कीरा र सुजन नाश हुन्छ ।

प्रमेह आदि रोगमा कुमार्यासव

(सुपक्वरससंशुद्धं कुमार्याः पत्रमाहरेत्॥१८॥
यत्नेन रसमादाय पात्रे पाषाणमृण्मये ।
द्रोणे गुडतुलां दत्त्वा घृतभाण्डे निधापयेत्॥१९॥
माक्षिकं पक्वलोहञ्च तस्मिन्नर्धतुलां क्षिपेत् ।
कटुत्रिकं लवङ्गञ्च चातुर्जातकमेव च॥२०॥
चित्रकं पिप्पलीमूलं विडङ्गं गजपिप्पली ।
चव्य(वि)कं हपुषा धान्यं क्रमुकं कटुरोहणी॥२१॥
मुस्ता फलं त्रिकं (फलत्रिकं) रास्ना देवदारु निशाद्वयम् ।

मूर्वा मधुरसा दन्ती मूलं पुष्करसम्भवम्॥२२॥
बला चातिबला चैव कपिकच्छुस्त्रिकण्टकम् ।
शतपुष्पा हिङ्गुपत्री ह्या(आ)कल्लकमुटिङ्गणम्॥२३॥
पुनर्नवाद्वयं लोध्रं धातुमाक्षिकमेव च ।
एषां चार्धपलं दत्त्वा धातक्यास्तु पलाष्टकम्॥२४॥
पलञ्चार्धपलञ्चैव पलद्वयमुदाहृतम् ।
वपुर्वयः प्रमाणेन बलवर्णाग्निदीपनम्॥२५॥
बृंहणं रोचनं वृष्यं पक्ति(ङ्क्ति)शूलनिवारणम् ।
अष्टावुदरजान्रोगान्क्षयमुग्रञ्च नाशयेत्॥२६॥
विंशतिं मेहजान्रोगानुदावर्तमपस्मृतिम् ।
मूत्रकृच्छ्रमपस्मारं शुक्रदोषन्तथाऽश्मरीम्॥२७॥
कृमिजं रक्तपित्तञ्च नाशयेत्तु न संशयः । : प्रक्षिप्त श्लोक)

छिप्पिएका घिउकुमारीका पात बटुली प्रयत्नपूर्वक त्यसको रस एउटा माटाका भाँडामा निचोर्नू । एक द्रोण यो रसमा एक तुला सक्खर, मह आधा तुला, फलामको धुलो आधा तुला, त्रिकटु (सुठो, मरिच र पिप्ला), ल्वाङ, चतुर्जातक (दालचिनी, तेजपात, अलैंची र नागकेशर), चितू, पिप्लाको जरा, वायुविडङ्ग, चाभा, चाभा विशेष, हपुषा, धनिया, सुपारी, कुटकी, नागरमोथे, हर्रो, बर्रो, अमला, फ्याक्सेकन्द, देवदारु, हलेदो, चुत्रो, मरुई लहरो, अङ्कुर, अजयपाल, कमलको जरा, बलु, अतिबला, काउछो, ओदानेकाँडो, सुप, जिम्बु, अकरकरा , उटिङ्गण (?), दुई थरी पुनर्नवा, लोध र स्वर्णमाक्षिक भस्म : यी सबै आधा आधा पल जम्मा पारी कुटेर धुलो बनाउनू । अनि धयैँराको फूल आठ पल समेत माथि उल्लेखित सबै एउटा घिउको चिल्लो भाँडामा हाल्नू । मुख बन्द गरेर उक महिना वा पन्ध्र दिन राख्नाले कुमार्यासव तयार हुन्छ । यो आसव शरीरको अवस्था, उमेर आदि हेरी एक पल वा आधा पल खान दिनाले बल, वर्ण र अग्नि वृद्धि हुन्छ । शरीर पुष्ट हुन्छ । यो रोचन र वीर्यवर्धक हुन्छ । यसले परिणामशूल नाश गर्दछ । आठ प्रकारका पेटका रोग, कडाखालको क्षयरोग, बीस प्रकारका प्रमेह, उदावर्त, छारेरोग, मुत्रकृच्छ्र, छारेरोग विशेष, शुक्रजन्य रोग, पत्थरी, पेटका कीरा र रक्तपित्त समेत नाश गर्दछ, कुनै शङ्का छैन ।



क्षयरोग आदिमा पिप्पल्याद्यासव

पिप्पली मरिचश्चव्यं हरिद्रा चित्रको घनः ॥२८॥
विडङ्गं क्रमुको लोध्रः पाठा धात्र्येलवालुकम् ।
उशीरं चन्दनं कुष्ठं लवङ्गं तगरन्तथा ॥२९॥
मांसी त्वगेलापत्रञ्च प्रियङ्गुर्नागकेशरम् ।
एषामर्धपलान्भागान्सूक्ष्मचूर्णीकृताञ्छुभान् ॥३०॥
जलद्रोणद्वये क्षिप्त्वा दद्याद् गुडतुलात्रयम् ।
पलानि दश धातक्या द्राक्षा षष्टिपला भवेत् ॥३१॥
एतान्येकत्र संयोज्य मृद्भाण्डे च विनिक्षिपेत् ।
ज्ञात्वाऽऽगतरसं सर्वं पाययेदग्न्यपेक्षया ॥३२॥
क्षयं गुल्मोदरं कार्श्यं ग्रहणीं पाण्डुतान्तथा ।

**अर्शांसि नाशयेच्छीघ्रं पिप्पल्याद्यासवस्त्वयम् ॥३३॥**

पिप्ला, कालोमरिच, चाँभा, हलेदो, चितू, नागरमोथे, वायुविडङ्ग, सुपारी, लोध, गानेगुर्जो, अमला, सिलटिमुर, खस, सेतो चन्दन, कूट, ल्वाङ, तगर, जटामसी, दालचिनी, अलैंची, तेजपात, दहिगुयेंलो र नागकेशर यी सबै आधा आधा पल लिनू । धुलो बनाएर दुई द्रोण पानीमा हाल्नू । यसमा सक्खर वा मिस्री तीन तुला, धयैँराको फूल दश पल, दाख साठी पल कुटेर हाल्नू । यसपछि त्यो भाँडाको मुख बन्द गरी एक महिना रहन दिनू । यसपछि मुख खोली रस निकालेर छान्नू । यसलाई पिप्पलाद्यासव भनिन्छ । यसलाई पाचन शक्ति हेरी खाने गर्नाले क्षयरोय, गुल्म, पेटका रोग, दुब्लोपन, ग्रहणी, पाण्डु र अल्काई चाँडै नाश गर्दछ ।

पाण्डु आदि रोगमा लोहासव

**लोहचूर्णं त्रिकटुकं त्रिफलाञ्च यवानिकाम् ।**
**विडङ्गं मुस्तकं चित्रं चतुःसंख्यापलं पृथक् ॥३४॥**

**धातकीकुसुमानान्तु प्रक्षिपेत् पलविंशतिम् ।**
**चूर्णीकृत्य ततः क्षौद्रं चतुःषष्टिपलं क्षिपेत् ॥३५॥**
**दद्याद्गुडतुलान्तत्र जल द्रोणद्वयन्तथा ।**
**घृतभाण्डे विनिक्षिप्य निदध्यान्मासमात्रकम् ॥३६॥**
**लोहासवममुं मर्त्यः पिबेद्वह्निकरं परम् ।**
**पाण्डुश्वयथुगुल्मानि जठराण्यर्शसां रुजम् ॥३७॥**
**कुष्ठं प्लीहामयं कण्डूं कासं श्वासं भगन्दरम् ।**
**अरोचकञ्च ग्रहणीं हृद्रोगञ्च विनाशयेत् ॥३८॥**

लोहभस्म, सुठो, कालोमरिच, पिप्ला, हर्रो, बर्रो, अमला, ज्वानु, वायुविडङ्ग, नागरमोथे र चितूको बोक्रा : यी सबै ओखती चार चार पल तथा धयैँराको फूल बीस पल लिएर सबैलाई कुटी धुलो बनाउनू । यसमा चौसठ्ठी पल मह र एक तुला सक्खर वा मिस्री मिसाई दुई द्रोण जलमा हाली कुनै घिउको चिल्लो भाँडोमा हाली मुख बन्द गरेर एक महिना राख्नू । पछि

मुख खोलेर निकाल्नू । यसलाई लोहासव भनिन्छ । यो आसव खानाले गुल्म, अल्काई, कुष्ठ, फियोका रोग, शरीर चिलाउने रोग, खोकी, दम, भगन्दर, अरुची, ग्रहणी र मुटुका रोग नाश हुन्छन् ।

अल्काई आदि रोगमा मृद्वीकासव

(मृद्वीकायाः पलशतञ्चतुर्द्रोणेऽम्भसः पचेत् ।
द्रोणशेषे सुशीते च पूते तस्मिन्प्रदापयेत् ॥३९॥
तुले द्वे क्षौद्रखण्डाभ्यां धातक्याः प्रस्थमेव च ।
कङ्कोलकं लवङ्गञ्च फलञ्जात्यास्तथैव च ॥४०॥
पलांशकञ्च मरिचं(च) त्वगेलापत्रकेसराः(रम्) ।
पिप्पली चित्रकञ्चव्यं पिप्पलीमूलरेणुके ॥४१॥
घृतभाण्डे विनिक्षिप्य चन्दनागरुधूपिते ।
कर्पूरवासितो ह्येष ग्रहण्यां दीपनः परः ॥४२॥



अर्शसां नाशने श्रेष्ठ उदावर्तस्य गुल्मनुत् ।
जठरकृमिकुष्ठानि व्रणास्तु विविधास्तथा ॥
अक्षिरोग शिरोरोग गलरोगाँश्च नाशयेत् ॥४३॥ : प्रक्षिप्त श्लोक)

सय पल दाखलाई चार द्रोण पानीमा हालेर एक द्रोण पानी बाँकी नहुँदासम्म उमाल्नू । यसपछि झिकेर सेलाएपछि छान्नू । अनि यसमा मह सय पल, सक्खर वा मिस्री सय पल, धयेंराको फूल एक प्रस्थ; फलकपूर, ल्वाङ, जाइफल, कालो मरिच, दालचिनी, अलैंचीका गेडा, तेजपात, नागकेशर, पिप्ला, चितुका बोक्रा, चाँभा, पिप्लाको जरा र शीतलचिनी एक एक पल जम्मा पारी कुटी धुलो बनाई त्यो रसमा मिसाउनू । चन्दनको धूप बाल्नू । अनि घिउ हालिएको चिल्लो भाँडामा हाली मुख बन्द गरी पन्ध्र दिनसम्म रहन दिनू । यसपछि झिकेर छान्नू । अब द्राक्षासव बनेर तयार हुन्छ । यसमा कपूर हालेर सुगन्धित बनाई खानाले संग्रहणी रोगीको जठराग्नि बल्दछ । यसैगरी यो ओखतीले अल्काई, उदावर्त, गुल्म, पेटका रोग, कीरा, कुष्ठ, घाउखटिरा, आँखाका रोग, टाउकाका रोग र घाँटीका रोग नाश हुन्छ ।

प्रमेह आदि रोगमा लोध्रासव

लोध्रं शठी पुष्करमूलमेला मूर्वा विडङ्गं त्रिफला यवानी ।
चव्यं प्रियङ्गु क्रमुकं विशालां किराततिक्तं कटुरोहिणी च ॥४४॥
भार्ङ्गी नतं चित्रकपिप्पलीनां मूलञ्च कुष्ठातिविषाञ्च पाठाम् ।
कलिङ्गकं केसरमिन्द्रसाह्वानन्तासिपत्रं मरिच प्लवञ्च ॥४५॥
द्रोणेऽम्भस कर्षसमाँश्च पक्त्या पूते चतुर्भागजलावशेषे ।
रसार्धभागं मधुनः प्रदाय पक्षं निधेयो घृतभाजनस्थः ॥४६॥
लोध्रासवोऽयं कफपित्तमेहान्क्षिप्रं निहन्याद् द्विपल प्रयोगात् ।
पाण्ड्वामयार्शांस्यरुचिं ग्रहण्या दोषं बलासं विविधञ्च कुष्ठम् ॥४७॥

लोध, कपुरहलेदो, कमलको जरा, अलैंची, मरुई लहरा, वायुविडङ्ग, हर्रो, बर्रो, अमला, ज्वानु, चाँभा, कागुनो, सुपारी, ऐरेलु, चिराइतो, कटुकी, भारङ्गी, तगर, चितू, पिप्लाको जरा, कूट, उत्तिस, गानेगुर्जो, इन्द्रजौ, नागकेशर, खरीको बोक्रा, अनन्तमूल, उखु, कालो मरिच र सेतो मोथे : यी सबै ओखती सबै एक एक कर्ष लिई धुलो बनाएर एक द्रोण पानीमा हाली पकाउनू । एक चौथाई पानी बाँकी भएपछि झिकेर छान्नू । सेलाएपछि काँढापानीको आधा मह हाल्नू । यसपछि घिउको चिल्लो भाँडामा हाली मुख बन्द गरेर पन्ध्र दिनसम्म राख्नू । लोध्रासव तयार हुन्छ । यसलाई शरीर र रोगको अवस्था हेरी दुई पलसम्म खुवाउनू । यो आसवले कफविकार, पित्तविकार, प्रमेह, पाण्डु, अल्काई, अरुची, ग्रहणी तथा कफजन्य अन्य रोग र सबै खालका कुष्ठरोग नाश गर्दछ ।



जरो आदिमा कुटजारिष्ट

तुलां कुटजमूलस्य मृद्वीकाऽर्द्धतुलान्तथा ॥४८॥
मधूकपुष्पकाश्मर्यौ(र्य) भागान्दशपलोन्मितान् ।
चतुर्द्रोणेऽम्भसः पक्त्वा क्वाथे द्रोणावशेषिते ॥४९॥
धातक्या विंशतिपलं गुडस्य च तुलां क्षिपेत् ।

**मासमात्रं स्थितो भाण्डे कुटजारिष्टसञ्ज्ञितः ॥५०॥**
**ज्वरान्प्रशमयेत्सर्वान्कुर्यात्तीक्ष्णं धनञ्जयम् ।**

ठूलो कुरोको जरा एक तुला, दाख आधा तुला तथा महुवाको फूल र खमारीको जरा दश दश पल लिनू । यिनलाई कुटी चार द्रोण पानीमा हाली पकाउनू । एक द्रोण जल बाँकी भएपछि झिकेर छान्नू । यसपछि यसमा धयेंराको फूलको धुलो बीस पल र सक्खर वा मिस्रीको धुलो एक तुला हाली कुनै भाँडामा मुख बन्द गरेर एक महिना राख्नू । यसपछि यसलाई खोली निकाल्नू, कुटजारिष्ट तयार हुन्छ । यो खानाले सबै प्रकारका जरो ठिक भई जठराग्निलाई बाल्दछ ।

विद्रधि आदि रोगमा विडङ्गारिष्ट

**विडङ्गं ग्रन्थिकं रास्ना कुटजत्वक्फलानि च ॥५१॥**
**पाठैलवालुकं धात्री भागान्पञ्चपलान्पृथक् ।**
**अष्टद्रोणेऽम्भसः पक्त्वा कुर्याद् द्रोणावशेषितम् ॥५२॥**

**पूते शीते क्षिपेत्तत्र क्षौद्रं पलशतत्रयम् ।**
**धातकीं विंशतिपलां त्रिजातं द्विपलन्तथा ॥५३॥**
**प्रियङ्गुकाञ्चनाराणां सलोध्राणां पलं पलम् ।**
**व्योषस्य च पलान्यष्टौ चूर्णीकृत्य प्रदा(निधा)पयेत् ॥५४॥**
**घृतभाण्डे विनिक्षिप्य मासमेकं विधारयेत् ।**
**ततः पिबेद्यथाऽर्हन्तु जयेद्विद्रधिमूर्जि(त्थि)तम् ॥५५॥**
**ऊरुस्तम्भाश्मरीमेहान् प्रत्यष्ठीलाभगन्दरान् ।**
**गण्डमालां हनुस्तम्भं विडङ्गारिष्टसञ्ज्ञितः(संज्ञकम्) ॥५६॥**

वायुविडङ्ग, पिप्लाको जरा, सिस्नु, ठूलो कुरोको बोक्रा, ठूलो कुरोको फल, अनन्तमूल, सिलटिमुर र अमला : यी सबै पाँच पाँच पल जम्मा पारी कुटेर धुलो बनाउनू र आठ द्रोण पानीमा हाली पकाउनू । एक द्रोण पानी बाँकी भएपछि झिकेर छान्नू । सेलाएपछि तीन सय पल मह, बीस पल धयेंराको फूलको धुलो तथा दालचिनी, सुकुमेल र तेजपात जम्मा दुई

पल; दहिगुयेंलो, नागकेशर र लोधको धुलो एक एक पल हाली घिउ हालेको चिल्लो भाँडामा मुख बन्द गरेर एक महिनासम्म राख्नू । त्यसपछि झिकेर छान्नू । यसलाई विडङ्गारिष्ट भनिन्छ । यो क्षमता हेरी पिउनाले विद्रधि, ऊरुस्तम्भ, पत्थरी, प्रमेह, प्रत्यष्ठीला, भगन्दर, गण्डमाला र हनुस्तम्भ रोग ठिक हुन्छ ।

### प्रमेह आदि रोगमा देवदार्वाद्यरिष्ट

तुलाऽर्द्धं देवदारु(रोः) स्याद्वासा च पलविंशतिः ।
मञ्जिष्ठेन्द्रयवा दन्ती तगरं रजनीद्वयम् ॥५७॥
रास्नाकृमिघ्नमुस्तञ्च शिरीषं खदिरार्जुनौ ।
भागान् दशपलान् दद्याद्यवान्या वत्सकस्य च ॥५८॥
चन्दनस्य गुडूच्याश्च रोहिण्याश्चित्रकस्य च ।
भागानष्टपलानेतानष्टद्रोणेऽम्भसः पचेत् ॥५९॥
द्रोणशेषे कषाये च पूते शीते प्रदापयेत् ।

धातक्याः षोडशपलं माक्षिकस्य तुलात्रयम् ॥६०॥
व्योषस्य द्विपलं दद्यात् त्रिजातस्य चतुष्पलम् ।
चतुष्पलं प्रियङ्गु(ङ्गो)श्च द्विपलं नागकेशरम् ॥६१॥
सर्वाण्येतानि संचूर्ण्य घृतभाण्डे निधापयेत् ।
मासादूर्ध्वं पिबेदेनं प्रमेहं हन्ति दुर्जयम् ॥६२॥
वातरोगान् ग्रहण्यर्शो मूत्रकृच्छ्राणि नाशयेत् ।
देवदार्वादिकोऽरिष्टो(ष्टः) दद्रु(कण्डु)कुष्ठविनाशनः ॥६३॥

देवदार आधा तुला, असुरो बीस पल; मजिठो, इन्द्रजौ, अजयपाल, तगर, हलेदो, चुत्रो, सिस्नु, वायुविडङ्ग, नागरमोथे, शिरिष, खयर र खरीको बोक्रा सबै दश दश पल; ज्वानु, ठूलोकुरोको बोक्रा, सेतो चन्दन, गुर्जो, कटुकी र चितूको बोक्रा आठ आठ पल : यी सबै ओखती धुलो पारी आठ द्रोण पानीमा हाली पकाउनू । एक द्रोण पानी बाँकी भएपछि झिकेर छान्नू । सेलाए पछि धयेंराको फूलको धुलो सोह्र पल, मह तीन तुला; सुठो, मरिच र पिप्लाको धुलो जम्मा दुई पल; दालचिनी, अलैंचीका गेडा र तेजपातको धुलो जम्मा चार पल;

दहीगुयेंलोको धुलो चार पल र नागकेशर दुई पल हाल्नू । अनि यसलाई कुनै घिउ हाल्ने गरिएको चिल्लो भाँडामा हाली मुख टम्म बन्द गरी एक महिनासम्म राख्नू । यसपछि मुख खोलेर रस निकाल्नू, देवदार्वादिकारिष्ट तयार हुन्छ । यो अरिष्ट पिउनाले कडा खालको प्रमेह, वातका रोग, ग्रहणी, अल्काई, मूत्रकृच्छ्र, दाद र कुष्ठ निको हुन्छ ।

### कुष्ठ आदि रोगमा खदिरारिष्ट

खदिरस्य तुलाऽर्द्धन्तु देवदारु च तत्समम् ।
वाकुची द्वादशपला दार्वी स्यात्पलविंशतिः ॥६४॥
त्रिफला विंशतिपला ह्यष्टद्रोणेऽम्भसः पचेत् ।
कषाये द्रोणशेषे च पूते शीते विनिक्षिपेत् ॥६५॥
तुलाद्वयं माक्षिकस्य तुलैका शर्करा मता ।
धातक्या विंशतिपलं कङ्कोलं नागकेशरम् ॥६६॥
जातीफलं लवङ्गैलात्वक्पत्राणि पृथक्पृथक् ।

पलोन्मितानि कृष्णाया दद्यात्पलचतुष्टयम् ॥६७॥
घृतभाण्डे विनिक्षिप्य मासादूर्ध्वं पिबेत्ततः(न्नरः) ।
महाकुष्ठानि हृद्रोगं पाण्डुरोगार्बुदे तथा ॥६८॥
गुल्मं ग्रन्थिं कृमीञ्श्वासं कासं प्लीहोदरन्तथा ।
एष वै खदिरारिष्टः सर्वकुष्ठनिवारणः ॥६९॥

खयरको बोक्रा आधा तुला, त्यति नै बराबर देवदार, बकुची बाह्र पल, चुत्रो बीस पल र त्रिफला बीस पल सबै धुलो पारी आठ द्रोण पानीमा हाली एक द्रोण पानी बाँकी नहुँदासम्म पकाउनू । यसपछि झिकेर छान्नू र सेलाए पछि दुई तुला मह, एक तुला शक्खर वा मिस्री, धयेंरोको फूलको धुलो बीस पल, अनि फलकपूर, नागकेशर, जाइफल, ल्वाङ, अलैंची, दालचिनी र तेजपात सबै एक एक पल एवं पिप्ला चार पल : यी सबै कुटी धुलो पारेर यसमा हाल्नू । यो रसलाई घिउ हालिएको चिल्लो भाँडामा मुख टम्म बन्द गरेर एक महिनासम्म राख्नू । एक महिनापछि खदिरारिष्ट तयार हुन्छ । यसले महाकुष्ठ, मुटुका रोग, पाण्डु, अर्बुद,

गुल्म, शरीरका गाँठागुँठी, कीरा, दम, खोकी, फियोका रोग, पेटका रोग र सबै खालका कुष्ठरोग नाश गर्दछ ।

### क्षयरोग आदिमा बब्बूलारिष्ट

**तुलाद्वयन्तु बब्बूल्याश्चतुर्द्रोणे जले पचेत् ।**
**द्रोणशेषे रसे शीते गुडस्य त्रि(च)तुलां क्षिपेत्॥७०॥**
**धातकीं षोडशपलां कृष्णाञ्च द्विपलान्तथा ।**
**जातीफलानि कङ्कोलमेलात्वक्पत्रकेशरम्॥७१॥**
**लवङ्गं मरिचञ्चैव पलिकान्युपकल्पयेत् ।**
**मासं भाण्डे स्थितस्त्वेष बब्बूलारिष्टको जयेत्॥७२॥**
**क्षयं कुष्ठमतीसारं प्रमेहं श्वासकासनुत् ।**

दुई तुला बबुर (कीकर) को बोक्रालाई लेराई कुटेर चार द्रोण पानीमा हाली पकाउनू । एकद्रोण पानी बाँकी भएपछि झिकी छान्नू । सेलाएपछि सक्खर वा मिस्री तीन तुला, धयैँराको फूल सोह्र पल, पिप्ला दुई पल तथा जाइफल, फलकपूर, अलैंचीका गेडा, दालचिनी, तेजपात, नागकेशर, ल्वाङ र कालो मरिच एक एक पल लिई कुटेर धुलो पारी त्यो रसमा हाल्नू । यसपछि घिउको चिल्लो भाँडामा राखी मुख टम्म बन्द गरेर एक महिनासम्म राख्नू । अनि मुख खोली रस छान्नू । बब्बूलारिष्ट तयार हुन्छ । यो पिउनाले क्षयरोग, कुष्ठरोग, अतिसार, प्रमेह, खोकी र दम नाश हुन्छ ।

### क्षयरोग आदिमा द्राक्षारिष्ट

**द्राक्षातुलार्द्धं द्विद्रोणे जलस्य विपचेत् सुधीः ॥७३॥**
**पादशेषे कषाये च पूते शीते विनिक्षिपेत् ।**
**गुडस्य द्वितुलान्तत्र त्वगेलापत्रकेशरम्॥७४॥**
**प्रियङ्गुमरिचं कृष्णां विडङ्गञ्चेति चूर्णयेत् ।**
**पृथक्पलोन्मितैर्भागैस्ततो भाण्डे निधापयेत्॥७५॥**
**स्थापयित्वा ततो मासं ततो जातरसं पिबेत् ।**

(समन्ततो घट्टयित्वा पिबेज्जातरसं ततः) ।
उरःक्षतं क्षयं हन्ति कासश्वासगलामयान् ॥७६॥
द्राक्षाऽरिष्टाह्वयः प्रोक्तो बलकृन्मलशोधनः ।

पचास पल दाखलाई दुई द्रोण पानी हाली उमाल्नू । एक चौथाई पानी बाँकी भएपछि झिकेर छान्नू । पानी सेलाएपछि सक्खर दुई तुला तथा दालचिनी, अलैंचीका गेडा, तेजपात, नागकेशर, फलकपूर, कालो मरिच, पिप्ला र वायुविडङ्ग एक एक पल : यी सबैको धुलो यो रसमा मिसाउनू । अनि चिल्लो भाँडोमा हाली टम्म मुख बन्द गरेर एक महिना (वा पन्ध्र दिन) रहन दिनू । यसपछि रस निकालेर छान्नू । द्राक्षारिष्ट तयार हुन्छ । यो पिउनाले उरक्षत, क्षयरोग, खोकी, दम र घाँटीका रोग ठिक हुन्छ । यसले बल बढाउँदछ र दिसा पनि सफा गर्दछ ।

अल्काई आदि रोगमा रोहितकारिष्ट

रोहितकतुलामेकाञ्चतुर्द्रोणे जले पचेत् ॥७७॥

पादशेषे रसे शीते पूते पलशतद्वयम् ।
दद्याद्गुडस्य धातक्याः पलषोडशिका मता (शिकं मतम्) ॥७८॥
पञ्चकोलत्रिजातञ्च त्रिफलाञ्च विनिक्षिपेत् ।
चूर्णयित्वा पलांशेन ततो भाण्डे निधापयेत् ॥७९॥
मासादूर्ध्वं च पिबतां गुदजा यान्ति सङ्क्षयम् ।
ग्रहणीं पाण्डुहृद्रोगप्लीहगुल्मोदराणि च ॥८०॥
कुष्ठशोफारुचिहरो रोहितारिष्टसंज्ञकः ।

लालिगुराँस एक तुलालाई कुटी चार द्रोण पानीमा हाली पकाउनू । एक द्रोण पानी बाँकी भएपछि झिकेर छान्नू । सेलाएपछि यो रसमा सक्खर दुई सय पल, धयैंराको फूलको धुलो सोह्र पल तथा पिप्ला, पिप्लाको जरा, चाँभा, चितूका बोक्रा, सुठो, दालचिनी, अलैंचीका गेडा, तेजपात, हर्रो, बर्रो र अमला एक एक पल जम्मा पारी  कुटेर धुलो बनाई हाल्नू । यसपछि घिउ हालिएको चिल्लो भाँडोमा हाली मुख बन्द गरेर एक महिनासम्म रहन दिनू ।

यसपछि खोली रस छान्नू । रोहितारिष्ट तयार हुन्छ । यो रस पिउनाले अलकाई, ग्रहणी, पाण्डु, मुटुका रोग, फियोका रोग, गुल्म, पेटका रोग, कुष्ठ, सुजन र अरुची नाश हुन्छ ।

वातका रोगमा दशमूलारिष्ट

(पर्ण्यौ बृहत्यौ गोकण्टो बिल्वोऽग्निमन्थकोऽरलुः ॥८१॥
पाटला काश्मरी चेति दशमूलमिहोच्यते । : प्रक्षिप्त श्लोक)
दशमूलानि कुर्वीत भागैः पञ्चपलैः पृथक् ॥८२॥
पञ्चविंशत्पलं कुर्याच्चित्रकं पौष्करन्तथा ।
कुर्याद् विंशपलं लोध्रं गुडूची तत्समा भवेत् ॥८३॥
पलैः षोडशभिर्धात्री रविसंख्यैर्दुरालभा ।
खदिरो बीजसारश्च पथ्या चेति पृथक्पलैः ॥८४॥
अष्टभिर्गणितं कुष्ठं मञ्जिष्ठा देवदारु च ।
विडङ्गं मधुकं भार्ङ्गी कपित्थोऽक्षः पुनर्नवा ॥८५॥

चव्यं मांसी प्रियङ्गुश्च सारिवा कृष्णजीरकः ।
त्रिवृता रेणुकं रास्ना पिप्पली क्रमुकः शठी ॥८६॥
हरिद्रा शतपुष्पा च पद्मकं नागकेशरम् ।
मुस्तमिन्द्रयवः शुण्ठी जीवकर्षभकौ तथा ॥८७॥
मेदा चान्या महामेदा काकोल्यौ ऋद्धिवृद्धिके ।
कुर्यात् पृथग्द्विपलिकान् पचेदष्टगुणे जले ॥८८॥
चतुर्थांशं श्रृतं नीत्वा मृद्भाण्डे सन्निधापयेत् ।
चतुःषष्टिपलां द्राक्षां पचेन्नीरे चतुर्गुणे ॥८९॥
त्रिपादशेषं शीतञ्च पूर्वक्वाथे श्रृतं क्षिपेत् ।
द्वात्रिंशत् पलकं क्षौद्रं दद्याद् गुड चतुःशतम् ॥९०॥
त्रिंशत्पलानि धातक्याः कङ्कोलं जलचन्दनम् ।
जातीफलं लवङ्गञ्च त्वगेलापत्रकेशरम् ॥९१॥

**पिप्पली चेति सञ्चूर्ण्य भागैर्द्विपलिकैः पृथक् ।**
**शाणमात्राञ्च कस्तूरीं सर्वमेकत्र निक्षिपेत् ॥९२॥**
**भूमौ निखातयेद्भाण्डं ततो जातरसं पिबेत् ।**
**कतकस्य फलं क्षिप्त्वा रसं निर्मलतां नयेत् ॥९३॥**
**ग्रहणीमरुचिं श्वासं कासं गुल्मं भगन्दरम् ।**
**वातव्याधिं क्षयं छर्दिं पाण्डुरोगञ्च कामलाम् ॥९४॥**
**कुष्ठान्यर्शांसि मेहाँश्च मन्दाग्निमुदराणि च ।**
**शर्करामश्मरीं मूत्रकृच्छ्रं धातुक्षयञ्जयेत् ॥९५॥**
**कृशानां पुष्टिजननो वन्ध्यानां गर्भदः परः ।**
**अरिष्टो दशमूलाख्यस्तेजः शुक्रबलप्रदः ॥९६॥**

दुई थरी पर्णी (शालपर्णी र पृष्ठपर्णी, साकिनु र सतिबयर), दुई थरी बृहती (ठूलो र सानो कण्टकारी), ओदानेकाँडो, बेल, अरणी, टटेलो, पाडरी र खमारी : यी दश ओखतीका जराको समूहलाई दशमूल भनिन्छ । दशमूल बेग्लाबेग्लै पाँच पाँच पल लिनू । चितूका बोक्रा पच्चीस पल, अरिडको मूल जरो पच्चीस पल, लोध बीस पल, गुर्जो बीस पल, अमला सोह्र पल, सिस्नु बाह्र पल, खयरको बोक्रा आठ पल, विजयसाल आठ पल, हर्रो आठ पल तथा कूट, मजिठो, देवदार, वायुविडङ्ग, जेठीमधु, भारङ्गी, कैथ, बर्रो, पुनर्नवा, चाँभा, जटामसी, दहीगुयेंलो, अनन्तमूल, कालोजीरा, सेतो निशोध, शीतलचिनी, फ्याक्सेकन्द, पिप्ला, सुपारी, कपुरहलेदो, हलेदो, सुप, पैयुँ, नागकेशर, नागरमोथे, इन्द्रजौ, सुठो, जीवक (नपाउँदा कुभिण्डो), ऋषभक(नपाउँदा कुभिण्डो), मेदा (नपाउँदा जेठीमधु), महामेदा (नपाउँदा जेठीमधु), कल्छे लहरो (नपाउँदा अश्वगन्धा), दूधे कल्छे लहरो (नपाउँदा अश्वगन्धा), ऋद्धि (नपाउँदा गिठो) र वृद्धि (नपाउँदा गिठो) : यी सबै ओखती दुई दुई पल जम्मा पार्नू । सबै ओखती कुटेर मिसाई आठ गुना पानीमा पकाउनू । एक चौथाई पानी बाँकी भएपछि झिकेर कुनै माटाका भाँडामा छान्नू । यसपछि चौसठ्ठी पला दाखलाई चार गुना पानीमा पकाई तीन चौथाई बाँकी भएपछि झिकेर छान्नू । यसलाई पनि सेलाएपछि पहिलेकै रसमा मिसाउनू । अनि बत्तीस पल मह, चार सय पल सक्खर, तीस पल धयैंराको फूलको धुलो तथा फलकपूर, खस, सेतो चन्दन, जाइफल, ल्वाङ, दालचिनी, अलैंचीका गेडा, तेजपात, नागकेशर र पिप्ला सबै दुई दुई पल कुटी धुलो बनाएर मिसाउनू । अनि एक शाण कस्तूरीको धुलो हाल्नू

। यसपछि त्यो भाँडाको मुख राम्ररी बन्द गरी भाँडोलाई जमिनमा गाड्नू । अनि पन्ध्र दिन वा एक महिना रहन दिनू । पछि झिकेर छानी निर्मलीका गेडाको धुलो अलिकति हाल्नू, रस सफा हुन्छ । यसलाई दशमूलारिष्ट भनिन्छ । यसले ग्रहणी, अरुची, दम, खोकी, गुल्म, भगन्दर, वातका रोग, क्षयरोग, वाकवाकी, पाण्डु, कमलपित्त, कुष्ठ रोगहरू, अल्काई, प्रमेह, मन्दाग्नि, पेटका रोग, पत्थरी विशेष, पत्थरी, मूत्रकृच्छ्र र धातुक्षय नाश गर्दछ । यसले दुर्बल मानिसलाई बलियो बनाउँदछ, बाँझी स्त्रीलाई सन्तानवती बनाउँदछ तथा वीर्य र बल बढाउँदछ ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां संहितायां मध्यखण्डे चिकित्सास्थाने
आसवारिष्टादिसन्धानकल्पना नाम दशमोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत दशौँ अध्यायको मोहन प्रसाद सापकोटाद्वारा
नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-१,२५६+९६=१,३५२

✷

# अथैकादशोऽध्यायः

## एघारौं अध्याय

### धातु खण्ड
### धातुको संख्या

**स्वर्णं तारं ताम्रमारं (स्वर्णताराररताम्राणि) नागवङ्गौ च तीक्ष्णकम् । धातवः सप्त विज्ञेयास्ततस्ताञ्छोधयेद् बुधः ॥१॥**

सुन, चाँदी, तामा, पित्तल ( वाजस्ता), सिसा, राङ, स्टील फलाम आदि सात धातु हुन्, यिनलाई प्रशोधन गर्नु पर्दछ ।

### धातु प्रशोधन

**स्वर्णताराररताम्राणां(यः) पत्राण्यग्नौ प्रतापयेत् ।**
**निषिञ्चेत्तप्ततप्तानि तैले तक्रे च काञ्जिके ॥२॥**
**गोमूत्रे च कुलत्थानां कषाये च त्रिधा त्रिधा ।**
**एवं स्वर्णादिलोहानां विशुद्धिः सम्प्रजायते ॥३॥**

खानीबाट निकालिएका सुन, चाँदी, जस्ता र तामालाई पातला पाता बनाई आगोमा सेकाएर तेल, तक्र, काँजी, गहुँत र गहतको काँढापानीमा तीन तीन पटक चोपल्नू । यसरी सुन आदि सात धातु शुद्ध हुन्छन् ।

### सिसा र राङको प्रशोधन विधि

**नागवङ्गौ प्रतप्तौ च ग(गा)लितौ तौ निषे(षिं)चयेत् ।**
**त्रिधा त्रिधा विशुद्धिः स्याद्रविदुग्धेन च त्रिधा ॥४॥**

सिसा र राङ पगाल्दै तेलमा तीन तीन पटक र आँकको दूधमा तीन तीन पटक हाल्दा शुद्ध हुन्छन् ।

स्वर्णभस्म बनाउने पहिलो तरिका

स्वर्णाच्च द्विगुणं सूतमम्लेन सह मर्दयेत् ।
तद्गोलके समं गन्धं निदध्यादधरोत्तरम् ॥५॥
गोलकञ्च ततो रुन्ध्याच्छरावदृढसम्पुटे ।
त्रिंशद्वनोपलैर्दद्यात्पुटान्येवं चतुर्दश ॥६॥
निरुत्थं जायते भस्म गन्धो देयः पुनः पुनः ।

राम्ररी धुलो पारिएको सुन एक भाग र शुद्ध पारिएको पारो दुई भाग अमिलोमा हाली माड्नू । जब सबै पारो सुनसँग मिसिएर डल्लो हुन्छ तब गन्धकको धुलो बनाउनू । दुई वटा माटाका भाँडा लिनू । पहिलो भाँडामा आधा गन्धक हाल्नू र त्यसमाथि त्यो डल्लो राख्नू । बाँकी गन्धक माथिबाट हाली अर्को भाँडाले छोपी वरिपरि पूरै बाक्लो गरी माटोले टाल्नू । यसपछि आधा आगो भित्र र आधा बाहिर देखिने गरी आरनको कडा तापमा पोल्नू । यसरी सेलाउँदै पारोमा घोट्दै पोल्दै चौध पटक गरेपछि स्वर्णभस्म तयार हुन्छ ।



(काँजी बनाउने तरिका : माटाको घैँटोलाई सफा गरी सर्सिउँको तेलले लिपी त्यसमा सफा पानी हाल्नू । अनि रायो, जीरा, सिधेनुन, हिङ, सुठो र बेसार धुलो पारी त्यसमा हाल्नू । भात सहितको माड, गहतको काँढापानी र थोरै बाँसका पात तथा माषका बारा पाँच दश वटा हाली मुख बन्द गरेर तीन दिन राख्नू । अमिलो बास्ना आउन थालेपछि काँजी राम्ररी तयार हुन्छ ।)

स्वर्णभस्म बनाउने दोश्रो विधि

काञ्चनं(ने) गालिते नागं षोडशांशेन निक्षिपेत् ॥७॥
चूर्णयित्वा तथाऽम्लेन घृष्ट्वा कृत्वा च गोलकम् ।
गोलकेन समं गन्धं दत्त्वा चैवाधरोत्तरम् ॥८॥
शरावसम्पुटे धृत्वा पुटेत् त्रिंशद्वनोपलैः ।
एवं सप्तपुटैर्हेम निरुत्थं भस्म जायते ॥९॥

सुनलाई पगालेर सुनको सोह्रौं भाग सिसा हालेर छोप्नू । अनि रेती खुर्केर धुलो पारी कागतीको रसमा हाली गोली बनाउनू । त्यो गोली बराबर शुद्ध गन्धक लिएर धुलो बनाउनू । माटाका दुई भाँडा लिई एउटामा आधा गन्धक हाल्नू । त्यसमाथि त्यो गोली राखी आधा गन्धकले छोप्नू । अर्को भाँडोले मुख बन्द गरी माटोले लेपी आरनमा पोल्नू (त्रिंशद्वनोपलै ?) । यसरी पटक पटक घोट्नू र पटक पटक पोल्नू । यसरी सात पटक पोल्नाले उत्तम स्वर्णभस्म तयार हुन्छ ।

स्वर्णभस्म बनाउने तेश्रो विधि

काञ्चनाररसैर्घृष्ट्वा समसूतकगन्धयोः ।
कज्जल्या हेमपत्राणि लेपयेत्सममात्रया ॥१०॥
काञ्चनारत्वचः कल्को मूषायुग्मं प्रकल्पयेत् ।
धृत्वा तत्सम्पुटे गोलं मृण्मूषासम्पुटे च तत् ॥११॥
निधाय सन्धिरोधञ्च कृत्वा संशोष्य गोमयैः (कोकिलैः) ।
वह्निं खरतरं कुर्यादेवं दद्यात् पुटत्रयम् ॥१२॥
निरुत्थं जायते भस्म सर्वकार्येषु योजयेत् ।



पारो र गन्धक बराबर मात्रामा लिई ओखलीमा कोइरालोको रस हाली लेदो हुने गरी घोट्नू । त्यो लेप बराबर सुन लिई तयसलाई यो लेप दलेर मोर्नू । अनि कोइरालोकै बोक्रा पिँधेर त्यसका दुईवटा मूषा (गाल्ने भाँडा) बनाउनू । एउटा मूषामा सुन राखेर अर्को मूषले छोप्नू । दुबैको बिट मिलाएर छोपी माटोले लेपेर गोलो बनाउनू । त्यसपछि घाममा सुकाउनू र भट्टीको कडा आगोमा पोल्नू । यसरी तीन पटक स्वर्णभस्म तयार हुन्छ । यो स्वर्णभस्म सबै कार्यमा प्रयोग गर्नू ।

स्वर्णभस्म बनाउने चौथो विधि

काञ्चनारप्रकारेण लाङ्गली हन्ति काञ्चनम् ॥१३॥
ज्वालामुखी यथा हन्यात्तथा हन्ति मनःशिला ।

कोइरालोको उपरोक्त विधिले जसरी नै हलहलेले पनि सुनलाई भस्म पार्न सकिन्छ । यसैगरी त्यही विधिले कोइरालो साटो मनशिलाको प्रयोग गर्नाले पनि सुनलाई ज्वालामुखीले जसरी भस्म पार्न सकिन्छ ।

### स्वर्णभस्म बनाउने पाँचौं विधि

शिलासिन्दूरयोश्चूर्णं समयोरर्कदुग्धकैः ॥१४॥
सप्तैव भावना दद्याच्छोषयेच्च पुनः पुनः ।
ततस्तु गालिते हेम्नि कल्कोऽयं दीयते समः ॥१५॥
पुनर्धमेदतितरां यथा कल्को विलीयते ।
एवं वेलात्रयं दद्यात् कल्कं हेममृतिर्भवेत् ॥१६॥

मनशिला र सिन्दुर बराबर मात्रामा लिई राम्ररी धुलो बनाउनू र आँकको दूध हाली खलमा पिसेर सुकाउनू । सुकेपछि फेरी यसै गर्नू । सातपटक गर्नू । यसपछि सुन पगाली त्यो सुन बराबर यो धूलो त्यसमा हाल्नू । जबसम्म यो धुलो नष्ट हुँदैन तबसम्म सुनलाई भट्टीमा राखेर पोल्नू । धुलो नष्ट भएपछि फेरी यही क्रम गर्नू । तीनपटक यसो गरेपछि उत्तम स्वर्णभस्म तयार हुन्छ ।



### स्वर्णभस्म बनाउने छैटौं विधि

पारावतमलैर्लिम्पेदथवा कुक्कुटोद्भवैः ।
हेमपत्राणि तेषाञ्च प्रदद्यादधरोत्तरम् (न्तरान्तरम्) ॥१७॥
गन्धचूर्णं समं दत्त्वा शरावयुग(ग्म)सम्पुटे ।
प्रदद्यात्कुक्कुटपुटं पञ्चभिर्गोमयोपलैः ॥१८॥
एवं नवपुटान्दद्याद्दशमञ्च महापुटम् ।
त्रिंशद्वनोपलैर्देयं जायते हेमभस्मकम् ॥१९॥

सुनको पातालाई परेबा अथवा कुखुराको सुलीको लेपले लेप्नू । सुनको पाता समान गन्धकको धुलो लिई आधा माटाको पालामा हाल्नू । यसमाथि सुनको त्यो विष्ठाले मोरिएको पाता

राख्नू । बाँकी आधा गन्धकको धुलो माथिबाट राख्नू । यसपछि अर्को माटाको भाँडाले मुख बन्द गरी वरीपरी माटोले बाक्लो गरी लेप्नू । घाममा सुकाउनू र गाई गुइँठाको आगोमा पोल्नू । यसरी नौ पटक गरेपछि र दशौं पटकमा स्वर्णभस्म तयार हुन्छ ।

### स्वर्णभस्मका गुण

सुवर्णञ्च भवेत्स्वादु तिक्तं स्निग्धं हिमं गुरु ।
बुद्धिविद्यास्मृतिकरं विषहारि रसायनम् ॥२०॥

स्वर्णभस्म स्वादिलो, तितो, चिल्लो, शीतल गर्ने र पचाउन कठिन हुन्छ । यसले बुद्धि, विद्या र सम्झनाशक्ति बढाउँदछ र विषको असर नाश गर्दछ ।

### चाँदीको भस्म बनाउने विधि

भागैकं तालकं मर्द्यं यामनाम्लेन केनचित् ।
तेन भागत्रयं तारपत्राणि परिलेपयेत् ॥२१॥

धृत्वा मूषापुटे रुद्ध्वा पुटेत्त्रिंशद्वनोपलैः ।
समुद्धृत्य पुनस्तालं दत्त्वा रुद्ध्वा पुटे पचेत् ॥२२॥
एवं चतुर्दशपुटैस्तारं भस्म प्रजायते ।

एक भाग हरितालालाई कागतीको रसमा एक प्रहरसम्म भिजाउनू र लेप बनाउनू । यसपछि हरितालको तेब्बर चाँदीको पातो लिई त्यसमा यो लेप सबैतिर दल्नू । यसपछि यसलाई माटाको भाँटामा राखी माटाकै अर्को भाँडाले छोपी माटोले राम्ररी लिप्नू । अनि भट्टीमा पोल्नू । चौध पटक यसो गरेपछि उत्तम रतजभस्म तयार हुन्छ ।

### चाँदीको भस्म बनाउने दोश्रो विधि

स्नुहीक्षीरेण सम्पिष्टं माक्षिकं तेन लेपयेत् ॥२३॥
तालकस्य प्रकारेण तारपत्राणि बुद्धिमान् ।
पुटेच्चतुर्दशपुटैस्तार भस्म प्रजायते ॥२४॥

सुनामखी एक भाग लिई धुलो बनाउनू । यसलाई सिउँडीको दूधमा एक प्रहर राखेर घोटी लेप बनाउनू । अनि सुनामखीको तेब्बर चाँदीको पाता लिई त्यसमा यो लेप वरीपरी दल्नू । यसलाई माटाको भाँडामा राखी माटाकै भाँडाले छोपी वरीपरी बाक्लो माटोको लेप गर्नू र घाममा सुकाउनू । अनि भट्टीमा पोल्नू । चौध पटकमा रतजभस्म तयार हुन्छ ।

ताम्रभस्म बनाउने विधि

सूक्ष्माणि ताम्रपत्राणि कृत्वा संस्वेदयेद् बुधः ।
वासरत्रयमम्लेन ततः खल्वे विनिक्षिपेत् ॥२५॥
पादांशं सूतकन्दत्त्वा याममम्लेन मर्दयेत् ।
तत उद्धृत्य पत्राणि लेपयेद् द्विगुणेन च ॥२६॥
गन्धकेनाम्लघृष्टेन तस्य कुर्याच्च गोलकम् ।
ततः पिष्ट्वा च मीनाक्षीं चाङ्गेरीं वा पुनर्नवाम् ॥२७॥
तत्कल्केन बहिर्गोलं लेपयेदङ्गुलोन्मितम् ।
धृत्वा तद्गोलकं भाण्डे शरावेण च रोधयेत् ॥२८॥
वालुकाभिः प्रपूर्याथ विभूतिलवणाम्बुभिः ।
दत्त्वा भाण्डमुखे मुद्रान्ततश्चुल्यां विपाचयेत् ॥२९॥
क्रमवृद्धाग्निना सम्यग्यावद्याम चतुष्टयम् ।
स्वाङ्गशीतलमुद्धृत्य मर्दयेत्सूरणद्रवैः ॥३०॥
दिनैकं गोलकं कुर्यादर्धं गन्धेन लेपयेत् ।
सघृतेन ततो मूषापुटे गजपुटे पचेत् ॥३१॥
स्वाङ्गशीतं समुद्धृत्य मृतं ताम्रं शुभं भवेत् ।
वान्तिं भ्रान्तिं क्लमं मूर्च्छां न करोति कदाचन ॥३२॥

तामाका मसिना टुक्रा पारी तीनसम्म कागतीको रसमा भिजाउनू । त्यसपछि ती टुक्राको एक चौथाई पारो लिई त्यो पारो र ती टुक्रालाई ओखलमा कागती रससँग एक प्रहरसम्म

घोट्नू । त्यसपछि तामाका टुक्रालाई निकाली त्यसको दोब्बर गन्धक लिएर कागतीको रसमा घोटी तामाका टुक्रालाई लेप्नू र गोली बनाउनू । यसपछि घोडताप्रे वा चरीअमिलो वा पुनर्नवा पिँधेर तामाको वरिपरि एक एक अमल लेप दल्नू । यो गोलीलाई कुनै भाँडामा हाली यसलाई कुनै माटाको भाँडाले छोप्नू । त्यसपछि बालुवाले छोप्नू । यसपछि नुन र खरानी पानीमा मुछी यसको मुखलाई टाल्नू । अनि क्रमशः मन्द, मध्यम र तेज आगोमा चार प्रहरसम्म पोल्नू । जब सेलाउँदछ तब बाहिर निकाली ओलको रसमा एक दिन भिजाउनू । फेरी यी तामाका टुक्राका गोली बनाई त्यसको आधा गन्धकलाई घिउमा घोटी त्यो गोलीलाई मोर्नू । दुई वटा माटाका भाँडा लिई एउटामा त्यो गोली राखी अर्कोले छोप्नू । त्यसपछि मुखमा माटोले राम्ररी टाल्नू । अनि यसलाई गजपुट दिनू । जब सेलाउँदछ तब यसलाई बाहिर निकाल्नू । ताम्रभस्म तयार हुन्छ । यो अति उत्तम गनको हुन्छ । यसले वाकवाकी, भ्रान्ति, थकाई र बेहोसी कहिल्यै हुँदैन ।

(गजपुट : सभा हात गहिरो, सभा हात चौडा र सभा हात लामो खाल्डोमा बनाईको आरनमा बीचमा ओखतीको गोली राखी पोल्नूलाई गजपुट भनिन्छ : रसराजसुन्दर) ।



### पित्तलको भस्म बनाउने विधि

**अर्कक्षीरेण सम्पिष्टो गन्धकस्तेन लेपयेत् ।**
**समेनारस्य पत्राणि शुद्धान्यम्लद्रवैर्मुहुः ॥३३॥**
**ततो मूषापुटे धृत्वा पुटेद्गजपुटेन च ।**
**एवं पुटद्वयेनैव भस्मारं भवति ध्रुवम् ॥३४॥**
**आरवत् काँस्यमप्येवं भस्मतां याति निश्चितम् ।**

पित्तलका मसिना टुक्रा बनाई आगोमा तताएर सात वा तीन पटक कागतीको रसमा चोपल्नू । यसपछि ती टुक्रालाई त्यत्ति नै गन्धक लिएर आँकको दूधमा घोटी मोर्नू । अनि माटाको कचौरीमा राखेर अर्को कचौरी छोपी माटो दलेर वरीपरी छोप्नू । त्यसपछि गजपुटमा पोल्नू । यसरी पित्तल र काँसको समेत भस्म तयार हुन्छ ।

### तामा, पित्तल र काँसको भस्म बनाउने विधि

**अर्कक्षीरं वटक्षीरं निर्गुण्डी क्षीरिका तथा ।।३५।।**
**ताम्ररीतिध्वनिवधे समगन्धकयोगतः ।**

तामा, पित्तल र काँसलाई त्यति नै मात्रामा गन्धक लिई आँकको दूध वा बरोंको दूध वा गाईको दूधमा वा नेवारीको रसमा वा खिर्नीको रसमा मिसाएर खलमा पिसी लेप्नू । अनि पूर्वोक्त विधि अनुसार सम्पूट बनाई आरनमा पोल्नू, भस्म तयार हुन्छ ।

### सिसाको भस्म बनाउने विधि

**ताम्बूलीरससम्पिष्टशिलालेपात्पुनः पुनः ।।३६।।**
**द्वात्रिंशद्भिः पुटैर्नागो निरुत्थो याति भस्मताम् ।**

पानको रस निकालेर त्यसमा सिसा जति नै मनशिला पिँध्नू । अनि यसलाई सिसामा लेप्नू । माटाका दुई भाँडा लिई एउटामा यो लेपिएको सिसा राख्नू र अर्कोले बन्द गरी बाहिरी भाग माटोले लेपेर बन्द गर्नू । घाममा सुकाउनू र सुकेपछि गजपुट दिनू । यसरी बत्तीस पटक गजपुट दिनाले सिसाभस्म हुन्छ, फेरी जीवित हुँदैन । यसलाई नागभस्म वा नागेश्वर पनि भनिन्छ ।

### सिसाको भस्म बनाउने दोश्रो विधि

**अश्वत्थचिञ्चात्वक्चूर्णं चतुर्थांशेन निक्षिपेत् ।।३७।।**
**मृत्पात्रे द्राविते नागे लोहदर्व्या प्रचालयेत् ।**
**यामैकेन भवेद्भस्म तत्तुल्याञ्च मनःशिलाम् ।।३८।।**
**काञ्जिकेन द्वयं पिष्ट्वा पचेद् दृढपुटेन च ।**
**स्वाङ्गशीतं पुनः पिष्ट्वा शिलया काञ्जिकेन च ।।३९।।**
**पुनः पुटेच्छरावाभ्यामेवं षष्टिपुटैर्मृतिः ।**

कुनै माटोको भाँडामा हाली सिसालाई भट्टीमा तताएर पगाल्नू । पग्लेपछि सिसाको एक चौथाई पीपलका बोक्रा र अमिलीका बोक्रा मिसाइएको धुलो लिनू र त्यो पग्लेको सिसामा अलिअलि गरेर छर्कनू । फलामको पन्यौले चलाउनू । यसरी एक प्रहरसम्म गरेपछि सिसाको भस्म तयार हुन्छ । यो भस्म बराबर मनशिला लिई दुबैलाई काँजीमा भिजाउनू । फेरी माटाका दुई भाँडा लिई एउटामा त्यो भस्म राख्नू । अर्कोले मुख बन्द गरी माटोले लिप्नू । अनि खाल्टो खनेर आरन बनाई गजपुट अग्निले पोल्नू । सेलाएपछि निकाल्नू । फेरी यसमा बराबर भाग मनशिला मिसाएर दुबैलाई काँजीमा मोली पूर्ववत् माटाका भाँडामा राखी छोपी माटोले लेपी आरनमा पोल्नू । यसरी साठी पुट दिएपछि सिसाको उत्तम भस्म तयार हुन्छ ।

### राङ्भस्म बनाउने विधि

**मृत्पात्रे द्राविते वङ्गे चिञ्चाऽश्वत्थत्वचो रजः ॥४०॥**
**क्षिप्त्वा तेन चतुर्थांशमयोदर्व्या प्रचालयेत् ।**
**ततो द्वियाममात्रेण वङ्गभस्म प्रजायते ॥४१॥**
**अथ भस्मसमं तालं क्षिप्त्वाऽम्लेन प्रमर्दयेत् ।**
**ततो गजपुटे पक्त्वा पुनरम्लेन मर्दयेत् ॥४२॥**
**तालेन दशमांशेन याममेकं ततः पुटेत् ।**
**एवं दशपुटैः पक्वो वङ्गस्तु म्रियते ध्रुवम् ॥४३॥**

माटाको भाँडामा राङ हाली आगामा तताएर पगाल्नू । पग्लेपछि पग्लेपछि राङको एक चौथाई पीपलका बोक्रा र अमिलीका बोक्रा मिसाइएको धुलो लिनू र त्यो पग्लेको राङमा अलिअलि गरेर छर्कनू । फलामको पन्यौले चलाउनू । यसरी दुई प्रहरमा राङ भस्म हुन्छ । अनि भस्म बराबर हरिताल लिएर दुबैलाई कागतीको रसमा मोल्नू । अनि माटाका भाँडामा हाली माटाकै भाँडोले छोपी गिलो माटोले लेप्नू । यसपछि पहिलेझैं आरनमा राखी पोल्नू । सेलाएपछि झिकेर पुनः भस्मका दशांश हरिताल हाली कागतीको रसमा मोल्नू र माटाको भाँडामा हाली छोपेर लिपी घाममा सुकाउनू । पुनः आरनमा पोल्नू । यसरी दश पटक गर्नाले उत्तम राङभस्म तयार हुन्छ । यसलाई वङ्गभस्म भनिन्छ ।

लोहभस्म बनाउने विधि

**शुद्धं लोहभवं चूर्णं पातालगरुडीरसैः ।**
**मर्दयित्वा पुटेद्वह्नौ दद्यादेवं पुटत्रयम् ॥४४॥**
**पुटत्रयं कुमार्याश्च कुठारच्छिन्नकारसैः ।**
**पुटषट्कन्ततो दद्यादेवं तीक्ष्णमृतिर्भवेत् ॥४५॥**

शुद्ध फलामको धुलोलाई भोटे खयरको रसमा मोली पूर्ववत् माटाको भाँडामा हाली तीन पटक पोल्नू । यसपछि घिउकुमारीको रसमा मोलेर तीन पटक तथा वनतुलसीको रसमा मोलेर छ पटक पोल्नू । यसरी नौ पटक पोलेपछि उत्तम लोहभस्म तयार हुन्छ । पोल्दा गजपुटमा पोल्नू ।

लोहभस्म बनाउने दोश्रो विधि

**क्षिपेद्द्वादशकांशेन पारदं तीक्ष्णलोहतः ।**

**मर्दयेत्कन्यकाद्रावैर्यामयुग्मन्ततः पुटेत् ॥४६॥**
**एवं सप्तपुटैर्मृत्युं लोहचूर्णमवाप्नुयात् ।**
**रसैः कुठारच्छिन्नायाः पातालगरुडीरसैः ॥४७॥**
**स्तन्येन चार्कदुग्धेन तीक्ष्णस्यैवं मृतिर्भवेत् ।**

कडा फलामलाई रेती खुर्केर धुलो बनाई धुलोको बाह्रौं भाग पारो मिसाएर घिउकुमारीको रसमा मोल्नू । अनि माटाका भाँडामा राखी छोपेर माटोल लेपी आरनमा पोल्नू । यसरी सातपटक गर्नाले फलामको भस्म बन्दछ । वनतुलसीको रस वा भोटे खयरको रस वा स्त्रीको दूध वा आँकको दूधमा मोली सात पटक पोल्नाले पनि लोहभस्म तयार हुन्छ ।

लोहभस्म बनाउने तेश्रो विधि

**सूतकाद् द्विगुणं गन्धं दत्वा कुर्याच्च कज्जलीम् ॥४८॥**
**द्वयोः समं लोहचूर्णं मर्दयेत् कन्यकाद्रवैः ।**

**यामयुग्मं ततः पिण्डं कृत्वा ताम्रस्य पात्रके ॥४९॥**
**घर्मे धृत्वा ऋबूकस्य पत्रैराच्छादयेद् बुधः ।**
**यामार्धेनोष्णता भूयाद्धान्यराशौ न्यसेत्ततः ॥५०॥**
**तस्योपरि शरावन्तु त्रिदिनान्ते समुद्धरेत् ।**
**पिष्ट्वा च गालयेद्वस्त्रादेवं वारितरं भवेत् ॥५१॥**
**एवं सर्वाणि लोहानि स्वर्णादीन्यपि गाल(मार)येत् ।**

पारो एक भाग र गन्धक दुई भाग लिई घोट्नू । यति नै बराबरको फलामको धुलो यसमा मिसाई घिउकुमारीको रसमा दुई प्रहरसम्म भिजाएर गोली बनाउनू । यो गोलीलाई तामाका भाँडामा हाली अरिडका पातले छोपी चार घडीसम्म घाममा राख्नू । सुकेपछि माटाको भाँडाले तामाको भाँडाको मुख बन्द गर्नू र तीन दिनसम्म धानमा गाडेर राख्नू । चौथो दिन निकाली छानेर पानीमा हाल्नू । पानीमा तैरिए त्यो भस्मलाई उत्तम भनी जान्नू । यसरी नै सबै फलाम र सुनआदिलाई पनि पोलेर भस्म बनाउनू ।



सबै धातुको भस्म बनाउने सामान्य विधि

**शिलागन्धार्कदुग्धाक्ताः स्वर्णाद्याः सर्वधातवः ॥५२॥**
**म्रियन्ते द्वादशपुटैः सत्यं गुरुवचो यथा ।**

सबै खालका धातुलाई मनशिला र गन्धक मिसाइएको आँकको दूधमा फिटिएको लेपले लेप्नू र आरनमा बाह्रपटक गजपुट गर्नू सबै धातु भस्म हुन्छन् । यो गुरुको वचन समान सत्य हुन्छ ।

उपधातु

**माक्षिकन्तुत्थकाभ्रौ च नीलाञ्जनशिलालकाः ॥५३॥**
**रसकश्चेति विज्ञेया एते सप्तोपधातवः ।**

सुनामक्खी, निलोतुथो, अभ्रक, नीलाञ्जन (?), मनशिला, हरिताल र रसक (?) यी सात उपधातु हुन् ।

### सुनामक्खी प्रशोधन गर्ने विधि

**माक्षिकस्य त्रयो भागा भागैकं सैन्धवस्य च ।।५४।।**
**मातुलुङ्गद्रवैर्वाऽथ जम्बीरोत्थद्रवैः पचेत् ।**
**चालयेल्लोहजे पात्रे यावत् पात्रं सु(तु)लोहितम् ।।५५।।**
**भवेत्ततस्तु संशुद्धिं स्वर्णमाक्षिकमृच्छति ।**

सुनामक्खी तीन भाग र सिधेनुन एक भागको धुलो पारी दुबैलाई फलामको कराहीमा हाली अगेनामा बसाली तताउनू । यसलाई बिमिरो वा ज्यामिरको रस हाली फलामको पन्यौले घोट्नू । कराही रातो भएपछि झिक्नू । जब सेलाउँदछ तब त्यहाँबाट सुनामक्खीलाई निकाल्नू ।

### सुनामक्खीको भस्म बनाउने विधि

**कुलत्थस्य कषायेण घृष्ट्वा तैलेन वा पुटेत् ।।५६।।**
**तक्रेण वाथ गोमूत्रैः (वाजमूत्रेण) म्रियते स्वर्णमाक्षिकम् ।**

यस्तो सुनामक्खीलाई गहतको काँढापानी, तिलको तेल वा तक्रमा वा गहुँतमा घोटी माटाका प्यालामा राखी माटाकै प्यालाले छोपी माटाले मोरेर सुकाई सुकेपछि आरनमा पोल्नू । सुनामक्खीको भस्म तयार हुन्छ ।

### रुपामक्खी प्रशोधन विधि

**कर्कोटीमेषशृङ्गयुत्थैर्द्रवैर्जम्बीरजैर्दिनम् ।।५७।।**
**भावयेदातपे तीव्रे विमला शुद्ध्यति ध्रुवम् ।**

रुपामक्खीलाई धुलो बनाएर वनतोरियाँ, मेढाशृङ्गी र ज्यामिरको रसमा एक दिन भिजाएर घाममा राख्नाले रुपामक्खी शुद्ध हुन्छ । (यसको भस्म सुनामक्खीको जसरी नै बनाउनु पर्दछ) ।

निलोतुथो प्रशोधन विधि

विष्ठया मर्दयेत्तुत्थं मार्जारककपोतयोः ॥५८॥
दशांशं टङ्कणं दत्त्वा पचेन्मृदुपुटे ततः (पुटेन तु) ।
पुटं दध्ना तथा क्षौद्रैर्देयं तुत्थविशुद्धये ॥५९॥

निलोतुथोसँग बराबर हुनेगरी बिरालोको र परेबाको मल अनि निलोतुथोको दशौं भाग बराबर सुहाग लिई मिसाएर भिजाउनू । अनि माटाका भाँडामा भरी माटाकै भाँडाले छोपी मन्द आँचमा पोल्नू । सेलाएपछि झिकी एकचोटी दहीमा र एकचोटी महमा भिजाएर पुनः यही विधिले पोल्नू । निलोतुथो शुद्ध हुन्छ ।

अभ्रक प्रशोधन विधि

कृष्णाभ्रकं धमेद्वह्नौ ततः क्षीरे विनिक्षिपेत् ।
भिन्नपत्रन्तु तत्कृत्वा तन्दुलीयाम्लयोर्द्रवैः ॥६०॥

भावयेदष्टयामन्तदेवं शुद्ध्यति चाभ्रकम् ।

कालो अभ्रख (वज्र अभ्रख) लाई आरनमा रातो नहुँदासम्म पोल्नू । त्यसपछि झिकेर दूधमा डुबाउनू । फेरी यसका पत्र अलग गरी चौलानी पानी र कागतीको रस मिसाएर आठ प्रहरसम्म भिजाएर राख्नू, अभ्रख शुद्ध हुन्छ ।

अभ्रकभस्म बनाउने विधि

कृत्वा धान्याभ्रकन्तत्तु शोषयित्वाऽथ मर्दयेत् ॥६१॥
अर्कक्षीरैर्दिनं खल्वे चक्राकारञ्च कारयेत् ।
वेष्टयेदर्कपत्रैश्च सम्यग्गजपुटे पचेत् ॥६२॥
पुनर्मर्द्यं पुनः पाच्यं सप्तवारं प्रयत्नतः ।
ततो वटजटाक्वाथैस्तद्वद्देयं पुटत्रयम् ॥६३॥
म्रियते नात्र सन्देहः सर्वरोगेषु योजयेत् ।

यसपछि यो अभ्रखलाई धानका सहायताले शुद्ध पारी आँकको दूधमा एक दिनसम्म भिजाउनू र गोलाकार चक्की बनाउनू । यसको चारैतिर आँकका पात बेरी माटाका भाँडामा राखी मुख बन्द गरी माटोले लेपी घाममा सुकाउनू । यसपछि गजपुटमा पोल्नू । यसै गरी आँकको दूधमा एकदिन भिजएर रातमा पुनः पोल्नू । यसरी सात पटक पोल्नू । अनि बरोंको जराको काँढापानीमा एक दिन भिजाएर अभ्रखलाई पुन तीन पटक गजपुटमा पोल्नू । यसपछि उत्तम अभ्रख भस्म तयार हुन्छ, कुनै शङ्का छैन । यो सबै रोगमा उपयोग गर्न हुन्छ ।

अभ्रख भस्म अमृत समान बनाउने विधि

**तुल्यं घृतं मृताभ्रेण लोहपात्रे विपाचयेत् ॥६४॥**
**घृते जीर्णे तदभ्रन्तु सर्वयोगेषु योजयेत् ।**

अभ्रख भस्ममा त्यति नै घिउ हाली फलामको भाँडामा पकाउनू । घिउ सुकेर अभ्रख मात्र बाँकी भएपछि त्यसलाई सबै योगमा मिसाउनू ।



अभ्रख भस्मका गुण

**मृतं त्वभ्रं हरेन्मृत्युं जरापलितनाशनम् ॥६५॥**
**अनुपानैश्च संयुक्तं तत्तद्रोगहरं परम् ।**

अभ्रख भस्मले मृत्युलाई समेत नाश गर्दछ । यसले बुढचौली नाश गर्दछ, फुलेको कपाल कालो हुन्छ । यसलाई उपयुक्त पेय पदार्थसँग जे जे रोगमा खुवाइन्छ त्यही त्यही रोग यसले नाश गर्दछ ।

अभ्रक भस्म बनाउने दोश्रो तरिका

**शुद्धं धान्याभ्रकं मुस्तं शुण्ठी षड्भागयोजितम् ॥६६॥**
**मर्दयेत् काञ्जिकेनैव दिनं चित्रकजै रसैः ।**
**ततो गजपुटं दद्यात्तस्मादुद्धृत्य मर्दयेत् ॥६७॥**

**त्रिफलावारिणा तद्वत्पुटेदेवं पुटैस्त्रिभिः ।**
**बलागोमूत्रमुसलीतुलसीसूरणद्रवैः ॥६८॥**
**मर्दितं पुटितं वह्नौ त्रित्रिवेलं व्रजेन्मृतिम् ।**

प्रशोधन गरिएको धान्याभ्रख लिनू । यसको छ भागको एक भाग नागरमोथे र सुठोको धुलो यसमा मिसाउनू । अनि यसलाई एक दिन काँजीमा भिजाउनू । फेरी एकदिन चितूको रसमा भिजाउनू । अनि माटाको प्यालामा राखी मुख बन्द गरेर लिपी गजपुटमा पोल्नू । सेलाएपछि बाहिर निकाली त्रिफलाको काढापानीमा हालेर माड्नू । तीन दिनसम्म यसो गरेपछि बलु, गहुँत, मुसलीकन्द, तुलसी र ओलको काँढापानीमा बेग्लाबेग्लै भिजाउनू । हरेक पटक तीन तीन गजपुट दिनू । यसरी अभ्रखको अति उत्तम भस्म तयार हुन्छ ।

(धान्याभ्रक : टुक्रा पारिएका अभ्रकलाई यसको एक चौथाई धानमा मिसाउनू र कुनै बलियो कपडामा पोको पार्नू । अनि कुनै फराकिलो भाँडामाथि यसलाई हातले समाउनू र पानी हाल्दै माड्दै गर्नू । यसो गर्दा पोकोमा भएको जति अभ्रख तल भाँडामा पानी मिसिएर आउँदछ । यसरी सबै अभ्रख पानीसँग मिसिएर आएपछि पानी निथारेर फाल्नू । अभ्रखको धुलो घाममा सुकाउनू । यसलाई धान्याभ्रख भनिन्छ ।)

### अभ्रखसत्व

**(धान्याभ्रकस्य भागेकं द्वौ भागौ टङ्कणस्य च ॥६९॥**
**पिष्ट्वा तदन्धमूषाणं रुद्ध्वा तीव्राग्निना पचेत् ।**
**स्वभावशीतलश्चूर्णं सर्वयोगेषु योजयेत् ॥७०॥** : प्रक्षिप्त श्लोक)

धान्याभ्रख एक भाग र दुई भाग सुहागाघलुवामा हाली धुलो बनाउनू । यसलाई कडा आगोमा पोल्नू । यसपछि बन्ने स्वभावैले शीतल धुलो सबै संयोजनमा प्रयोग गर्नू ।

### नीलाञ्जन प्रशोधन विधि

**नीलाञ्जनश्चूर्णयित्वा जम्बीरद्रवभावितम् ।**

**दिनैकमातपे शुद्धं भवेत् कार्येषु योजयेत्॥७१॥**

नीलाञ्जनलाई धुलो बनाई ज्यामिरको रसमा एक दिन भिजाउनू र घाममा राख्नू शुद्ध हुन्छ । यसपछि यसलाई रोग आदिमा दिनु उपयुक्त हुन्छ ।

गेरु, हीराकसी आदि प्रशोधन विधि

**एवं गैरिककाशीसं टङ्कणानि वराटिका ।**
**तुव(तौ)री शङ्खकं (शङ्खं च) कुष्ठं शुद्धिमायाति निश्चितम्॥७२॥**

यसैगरी गेरु, हिराकसी, सुहागा, कौडो, फिटकिरी, शङ्ख र मुर्दासङ्खको पनि प्रशोधन गर्नु पर्दछ ।

मनशिला प्रशोधन विधि

**पचेत् त्र्यहमजामूत्रैर्दोलायन्त्रे मनःशिलाम् ।**

**भावयेत्सप्तधा पित्तैरजायाः शुद्धिमृच्छति॥७३॥**

मनशिलालाई बाख्रीको मूत्रमा हाली दोलायन्त्रमा तीन दिन राख्नू । अनि बाहिर निकाली ओखलीमा हाली बाख्रीको पित्तले सात पटक भिजाउनू (वा भिजाई पकाउनू) । मनशिला शुद्ध हुन्छ ।

हरिताल प्रशोधन विधि

**तालकं कणशः कृत्वा तच्चूर्णं काञ्जिके क्षिपेत् ।**
**दोलायन्त्रेण यामैकं ततः कूष्माण्डजैर्द्रवैः॥७४॥**
**तिलतैले पचेद्यामं यामञ्च त्रिफलाजलैः ।**
**एवं यन्त्रे चतुर्यामं पाच्यं शुद्ध्यति तालकम्॥७५॥**

हरितालालाई ससाना टुक्रा पारी कपडामा पोको पार्नू । यसपछि दोलायन्त्रमा एक प्रहरसम्म काँजीमा एक प्रहरसम्म, कुभिण्डोको रसमा एक प्रहरसम्म, तिलको तेलमा एक प्रहरसम्म र

त्रिफलाको काँढापानीमा एक प्रहरसम्म राख्नू । यसरी चार प्रहरसम्म दोलायन्त्रमा राखेपछि हरिताल शुद्ध हुन्छ ।

रसक (तुथो विशेष) प्रशोधन विधि

**नृमूत्रे वाऽथ गोमूत्रे (नरमूत्रैश्च गोमूत्रैः) सप्ताहं रसकं क्षिपेत् ।**
**दोलायन्त्रेण शुद्धिः स्यात्ततः कार्येषु योजयेत् ॥७६॥**

रसकलाई दोलायन्त्रमा गहुँतमा वा मानव मूत्रमा एक हप्ता राख्नाले शुद्ध हुन्छ । यसपछि यसलाई ओखतीमा प्रयोग गर्न हुन्छ ।

अभ्रख आदिको सत्व (सारतत्व) निकाल्ने विधि

**लाक्षामीनपयश्छागं टङ्कणं मृगशृङ्गकम् ।**
**पिण्याकं सर्षपाः शिग्रुगुञ्जोर्णागुडसैन्धवाः ॥७७॥**
**यवस्तिक्ता घृतं क्षौद्रं यथालाभं विचूर्णयेत् ।**
**एभिर्विमिश्रिताः सर्वे धातवो गाढवह्निना ॥७८॥**
**मूषाध्माताः प्रजायन्ते मुक्तसत्त्वा न संशयः ।**

लाहा, साना माछा, बाख्रीको दूध, सुहागा, हरिणको सिङ, पिना, सर्सिउँ, सैजनको गेडा, रातीगेडी, भेडाको ऊन, सक्खर, सिधे नुन, जौ, कटुकी, घिउ र महको धुलो बनाएर जुन कुराको सार तत्व निकाल्नू छ त्यसलाई पनि धुलो वा टुक्रा पारी यसले मोरेर गोली बनाउनू र कोइलाको रापमा पूर्ववत् तरिकाले पोल्नू । यसरी सार तत्व निकाल्न सकिन्छ ।

हिरा प्रशोधन विधि

**कुलत्थकोद्रवक्वाथैर्दोलायन्त्रे विपाचयेत् ॥७९॥**
**व्याघ्रीकन्दगतं वज्रं त्रिदिनं शुद्धिमृच्छति (तद्विशुध्यति) ।**

व्याघ्रीकन्द (ठूलो बिहीको जरा) लाई कुटेर लेप बनाई त्यसमा हिरा राखेर कपडामा पोको पारी दोलायन्त्रमा हाली गहतको काँढापानी तीन र  कोदोको काँढापानीमा तीन दिन दोलायन्त्रमा राख्नाले हिरा शुद्ध हुन्छ ।

हिरा प्रशोधन गर्ने दोश्रो विधि

**तप्तन्तप्तन्तु तद्वज्रं खरमूत्रे निषेचयेत् (खरमूत्रैर्निषेचयेत्) ॥८०॥**
**पुनस्तप्यं पुनः सेच्यमेवं कुर्यात्त्रिसप्तधा ।**

हिरालाई अग्निमा तताउँदै गधाको मूत्रमा डुबाउँदै एक्काईस पटक गर्नाले हिरा शुद्ध हुन्छ ।

हिराको भस्म बनाउने विधि

**मत्कुणैस्तालकं पिष्ट्वा यावद्भवति गोलकम् ॥८१॥**
**तद्गोले निहितं वज्रं तद्गोलं वह्निना धमेत् ।**

**सिञ्चयेदश्वमूत्रेण तद्गोले च क्षिपेत् पुनः ॥८२॥**
**रुद्ध्वा ध्मातं पुनः सेच्यमेवं कुर्यात्त्रिसप्तधा ।**
**एवञ्च म्रियते वज्रं चूर्णं सर्वत्र योजयेत् ॥८३॥**

उडुससँग हरिताल पिसी त्यसको बीचमा हिरा राखेर गोली बनाएर माटाको भस्म बनाउने भाँडामा राखी त्यसलाई अग्निको कडा रापमा पोल्नू । धेरै तातेपछि घोडाको मूतमा चोबल्नू । यही क्रम सातपटक गरेपछि हिराको उत्तम भस्म तयार हुन्छ । यो भस्मलाई सबै रोगमा प्रयोग गर्नू ।

हिराको भस्म बनाउने दोश्रो विधि

**हिङ्गुसैन्धवसंयुक्ते क्वाथे कौलत्थजे क्षिपेत् ।**
**तप्तन्तप्तं पुनर्वज्रं भूयाच्चूर्णं त्रिसप्तधा ॥८४॥**

हिङ, सिधेनुन र गहत मिसाई काँढापानी पकाएर त्यो काँढापानीमा हिरालाई तताउँदै चोपल्दै गर्दा पनि हिराको भस्म तयार हुन्छ ।

हिराको भस्म बनाउने तेश्रो विधि

**मण्डूकं कांस्यजे पात्रे निगृह्य स्थापयेत्सुधीः ।**
**स भीतो मूत्रयेत्तत्र तन्मूत्रे वज्रमावपेत् ॥८५॥**
**तप्तन्तप्तञ्च बहुधा वज्रस्यैवं मृतिर्भवेत् ।**

भ्यागुतोलाई काँसका भाँडामा राख्नू, जब त्यसले डराएर पिसाब गर्दछ तब त्यो पिसाबमा हिरालाई बेस्सरी तताउँदै चोपल्दै धेरै पटक गर्नाले पनि हिराभस्म तयार हुन्छ ।

वैक्रान्त प्रशोधन गर्ने र भस्म बनाउने विधि

**वैक्रान्तं वज्रवच्छोध्यं नीलं वा लोहितन्तथा ॥८६॥**
**हयमूत्रेण तत्सेच्यन्तप्तन्तप्तं द्विसप्तधा ।**
**ततस्तु मेषशृङ्ग्युक्त(मेषदुग्धस्य)पञ्चाङ्गे गोलके क्षिपेत् ॥८७॥**
**पुटेन्मूषापुटे रुद्ध्वा कुर्यादेवञ्च सप्तधा ।**
**वैक्रान्तं भस्मतां याति वज्रस्थाने नियोजयेत् ॥८८॥**

खानीबाट निकालिएको विकृत हिरा, नीलमणि वा पद्मरागलाई पनि हिरा जसरी नै प्रशोधन गर्नू । अनि त्यो वैक्रान्तमणिलाई तताई तताई घोडाको मूत्रमा चौध पटक डुबाउनू । अनि भेडाशृङ्गीका पाँचै अङ्ग कुटी लेप बनाएर त्यसमा त्यो मणिलाई राखी भस्म बनाउने भाँडा (घलुवा) मा हाली माटोले लेपी गजपुटमा पोल्नू । यसरी सात पटक पोलेपछि यो भस्म हुन्छ । हिराको भस्म नहुँदा यसको प्रयोग गर्नू ।

बाँकी अन्य रत्नको प्रशोधन गर्ने विधि

**स्वेदयेद्दोलिकायन्त्रे जयन्त्याः स्वरसेन च ।**
**मणिमुक्ताप्रबालानां यामैकं शोधनं भवेत् ॥८९॥**

मणि, मोति, मुगा आदिलाई दोलायन्त्रमा हाली अरणी वा जाईको रसमा एक प्रहर डुवाउनाले शुद्ध हुन्छन् ।

बाँकी अन्य रत्नको भस्म बनाउने विधि

कुमार्या तण्डुलीयेन स्तन्येन च निषेचयेत् ।
प्रत्येकं सप्तवेलञ्च तप्ततप्तानि कृत्स्नशः ॥९०॥
मौक्तिकानि प्रवालानि तथा रत्नान्यशेषतः ।
क्षणाद्विविधवर्णानि म्रियन्ते नात्र संशयः ॥९१॥
उक्तमाक्षिकवन्मुक्ताः प्रवालानि च मारयेत् ।
वज्रवत् सर्वरत्नानि शोधयेन् मारयेत्तथा ॥९२॥

घिउकुमारी, लुँडे र स्त्रीको दूध यी तीन रसमा मणि, मुगा आदि रत्नलाई तताउँदै सात पटक चोपल्नू । यसो गर्नाले तुरुन्त यी भस्म हुन्छन्, शङ्का गर्नै पर्दैन । अथवा सुनामक्खीको जसरी नै मोति र मुगाको भस्म बनाउनू । हिराको प्रशोधन गरी भस्म बनाए जसरी नै अरु रत्नको पनि प्रशोधन गर्नू र भस्म बनाउनू ।



शिलाजित प्रशोधन विधि

शिलाजतु समानीय ग्रीष्मतप्तशिलाच्च्युतम् ।
गोदुग्धैस्त्रिफलाक्वाथैर्भृङ्गद्रावैश्च मर्दयेत् ॥९३॥
आतपे दिनमेकैकं तच्छुष्कं शुद्धतां व्रजेत् ।

(ग्रीष्म ऋतुको प्रचण्ड गर्मीमा पहाडका ठूलठुला चट्टान धेरै ताती तिनको रस गलेर जम्दछ, यसैलाई शिलाजित भनिन्छ) । यस्तो शिलाजित लेराई गाईको दूधमा, त्रिफलाको काँढापानीमा तथा भृङ्गिराजको रसमा बेग्लाबेग्लै एक एक दिन ढड्याएर घाममा सुकाउनू, शिलाजित शुद्ध हुन्छ ।

### शिलाजित प्रशोधन गर्ने दोश्रो विधि

मुख्यां शिलाजतुशिलां सूक्ष्मखण्डप्रकल्पिताम् ॥९४॥
निक्षिप्यात्युष्णपानीये यामैकं स्थापयेत्सुधीः ।
मर्दयित्वा ततो नीरं गृह्णीयाद्वस्त्रगालितम् ॥९५॥
स्थापयित्वा च मृत्पात्रे धारयेदातपे बुधः ।
उपरिस्थं घनं यत्स्यात्तत्क्षिपेदन्यपात्रके ॥९६॥
धारयेदातपे धीमानुपरिस्थं घनन्नयेत् ।
एवं पुनः पुनर्नीत्वा द्विमासाभ्यां शिलाजतु ॥९७॥
भूयात्कार्यक्षमं वह्नौ क्षिप्तं लिङ्गोपमं भवेत् ।
निर्धूमञ्च ततः शुद्धं सर्वकर्मसु योजयेत् ॥९८॥
अधः स्थितञ्च यच्छेषं तस्मिन्नीरं विनिक्षिपेत् ।
विमर्द्य धारयेद्धर्मे पूर्ववच्चैव तन्नयेत् ॥९९॥



शिलाजित लागेका पत्थरलाई बटुली लेराएर टुक्रा पारी उम्लिरहेको तातो पानीमा हाली एक प्रहरसम्म हालेर भिकी भिजाउनू । यसपछि हातले माडेर त्यो पानी छान्नू र त्यो पानीलाई माटोको अर्को भाँडामा हाली घाममा सुकाउनू । जब यसमा तर पर्न थाल्दछ फेरी यही क्रमले माडी छानी अर्को माटाका भाँडामा हाल्दै जानू । यसरी दुई महिनासम्म गरेपछि बल्ल उत्तम तरिकाले शिलाजितको प्रशोधन हुन्छ । यसरी तयार भएको शुद्ध शिलाजित आगोमा हाल्दा धुवाँ रहित लिङ्गाकार बन्दछ । यस्तो शुद्ध शिलाजित सबै काममा प्रयोग गर्न दिनू ।

### फलामको कीट प्रशोधन गर्ने र भस्म बनाउने विधि

अक्षाङ्गारैर्धमेत्किट्टं लोहजन्तद्द्रवाञ्जलैः ।
सेचयेत्तप्ततप्तं तत् सप्तवारं पुनः पुनः ॥१००॥
चूर्णयित्वा ततः क्वाथैर्द्विगुणैस्त्रिफलाभवैः ।
आलोडय भर्जयेद्वह्नौ मण्डूरञ्जायते वरम् ॥१०१॥

बरोंका दाउराको गोलमा फलामको कीटलाई पोल्नू । जब रातो हुन्छ तब झिकेर गहुँतमा चोपल्नू । यसरी सात पटक गर्नू । अनि कीटलाई राम्ररी धुलो बनाई यसको दोब्बर त्रिफलाको काँढापानीमा हाली कुनै माटाको भाँडामा हाल्नू । त्यसको मुख राम्ररी बन्द गरी माटोले टाल्नू । यसपछि गजपुटमा पोल्नू । जब झिकेर सेलाउँदछ तब त्यो भाँडोबाट धुलो निकाल्नू, उत्तम मण्डूर तयार हुन्छ ।

क्षार (खार) बनाउने विधि

**क्षारवृक्षस्य काष्ठानि शुष्काण्यग्नौ प्रदीपयेत् ।**
**नीत्वा तद्भस्म मृत्पात्रे क्षिप्त्वा नीरे चतुर्गुणे ॥१०२॥**
**विमर्द्य धारयेद्रात्रौ प्रातरच्छजलन्नयेत् ।**
**तन्नीरं क्वाथयेद्वह्नौ यावत् सर्वं विशुष्यति ॥१०३॥**
**ततः पात्रात् समुल्लिख्य क्षारो ग्राह्यः सितप्रभः ।**
**चूर्णाभः प्रतिसार्यः स्यात् पेयः स्यात् क्वाथवत्स्थितः ॥१०४॥**
**इति क्षारद्वयं धीमान् युक्तकार्येषु योजयेत् ।**



खार बनाउने वृक्षका बोट पाँचै अङ्ग सहित लेराई सुकाएर डढाउनू । जब खरानी हुन्छ तब त्यो खरानीलाई कुनै माटाका भाँडामा हाली खरानीको चार गुना पानी हाली घोलेर राख्नू । यसरी एक रात राखेपछि भोलिपल्ट बिहान त्यो भाँडोका मास्तिरको निथारिएको पानी फलामको कराहीमा निथार्नू । अनि कराहीलाई आगोमा बसाली उमाल्दै पानी सुकाउनू । पानी सुकेपछि कराहीका चारैतिर सेतो रङ्का खारको धुलो टाँसिएर बसेको हुन्छ । यसलाई निकाल्नू । यस्तो क्षारलाई “प्रतिसार्य” भनिन्छ । यो खारलाई दम आदि रोगमा खान दिनू । काँढापानी जस्तो क्षारलाई “पेय” भनिन्छ । यस्तो क्षारलाई गुल्म आदि रोगमा खान दिनू । यसरी धुलो र तरल गरी क्षार दुई किसिमको हुन्छ ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां संहितायां चिकित्सास्थाने मध्यखण्डे धातुशोधनमारणं नामैकादशोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत एघारौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-१,३५२+१०४.५=१,४५६.५

✷

# अथ द्वादशोऽध्यायः

## बाह्रौँ अध्याय

### पारोको प्रशंसा

**पारदः सर्वरोगाणां जेता पुष्टिकरः स्मृतः ।**
**सुज्ञेन (सुदिने) साधितः कुर्यात् संसिद्धिं देहलोहयोः ॥१॥**

पारोले सबै रोगलाई जित्दछ र शरीरलाई पुष्ट बनाउँदछ । जान्ने मानिसले (असल दिनमा) तयार पारेको पारेको पारोले शरीरलाई र फलामलाई तुरुन्त सिद्ध गर्दछ ।

### पारोका पर्यायवाची नामहरू

**रसेन्द्रः पारदः सूतो हरजः सूतको रसः ।**
**मुकुन्दश्चेति (बुधैस्तस्येति) नामानि ज्ञेयानि रसकर्मसु ॥२॥**



रसायनका काममा रसेन्द्र, पारद, सूत, हरज, सूतक, रस र मुकुन्द शब्दले पारोलाई बुझाउने गर्दछ ।

### तामा आदि धातुका पर्यायवाची नामहरू

**ताम्रतारारनागाश्च हेमवङ्गौ च तीक्ष्णकम् ।**
**कांस्यकं कान्तलोहञ्च धातवो नव ये स्मृताः ॥३॥**
**सूर्यादीनां ग्रहाणान्ते कथिता नामभिः क्रमात् ।**

तामा, चाँदी (तार), पित्तल (आर), सिसा, सुन, राङ, स्टिल, काँस र कान्तलोह (?) यी नौ धातुका नाम सूर्य, चन्द्रमा, मङ्गल आदि नौ ग्रहका नामबाट क्रमशः चिनिन्छन् । अर्थात् रसायन शास्त्रमा सूर्यका नामले तामालाई बुझाउँदछ, आदि ।

पारो प्रशोधन विधि

राजी रसोनं मूषायां रसं क्षिप्त्वा विबन्धयेत् ।।४।।
वस्त्रेण दोलिकायन्त्रे स्वेदयेत्काञ्जिकैस्त्र्यहम् ।
दिनैकं मर्दयेत् सूतं कुमारीसम्भवैर्द्रवैः ।।५।।
तथा चित्रकजैः क्वाथैर्मर्दयेदेकवासरम् ।
काकमाचीरसैस्तद्वद् दिनमेकञ्च मर्दयेत् ।।६।।
त्रिफलायास्तथा क्वाथै रसो मर्द्यः प्रयत्नतः ।
ततस्तेभ्यः पृथक्कुर्यात्सूतं प्रक्षाल्य काञ्जिकैः ।।७।।
ततः क्षिप्त्वा रसं खल्वे रसादर्धञ्च सैन्धवम् ।
मर्दयेन्निम्बुकरसैर्दिनमेकमनारतम् ।।८।।
ततो राजी रसोनश्च मुख्यश्च नवसादरः ।
एतै रससमैस्तद्वत्सूतो मर्द्यस्तुषाम्बुना ।।९।।



ततः संशोध्य चक्राभं कृत्वा लिप्त्वा च हिङ्गुना ।
द्विस्थालीसम्पुटे धृत्वा पूरयेल्लवणेन च ।।१०।।
अधः स्थाल्यां ततो मुद्रां दद्याद् दृढरां बुधः ।
विशोष्याग्निं विधायाधो निषिञ्चेदम्बु चोपरि ।।११।।
ततस्तु कुर्यात्तीव्राग्निं तदधः प्रहरत्रयम् ।
एवं निपातयेदूर्ध्वं रसो दोषविवर्जितः ।।१२।।
अथोर्ध्वपिठरीमध्ये लग्नो ग्राह्यो रसोत्तमः ।

रायोका गेडा र लसुनलाई पिसी घरियामा हाल्नू । त्यसमा पारो हाली कपडामा पोको पार्नू । त्यसपछि काँजीमा चोबलेर दोलायन्त्रमा तीन दिनसम्म राख्नू । यसपछि पारोलाई निकाली ओखलीमा घिउकुमारी रसमा हाली एक दिनसम्म राख्नू । यसपछि चितूको बोक्राको काँढापानीमा र कवईको रसमा एक एक दिन डुबाएर राख्नू । यसपछि पुनः एकदिन त्रिफलाको रसमा डुबाएर राख्नू । यसपछि पारोलाई निकाली काँजीमा पखाल्नू । अनि पुनः ओखलीमा पारोको आधा सिधेनुन र कागतीको रस हाली त्यसमा पारो हालेर एक दिन राख्नू

। यसपछि पारोलाई निकालेर रायोका गेडा, लसुन र नौसादर पारो जति नै लिई धानको भुसको काँढापानीमा मिसाई घोल्नू । जब यो घोलन सुक्दछ तब ससाना गोली बनाउनू । गोलीलाई हिङले वरिपरि लिपी एउटा भाँडामा हाल्नू । यसमा नुन छर्केर अर्को भाँडाले छोप्नू । वरिपरि माटोले लेपी आगोमा पोल्नू । यसरी पोल्दा माथिबाट भिजाएको कपडा राखी फेरिरहनू । यसबाट छोपिएको भाँडो चिसो भइरहन्छ र जमेको पारो तल झर्न पाउँदैन । अथवा यो छोपिएको भाँडामा पानी छर्किरहनू । यसरी तीन प्रहरसम्म तताउनू । यसपछि निकाल्नू र सेलाएपछि भाँडामा लागेको पारो सरक्कसँग निकाल्नू । यो पारो अति नै शुद्ध र दोषरहीत हुन्छ ।

### गन्धक प्रशोधन विधि

**लोहपात्रे विनिक्षिप्य घृतमग्नौ प्रतापयेत् ॥१३॥**
**तप्ते घृते तत् समानं क्षिपेद्गन्धकजं रजः ।**
**विद्रुतं गन्धकं ज्ञात्वा दुग्धमध्ये विनिःक्षिपेत् ॥१४॥**
**एवं गन्धकशुद्धिः स्यात् सर्वकार्येषु योजयेत् ।**



फलामको भाँडामा घिउ हाली मन्द आँचमा तताउनू । त्यसपछि त्यहाँ घिउ जति नै गन्धकको धुलो हाल्नू । जब गन्धक पग्लेर रस बन्दछ तब एउटा दूधको भाँडोको मुखमा कपडा बाँधी त्यो गन्धकलाई खन्याउनू । जब सेलाउँदछ तब त्यो गन्धकलाई निकाल्नू । यो शुद्ध गन्धकलाई सबै (तोकिएका काममा प्रयोग गर्नू ।

### हिङबाट पारो निकाल्ने विधि

**निम्बूरसैर्निम्बपत्ररसैर्वा याममात्रकम् ॥१५॥**
**पिष्ट्वा दरदमूर्ध्वञ्च पातयेत् सूतयुक्तिवत् ।**
**ततः शुद्धरसं तस्मान्नीत्वा कार्येषु योजयेत् ॥१६॥**

कागतीको रसमा वा नीमका पातको रसमा हिङ हाली डमरु यन्त्रमा तताउनू । यसरी तताउँदा हिङको पारो माख्लो भाँडामा गएर टाँसिन्छ । त्यसलाई पखालेर पारो निकाल्नू । यो शुद्ध हुन्छ र तोकिएका सबै काममा प्रयोग गर्न हुन्छ ।

हिङ प्रशोधन गर्ने विधि

**मेषीक्षीरेण दरदमम्लवर्गैश्च भावितम् ।**
**सप्तवारं प्रयत्नेन शुद्धिमायाति निश्चितम् ॥१७॥**

हिङलाई भेडीको दूधमा सात पटक र कागती आदि अमिलो रसमा सात पटक भिजाउनाले शुद्ध हुन्छ ।

पारोलाई तेजस्वी बनाउने विधि

**कालकूटो वत्सनाभः शृङ्गकश्च प्रदीपकः ।**
**हालाहलो ब्रह्मपुत्रो हारिद्रः सक्तुकस्तथा ॥१८॥**
**सौराष्ट्रिक इति प्रोक्ता विषभेदा अमी नव ।**
**अर्कसेहुण्डधत्तूरलाङ्गलीकरवीरकम् ॥१९॥**



**गुञ्जाऽहिफेनावित्येताः सप्तोपविषजातयः ।**
**एतैर्विमर्दितः सूतश्छिन्नपक्षः प्रजायते ॥२०॥**
**मुखञ्च जायते तस्य धातूँश्च ग्रसते क्षणात् ।**

कालकूट, वत्सनाभ, शृङ्गक, प्रदीपक, हलाहल, ब्रह्मपुत्र, हारिद्र, सक्तुक र सौराष्ट्रिक यी नौ महाविष हुन् । आँक, सिउँडी, धतुरो, हलहले, करवीर वा कँडेल र रातीगेडी यी सात उपविष हुन् । यी सबै सोह्र विषमा पारोलाई पालैपालो सात सात दिनसम्म भिजाएर त्यसपछि पखाल्नाले पारो तेजस्वी हुन्छ र सुन आदि धातुलाई पचाउँदछ ।

व्याख्याः

(क) कालकूट : यो सेतो रङको हुन्छ र यसमा राता राता थोप्ला धेरै हुन्छन् । यो हिलोजस्तै नरम हुन्छ । भनिन्छ कि यो विष देवता र दानवका बीचमा युद्ध हुँदा मालि नाम गरिएको दैत्यको रगतबाट उत्पन्न भएको थियो । यसको रूख पीपलको जस्तै हुन्छ र यसको चोप आउँदछ ।

(ख) वत्सनाभ : यसका पात नेवारीका जस्तै हुन्छन् । स्वरूप नागको जस्तै हुन्छ । यसका वरिपरि रुख, घाँस आदि बढ्दैनन् ।

(ग) शृङ्गक : यसका गाईका सिङ जस्तै दुई भाग हुन्छन् । यो विषलाई गाईको सिङमा बाँधे गाईले रगत जस्तै रातो दूध दिन थाल्दछ । यसका पात अदुवाका जस्तै हुन्छन् । यो नदीका किनारका हिलो भागमा यो विष पाइने गर्दछ ।

(घ) प्रदीपक : रातो आगोको फिलिङ्गो जस्तै चमकिलो हुन्छ । पात खजूरका जस्ता हुन्छन् । यो सुँघे मानिस शरीर भतभती पोली तुरुन्त मर्दछ । यो समुद्रका किनारमा प्रशस्त हुन्छ ।

(ङ) हलाहल : यसका पात ताडका पात जस्तै तर नीला रङका हुन्छन् । यसका फल गाईको थुनजस्ता र सेता हुन्छन् । यसको कन्द पनि गाईको थुनजस्तै हुन्छ । यसका वरिपरि रुख हुँदैनन् । यसको बास्ना सुँघे मानिस तुरुन्त मर्दछ ।

(च) ब्रह्मपुत्र : यो ब्रह्मपुत्र नदीका किनारमा धेरै पाइन्छ । यसका पात र फल पलाँशका जस्ता हुन्छन् । यसको कन्द ठूलो र पहेँलो हुन्छ । यो विष रोग नाश गर्न र रसायन कर्मका लागि अति उपयोगी हुन्छ ।

(छ) हारिद्र : यो हलेदोको खेती गरिएका स्थानमा उम्रन्छ । पात र कन्द हलेदोको जस्तै हुन्छन् ।



(ज) सक्तुक : यसको आकार जौको जस्तै हुन्छ । भित्र सेतो हुन्छ ।

(झ) सौराष्ट्रिक : गुजराततिर पाइने यो विषको कन्द कछुवाको टाउको जस्तै मोटो र कालो हुन्छ । यसका पात पलाँशका जस्ता हुन्छन् ।

पारोलाई तेजस्वी बनाउने दोश्रो विधि

**अथवा त्रिकटु(कटुक)क्षारौ राजी लवणपञ्चकम् ॥२१॥**
**रसोनो नवसारश्च शिग्रुश्चैकत्र चूर्णितैः ।**
**समांशैः पारदादेतैर्जम्बीरेण द्रवेण वा ॥२२॥**
**निम्बुतोयैः काञ्जिकैर्वा सोष्णखल्वे विमर्दयेत् ।**
**अहोरात्रत्रयेण स्याद्रसे धातुचरं मुखम् ॥२३॥**

सुठो, कालोमरिच, पिप्ला, जवाखार, सज्जिखार, रायो, पाँच थरी नुन, लसुन, नौसादर र सैजनको बोक्रा समान मात्रामा लिई धुलो बनाएर त्यस बराबरको पारो लिई ज्यामिर वा कागतीको रसमा वा काँजीमा मिसाएर तातो खलमा माडी तीन दिन तीन रात राख्नाले पनि सुन आदि धातुलाई भस्म पार्नसक्ने पारो तयार हुन्छ ।

पारोलाई तेजस्वी बनाउने तेश्रो विधि

अथवा बिन्दुलीकीटै रसो मर्द्यस्त्रिवासरम् ।
लवणाम्लैर्मुखं तस्य जायते धातुघस्मरम् ॥२४॥

वीरबहुटी नामक कीरा (?)सँग पारोलाई तीन दिन खलमा मिसाएर राखी अनि कागतीको रस र सिधेनुनमा हाली सफा गर्नाले पनि पारो तेजिलो हुन्छ ।

कच्छपयन्त्र मार्फत पारो तेजिलो बनाउने विधि

अथ कच्छपयन्त्रेण गन्धजारणमुच्यते ।

मृत्कुण्डे निक्षिपेन्नीरं तन्मध्ये च शरावकम् ॥२५॥
महत्कुण्डपिधानाभं मध्ये मेखलया युतम् ।
लिप्त्वा च मेखलामध्यं चूर्णेनात्र रसं क्षिपेत् ॥२६॥
रसस्योपरि गन्धस्य रजो दद्यात्समांशकम् ।
दत्त्वोपरि शरावञ्च भस्ममुद्रां प्रदापयेत् ॥२७॥
तस्योपरि पुटं दद्याच्चतुर्भिर्गोमयोपलैः ।
एवं पुनः पुनर्गन्धं षड्गुणं जारयेद् बुधः ॥२८॥
गन्धे जीर्णे भवेत्सूतस्तीक्ष्णाग्निः सर्वकर्मकृत् ।

अब कच्छप यन्त्रबाट पारो तेजिलो बनाउने विधि बताइन्छ । एउटा खाल्डो जत्रै अग्लो मुख भएको माटाको भाँडामा पानी भरी मुख टम्म मिल्ने गरी बिर्को लिनू । त्यसलाई पानी नपर्ने गरी छुट्टै राख्नू । यसमा माटाको एक अमल अग्लो खाल्टो बनाउनू र त्यसमा चुन हालेर पारो भर्नू । अनि पारो जति नै गन्धकको धुलो त्यसमा मिसाउनू । अनि माटोको अर्को

बिर्कोले त्यसलाई छोपी नुन मिसिएको खरानीले राम्ररी लिप्नू । त्यसमाथि गुइँठा बालेर पोल्नू । यसरी छ पटक गर्नाले पारो अग्नि समान तेजिलो भई सबै काम गर्ने बन्दछ ।

**पारोको भस्म बनाउने विधि**

धूमसारं रसं तोरीं गन्धकं नवसादरम् ॥२९॥
यामैकं मर्दयेदम्लैर्भागं कृत्वा समांशकम् ।
काचकूप्यां विनिक्षिप्य ताञ्च मृद्वस्त्रमुद्रिताम् (मुद्रया) ॥३०॥
विलिप्य परितो वक्त्रं(क्त्रे) मुद्रां दत्त्वा च शोषयेत् ।
अधः सच्छिद्र पिठरीमध्ये कूपीं निवेशयेत् ॥३१॥
पिठरीं वालुकापूरैर्भृत्वा चाकूपिकागलम् ।
निवेश्य चुल्ल्यां तदधः कुर्याद्वह्निं शनैः शनैः ॥३२॥
तस्मादप्यधिकं किञ्चित् पावकं ज्वालयेत् क्रमात् ।
एवं द्वादशभिर्यामैर्म्रियते सूतकोत्तमः ॥३३॥

स्फोटयेत्स्वाङ्गशीतञ्च ऊर्ध्वगं गन्धकं त्यजेत् ।
अधःस्थं मृतसूतञ्च सर्वकर्मसु योजयेत् ॥३४॥

घरभित्रको ध्वाँसो, पारो, फिटकिरी, गन्धक, नौसादर बराबर मात्रामा लिई कागतीको रसमा भिजाएर एक प्रहर राखी अनि सिसिमा भरेर माटोले मुख बन्द गरी घाममा सुकाउनू । मुखलाई बल गरेर बन्द गर्नू । अनि माटाको एउटा ठूलो भाँडाको पिँधमा प्वाल पार्नू त्यो प्वालमाथि एउटा माटोको खबटो राख्नू । त्यसमाथि त्यो पारो हालिएको सिसि राख्नू । अनि सिसिको मुखसम्म आउने गरी बालुवा भर्नू । सिसिको मुख खाली राख्नू । यसलाई बालुकायन्त्र भनिन्छ । यसलाई अगेनामा बसाली पहिले मन्द त्यसपछि मध्यम र अन्तिममा तेज रापले तताउनू । यसरी बाह्र प्रहरसम्म तताएपछि झिक्नू । सेलाएपछि सिसिलाई झिकी साबधानीपूर्वक फोर्नू । त्यसको मुखमा लागेको गन्धक हटाई त्यसमुनि रहेको पारो निकाली प्रयोगमा लेराउनू ।

पारोको भस्म बनाउने दोश्रो विधि

अपामार्गस्य बीजानां मूषायुग्मं प्रकल्पयेत् ।
तत् सम्पुटे न्यसेत् सूतं मलयूदुग्धमिश्रितम् ॥३५॥
द्रोणपुष्पीप्रसूनानि विडङ्गान्यरिमेदकः ।
एतच्चूर्णमधोर्ध्वञ्च दत्त्वा मुद्रां प्रदीयताम् ॥३६॥
तं गोलं सन्धयेत् सम्यङ्मृण्मूषासम्पुटे सुधीः ।
मुद्रां दत्त्वा शोधयित्वा ततो गजपुटे पचेत् ॥३७॥
एवमेकपुटेनैव जायते भस्म सूतकम् ।

दतिवनका गेडालाई राम्ररी पिँधी दुई वटा घरियामा हाल्नू । अनि गुम्पातीका फूल, वायुविडङ्ग र खयरको बोक्रा मिसाई कुटेर धुलो बनाई आधा धुलो एउटा घरियामा हाल्नू । त्यसमाथि काठे डुम्री हाली दूधसँग माडिएको पारो राख्नू । यसपछि बाँकी आधा धूलो हाल्नू । यसपछि यसको मुख अर्को घरियाले बन्द गरी माटोले मुख टाल्नू । यसलाई वरिपरि लिपेर डल्लो जस्तो बनाई गजपुटको आगोमा पोल्नू । एकै पोलाइमा पारद भस्म तयार हुन्छ ।



पारोको भस्म बनाउने तेश्रो विधि

काकोदुम्बरिकादुग्धै रसं किञ्चिद्विमर्दयेत् ॥३८॥
तद्दुग्धघृष्टहिङ्गोश्च मूषायुग्मं प्रकल्पयेत् ।
क्षिप्त्वा तत्सम्पुटे सूतन्तत्र मुद्रां प्रदापयेत् ॥३९॥
धृत्वा तं गोलकं प्राज्ञो मृण्मूषासम्पुटेऽधिके ।
पचेन्मृदुपुटेनैव सूतको याति भस्मताम् ॥४०॥

खोस्रेटोको दूधमा पारोलाई केही बेर भिजाउनू । अनि दूधमा हिङ घोटी पारोलाई राख्नू । दुईवटा घरिया बनाउनू । एउटा घरियामा पारोलाई राखी अर्को घरियाले मुख बन्द गरेर माटोले टाली डल्लो जस्तो बनाउनू । यो गोलोलाई माटाको भाँडामा राखी हल्का माटोले लेपी केहीबेर हल्का आँचमा तताउनू । पारो भस्म तयार हुन्छ ।

पारोको भस्म बनाउने चौथो विधि

**नागवल्लीरसैर्घृष्ट(ष्ठ)ः कर्कोटीकन्दगर्भितः ।**
**मृण्मूषासम्पुटे पक्त्वा सूतो यात्येव भस्मताम् ॥४१॥**

पानको रसमा पारोलाई घोलेर वनतोरियाँको फलमा पारोलाई राख्नू । अनि यसको मुख वनतोरियाकै टुक्राले बन्द गर्नू । वरिपरि माटो दलेर बन्द गर्नू । घाममा सुकाई माटाका भाँडामा हाली माटोले लिपेर आरनमा मन्द आँचमा पोल्नू । प्रयोग गर्न मिल्ने गरी उत्तम पारोभस्म तयार हुन्छ ।

ज्वराङ्कुश रस

**खण्डितं मृगशृङ्गञ्च ज्वालामुख्या रसैः समम् ।**
**रुद्ध्वा भाण्डे पचेच्चुल्ल्यां यामयुग्मं ततो नयेत् ॥४२॥**
**अष्टांशं त्रिकटुं दद्यान्निष्कमात्रञ्च भक्षयेत् ।**

**नागवल्ल्यारसैः सार्धं वातपित्तज्वरापहम् ॥४३॥**
**अयं ज्वराङ्कुशो नाम रसः सर्वज्वरापहः ।**
**एकाहिकं द्व्याहिकञ्च त्र्याहिकं वा न संशयः ॥४४॥**

हरिणको सिङलाई राम्ररी टुक्रा पारी एउटा भाँडामा राख्नू । यसमा ज्वालामुखी (?) को रस हालेर मुख बन्द गरी माटोले लिप्नू । यसलाई दुई प्रहरसम्म आगोमा बसालेर तताउनू । जब सेलाउँदछ तब ती टुक्राको खरानीलाई बाहिर निकाली खरानीको आठ भागको एक भाग सुठो, मरिच र पिप्लाको धुलो मिसाउनू । यसलाई अन्दाजी चार मास जति अनुपानसँग मिसाएर खानू । यसलाई ज्वरांकुश भनिन्छ । यसले सबै खालका जरो नाश गर्दछ ।

ज्वरारि रस

**पारदं रसकं तालं तुत्थं टङ्कणगन्धकैः(के) ।**
**सर्वमेतत् समं शुद्धं कारवेल्ल्या रसैर्दिनम् ॥४५॥**
**मर्दयेल्लेपयेत्तेन ताम्रपात्रोदरं भिषक् ।**

अङ्गुल्यर्धप्रमाणेन ततो रुद्ध्वा च तन्मुखम् ।।४६।।
पचेत्तं वालुकायन्त्रे क्षिप्त्वा धान्यानि तन्मुखे ।
यदा स्फुटन्ति धान्यानि तदा सिद्धं विनिर्दिशेत् ।।४७।।
ततो नयेत् स्वाङ्गशीतं ताम्रपात्रोदराद्भिषक् ।
रसं ज्वरारिनामानं विचूर्ण्य मरिचैः समम् ।।४८।।
माषैकं पर्णखण्डेन भक्षयेन्नाशयेज्ज्वरम् ।
त्रिदिनैर्विषमं तीव्रमेकद्वित्रिचतुर्थकम् ।।४९।।

पारो, फिटकिरी (?), हरिताल, नीलोतुथो, सुहागा र गन्धक प्रशोधन गरी बराबर मात्रामा लिनू । सबैलाई खलमा हाली करेलोको पातका रसमा एक दिनसम्म राख्नू । यसपछि तामाको बट्टामा आधा अमल लेप दली यो रस हाली बिर्को लगाएर बालुकायन्त्रमा हाली पोल्नू र भाँडाको मुखमा धान राख्नू । जब धान पुरै लाजा बन्दछ तब ओखती तयार भो भनी जान्नू । अनि आगो बन्द गरी सेलाएपछि बाहिर निकाल्नू र बट्टाबाट ओखती झिक्नू । यसलाई ज्वरारि रस भनिन्छ । यसमा बराबर मात्रामा कालोमरिच मिसाउनू । यो ओखती एक मासा पानमा राखेर तीन दिनसम्म दिनहुँ खानाले एकदिने, दुईदिने, दिनदिने र चारदिने तथा कडा खालका जरो पनि ठिक गर्दछ ।



शीतज्वरारि रस

तालकं तुत्थकं ताम्रं रसं गन्धं मनःशिलाम् ।
कर्षं कर्षं प्रयोक्तव्यं मर्दयेत् त्रिफलाऽम्बुभिः ।।५०।।
गोलं न्यसेत् सम्पुटके पुटं दद्यात् प्रयत्नतः ।
ततो नीत्वाऽर्कदुग्धेन वज्रीदुग्धेन सप्तधा ।।५१।।
क्वाथेन दन्त्याः श्यामायाः भावयेत् सप्तधा पुनः ।
माषमात्रं रसं दिव्यं पञ्चाशन्मरिचैर्युतम् ।।५२।।
गुडं गद्याणकञ्चैव तुलसीदलयुग्मकम् ।
भक्षयेत् त्रिदिनं भक्त्या शीतारिर्दुर्लभः परः ।।५३।।

**पथ्यं दुग्धौदनं देयं विषमं शीतपूर्वकम् ।**
**दाहपूर्वं हरत्याशु तृतीयकचतुर्थकौ ॥५४॥**
**द्व्याहिकं सततञ्चैव वैवर्ण्यञ्च नियच्छति ।**

हरिताल, नीलोतुथो, ताम्रभस्म, पारो, गन्धक र मैनशिला सबै एक एक कर्ष लिई त्रिफलाको काँढापानीमा भिजाएर गोली बनाउनू । माटाका भाँडामा यिनलाई राखेर घाममा सुकाउनू । अनि आरनमा गजपुट गर्नू । सेलाएपछि बाहिर निकाल्नू । अनि पुनः खलमा हाली आँकको दूधले सात पटक भिजाउनू । यसपछि एक एक मासाको गोली बनाउनू । पचास वटा मरिच, छ मासा सक्खर र तुलसीका दुई वटा पात जम्मा पारी त्योसँग क्षमता अनुसार तीन दिनसम्म खाने गरेमा तथा दूधभात जस्ता पथ्य खाना खाएमा शीत-विषमज्वर, डाह गर्ने जरो, तीन दिने जरो, चार दिने जरो, रातमा दुई पटक आउने जरो, एक नाससँग आइरहने जरो र विलक्षण जरो सबै नाश हुन्छन् ।

ज्वरघ्नी गुटिका



**भागैकः स्याद्रसाच्छुद्धादेलायाः(दैलेयः) पिप्पली शिवा ॥५५॥ आकारकरभो**
**गन्धः कटुतैलेन शोधितः ।**
**फलानि चेन्द्रवारुण्याश्चतुर्भागमिता ह्य(अ)मी ॥५६॥**
**एकत्र मर्दयेच्चूर्णमिन्द्रवारुणिकारसे(सैः) ।**
**माषोन्मितां गुटीं कृत्वा दद्यात् सर्वज्वरे बुधः ॥५७॥**
**छिन्नारसानुपानेन ज्वरघ्नी गुटिका मता ।**

प्रशोधित पारो एक भाग तथा अलैंची, पिप्ला, हर्रो, अकरकरा, सर्सिउँको तेलमा प्रशोधन गरिएको गन्धक र ऐरेलु चार चार भाग लिई सबैको धुलो बनाएर खलमा पिसी ऐरेलुको रसमा मिसाएर एक एक मासाको गोली बनाउनू । यो एक गोली गुर्जोको रससँग खाने गर्नाले सबै खालको जरो नाश हुन्छ ।

### लोकनाथ रस

शुद्धो बुभुक्षितः सूतो भागद्वयमितो भवेत् ॥५८॥
तथा गन्धस्य भागौ द्वौ कुर्यात्कज्जलिकां तयोः ।
सूताच्चतुर्गुणेष्वेव कपर्देषु विनिक्षिपेत् ॥५९॥
भागैकं टङ्कणं दत्त्वा गोक्षीरेण विमर्दयेत् ।
तथा शङ्खस्य खण्डानां भागानष्टौ प्रकल्पयेत् ॥६०॥
क्षिपेत् सर्वं पुटस्यान्तश्चूर्णलिप्तशरावयोः ।
गर्ते हस्तोन्मिते धृत्वा पुटेद्गजपुटेन च ॥६१॥
स्वाङ्गशीतं समुद्धृत्य पिष्ट्वा तत् सर्वमेकतः ।
षड्गुञ्जासम्मितं चूर्णमेकोनत्रिंशदूषणैः ॥६२॥

शुद्ध र तेजिलो बनाइएको पारो दुई भाग तथा प्रशोधित गन्धक दुई भाग लिई मिसाएर त्यसमा पारोको चौबर कौडीमा भर्नू । अनि सुहागा एक भाग लिएर गाईको दूधमा घोटी लेप बनाएर त्यो कौडीको मुख बन्द गर्नू । शङ्खका टुक्रा आठ भाग लिई माटाका दुईवटा भाँडामध्ये एउटालाई चूनले लिपी त्यसमा त्यो शङ्खको धुलो आधा हाल्नू । त्यसमाथि कौडी राखी बाँकी शङ्खको धुलो हाल्नू । यसलाई अर्को माटाको भाँडाले छोपी वरिपरि माटोले लेपेर मुख टाल्नू । यसपछि गजपुटमा पोल्नू । सेलाएपछि बाहिर झिकी त्यसबाट ओखती निकाल्नू । यसलाई खलमा हाल्नू । यो रसलाई लोकनाथ रस भनिन्छ ।



### लोकनाथ रससँग मिसाएर खाने कुरा

घृतेन वातजे दद्यान्नवनीतेन पित्तजे ।
क्षौद्रेण श्लेष्मजे दद्यादतीसारे क्षये तथा ॥६३॥
अरुचौ ग्रहणीरोगे कार्श्ये मन्दानले तथा ।
कासश्वासेषु गुल्मेषु लोकनाथरसो हितः ॥६४॥

उनन्तीस वटा कालो मरिचको धुलोसँग छ रत्ति यो रस घिउसँग मिसाई खाने गर्नाले वातजन्य रोगहरू नाश हुन्छन् । पित्तजन्य रोगमा नौनीसँग खानू । कफजन्य रोगमा

महसँग खानू । यो रस खानाले अतिसार, क्षयरोग, अरुची, ग्रहणी, दुब्लोपना, मन्दाग्नि, खोकी, दम र गुल्म निको हुन्छ ।

लोकनाथ रस खाने तरिका

**तस्योपरि घृतान्नञ्च भुञ्जीत कवलत्रयम् ।**
**मञ्चे क्षणैकमुत्तानः शयीतानुपधानके ॥६५॥**

मात्रा अनुसार यो ओखती खाएपछि तीन गाँस घिउभात खानु पर्दछ । अनि डस्ना आदि नओछ्याइएको खाटमा एक छिन उत्तानो परेर सिधा सुत्नू ।

लोकनाथ रस खाएपछि खान पिउन योग्य कुरा

**अनम्लमन्नं सघृतं भुञ्जीत मधुरं दधि ।**
**प्रायेण जाङ्गलं मांसं प्रदेयं घृतपाचितम् ॥६६॥**
**सुदुग्धभक्तं दद्याच्च जातेऽग्नौ सान्ध्यभोजने । सघृतान्मुद्गवटकान्व्यञ्जनेष्वेव चारयेत् ॥६७॥**

अमिलो नखानू र घिउसँग भोजन गर्नू ।  उत्तम र मिठो घिउ पिउने गर्नू । मृग आदि जङ्गली जनावरको मासु घिउमा तारेर खाने गर्नू । साँझमा भोक लागे दूधभात एवं घिउमा तारिएका मुगीका बारा खानू ।

लोकनाथ रस खाएपछि गरिने मालिश र स्नान

**तिलामलककल्केन स्नापयेत् सर्पिषाऽथवा ।**
**अभ्यञ्जयेत् सर्पिषा च स्नानं कोष्णोदकेन च ॥६८॥**

तिल र अमला पिसी शरीरमा मालिश गर्नू वा घिउले मालिश गर्नू । नुहाउन मनतातो पानीको प्रयोग गर्नू ।

### लोकनाथ रस खाँदा बार्नुपर्ने कुरा

**क्वचित्तैलं न गृह्णीयान्न बिल्वं कारवेल्लकम् ।**
**वार्ताकं शफरीं चिञ्चां त्यजेद्व्यायाममैथुने ॥६९॥**
**मद्यं सन्धानकं हिङ्गु शुण्ठीं माषान्मसूरकान् ।**
**कूष्माण्डं राजिकां कोपं(लं) काञ्जिकञ्चैव वर्जयेत् ॥७०॥**
**त्यजेदयुक्तनिद्राञ्च कांस्यपात्रे च भोजनम् ।**
**ककारादियुतं सर्वं त्यजेच्छाकफलादिकम् ॥७१॥**
**पथ्योऽयं लोकनाथेऽस्तु शुभनक्षत्रवासरे ।**

तेलको प्रयोग नगर्नू । बेलको फल, करेलो, भण्टा, ससाना माछा, अमिली, परिश्रम, ग्राम्यधर्म, मदिरा सेवन, सँधिएका कुरा खानपिन गर्न, हिङ, सुठो, माष, मसुरो, कुभिण्डो, रायो, रिसाउने काम र काँजी यो अवधिमा निषेध गर्नू । दिउस नसुत्नू । काँसका भाँडामा नखानू । क अक्षरबाट शुरु हुने तरकारी, फलफूल आदि नखानू । यसरी नियममा बसी शुभ नक्षत्र र बारमा सेवन गर्नाले लोकनाथ रस पथ्य हुन्छ ।



### लोकनाथ रस खाने साइत

**पूर्णातिथौ सिते पक्षे जाते चन्द्र बले तथा ॥७२॥**
**पूजयित्वा लोकनाथं कुमारीं भोजयेत् ततः ।**
**दानं दत्त्वा द्विघटिकामध्ये ग्राह्यो रसोत्तमः ॥७३॥**

पञ्चमी, दशमी, पूर्णिमा, शुक्लपक्षमा चन्द्रमाको बल हेरी रसलाई पूजा गरी कुमारी केटीहरूलाई भोजन गराएर, यथाशक्य दान दिई लोकनाथ रस पिउने गर्नू ।

### लोकनाथ रसले गर्ने असर हटाउने उपाय

**रसाच्चेज्जायते तापस्तदा शर्करया युतम् ।**
**सत्त्वं गुडूच्या गृह्णीयाद्वंशरोचनया युतम् ॥७४॥**

**खर्जूरं दाडिमं द्राक्षामिक्षुखण्डानि दाप(चार)येत् ।**

यो रस पिएपछि दुई घडीसम्म शरीरमा डाह हुन्छ यसलाई शान्त पार्न मिस्री, गुर्जोको काँढापानी र व.शलोचन मिसाएर पिउनु पर्दछ । छोकडा, दारिम, अङ्गुर र उखुका गिँड अलिअलि खाए पनि यसले गर्ने डाह र अरुची नाश हुन्छ ।

रोग अनुसार लोकनाथ रस खाने विधि

**अरुचौ निस्तुषं धान्यं घृतभृष्टं सशर्करम् ॥७५॥**
**दद्यात्तथा ज्वरे धान्यगुडूचीक्वाथमाहरेत् ।**
**उशीरवासकक्वाथं दद्यात् समधुशर्करम् ॥७६॥**
**रक्तपित्ते कफे श्वासे कासे च स्वरसङ्क्षये ।**
**अग्निभृष्टजयाचूर्णं मधुना निशि दीयते ॥७७॥**
**निद्रानाशेऽतिसारे च ग्रहण्यां मन्दपावके ।**
**सौवर्चलाभयाकृष्णाचूर्णमुष्णोदकैः पिबेत् ॥७८॥**
**शूलेऽजीर्णे तथा कृष्णा मधुयुक्ता ज्वरे हिता ।**
**प्लीहोदरे वातरक्ते छर्द्यांञ्चैव गुदाङ्कुरे ॥७९॥**
**नासिकादिषु रक्तेषु रसं दाडिमपुष्पजम् ।**
**दूर्वायाः स्वरसं नस्ये प्रदद्याच्छर्करायुतम् ॥८०॥**
**मधुना लेहयेच्छर्दिहिक्काकोपस्य शान्तये ।**
**विधिरेष प्रयोज्यस्तु सर्वस्मिन्पोटलीरसे ॥८१॥**
**मृगाङ्के हेमगर्भे च मौक्तिकाख्ये रसे(परे)षु च ।**
**इत्ययं लोकनाथाख्यो रसः सर्वरुजो जयेत् ॥८२॥**

धनियालाई कुटी त्यसका भुस फालेर घिउमा भुटी मिस्रीसँग यो रस खानाले जरो नाश हुन्छ । धनिया र गुर्जो मिसाई काँढापानी पकाएर त्योसँग यो रस खानाले पनि जरो ठिक हुन्छ । खस र असुरोको काँढापानीमा मह र मिस्री मिसाई त्योसँग यो रस खानाले रक्तपित्त,

कफरोग, दम, खोकी र स्वर-समस्या ठिक हुन्छ । अलिकति भाङ्का गेडा भुटी धुलो बनाएर मह समेत यो रसमा मिसाएर रातमा खानाले निद्रा नलाग्ने, अतिसार, ग्रहणी र मन्दाग्नि रोग नाश हुन्छन् । सौवर्चल (कालो) नुन, हर्रो र पिप्लाको धुलो यो रसमा मिसाएर तातोपानीसँग खानाले शूल र अजीर्ण ठिक गर्दछ । पिप्ला र महसँग यो रस खानाले जरोमा फाइदा गर्दछ । फियोका रोग, वातरक्त, वाकवाकी र अल्काई ठिक गर्दछ । नाक आदिबाट रगत बहने रोगमा यसलाई दारिमको फूलको रससँग खानू । कोलमज्जा कणा बर्हिपक्षभस्म सशर्करम् । दुबोको रसमा मिस्री मिसाएर लोकनाथ रस नाकमा हाल्नाले वा नस लिनाले पनि नाकबाट रगत बहन बन्द हुन्छ । बयरको गुदी, पिप्ला र  मयुरको प्वाँखको खरानीमा मह मिसाएर त्यससँग यो रस खानाले वाकवाकी र बाडुली शान्त हुन्छ । यसै गरी सबैखालका पोको पारेर बनाइने मृगाङ्क रस, हेमगर्भ रस र मौक्तिकाख्य रसमा पनि यही विधि गर्नु पर्दछ । यसरी सबै रोग नाश गर्ने लोकनाथ रसका बारेमा बताइयो ।

लघुलोकनाथ रस

(वराटभस्म मण्डूरञ्चूर्णयित्वा घृते पचेत् ।
तत्समं मारिचञ्चूर्णं नागवल्ल्यां विभावितम् ॥८३॥
तच्चूर्णं मधुना लेह्यमथवा नवनीतकैः ।
माषमात्रं क्षयं हन्ति यामे यामे च भक्षितम् ॥८४॥
लोकनाथरसो ह्येष मण्डलाद्राजयक्ष्मनुत् । : प्रक्षिप्त श्लोक)

कौडीभस्म एक भाग र फलामको किटभस्म एक भागलाई मिसाएर घिउमा भुट्नू । अनि यसमा दुई भाग कालो मरिचको धुलो मिसाई पानको रसमा भिजाएर राख्नू । यसलाई लघु लोकनाथ रस भनिन्छ । यो रसलाई महसँग वा नौनीसँग एक एक प्हरको फरकमा एक एक मासा खानाले सामान्य खालको क्षयरोग नाश हुन्छ । यसैगरी एक मण्डल (चालीस दिन) सम्म खानाले कडा खालको क्षयरोग पनि नाश हुन्छ ।

क्षयरोग आदिमा मृगाङ्कपोट्टली रस

भूर्जवत्तनुपत्राणि हेम्नः सूक्ष्माणि कारयेत् ॥८५॥

तुल्यानि तानि सूतेन खल्वे क्षिप्त्वा विमर्दयेत् ।
काञ्चनाररसेनैव ज्वालामुख्या रसेन वा ॥८६॥
लाङ्गल्या वा रसैस्तावद्यावद्भवति पिष्टिका ।
ततो हेम्नश्चतुर्थांशं टङ्कणन्तत्र निक्षिपेत् ॥८७॥
पिष्टमौक्तिकचूर्णञ्च हेमद्विगुणमावपेत् ।
तेषु सर्वसमं गन्धं क्षिप्त्वा चैकत्र मर्दयेत् ॥८८॥
तेषां कृत्वा ततो गोलवासोभिः परिवेष्टयेत् ।
पश्चान्मृदा वेष्टयित्वा शोषयित्वा च धारयेत् ॥८९॥
शरावसम्पुटस्यान्ते तत्र (स्यान्तस्तत्र) मुद्रां प्रदापयेत् ।
लवणापूरिते भाण्डे धारयेत्तञ्च सम्पुटम् ॥९०॥
मुद्रां दत्त्वा शोषयित्वा बहुभिर्गोमयैः पुटेत् ।
ततः शीते समाहृत्य गन्धं सूतसमं क्षिपेत् ॥९१॥
घृष्ट्वा च पूर्ववत्खल्वे पुटेद्गजपुटेन च ।
स्वाङ्गशीतं ततो नीत्वा गुञ्जायुग्मं प्रयोजयेत् ॥९२॥
अष्टभिर्मरिचैर्युक्तः कृष्णात्रययुतोऽथवा ।
विलोक्य देयो दोषादीनेकैका रसरक्तिका ॥९३॥
सर्पिषा मधुना वाऽपि दद्याद्दोषाद्यपेक्षया ।
लोकनाथसमं पथ्यं कुर्यात् स्वस्थमनाः शुचिः ॥९४॥
श्लेष्माणं ग्रहणीं कासं श्वासं क्षयमरोचकम् ।
मृगाङ्कोऽयं रसो हन्यात्कृशत्वं बलहीनताम् ॥९५॥

सुनका भोजपत्र जस्ता पातला पाता बनाएर त्यत्ति नै शुद्ध पारो लिई दुवैलाई मिसाई कोइरालो वा ज्वालामुखी (जयन्ती) को  वा हलहलेको रसमा हाली जबसम्म मिहीन पिठोजस्तो हुँदैन तबसम्म खलमा हाली कुट्नू पिस्नू । यसमा सुनको एक चौथाई सुहागा र सुनको दोब्बर मोतिको धुलो मिसाउनू । जति हुन्छ त्यति गन्धक हाल्नू । सबैलाई राम्ररी कुटी मिसाएर गोली बनाउनू । गोलीलाई चारैतिरबाट कपडाले बेरी त्यस बाहिर माटोले

लिप्नू । यसपछि घाममा सुकाउनू । यसपछि माटाका दुई वटा भाँडा लिई एउटामा यो गोली राख्नू । अर्को भाँडाले छोपी कपडाले बाँधी माटाले लेपेर मुखजोर्नी बन्द गर्नू । यसपछि एउटा हाँडीमा नुनको धुलो हालेर आधा भर्नू । त्यसको बीचमा यो गोली राख्नू । अनि पुनः नुनकै धुलोले त्यो हाँडी भर्नू । यसपछि हाँडीको पनि मुख बन्द गरी माटोले लिप्नू । यसलाई गजपुटमा कडा आगोमा पोल्नू । जब पूरै सेलाउँदछ तब झिकी खलमा पारो जति गन्धक लिईकोइरालो वा ज्वालामुखीको रसमा भिजाउनू । पुनः माथिकै विधिले गोली बनाई गजपुटमा पोल्नू । जब सेलाउँदछ तब निकाल्नू । यसलाई मृगाङ्क पोटली रस भनिन्छ । यो रस दुई रत्ति आठ गेडा मरिचको धुलो वा तीन वटा पिप्लासँग खान दिनू । रोगको असर हेरी एक रत्ति दिनू, घिउ र मह खान दिनू । यो रस खाने मानिसको अन्तस्करण स्वस्थ र पवित्र हुन्छ । यसपछिका खानपिन लोकनाथ रसका जसरी नै गर्नू । यसरी नियम अनुसार यो मृगाङ्क रस खानाले कफका रोग, ग्रहणी, खोकी, दम, क्षयरोग, अरुची, दुब्लोपन र नातागत नाश हुन्छ ।

खोकी आदिमा हेमगर्भपोट्टली रस

सूतात्पादप्रमाणेन हेम्नः पिष्टं प्रकल्पयेत् ।
तयोः स्याद् द्विगुणो गन्धो मर्दयेत्काञ्चनारिणा(रकैः) ॥९६॥
कृत्वा गोलं क्षिपेन्मूषासम्पुटे मुद्रयेत्ततः ।
पचेद्भूधरयन्त्रेण वासरत्रितयं बुधः ॥९७॥
तत उद्धृत्य तत्सर्वं दद्याद्गन्धञ्च तत्समम् ।
मर्दयेच्चार्द्रकरसैश्चित्रकं स्वरसेन च ॥९८॥
स्थूलपीतवराटाँश्च पूरयेत्तेन युक्तितः ।
एतस्मादौषधात् कुर्यादष्टमांशेन टङ्कणम् ॥९९॥
टङ्कणार्धं विषं दत्त्वा पिष्ट्वा सेहुण्डदुग्धकैः ।
मुद्रयेत्तेन कल्केन वराटानां मुखानि च ॥१००॥
भाण्डे चूर्णप्रलिप्तेऽथ धृत्वा मुद्रां प्रदापयेत् ।
गर्ते हस्तोन्मिते धृत्वा पुटेद्गजपुटेन च ॥१०१॥
स्वाङ्गशीतं रसं ज्ञात्वा प्रदद्याल्लोकनाथवत् ।

**पथ्यं मृगाङ्कवज्ज्ञेयं त्रिदिनं लवणं त्यजेत् ॥१०२॥**
**यदा छर्दिर्भवेत्तस्य दद्याच्छिन्नाशृतन्तदा ।**
**मधुयुक्तं तथा श्लेष्मकोपे दद्याद्गुडार्द्रकम् ॥१०३॥**
**विरेके भर्जिता भङ्गा प्रदेया दधिसंयुता ।**
**जयेत् कासं क्षयं श्वासं ग्रहणीमरुचिन्तथा ॥१०४॥**
**अग्निश्च कुरुते दीप्तं कफवातं नियच्छति ।**
**हेमगर्भ परो ज्ञेयो रसः पोट्टलिकाभिधः ॥१०५॥**

शुद्ध पारो एक भाग, त्यसको एक चौथाई सुनको धुलो र पारो एवं सुनको दोब्बर प्रशोधित गन्धक लिनू । सबैलाई कोइरालोको रसमा हाली मोल्नू । अनि डल्लो बनाएर माटाको भाँडामा हाली वरीपरी माटो दल्नू । अनि जमिनका एक हाथ गहिरो खाडल खन्नू र त्यो खाडल भित्र पुनः अर्को सानो खोबिल्टो खनी त्यो भाँडोलाई त्यो सानो खाल्डोमा राखी माटोले पुर्नू । यसपछि त्यो ठूलो खाल्डोमा तीन दिनसम्म आगो बाल्नू । यो कार्यलाई "अग्नि भूधर यन्त्र" भनिन्छ । जब सेलाउँदछ तब भाँडोलाई बाहिर निकाली रस झिक्नू र त्यो त्यसमा त्यति नै गन्धक मिसाउनू । यसलाई पहिला अदुवाको रसमा र त्यसपछि चितूको बोक्राको रसमा घोट्नू । यसपछि ठूलठूला पहेँला कौडा लिएर त्यसमा यो घोटिएको रस हाल्नू । यसको आठौँ भाग सुहागा र त्यसको आधा विष लिई सिउँडीको दूधमा घोटी बाक्लो लेप बनाएर ती कौडाका मुख टाल्नू । यसपछि एउटा हाँडीमा चुन पोती यी कौडाहरू राख्नू । अनि हाँडीको मुखमा अर्को हाँडी घोप्टो पारेर राखी वरीपरी माटोले लिपेर मुख राम्ररी टाल्नू । यसपछि गजपुटमा यो हाँडीलाई पोल्नू । सेलाएपछि निकाल्नू । यो रसलाई "हेमगर्भपोटली रस" भनिन्छ । यसलाई लोकनाथ रस खाने विधिले खानू र मृगाङ्क रसमा बताए अनुसारका खानपिन गर्नू । यो रस खाँदा पनि विशेष गरी नुन हालिएका कुरा खानु हुँदैन । ओखती खाँदा बान्ता भए गुर्जोको काँढापानीमा मह मिसाएर खानू, ठिक हुन्छ । यसलाई कफजन्य रोगमा मिस्री र अदुवासँग खानू । ओखतीकै कारण दिसा लागे भाङलाई हलुका भुटी दहीमा मिसाएर खानू, ठिक हुन्छ । यो रसले खोकी, क्षयरोग, दम, ग्रहणी र अरुची नाश हुन्छ । यसले पाचकाग्नि बाल्दछ, कफविकार र वातविकार नाश गर्दछ ।

हेमगर्भपोट्टली रस बनाउने दोश्रो विधि

रसस्य भागाश्चत्वारस्तावन्तः कनकस्य च ।
तयोश्च पिष्टिकां कृत्वा गन्धो द्वादशभाग(गि)कः ॥१०६॥
कुर्यात्कज्जलिकां तेषां मुक्ताभागाश्च षोडशः ।
चतुर्विंशच्च शङ्खस्य भागैकं टङ्कणस्य च ॥१०७॥
एकत्र मर्दयेत्सर्वं पक्वनिम्बूकजैः रसैः ।
कृत्वा तेषां ततो गोलं मूषासम्पुटके न्यसेत् ॥१०८॥
मुद्रां दत्त्वा ततो हस्तमात्रे गर्ते च गोमयैः ।
पुटेद्गजपुटेनैव स्वाङ्गशीतं समुद्धरेत् ॥१०९॥
पिष्ट्वा गुञ्जाचतुर्मानं दद्याद्व्याज्यसंयुतम् ।
एकोनत्रिंशदुन्मानमरिचैः सह दीयते ॥११०॥
राजते मृण्मये पात्रे काचजे वाऽवलेहयेत् ।

लोकनाथसमं पथ्यं कुर्याच्च स्वस्थमानसः ॥१११॥
कासे श्वासे क्षये वाते कफे ग्रहणिकागदे ।
अतिसारे प्रयोक्तव्या पोट(ट्ट)ली हेमगर्भिका ॥११२॥

पारो चार भाग र सुनको धुलो चार भाग लिएर खलमा राम्ररी लेप नबन्दासम्म घोट्नू । यसमा यी दुबैको बाह्र भाग गन्धक मिसाएर घोट्नू । पुनः सोह्र भाग मोति, चौबीस भाग शङ्ख र एक भाग सुहागा लिई यसमा मिसाएर पाकेका कागतीका रस हाली घोटेर गोला बनाई माटाका भाँडामा राख्नू अनि कपडाले बेरी माटोले लिप्नू । अनि एक हात गहिरो र फराकिलो खाडल खनी त्यसमा गुइँठा राखेर बीचमा यो भाँडोलाई राखेर गजपुट अग्निमा पोल्नू । सेलाए पछि झिक्नू । यो रसलाई पनि हेमगर्भपोटली रस भनिन्छ । चार रत्ती यो रस  उनन्तीस वटा कालो मरिचको धुलोसँग चाँदीको अथवा माटोको अथवा सिसाको कचौरीमा गार्यको घिउसँग प्रसन्न मनले पिउनू र यो अवधिमा लोकनाथ रस पिउँदा बताएकै कुरा खानेपिउने गर्नू । यसो गर्नाले खोकी, दम, क्षयरोग, कफविकार, ग्रहणी र अतिसार ठिक गर्दछ ।

विषमज्वर आदिमा महाज्वराङ्कुश रस

**शुद्धसूतो विषं गन्धः प्रत्येकं शाणसम्मितम् ।**
**धूर्तबीजं त्रिशाणं स्यात्सर्वेभ्यो द्विगुणा भवेत् ॥११३॥**
**हेमाह्वा कारयेदेषां सूक्ष्मं चूर्णं प्रयत्नतः ।**
**देयं जम्बीरमज्जाभिश्चूर्णं गुञ्जाद्वयोन्मितम् ॥११४॥**
**आर्द्रकस्वरसैर्वाऽपि ज्वरं हन्ति त्रिदोषजम् ।**
**एकाहिकं द्व्याहिकं वा त्र्याहिकं वा चतुर्थकम् ॥११५॥**
**विषमञ्च ज्वरं हन्याद्विख्यातोऽयं ज्वराङ्कुशः ।**

प्रशोधित पारो तीन मासा, प्रशोधित विष तीन मासा, गन्धक तीन मासा,धतुराका गेडा नौ मासा र चाँप यी सबैको दोबर जम्मा पारी खलमा पिँध्नू । यो "महाज्वराङ्कुश रस"लाई ज्यामिर वा अदुवाको रसमा मिसाएर दुई दुई रत्ती खान दिनाले त्रिदोषजन्य जरो, एकनाससँग आइरहने जरो, तीन रातमा दुई पटक आउने जरो, तीन दिने जरो, चार दिने जरो र विषमजरो ठिक हुन्छ भनी खुब प्रसिद्ध छ ।



अतिसार आदिमा आनन्दभैरव रस

**दरदं वत्सनाभञ्च मरिचं टङ्कणं कणाम् ॥११६॥**
**चूर्णयेत्समभागेन रसो ह्यानन्दभैरवः ।**
**गुञ्जैकं वा द्विगुञ्जं वा बलं ज्ञात्वा प्रयोजयेत् ॥११७॥**
**मधुना लेहयेच्चानु कुटजस्य फलं त्वचम् ।**
**चूर्णितं कर्षमात्रन्तु त्रिदोषोत्थातिसारनुत् ॥११८॥**
**दध्यन्नं दापयेत् पथ्यं गवाज्यं तक्रमेव च ।**
**पिपासायाञ्जलं शीतं विजया च हिता निशि ॥११९॥**

हिङ, प्रशोधित वत्सनाभ नामक विषबूटी, कालो मरिच, सुहागा र पिप्पला बराबर मात्रामा लिई पिँधेर धुलो बनाउनू । यो रसलाई "आनन्दभैरव रस" भनिन्छ । यो रस ठूलोकुरोका

बोक्रा र गेडा एक कर्ष मिसाई धुलो पारेर त्योसँग रोग र रोगीको अवस्था हेरी महसँग मिसाएर एक एक रत्ति खान दिनाले त्रिदोषजन्य अतिसार ठिक हुन्छ । यसबेला गाईको दही वा मोहीसँग भात खानु पथ्य हुन्छ । तिर्खा लागे शीतल पानी पिउनू । रातमा अलिकति भाङका गेडा शुद्ध पारी घोटेर पिउनु पर्दछ ।

### लघुसूचिकाभरण रस

विषं पलमितं सूतः शाणिकच्चूर्णयेद् द्वयम् ।
तच्चूर्णं सम्पुटे क्षिप्त्वा काचलिप्तशरावयोः ॥१२०॥
मुद्रां दत्त्वा च संशोष्य ततश्चुल्यां निवेशयेत् ।
वह्निं शनैः शनैः कुर्यात् प्रहरद्वयसङ्ख्यया ॥१२१॥
तत उद्घाटयेन्मुद्रामुपरिस्थां शरावकात् ।
सँल्लग्नो यो भवेत् सूतस्तं गृह्णीयाच्छनैः शनैः ॥१२२॥
वायुस्पर्शो यथा न स्यात् तथा कुप्यां निवेशयेत् ।

यावत् सूच्या मुखे लग्नं कुप्या निर्याति भेषजम् ॥१२३॥
तावन्मात्रो रसो देयो मूर्च्छिते सन्निपातिनि ।
क्षुरेण प्रच्छिते मूर्ध्नि तत्राङ्गुल्या च घर्षयेत् ॥१२४॥
रक्तभेषजसम्पर्कान्मूर्च्छितोऽपि हि जीवति ।
तथैव सर्पदष्टस्तु मृतावस्थोऽपि जीवति ॥१२५॥
यदा तापो भवेत्तस्य मधुरं तत्र दीयते ।

वत्सनाग विष एक पल र प्रशोधित पारो तीन मासा मिसाई कुटेर धुलो बनाउनू । दुई वटा काँचको जलप लगाइएको माटाका कचौरा लिई एउटा यो धुलो राख्नू र अर्कोले मुख बन्द गर्नू । कपडाले बेरी त्यसमाथि माटोले लिप्नू । घाममा सुकाई आगोमा हाली मन्द आँचमा दुई प्रहरसम्म तताउनू । यसपछि यो लघुसूचिकाभरण रसलाई झिकेर माथ्लो कचौरामा गएर टाँस्सिएको पारोलाई साबधानीपूर्वक निकालेर कुनै सिसिमा हालेर राख्नू । पछि एउटा सियो यसमा चोपलेर सियोको टुप्पोमा जति लाग्दछ त्यति रस निकाली सन्निपातका कारण बेहोस भएको मानिसका तालुमा कपाल पन्छाई छाला अलिकति खुर्केर घाउ बनाई यो

ओखती लगाउनू र रगतमा पूरा नमिल्दासम्म माड्नू । जब यो ओखती रगतमा मिल्दछ तब रोगी होशमा आउँदछ । यसैगरी सर्पले डसेर बेहोश भई मर्न आँटिका मानिस पनि यो विधिले ओखती गर्नाले होशमा आउँदछ र बाँच्दछ । यो ओखती प्रयोग गर्दा रोगीलाई अति नै डाह हुन्छ । डाह हटाउन दाख आदि गुलिया पदार्थ खानु पर्दछ ।

सन्निपात जरोमा जलबन्धु रस

सूतभस्मसमं गन्धं गन्धात् पादं मनःशिला ॥१२६॥
माक्षिकं पिप्पली व्योषं प्रत्येकं शिलया समम् ।
चूर्णयेद्भावयेत् पित्तैर्मत्स्यमायूरसम्भवैः ॥१२७॥
सप्तधा भावयेच्छुष्कं देयं गुञ्जाद्वयं हितम् ।
तालपर्णीरसश्चानु पञ्चकोलशृतोऽथवा ॥१२८॥
जलबन्धुरसो नाम सन्निपातं नियच्छति ।
जलयोगश्च कर्तव्यस्तेन वीर्यं भवेद्रसे ॥१२९॥



पारोको भस्म एक भाग, गन्धक एक भाग, गन्धकको एक चौथाई मनशिला, तथा सुनामक्खी भस्म, पिप्ला, सुठो, कालो मरिच र पिप्ला मनशिला जति नै लिई सबैलाई मिसाएर धुलो बनाउनू । यसपछि माछाको पित्तमा सात पटक पकाउनू वा भिजाउनू (पुट दिनु), अनि मुजुरको पित्तमा सात पटक भिजाउनू । अनि सुकाउनू । यसलाई जलचूडामणि रस भनिन्छ । यो रस दुई रत्ति जटामसीको रसमा वा पञ्चकोलको रस (काँढापानी) मा मिसाएर खान दिनाले सन्निपात ठिक गर्दछ । तालुमा शीतल जलले मालिश गर्नू, रसको शक्ति बढ्दछ ।

सन्निपात जरोमा पञ्चवक्त्र रस

शुद्धसूतं विषं गन्धं मरिचं टङ्कणं कणाम् ।
मर्दयेद् धूर्तजद्रावैर्दिनमेकञ्च शोषयेत् ॥१३०॥
पञ्चवक्त्रो रसो नाम द्विगुञ्जः सन्निपातहा(जित्) ।
अर्कमूलकषायन्तु सत्र्यूषमनुपाययेत् ॥१३१॥

**युक्तं दध्योदनं पथ्यं जलयोगञ्च कारयेत् ।**
**रसेनानेन शाम्यन्ति सक्षौद्रेण कफादयः ॥१३२॥**
**मध्वार्द्रकरसञ्चानुपिबेदग्निविवृद्धये ।**
**यथेष्टं घृतमांसाशी शक्तो भवति पावकः ॥१३३॥**

प्रशोधित पारो, प्रशोधित वत्सनाभ विष, गन्धक, कालो मरिच, सुहागा र पिप्लाको धुलोलाई धतुराको रसमा एक दिन भिजाएर दुई दुई रत्तीको गोली बनाउनू र घाममा सुकाउनू । यसलाई पञ्चवक्त्र रस भनिन्छ । आँकको जराको काँढापानीमा सुठो, मरिच र पिप्लाको धुलो मिसाएर यो ओखती खानाले सन्निपात जरो नाश हुन्छ । खान दहीभात दिनू । बिरामीलाई गर्मी भए शीतल पानीले पट्टी लगाउनू । यो रस महसँग खानाले कफजन्य आदि रोग निको हुन्छ । अदुवाको रसमा मह मिसाएर यो रस खानाले जठराग्नि बल्दछ र घिउ, मासु आदि खाए पनि पच्दछ ।

सन्निपात जरोमा उन्मत्त रस



**रसगन्धो समानांशौ धत्तूरफलजै रसैः ।**
**(रसं गन्धकतुल्यांशं धत्तूरफलजद्रवैः)**
**मर्दयेद्दिनमेकन्तु तत्तुल्यं त्रिकटु क्षिपेत् ॥१३४॥**
**उन्मत्ताख्यो रसो नाम्ना नस्ये स्यात्सन्निपातजित् ।**

प्रशोधित पारो एक भाग, गन्धक एक भाग तथा यी दुई जति सुठो, मरिच र पिप्ला लिई सबै मिसाएर धुलो बनाउनू । यसपछि धतुराको फलको रसमा भिजाएर सुकाउनू । यसलाई उन्मत्त रस भनिन्छ । सन्निपातजन्य जरोका बिरामीलाई यो रसको नस दिनाले जरो ठिक हुन्छ ।

सन्निपात आदिमा अञ्जन रस

**निस्त्वग्जे(जै)पालबीजञ्च दशनिष्कं विचूर्णयेत् ॥१३५॥**
**मरिचं पिप्पलीं सूतं प्रतिनिष्कं विमिश्रयेत् ।**

**भाव्यो जम्बीरजैर्द्रावैः सप्ताहं सम्प्रयत्नतः ॥१३६॥**
**रसोऽयमञ्जने दत्तः सन्निपातं विनाशयेत् ।**

अजयपालको बोक्रासहितका गेडा दश टङ्क लिनू । कालो मरिच, पिप्ला र पारो एक एक टङ्क लिनू । यी सबैलाई ज्यामिरको रसमा सात दिनसम्म भिजाएर गोली बनाउनू । सन्निपात जरोको रोगीलाई यो गोली पानीमा घोटेर दुबै आँखामा लगाउनू, जरो ठिक हुन्छ ।

शूल आदिमा नाराच रस

**सूतं टङ्कणके(कं) तुल्यं मरिचं सूततुल्यकम् ॥१३७॥**
**गन्धकं पिप्पली शुण्ठी द्वौ द्वौ भागौ विचूर्णयेत् ।**
**सर्वतुल्यं क्षिपेद्दन्तीबीजं निस्तुषितं भिषक् ॥१३८॥**
**द्विगुञ्जं रेचनं सिद्धं नाराचोऽयं महारसः ।**
**आध्मानं मलविष्टम्भानुदावर्त्तञ्च नाशयेत् ॥१३९॥**



पारो, सुहागा, र कालो मरिच बराबर लिनू । गन्धक, पिप्ला र सुठो पारोको दोब्बर लिनू । यी सबैको बराबर बोक्रा सहितका अजयपालका गेडा लिनू । सबैलाई मिसाएर धुलो बनाउनू । यसलाई नाराच रस भनिन्छ । दिसा नलाग्दा यो रस दुई रत्ति खान दिनू दिसा लाग्दछ । आध्मान, दिसा रोकिएको र उदावर्त रोग नाश गर्दछ । दिसा बन्द गर्नुपर्दा चिसो पानी पिउन दिनू ।

शूल आदिमा इच्छाभेदी रस

**दरदं टङ्कणं शुण्ठी पिप्पली चेति कार्षिकाः ।**
**हेमाह्वा पलमात्रा स्याद्दन्तीबीजञ्च तत् समम् ॥१४०॥**
**विचूर्ण्यैकत्र सर्वाणि गोदुग्धेनैव पाय(साध)येत् ।**
**त्रिगुञ्जं रेचनं दद्याद्विष्टम्भाध्मानरोगिषु ॥१४१॥**

हिङ, सुहागा, सुठो र पिप्ला सबै एक एक तोला (एक एक कर्ष) लिनू । चौँप र अजयपालका गेडा चार चार तोला लिनू । सबै मिसाएर धुलो बनाउनू । (यो धुलोलाई चार गुना दूधमा हालेर दुध नसुक्दासम्म पकाउनू) । यसलाई इच्छाभेदीरस भनिन्छ । यो रसलाई दिसा खुलाउन गाईको दूधसँग तीन रत्ति खान दिनू । दिसा खुली विष्टम्भ, आध्मान जस्ता रोग निको हुन्छ । (यसले इच्छा अनुसार दिसा लगाउने हुनाले इच्छाभेदी रस भनिएको हो) ।

सबै प्रमेहमा वसन्तकुसुमाकर रस

**द्वौ भागौ हेमभूतेश्च गगनञ्चापि तत्समम् ।**
**लोहभस्म त्रयो भागाश्चत्वारो रसभस्मतः ॥१४२॥**
**वङ्गभस्म त्रिभागं स्यात् सर्वमेकत्र मर्दयेत् ।**
**प्रवालं मौक्तिकञ्चैव रससाम्येन दापयेत् ॥१४३॥**
**भावना गव्यदुग्धेन रसैर्घृष्ट्वाऽटरुषकैः ।**
**हरिद्रा वारिणा चैव मोचकन्दरसेन च ॥१४४॥**
**शतपत्ररसेनापि मालत्याः स्वरसेन च ।**
**पश्चान् मृगमदश्चन्द्र तुलसीरसभावितः ॥१४५॥**
**कुसुमाकर इत्येष वसन्तपदपूर्वकः ।**
**गुञ्जाद्वयं ददीतास्य मधुना सर्वमेहनुत् ॥१४६॥**
**सिताचन्दनसंयुक्तश्चाम्लपित्तादिरोगजित् ।**

स्वर्णभस्म दुई भाग, अभ्रखको भस्म दुई भाग, लोहभस्म तीन भाग, पारोको भस्म चार भाग, राङको भस्म तीन भाग, मोतिभस्म चार भाग लिई गाईको दूधमा एक पटक, असुरोको रसमा एक पटक, हलेदोको रसमा एक पटक, सिमलको जराको रसमा एक पटक, सयपत्रीको रसमा एक पटक, चमेलीको रसमा एक पटक, कस्तूरीको रसमा एक पटक र तुलसीको रसमा एक पटक भिजाएर गोली बनाई सुकाउनू । यसलाई वसन्तकुसुमाकर रस भनिन्छ । सबै खालका प्रमेहमा यो रस दुई रत्ति खान दिनू । मिस्री र सेतो चन्दनको धुलोसँग खान दिनाले सबै खालका पित्तरोग नाश हुन्छन् । (यो प्रक्षिप्त वा पछि थपिएको श्लोक हो) ।

### क्षयरोगमा राजमृगाङ्क रस

**सूतभस्म त्रयो भागा भागैकं हेमभस्मकम् ॥१४७॥**
**मृतताभ्रस्य भागैकं शिलागन्धकतालकम् ।**
**प्रतिभागद्वयं शुद्धमेकीकृत्य विचूर्णयेत् ॥१४८॥**
**वराटान्पूरयेत्तेन छागीक्षीरेण टङ्कणम् ।**
**पिष्ट्वा तेन मुखं रुद्ध्वा मृद्भाण्डे स(त)न्निरोधयेत् ॥१४९॥**
**शुष्कं गजपुटे(टं) पक्त्वा चूर्णयेत्स्वाङ्गशीतलम् ।**
**रसो राजमृगाङ्कोऽयं चतुर्गुञ्जः क्षयापहः ॥१५०॥**
**दशपिप्पलिकाक्षौद्रैरेकोनत्रिंशदूषणैः ।**
**सघृतं दापयेत्पथ्यं स्त्रीकोपाग्निश्रमाँस्त्यजेत् ॥१५१॥**
**पथ्यं वा लघुमांसानि राजरोगप्रशान्तये ।**

पारोको भस्म तीन भाग, सुवर्णको भस्म एक भाग, अभ्रखको भस्म एक भाग तथा प्रशोधित मनशिला, गन्धक र हरिताल दुई दुई भाग लिई सबैलाई मिलाएर धुलो बनाउनू । यसलाई ठूलठूला पहेँला कौडीमा हाली त्यसको मुखलाई बाख्रीको दूधमा घोटिएको सुहागाले बन्द गर्नू । अनि यो कौडीलाई कुनै माटाको हाँडीमा हाली माटाकै हाँडीले मुख बन्द गर्नू र जोरनमा कपडा बेरी माटो लिपेर टाल्नू । पहिला यसलाई घाममा सुकाउनू र सुकेपछि गजपुटमा पोल्नू । जब सेलाउँदछ तब ओखती झिकेर राख्नू । यसलाई राजमृगाङ्क रस भनिन्छ । चार रत्ती यो रस दशवटा पिप्ला र उनन्तीस वटा कालोमरिचको धुलो मिसाइएको महसँग खानाले क्षयरोग नाश हुन्छ । यसपछि घिउ आदि सहित पथ्य खानेकुरा खानू । पचाउने सहज हुने खालका मासुको रस खानू । यो अवधिका ग्राम्यधर्म, रिस, आगो ताप्न र परिश्रम गर्न हुँदैन ।

### क्षयरोग र दममा स्वयमग्नि रस

**शुद्धं सूतं द्विधा गन्धं कुर्यात् खल्वेन कज्जलीम् ॥१५२॥**
**तयोः समं तीक्ष्णचूर्णं मर्दयेत् कन्यकाद्रवैः ।**

द्वियामान्ते कृतं गोलं ताम्रपात्रे विनिक्षिपेत् ॥१५३॥
आच्छाद्यैरण्डपत्रेण यामार्धेऽत्युष्णता भवेद् ।
धान्यराशौ न्यसेत् पश्चादहोरात्रात् समुद्धरेत् ॥१५४॥
सञ्चूर्य(र्ण्य) गालयेद्वस्त्रे सत्यं वारितरं भवेत् ।
भावयेत् कन्यकाद्रावैः सप्तधा भृङ्गजैस्तथा ॥१५५॥
काकमाचीकुरण्टोत्थद्रवैर्मुण्ड्याः पुनर्नवैः ।
सहदेव्यमृतानीलीनिर्गुण्डीचित्रजैस्तथा ॥१५६॥
सप्तधा तु पृथग्द्रावैर्भाव्यं शोष्यं तथाऽऽतपे ।
सिद्धयोगो ह्ययं ख्यातः सिद्धानाञ्च मुखागतः ॥१५७॥
अनुभूतो मया सत्यं सर्वरोगगणापहः ।
स्वर्णादीन् मारयेदेवं चूर्णीकृत्य तु लोहवत् ॥१५८॥
त्रिफलामधुसंयुक्तः सर्वरोगेषु योजयेत् ।
त्रिकटुत्रिफलैलाभिर्जातीफललवङ्गकैः ॥१५९॥
सम(नव)भागोन्मितैरेतैः समः पूर्वरसो भवेत् ।
सञ्चूर्ण्यालोडयेत् क्षौद्रैर्भक्ष्यं निष्कद्वयं द्वयम् ॥१६०॥
स्वयमग्निरसो नाम्ना क्षयकासनिकृन्तनः ।

प्रशोधित पारो एक भाग र प्रशोधित गन्धक दुई भाग लिएर खलमा घोट्नू । अनि यसमा यति नै स्टिलको धुलो मिसाएर घिउकुमारीको रसमा दुई प्रहरसम्म ढड्याउनू । अनि यसलाई गोली बनाएर तामाको कचौरामा राख्नू । गोलीलाई अरिडका पातले छोप्नू र चार घडीसम्म घाममा राख्नू । गोली धेरै तातेपछि धानभित्र गाड्नू । एक दिनरात बितेपछि त्यसलाई निकालेर कपडछान गर्नू । यो भस्मलाई यसपछि पानीमा हालियो भने निश्चय नै तैरिन्छ । यसपछि यो भस्मलाई खलमा हाल्नू र घिउकुमारी, भाङ, कवई, पहेँलो कपुरनली, गोरखमुण्डी, पुनर्नवा, सहदेवी, गुर्जो, नीर, नेवारी र चितूको रसमा बेग्लाबेग्लै सात पटक भिजाउँदै सुकाउँदै गर्नू । स्वयमग्निरस तयार हुन्छ । यो रस सबैतिर प्रख्यात छ भनी ठूलठूला विद्वानले भनेका छन्, मैले पनि अनुभवका आधारमा बताएको हुँ । यो रस दुई निष्क त्रिफलाको धुलो र महसँग खानाले सबै रोग नाश हुन्छन् । सुठो, मरिच, पिप्ला, हर्रो, बर्रो,

अमला, अलैंची, जाइफल र ल्वाङ सबै बराबर मात्रामा लिई धुलो बनाउनू । यो धुलोसँग बराबर मात्रामा यो रस लिनू । दुबैलाई महसँग मिसाएर दुई दुई निष्क खाने गर्नाले क्षयरोग र खोकी नाश हुन्छ । (यो रसायन विधिले सुन आदि धातुलाई फलाम जसरी नै धुलो पारी भस्म गर्नाले ती पनि भस्म हुन्छन् ।)

अमृतार्णव रस

(पारदं गन्धकं शुद्धं मृतलोहञ्च टङ्कणम् ॥१६१॥
रास्नाविडङ्गत्रिफला देवदारु कटुत्रयम् ।
अमृता पद्मकं क्षौद्रं विश्वं तुल्यांशचूर्णितम् ॥१६२॥
त्रिगुञ्जं सर्वकासातः सेवयेदमृतार्णवम् । : प्रक्षिप्त श्लोक)

प्रशोधित पारो, प्रशोधित गन्धक, लोहभस्म, सुहागा, फ्याक्सेकन्द, वायुविडङ्ग, त्रिफला, देवदार, त्रिकटु, गुर्जो, पैयुँ, मह र सुठो बराबर मात्रामा लिई धुलो बनाउनू । सबै खालका खोकीमा यो धुलो तीन गुञ्ज गुर्जोको रससँग खानू ।



दमरोगमा सूर्यावर्त रस

सूतार्धो गन्धको मर्द्यो यामैकं कन्यकाद्रवैः ॥१६३॥
द्वयोस्तुल्यं ताम्रपत्रं पूर्वकल्केन लेपयेत् ।
दिनैकं स्थालिकायन्त्रे पक्वमादाय चूर्णयेत् ॥१६४॥
सूर्यावर्तो रसो ह्येष द्विगुञ्जः श्वासजिद्भवेत् ।

प्रशोधित पारो एक भाग र त्यसको आधा गन्धक लिनू । दुबैलाई मिसाएर घिउकुमारीको रसमा घोटी एक प्रहरसम्म राख्नू । अनि यति नै तामाका पाता लिई त्यसलाई यो लेपले लेप्नू । अनि पातालाई माटाका भाँडामा राखी माटाकै भाँडाले छोपी कपडा बेरेर माटोले लिपी मुख टाल्नू । घाममा सुकाउनू र सुकेपछि आगोमा एकदिनसम्म पोल्नू । यसलाई स्थालिकायन्त्र भन्दछन् । सेलाएपछि झिकी सावधानीपूर्वक धुलो निकाल्नू । यसलाई सूर्यावर्तरस भनिन्छ । यो रस दुई रत्ति दमका रोगमा खानाले रोग ठिक हुन्छ ।

वातरोगमा स्वच्छन्दभैरव रस

**शुद्धं सूतं मृतं लोहं ताप्यं गन्धकतालकम्(के) ॥१६५॥**
**पथ्याऽग्निमन्थं निर्गुण्डी त्र्यूषणं टङ्कणं विषम् ।**
**तुल्यांशं मर्दयेत् खल्वे दिनं निर्गुण्डिकाद्रवैः ॥१६६॥**
**मुण्डीद्रावैर्दिनैकन्तु द्विगुञ्जं वटकीकृतम् ।**
**भक्षयेद्वातरोगार्तोनाम्ना स्वच्छन्दभैरवः ॥१६७॥**
**रास्नाऽमृतादेवदारुशुण्ठीवातारिजं शृतम् ।**
**सगुग्गुलुं पिबेत् कोष्णमनुपानं सुखावहम् ॥१६८॥**

प्रशोधित पारो, लोहभस्म, सुनामक्खीको भस्म, गन्धक, हरिताल, हर्रो, अरणी, नेवारी, सुठो, मरिच, पिप्ला, सुहागा र प्रशोधित वत्सनाभ विष बराबर मात्रामा लिई नेवारीको रसमा एक दिन भिजाउनू । त्यसपछि गोरखमुण्डीको रसमा घोटेर एक दिन राखी दुई दुई रत्तीको गोली बनाउनू । यसलाई स्वच्छन्दभैरव रस भनिन्छ । फ्याक्सेकन्द, गुर्जो, देवदार, सुठो र अरिडको जराको काँढापानीमा गोकुलधूप मिसाई यो रस खाने गर्नाले वातजन्य रोग नाश हुन्छ ।



ग्रहणी रोगमा हंसपोट्टली रस

**दग्धान्कपर्दिकान्पिष्ट्वा (दग्ध्वा कपर्दकं पिष्ट्वा) त्र्यूषणं टङ्कणं विषम् । गन्धकं शुद्धसूतञ्च तुल्यं जम्बीरजैर्द्रवैः ॥१६९॥**
**मर्दयेद्भक्षेयन्माषं मरिचाज्यं लिहेदनु ।**
**निहन्ति ग्रहणीरोगं पथ्यं तक्रौदनं हितम् ॥१७०॥**

कौडीको भस्म, सुठो, कालोमरिच, पिप्ला, सुहागा, प्रशोधित वत्सनाभ, गन्धक र प्रशोधित पारो मिसाई पिसेर ज्यामिरको रसमा भिजाई एक एक मासाका गोली बनाउनू । यसलाई हंसपोटली रस भनिन्छ । यो ओखतीलाई कालोमरिचको धुलो र महसँग मिसाएर खानू । पथ्यमा तक्र र भात खानू । यसले ग्रहणी रोग ठिक गर्दछ ।

पत्थरीमा त्रिविक्रम रस

मृतं ताम्रमजाक्षीरैः पाच्यं तुल्ये गतद्रवम् ।
तत्ताम्रं शुद्धसूतञ्च गन्धकञ्च समं समम् ॥१७१॥
निर्गुण्डीस्वरसैर्मर्द्यं दिनं तद्गोलकं कृतम् (तद्गोलं सन्धयेद्दिनम्) ।
यामैकं बालुकायन्त्रे पाच्यं योज्यं द्विगुञ्जकम् ॥१७२॥
बीजपूरकमूलन्तु सजलं चानुपाययेत् ।
रसस्त्रिविक्रमो नाम्ना मासैकेनाश्मरीप्रणुत् ॥१७३॥

ताम्रभस्म जति नै बाख्रीको दूध लिनू । दुबै मिसाएर तताई लदरो बनाउनू । यसमा प्रशोधित पारो र गन्धक बराबर मिसाउनू । अनि नेवारीको रसमा घोटेर गोली बनाई बालुकायन्त्रमा हाली एक प्रहरसम्म तताउनू । सेलाएपछि झिकी ओखती निकाल्नू । यसलाई त्रिविक्रम रस भनिन्छ । यो रस दुई दुई रत्ति बिमिराको जराको रससँग वा यसको काँढापानीसँग खाने गर्नाले एक महिनामा पत्थरी ठिक हुन्छ ।



कुष्ठ आदि रोगमा महातालेश्वर रस

तालं ताप्यं शिलां सूतं शुद्धं सैन्धवटङ्कणे ।
समांशं चूर्णयेत् खल्वे सूताद् द्विगुणगन्धकम् ॥१७४॥
गन्धतुल्यं मृतं ताम्रं जम्बीरैर्दिनपञ्चकम् ।
मर्द्यं षड्भिः पुटैः पाच्यं भूधरे सम्पुटोदरे ॥१७५॥
पुटे पुटे द्रवैर्मर्द्यं सर्वमेतत्तु षट्पलम् ।
द्विपलं मारितं ताम्रं लोहभस्म चतुष्पलम् ॥१७६॥
जम्बीराम्लेन तत्सर्वं दिनं मर्द्यं पुटेल्लघु ।
त्रिंशदंशं विषं चास्य क्षिप्त्वा सर्वं विचूर्णयेत् ॥१७७॥
माहिषाज्येन सम्मिश्रं निष्कार्धं भक्षयेत् सदा ।
मध्वाज्यैर्वाकुचीचूर्णं कर्षमात्रं लिहेदनु ॥१७८॥
सर्वकुष्ठानि हन्त्याशु महातालेश्वरो रसः ।

हरिता, सुनामक्खी, मनशिला, प्रशोधित पारो, सिधेनुन र सुहागा बराबर मात्रामा लिई गन्धक पारोको दोब्बर लिनू । गन्धक जति नै ताम्रभस्म लिनू । सबैलाई ज्यामिरको रसमा पाँच दिनसम्म घोट्नू । अनि यसका गोली बनाई माटाका भाँडामा राखी छोपेर कपडाले बेरी माटाले लिप्नू । यसपछि भूधर यन्त्रमा हाली पोल्नू । सेलाएपछि यो क्रम पुनः गर्नू । छ पटक यसरी पोलेपछि भस्म सिद्ध हुन्छ । यो भस्म छ पल ताम्रभस्म दुई पल र लोहभस्म चार पल मिसाएर पुनः ज्यामिरको रसमा एक दिन भिजाउनू । पुनः पहिलेझैं भाँडामा राखी मुख बन्द गरेर कपडाले बेरी माटो दलेर मन्द आँचमा पोल्नू । सेलाएपछि झिकेर यसको तीस भागको एक भाग प्रशोधित वत्सनाभ विष राम्ररी मिलाउनू । यसलाई महातालेश्वर रस भनिन्छ । यो आधा निष्क भैंसीको घिउसँग खानू र त्यही बेला घिउ र मह असमान मात्रामा लिई बाकुचीको धुलो एक कर्ष मिलाउनू र खानू । यसले सबै खालका कुष्ठरोग तत्काल निको हुन्छ ।

### कुष्ठकुठार रस

**सूतभस्म(भस्मसुत)समो गन्धो मृतायस्ताम्रगुग्गुलुः(न्) ॥१७९॥**
**त्रिफला च महानिम्बश्चित्रकश्च शिलाजतु ।**
**इत्येतच्चूर्णितं कुर्यात् प्रत्येकं शाणषोडशम् ॥१८०॥**
**चतुःषष्टिः करञ्जस्य बीजचूर्णं प्रकल्पयेत् ।**
**चतुःषष्टिमृतं चाभ्रं मध्वाज्याभ्यां विलोडयेत् ॥१८१॥**
**स्निग्धे भाण्डे धृतं खादेद् द्विनिष्कं सर्वकुष्ठनुत् ।**
**रसः कुष्ठकुठारोऽयं गलत् कुष्ठनिवारणः ॥१८२॥**



पारोको भस्म, गन्धक, लोहभस्म, ताम्रभस्म, गोकुल धूप, हर्रो, बर्रो, अमला, बकाइनुका बोक्रा, चितूको बोक्रा र शिलाजित सबै सोह्र सोह्र शाण तथा कुबेराक्षको गेडा चौसठ्ठी शाण लिनू । सबैलाई राम्ररी धुलो पारी अभ्रक भस्म चौसठ्ठी शाण लिई त्यसमा मिसाउनू । यसलाई कुष्ठकुठार रस भनिन्छ । यो रस दुई निष्क खानाले गलितकुष्ठ आदि सबै कुष्ठरोग निको हुन्छ ।

श्वेतकुष्ठ आदि रोगमा उदयादित्य रस

शुद्धं सूतं द्विधा गन्धं मर्द्यं कन्याद्रवैर्दिनम् ।
तद्गोलं पिठीमध्ये ताम्रपात्रेण रोधयेत् ॥१८३॥
सूतकाद् द्विगुणेनैव शुद्धेनाधोमुखेन च ।
पार्श्वे भस्म निधायाथ पात्रोर्ध्वं गोमयं जलम् ॥१८४॥
किञ्चित् किञ्चित्प्रदातव्यं चुल्ल्यां यामद्वयं पचेत् ।
चण्डाग्निना तदुद्धृत्य स्वाङ्गशीतं विचूर्णयेत् ॥१८५॥
काष्ठोदुम्बरिकावह्नित्रिफलाराजवृक्षकम् ।
विडङ्गं वाकुचीबीजं क्वाथयेत्तेन भावयेत् ॥१८६॥
दिनैकमुदयादित्योरसो देयो द्विगुञ्जकः ।
विचर्चिकां दद्रुकुष्ठं वातरक्तञ्च नाशयेत् ॥१८७॥
अनुपानञ्च कर्तव्यं वाकुचीफलचूर्णकम् ।

खदिरस्य कषायेण समेन परिपाचितम् ॥१८८॥
त्रिशाणं तद्द्रवां क्षीरैः क्वाथैर्वा त्रैफलैः पिबेत् ।
त्रिदिनान्ते भवेत्स्फोटः सप्ताहाद्वा किलासके ॥१८९॥
नीलीं गुञ्जाँश्च (च) कासीसं धत्तूरं हंसपादिकम् ।
सूर्यभक्ताञ्च चाङ्गेरीं पिष्ट्वा मूलानि(त्प्र)लेपयेत् ॥१९०॥
स्फोटस्थानप्रशान्त्यर्थं सप्तरात्रं पुनः पुनः ।
श्वेतकुष्ठं निहन्त्याशु साध्यासाध्यं न संशयः ॥१९१॥
अपरः श्वित्रलेपोऽपि कथ्यतेऽत्र भिषग्वरैः ।
गुञ्जाफलाग्निचूर्णं च लेपितं श्वेतकुष्ठनुत् ॥१९२॥
शिलाऽपामार्गभस्मापि लिप्तं श्वित्रं विनाशयेत् ।

प्रशोधित पारो चार पल र गन्धक दुई भागलाई घिउकुमारीको रसमा पिसी गोली बनाउनू । त्यो गोलीलाई घैंटोमा राखी पारोको तेब्बर शुद्ध तामाको कचौरी बनाई त्यसले गोलीलाई

छोप्नू । जोरनमा गुइँठाको खरानीले लिप्नू । गोबर र पानी मिसाएर पुनः कचौरीको चारैतिर लिप्नू । यसलाई आरनमा राखी कडा रापमा दुई प्रहरसम्म पोल्नू । सेलाएपछि ओखती निकालेर धुलो बनाई डुम्री, चितू, हर्रो, बर्रो, अमला, राजवृक्षको गुदी, वायुविडङ्ग र बाकुचीको फलको काँढापानी पकाएर यो ओखती हाली एकदिनसम्म भिजाएर राख्नू । अनि यसलाई बाक्लो बनाएर गोली बनाउनू । यसलाई उदयादित्य रस भनिन्छ । यो रस एक रत्ति खयरको बोक्राको काँढापानीमा बाकुचीको धुलो तीन शाण मिसाएर खानाले अथवा गाईको दूधसँग अथवा त्रिफालाको काँढापानीसँग खानाले विचर्चिका, दाद , कुष्ठ र वातरक्त रोग नाश हुन्छ । यो रस तीन दिन खानाले चित्रकुष्ठ रोगीका शरीरमा चौथो दिन वा सातौं दिन फोका उत्पन्न हुन्छन् । यो हटाउन नीरको फूल, रातीगेडी, हिराकसी, धतुरो, लज्जावती, सूर्यभक्ति (हलहले ?) र चरीअमिलो बराबर मात्रामा लिई राम्ररी पिँध्नू । यो लेप सात दिनसम्म लगाउनाले ती फोका निको हुन्छ । यसरी यो रसले कडाभन्दा कडा श्वेतकुष्ठ पनि निको हुन्छ शङ्का गर्नु नै पर्दैन । अथवा रातीगेडी र चितूलाई राम्ररी पिँधी धुलो बनाएर त्यो धुलोलाई पानीमा मिसाएर मालिश गर्नू । यसै गरी मनशिला र दतिवनको खरानी भिजाएर मालिश गर्नू, श्वेतकुष्ठ ठिक हुन्छ ।



### कुष्ठ आदि रोगमा सर्वेश्वर रस

शुद्धं सूतं चतुर्गन्धं पलं यामं विचूर्णयेत् ॥१९३॥
मृतताम्राभ्रलोहानां दरदस्य पलं पलम् ।
सुवर्णं रजतश्चैव प्रत्येकं दशनिष्ककम् ॥१९४॥
माषैकं मृतवज्रञ्च तालं शुद्धं पलद्वयम् ।
जम्बीरोन्मत्तवासाभिः स्नुह्यर्क विषमुष्टि(ष्ठि)भिः ॥१९५॥
मर्द्यं हयारिजैर्द्रावैः प्रत्येकेन दिनं दिनम् ।
एवं सप्तदिनं मर्द्यं तद्गोलं वस्त्रवेष्टितम् ॥१९६॥
वालुकायन्त्रगं स्वेद्यं त्रिदिनं लघुवह्निना ।
आदाय चूर्णयेच्छ्लक्ष्णं पलैकं योजयेद्विषम् ॥१९७॥
द्विपलं पिप्पलीचूर्णं मिश्रं सर्वेश्वरो रसः ।
द्विगुञ्जो लिह्यते क्षौद्रैः सुप्तिमण्डलकुष्ठनुत् ॥१९८॥

**वाकुचीं देवकाष्ठञ्च कर्षमात्रं सुचूर्णयेत् ।**
**लिहेदैरण्डतैलाक्तमनुपानं सुखावहम् ॥१९९॥**

प्रशोधित पारो एक पल र गन्धक चार पल मिसाएर धुलो बनाई एक प्रहरसम्म भिजाउनू । ताम्रभस्म, अभ्रखभस्म, लोहभस्म र हिङ एक एक पल तथा स्वर्णभस्म र रतजभस्म दुबै दश दश निष्क एवं हिराको भस्म एक मासा र हरितालको सार दुई पल त्यो पारो र गन्धकको घोलमा मिसाउनू । ज्यामिर, धतुरो, असुरो, बकाइनु र करवीरको जराको रसमा अनि सिउँडी र आँकको दूधमा बेग्लाबेग्लै एक एक दिन भिजाउनू । यसरी सातदिनसम्म भिजाउने गरेपछि माडेर त्यसको गोली बनाउनू । यसको चारैतिर कपडाले बेरी बालुकायन्त्रमा राखेर आगोमा पोल्नू । मन्द आँचमा यसरी तीन दिनसम्म पोल्नू । सेलाएपछि ओखती निकालेर त्यसमा प्रशोधित वत्सनाभको धुलो एक पल र पिप्लाको धुलो दुई पल मिसाउनू । यसलाई सर्वेश्वर रस भनिन्छ । यो रस दुई रत्ती महसँग खानू । यसपछि लगत्तै बाकुची र देवदारको धुलो एक कर्ष अरिडको तेलमा मिसाएर खानू । सुप्तिकुष्ठ र मण्डलकुष्ठ निको हुन्छ ।

### सुप्तिकुष्ठ आदि रोगमा स्वर्णक्षीरी रस



**हेमाह्वां पञ्चपलिकां क्षिप्त्वा तक्रघटे पचेत् ।**
**तक्रे जीर्णे समाहृत्य पुनः क्षीरघटे पचेत् ॥२००॥**
**क्षीरे जीर्णे समुद्धृत्य शा(क्षा)लयित्वा विशेषतः ।**
**तच्चूर्णं पञ्चपलिकं मरिचानां पलद्वयम् ॥२०१॥**
**पलैकं मूर्च्छितं सूतमेकीकृत्य तु भक्षयेत् ।**
**निष्कैकं सुप्तिकुष्ठार्तः स्वर्णक्षीरीरसो ह्ययम् ॥२०२॥**

हेमाह्व (चाँप ?) पाँच पललाई एउटा तक्रले भरिएको घैंटोमा हाली राख्नू । जब तक्र सुक्दछ तब हेमाह्व निकाल्नू र दूधको घैंटोमा हालेर राख्नू । जब दूध पनि सुक्दछ तब हेमाह्वलाई निकालेर पखाल्नू । अनि यसको धुलो बनाएर त्यो धुलो पाँच पल दुई पल मरिचको धुलो र प्रशोधित पारोको भस्म एक पल मिसाएर पिँध्नू । यसलाई स्वर्णक्षीरी रस भनिन्छ । यो रस एक निष्क दिनहुँ खाने गर्नाले सुप्तिकुष्ठ नाश हुन्छ ।

### प्रमेहमा मेहबद्ध रस

सूतभस्म(भस्मसूतं) मृतं कान्तं मुण्डभस्म शिलाजतु ।
शुद्धं ताप्यं शिलां व्योषं(म) त्रिफलां कोलबीजकम् ॥२०३॥
कपित्थं रजनीचूर्णं भृङ्गराजेन भावयेत् ।
विं(त्रिं)शद्वारं विशोष्याथ मधुयुक्तं लिहेत् सदा ॥२०४॥
निष्कमात्रं(त्रो) हरेन्मेहान्मेहबद्धो रसो महान् ।
महानिम्बस्य बीजानि पिष्ट्वा षट्सम्मितानि च ॥२०५॥
पलतण्डुलतोयेन घृतनिष्कद्वयेन च ।
एकीकृत्य पिबेच्चानु हन्ति मेहश्चिरन्तनम् ॥२०६॥

प्रशोधित पारोको भस्म, कान्तसारलौहको भस्म, लोहभस्म, प्रशोधित शिलाजित, प्रशोधित सुनामक्खीको भस्म, मनशिला, सुठो, मरिच, पिप्ला, हर्रो, बर्रो, अमला, बयरका गेडा, खयरको गुदी र बेसार बराबर मात्रामा लिई भस्म बाहेकका अरु ओखती धुलो पारी त्यसमा सबै भस्म मिसाएर भाङको रसमा बीस पटक भिजाउनू । यसलाई मेहवद्ध रस भनिन्छ । यो रस एक निष्क महसँग मिसाएर खानाले कडा खालको प्रमेह पनि नाश हुन्छ । बकाइनुको गेडा छ वटा पिसेर धुलो बनाई चौलानी पानी एक पलमा यो धुलो मिसाएर त्यो रस खानाले पुरानो खालको प्रमेह पनि नाश हुन्छ ।



### जलोदर आदि रोगमा महावह्निरस

चतुःसूतस्य गन्धाष्टौ रजनी त्रिफला शिवा ।
प्रत्येकञ्च द्विभागं स्यात् त्रिवृज्जैपालचित्रकम् ॥२०७॥
प्रत्येकञ्च त्रिभागं स्यात् त्र्यूषणं दन्ति जीरकम् ।
प्रत्येकमष्टभागं स्यादेकीकृत्य विचूर्णयेत् ॥२०८॥
जयन्ती स्नुक्पयो भृङ्गवह्निवातारितैलकैः ।
प्रत्येकेन क्रमाद्भाव्यं सप्तवारं पृथक् पृथक् ॥२०९॥
महावह्निरसो नाम निष्कमुष्णजलैः पिबेत् ।

**विरेचनं भवेत्तेन तक्रभक्तं ससैन्धवम् ॥२१०॥**
**दिनान्ते दापयेत् पथ्यं वर्जयेच्छीतलं जलम् ।**
**सर्वोदरहरः प्रोक्तो मूढवातहरः परः ॥२११॥**

पारो चार भाग, गन्धक आठ भाग; हलेदो, हर्रो, बर्रो, अमला र (पुनः) हर्रो दुई दुई भाग; निशोध, प्रशोधित अजयपाल र चितू तीन तीन भाग तथा सुठो, मरिच, पिप्ला, वज्रदन्ती र जीरा आठ आठ भाग लिई मिसाएर धुलो बनाउनू । यो धुलो अरणी (गिनेरी) को रसमा, सिउँडीको दूध, भाङको रस, चितुको रस र अरिडको तेलमा बेग्लाबेग्लै सात सात पटक भिजाउनू । यसपछि एक एक निष्कका गोली बनाउनू । एक गोली तातोपानीसँग खानाले दिसा लाग्दछ । दिसा लागेपछि साँझमा पथ्य खानाका रूपमा तक्रमा नुन हाली त्योसँग भात खान दिनू । पानी पिउनु पर्दा तातो पानी पिउनू, चिसो पानी नपिउनू । यो रस खानाले दिसा खुली पेटका विकार र मूढवातरोग ठिक हुन्छ ।

### गुल्म, फियोका रोग आदिमा विद्याधर रस



**गन्धकं तालकं ताप्यं मृतताम्रं मनःशिलाम् ।**
**शुद्धं सूतञ्च तुल्यांशं मर्दयेद्भावयेद् दिनम् ॥२१२॥**
**पिप्पल्यास्तु कषायेण वज्रीक्षीरेण भावयेत् ।**
**निष्कार्धं भक्षयेत् क्षौद्रैर्गुल्मप्लीहादिकञ्जयेत् ॥२१३॥**
**रसो विद्याधरो नाम गोमूत्रञ्च पिबेदनु ।**

गन्धक, हरिताल, सुनामक्खीको भस्म, ताम्रभस्म, मनशिला र प्रशोधित पारो बराबर मात्रामा लिनू । खलमा हाली पिप्लाको काँढापानीमा एक दिनसम्म भिजाउनू । अनि अर्को दिन सिहुँडीको दूधमा भिजाउनू । यसलाई विद्याधर रस भनिन्छ । यो रस आधा निष्क महसँग मिसाएर खानाले गुल्म र फियोका रोग नाश हुन्छ । यो ओखती खाएपछि गहुँत खानु पर्दछ ।

### परिणामशूल रोगमा त्रिनेत्र रस

टङ्कणं हारिणं शृङ्गं स्वर्णं शुल्बं मृतं रसम् ॥२१४॥
दिनैकमार्द्रकद्रावैर्मर्द्यं रुद्ध्वा पुटे पचेत् ।
त्रिनेत्राख्यरसस्यैकं माषं मध्वाज्यकैर्लिहेत् ॥२१५॥
सैन्धवं जीरकं हिङ्गु मध्वाज्याभ्यां लिहेदनु ।
पक्तिशूलहरः ख्यातो मासमात्रान्न संशयः ॥२१६॥

सुहागा, हरिणको सिङ, स्वर्णभस्म, ताम्रभस्म र पारोभस्मलाई मिसाई अदुवाको रसमा एक दिन भिजाउनू । यसपछि माटाको भाँडामा हाली कपडाले मुख बेरी माटोले लिपेर खाल्टो खनी राखेर मन्द आँचमा तताउनू । सेलाएपछि बाहिर निकालेर ओखती झिक्नू । यसलाई त्रिनेत्र रस भनिन्छ । यो रस एक मासा मह र घिउसँग मिसाएर खान दिनू । यसपछि लगत्तै सिधेनुन, जीरा र भुटेको हिङ धुलो पारेर मह र घिउसँग मिसाई खानू । परिणाम शूल एक महिनामा ठिक हुन्छ ।



### शूल रोगमा शूलगजकेसरी रस

शुद्धसूतं द्विधा गन्धं यामैकं मर्दयेद् दृढम् ।
द्वयोस्तुल्यं शुद्धताम्रं सम्पुटे तं निरोधयेत् ॥२१७॥
ऊर्ध्वाधो लवणं दत्त्वा मृद्भाण्डे धारयेद्भिषक् ।
ततो गजपुटे पक्त्वा स्वाङ्गशीतं समुद्धरेत् ॥२१८॥
सम्पुटं चूर्णयेत् सूक्ष्मं पर्णखण्डे द्विगुञ्जकम् ।
भक्षयेत् सर्वशूलार्तो हिङ्गु शुण्ठी च जीरकम् ॥२१९॥
वचामरिचजं चूर्णं कर्षमुष्णजलैः पिबेत् ।
असाध्यं नाशयेच्छूलं रसोऽयं गजकेसरी ॥२२०॥

प्रशोधित पारो एक भाग र गन्धक दुई भाग मिसाएर एक दिनसम्म खलमा भिजाएर राख्नू । अनि यति नै प्रशोधित तामा लिनू । यसको कचौरी बनाएर त्यसमा यो ओखती राख्नू र अर्को कचौरीले छोप्नू । अनि माटाको हाँडीलाई आधा नुन हालेर भरी त्यसको बीचमा यो

कचौरी राख्नू । यो हाँडीलाई अर्को हाँडीले छोपी मुखमा कपडा बेरी माटोले लिपेर बन्द गर्नू । अनि सुकाउनू । यसपछि खाल्टो खनी गजपुटको आगोमा तताउनू । जब सेलाउँदछ तब झिकेर त्यो कचौरीलाई सावधानीपूर्वक पिँधेर धुलो बनाउनू । यसलाई शूलगजकेशरी रस भनिन्छ । सबै प्रकारका शूलका रोगीलाई यो रस दुई रत्ति पानको बिडामा हाली खान दिनू । यसपछि तुरुन्त भुटेको हिङ, सुठो, जीरा, बोझो र कालोमरिचको धुलो एक कर्ष पानीमा मिसाएर खुवाउनू । यसले जस्तोसुकै शूल रोग पनि निको हुन्छ ।

कमजोर पाचन शक्ति आदिमा अग्नितुण्डीवटी रस

शुद्धसूतं विषं गन्धमजमोदां फलत्रयम् ।
सर्ज्जी(स्वर्जि)क्षारं यवक्षारं वह्निसैन्धवजीरकौ(कम्) ॥२२१॥
सौवर्चलं विडङ्गानि सामुद्रं त्र्यूषणं समम् ।
विषमुष्टिं सर्वतुल्यां जम्बीराम्लेन मर्दयेत् ॥२२२॥
मरिचाभां वटीं खादत् सर्वाजीर्ण (खादेद्वह्निमान्द्य) प्रशान्तये ।
पथ्या शुण्ठी गुडञ्चानु पलार्धं भक्षयेत् सदा ॥२२३॥
अग्नितुण्डीवटी ख्याता सर्वरोगकुलान्तका ।

प्रशोधित पारो, प्रशोधित वत्सनाभ विष, गन्धक, ज्वानु, हर्रो, बर्रो, अमला, सज्जिखार, जवाखार, चितू, सिधेनुन, जीरा, सौवर्चल नुन, विडनुन, समुद्रीनुन, सुठो, मरिच र पिप्ला बराबर मात्रामा लिई प्रशोधित उष्टि (विष विशेष ? हलहले) का गेडा यी सबै ओखती बराबर लिनू । अनि सबैलाई ज्यामिरको रसमा भिजाएर मरिचका गेडाजत्रा गोली बनाउनू । यी गोली एक एक वटा दिनहुँ खानाले सबै खालका अजीर्ण नाश हुन्छन् । यसपछि हर्रो, सुठो र मिस्री कुटेर दुई दुई तोलाका दरले खानाले यो अग्नितुण्डीबटीले सबै रोग नाश गर्दछ ।

हैजा (विषूचिका) मा अजीर्णकण्टक रस

शुद्धसूतं विषं गन्धं समं सर्वं विचूर्णयेत् ॥२२४॥
मरिचं सर्वतुल्यांशं कण्टकार्याः फलद्रवैः ।
मर्दयेद्भावयेत् सर्वमेकविंशतिवारकम् ॥२२५॥

**वटीं गुञ्जात्रयं खादेत् सर्वाजीर्णप्रशान्तये ।**
**अजीर्णकण्टकश्चायं (: सोऽयं) रसो हन्ति विषूचिकाम् ।।२२६।।**

प्रशोधित पारो, प्रशोधित वत्सनाभ विष र गन्धक बराबर मात्रामा लिई यी सबै बराबर कालो मरिच लिनू । सबैलाई मिसाएर धुलो पारी कण्टकारीको रसमा एक्काईस पटक भिजाउनू । त्यसपछि तीन तीन रत्तिका गोली बनाउनू । यसलाई अजीर्णकण्टक रस भनिन्छ । यो गोली दिनको एक एक वटा खानाले सबै खालको अजीर्ण र हैजा निको हुन्छ ।

**कफका रोगमा मन्थानभैरव रस**

**मृतं सूतं मृतं ताम्रं हिङ्गु पुष्करमूलकम् ।**
**सैन्धवं गन्धकं तालं कटुकीं चूर्णयेत् समम् ।।२२७।।**
**पुनर्नवादेवदालीनिर्गुण्डीतण्डुलीयकैः ।**
**तिक्तकोशातकीद्रावैर्दिनैकं मर्दयेद् दृढम् ।।२२८।।**
**माषमात्रं लिहेत् क्षौद्रे रसं मन्थानभैरवम् ।**
**कफरोगप्रशान्त्यर्थं निम्बक्वाथं पिबेदनु ।।२२९।।**

पारोभस्म, ताम्रभस्म, हिङ, चाभा, सिधे नुन, गन्धक, हरिताल र कुटकी बराबर मात्रामा लिनू । भस्म बाहेकका अरु ओखतीलाई धुलो बनाएर त्यसमा भस्म सबै मिसाउनू । अनि यो धुलोलाई पुनर्नवाको रस, देवदारको रस, नेवारीको रस, लुँडे (वा कालीकाठ ?) मा एक एक दिन भिजाउनू । पुनः पर्बल र घिरौंलोको रसमा एक एक दिन भिजाउनू । त्यसपछि बेस्सरी माडेर गोली बनाउनू । यसलाई मन्थानभैरव रस भनिन्छ । यो रस एक मासा महमा मिसाएर खानाले र यसपछि नीमको बोक्राको काँढापानी पिउनाले कफका रोगहरू नाश हुन्छन् ।

**वातरोगमा वातनाशन रस**

**सूतहाटकवज्राणि ताम्रं लोहञ्च माक्षिकम् ।**
**तालं नीलाञ्जनं तुत्थमहिफेनं समांशकम् ।।२३०।।**

पञ्चानां लवणानाञ्च भागमेकं विमर्दयेत् ।
वज्रीक्षीरैर्दिनैकन्तु रुद्ध्वाऽधो भूधरे पचेत् ॥२३१॥
माषैकमार्द्रकद्रावैर्लेहयेद्वातनाशनम् ।
पिप्पलीमूलजक्वाथं सकृष्णमनुपाययेत् ॥२३२॥
सर्वान्वातविकाराँस्तु निहन्त्याक्षेपकादिकान् ।

पारोको भस्म, स्वर्णभस्म, हीराभस्म, ताम्रभस्म, लोहभस्म, सुनामक्खीको भस्म, हरितालको भस्म, निलाञ्जन, प्रशोधित नीलोतुथो र अफिम यी सबै ओखती बराबर मात्रामा लिनू । पाँच थरी नुन मिसाएर एक भाग लिनू (अरु दश थरी ओखती दश तोला हुँदा यो नुन एक तोला) । सबैलाई मिसाएर सिहुँडीको दूधमा एक दिन भिजाएर राख्नू । अनि माटाका भाँडामा हाली कपडाले बेरी माटो दलेर भूधरयन्त्रमा राखी पोल्नू । सेलाए पछि झिकेर राख्नू । यसलाई वातनाशक रस भनिन्छ । यो रस एक मासाका दरले अदुवाको रसमा मिसाएर खाई त्यसपछि तुरुन्तै पिप्लाको जराको काँढापानीमा पिप्लाको धुलो मिसाएर खानाले आक्षेप आदि वातरोग नाश हुन्छन् ।



सन्निपात आदिमा कनकसुन्दर रस

कनकस्याष्टशाणाः स्युः सूतो द्वादशभिर्मतः ॥२३३॥
गन्धोऽपि द्वादश प्रोक्तस्ताम्रं शाणद्वयोन्मितम् ।
अभ्रकस्य चतुःशाणं (अभ्रकं स्याच्चतुःशाणं) माक्षिकञ्च द्विशाणिकम् ॥२३४॥
वङ्गो द्विशाणः सौबीरं त्रिशाणं लोहमष्टकम् ।
विषं त्रिशाणिकं कुर्याल(कृत्वा)लाङ्गली पलसम्मिता ॥२३५॥
मर्दयेद्दिनमेकञ्च रसैरम्लफलोद्भवैः ।
दद्यान्मृदुपुटे(टं) वह्नौ ततः सूक्ष्मं विचूर्णयेत् ॥२३६॥
माषमात्रो रसो देयः सन्निपाते सुदारुणे ।
आर्द्रकस्वरसेनैव रसोनस्य रसेन वा ॥२३७॥
किलासं सर्वकुष्ठानि विसर्पञ्च भगन्दरम् ।

**ज्वरं गरमजीर्णञ्च जयेद्रोगहरो रसः ॥२३८॥**

धतुराका गेडा आठ शाण, पारो बाह्र शाण, गन्धक बाह्र शाण, ताम्रभस्म दुई शाण, अभ्रखभस्म चार शाण, सुनामक्खीभस्म दुई शाण, राङभस्म दुई शाण, निलाञ्जन तीन शाण, लाहेभस्म आठ शाण, प्रशोधित वत्सनाभ विष तीन शाण र हलहलेको जरा एक पल यी सबै पिँधेर कागती आदि अमिलोको रसमा एकदिन भिजाएर राख्नू । त्यसपछि माटाको भाँडामा राखी कपडा बेरेर माटोले लिपी आरनमा राखेर मन्द आँचमा तताउनू । सेलाएपछि झिकी राम्ररी पिसेर राख्नू । यसलाई कनकसुन्दर रस भनिन्छ । यो रस एक मासा अदुवाको रससँग वा लसुनको रससँग खानाले कडा खालको सन्निपात पनि ठिक हुन्छ । किलासकुष्ठ र अन्य सबै कुष्ठ, विसर्प, भगन्दर, जरो, विषदोष र अजीर्ण समेत नाश हुन्छ ।

सन्निपातभैरव रस

**रसगन्धौ त्रिकर्षौ (रसो गन्धस्त्रिकर्षः) स्यात्कुर्यात्कज्जलिकां तयोः ।**
**ताराभ्रताम्र(ताम्रताराभ्र)वङ्गाहिसाराश्चैकैककार्षिकाः ॥२३९॥**

**शिग्रुज्वालामुखीशुण्ठी बिल्वेभ्यस्तण्डुलीयकात्(न्) ।**
**प्रत्येकं स्वरसैः कुर्याद्यामैकैकं विमर्दनम् ॥२४०॥**
**कृत्वा गोलं वृतं वस्त्रे लवणापूरिते न्यसेत् ।**
**काचभाण्डे ततः स्थाल्यां काचकूपीं निवेशयेत् ॥२४१॥**
**बालुकाभिः प्रपूर्याथ वह्नियामद्वयं भवेत् ।**
**तत उद्धृत्य तं गोलं चूर्णयित्वा विमिश्रयेत् ॥२४२॥**
**प्रवालचूर्णकर्षेण शाणमात्रविषेण च ।**
**कृष्णसर्पस्य गरलैर्दिवसं(द्विबेलं) भावयेत्तथा ॥२४३॥**
**तगरं मुशली मांसी हेमाह्वा वेतसः कणा ।**
**नीलिनी पत्रकं चैला चित्रकश्च कुठेरकः ॥२४४॥**
**शतपुष्पा देवदाली धत्तूरागस्त्यमुण्डिकाः ।**
**मधूकजातीमदनरसैरेषां विमर्दयेत् ॥२४५॥**

**प्रत्येकमेकवेलञ्च ततः संशोष्य धारयेत् ।**
**बीजपूरार्द्रकद्रावैर्मरिचैः षोडशोन्मितैः ॥२४६॥**
**रसो द्विगुञ्जाप्रमितः सन्निपातेषु दीयते ।**
**प्रसिद्धोऽयं रसो नाम्ना सन्निपातस्य भैरवः ॥२४७॥**

प्रशोधित पारो तीन कर्ष र गन्धक तीन कर्ष मिसाएर लेप बनाउनू । अनि यसमा चाँदीको भस्म, अभ्रखभस्म, ताम्रभस्म, नागभस्म, राङभस्म र लोहभस्म एक एक कर्ष मिसाउनू । यसपछि सैजनको बोक्राको रसमा एक प्रहरसम्म भिजाउनू । अनि ज्वालामुखीको रसमा, सुठोको काँढापानीमा, बेलफलको रसमा र लुँडेको रसमा बेग्लाबेग्लै एक एक प्रहरसम्म भिजाउनू । यसपछि डल्लो बनाउनू । डल्लोलाई कपडाले बेरेर सिसाको कचौरामा राख्नू । त्यसलाई अर्को कचौराले छोपी माटोले लिप्नू । यसपछि एउटा हाँडीमा धुलो नुन आधा भरी बीचमा त्यो सिसाको डल्लो बनाइएको कचौरा राख्नू र फेरी नुनको धुलो हालेर हाँडी भर्नू । यसपछि आरनमा बसालेर हाँडीलाई दुई प्रहरसम्म तताउनू । सेलाएपछि ओखती निकाल्नू । त्यसपछि त्यो डल्लोलाई धुलो बनाएर त्यसमा मुगाको धुलो एक कर्ष र प्रशोधित वत्सनाभको धुलो एक शाण मिसाउनू । कालो सर्पको विष हाली एक दिनसम्म भिजाउनू । फेरी यो रसलाई सिसिमा हाली मुखमा ईँटको बिर्को लगाई त्यसलाई कपडाले बेरी माटोले लिप्नू । घाममा सुकाएर बालुकायन्त्रमा राखी दुई प्रहरसम्म पोल्नू । सेलाएपछि झिकेर तगर, मुसलीकन्द, जटामसी, चाँप, बेत, पिप्ला, नीरको फूल, तेजपात, अलैंची, चितू, वनतुलसी, सुप, देवदार, धतुरो, अगस्ति, गोरखमुण्डी, महुवा, चमेली र मैनकाँडोको स्वरसमा घोट्नू । अर्थात् एउटाको रस निचोरेर घोट्नू, त्यो सुक्दछ फेरी अर्कोको रस निचोरेर घोट्नू । बेग्लाबेग्लै घोट्नू । रस नआउने ओखतीको काँढापानी बनाएर घोट्नू । अन्तमा सुकेपछि गोली बनाउनू । यो रसलाई सन्निपातभैरव रस भनिन्छ । दुई रत्ति यो रस बिमिरो र अदुवाको रसमा मिसाई सोह्र वटा कालो मरिचको धुलो हालेर सन्निपातका रोगीलाई खान दिए रोग ठिक हुन्छ ।

अतीसार आदिमा ग्रहणीकपाटरस

**तारमौक्तिकहेमानि सारश्चैकैकभागिकाः ।**
**द्विभागो गन्धकः सूतस्त्रिभागो मर्दयेदिमान् ॥२४८॥**

कपित्थस्वरसैर्गाढं मृगशृङ्गे ततः क्षिपेत् ।
पुटेन्मध्यपुटेनैव तत उद्धृत्य मर्दयेत् ॥२४९॥
बलारसैः सप्तबेलमपामार्गरसैस्त्रिधा ।
लोध्रप्रतिविषामुस्तधातकीन्द्रयवाः स्मृताः (यवामृता) ॥२५०॥
प्रत्येकमेषां स्वरसैर्भावना स्यात्त्रिधा त्रिधा ।
माषमात्रो रसो देयो मधुना मरिचैस्तथा ॥२५१॥
हन्यात् सर्वानतीसारान्ग्रहणीं सर्वजामपि ।
कपाटो ग्रहणीरोगे रसोऽयं वह्निदीपनः ॥२५२॥

रतजभस्म, मोतिभस्म, स्वर्णभस्म र लोहभस्म यी एक एक भाग लिनू । गन्धक दुई भाग र प्रशोधित पारो तीन भाग लिनू । सबैलाई खयरको रसमा घोटी हरिणको सिङमा खाँदी खाँदी भर्नू । अनि त्यो सिङलाई कपडाले बेरी माटोले लिपेर आरनमा मध्यम आँचमा पोल्नू । जब सेलाउँदछ बाहिर झिकी खलमा हाली बलुको रसमा सात पटक भिजाउनू (पुट दिनू) । बेल र दतिवनको रसमा तीन पटक, तथा लोध, उत्तिस, नागरमोथे, धयैँराको फूल र इन्द्रजौको स्वरसमा बेग्लाबेग्लै तीन तीन पुट दिनू । जुन ओखतीको स्वरस निस्कँदैन त्यसको काढापानी बनाएर त्यसमा घोट्नू । सुक्न आँटेपछि एक एक माषाका गोलीहरू बनाउनू । यसलाई ग्रहणीकपाट रस भनिन्छ । यो रसको एक गोली कालो मरिचको धुलोसँग महमा मिसाएर खानाले सबै खालका अतिसार तथा सबै खालका ग्रहणी नाश हुन्छन् । पाचकाग्नि बल्दछ ।

### ग्रहणीवज्रकपाटरस

मृतसूताभ्रके(कं) गन्धं यवक्षारं सटङ्कणम् ।
अग्निमन्थं वचां कुर्यात् सूततुल्यानिमान् सुधीः ॥२५३॥
ततो जयन्तीजम्बीरभृङ्गद्रावैर्विमर्दयेत् ।
त्रिवासरं ततो गोलं कृत्वा संशोष्य धारयेत् ॥२५४॥
लोहपात्रे शरावञ्च दत्त्वोपरि विमुद्रयेत् ।
अधो वह्निं शनैः कुर्याद्यामार्धं तत उद्धरेत् ॥२५५॥

**रसतुल्यां प्रतिविषां दद्यान्मोचरसन्तथा ।**
**कपित्थविजयाद्रावैर्भावयेत् सप्तधा पृथक् ॥२५६॥**
**धातकीन्द्रयवा मुस्ता लोध्रं बिल्वं गुडूचिका ।**
**एतद्रसैर्भावयित्वा वेलैकैकञ्च शोषयेत् ॥२५७॥**
**रसं वज्रकपाटाख्यं शाणैकं मधुना लिहेत् ।**
**वह्निशुण्ठीं विडं बिल्वं लवणं चूर्णयेत् समम् ॥२५८॥**
**पिबेदुष्णाम्बुना चानु सर्वजां ग्रहणीञ्जयेत् ।**

पारोको भस्म, अभ्रखभस्म, गन्धक, जवाखार, सुहागा, अरणीको जरा र बोझो बराबर मात्रामा लिनू । यसलाई मिसाएर गिनेरी, ज्यामिर र भाङको रसमा एक एक दिन घोटेर त्यसपछि गोलो बनाउनू । सुकाएर फलामको कराहीमा राखी माटोको कचौराले छोप्नू र जोरनमा माटो दलेर टाल्नू । त्यसपछि कराहीलाई मन्द आँचमा चार घडीसम्म तताउनू । जब सेलाउँदछ तब गोलालाई बाहिर निकाल्नू । यसमा यति नै बराबर उत्तिसको धुलो र सिमलको खोटो मिसाएर खलमा हाली खयरको रसको सात पटक भिजाएर पुनः भाङको रसमा सात पटक भिजाएर घोट्नू । यसपछि धयैँराको फूल, इन्द्रजौ, नागरमोथे, लोध, बेलफल, र गुर्जोको रसमा बेग्लाबेग्लै घोट्नू । सुक्न सुक्न आँटिपछि एक एक शाणका गोली बनाउनू । यसलाई ग्रहणीवज्रकपाट रस भनिन्छ । जसलाई ग्रहणीजन्य विकार छ उसलाई मद्यसँग यो गोली खान दिनू । अनि तुरुन्त चितू, सुठो, विडनुन, बेलको गुदी र सिधेनमक मिसाएर धुलो बनाई तातो पानीसँग खान दिनू । सबै खालका ग्रहणी नाश हुन्छन् ।



**वीर्य बढाउन मदनकामदेव रस**

**तारं वज्रं सुवर्णञ्च ताम्रं सूतकगन्धकम् ॥२५९॥**
**लोहं क्रमविवृद्धानि कुर्यादेतानि मात्रया ।**
**विमर्द्य कन्यकाद्रावैर्न्यसेत्काचमये घटे ॥२६०॥**
**विमुच्य पिठरीमध्ये धारयेत्सैन्धवामृ(वृ)ते ।**
**पिठरीं मुद्रयेत्सम्यक् ततश्चुल्ल्यां निवेशयेत् ॥२६१॥**
**वह्निं शनैः शनैः कुर्याद्दिनैकं तत उद्धरेत् ।**

स्वाङ्गशीतञ्च सञ्चूर्ण्य भावयेदर्कदुग्धकैः ॥२६२॥
अश्वगन्धा च काकोली वानरी मुसली क्षुरा ।
त्रित्रिवेलं रसैरेषां(रासां) शतावर्याश्च भावयेत् ॥२६३॥
पद्मकन्दकसेरूणां रसैः काशस्य भावयेत् ।
कस्तूरीव्योषकर्पूरकङ्कोलैलालवङ्गकम् ॥२६४॥
पूर्वचूर्णादष्टमांशमेतच्चूर्णं विमिश्रयेत् ।
सर्वैः समां शर्कराञ्च दत्त्वा शाणोन्मितं पिबेत् ॥२६५॥
गोदुग्धद्विपलेनैव मधुराहारसेवकः ।
अस्य प्रभावात् सौन्दर्यं स लभेन्नात्र संशयः ॥२६६॥
तरुणी रमयेद्बह्वीः शुक्रहानिर्न जायते ।

रतजभस्म एक भाग, हिराको भस्म दुई भाग, स्वर्ण भस्म तीन भाग, ताम्रभस्म चार भाग, पारो पाँच भाग, गन्धक छ भाग र लोहभस्म सात भाग खलमा हालेर धिउकुमारीको रसमा घोट्नू । यसलाई सिसिमा हाली कपडाले बेर्नु र माटोले लिप्नू । सुकेपछि यसलाई एउटा माटोको हाँडीमा सिसिको घाँटीसम्म आउने गरी धुलो नुन हालेर राख्नू । यसपछि हाँडीको मुख बन्द गरी कपडाले बेरी माटोले लिपेर सुकाउनू । सुकेपछि अगेनामा बसाली मन्द आँचमा एकदिनसम्म तताउनू । सेलाएपछि सिसिबाट ओखती झिकी खलमा हालेर आँकको दूधले तीन पटक घोट्नू । यसपछि अश्वगन्धा, काकोली (वा पुनः अश्वगन्धा), काउछोका गेडा, मुसलीकन्द, तालमखाना, कुरिलो, कमलगट्टा, सेतो मोथे र काँशको रसमा बेग्लाबेग्लै तीन तीन पटक घोट्नू । रस सिद्ध हुन्छ । यसपछि यसमा कस्तूरी, सुठो, कालोमरिच, पिप्ला, कपूर, फलकपूर, अलैंची र ल्वाङको धुलो ओखतीको आठौं भाग मिसाउनू । यो रस एक शाणमा त्यति नै मिस्री मिसाएर दुई पल गाईको दूधसँग पिउनाले शरीर अत्यन्त सुन्दर हुन्छ । बलशाली र तेजस्वी हुन्छ । अनेकौं युवतीसँग रमण गर्दा पनि वीर्य क्षय हुँदैन । यो ओखती खाँदा अमिलो कुरा नखानू, गुलियो कुरा खानू । यसलाई मदनकामदेव रस भनिन्छ ।

### वीर्य बढाउन कन्दर्पसुन्दर रस

**सूतो वज्रमहिर्मुक्ता तारं हेम(मा) सिताभ्रकम् ॥२६७॥**
**रसैः कर्षांशकानेतान् मर्दयेदिरिमेदजैः ।**
**प्रवालचूर्णं गन्धश्च द्विद्विकर्षं विमिश्रयेत् ॥२६८॥ ततोऽश्वगन्धास्वरसैर्विमर्द्य मृगशृङ्गके ।**
**क्षिप्त्वा मृदुपुटे पक्त्वा भावयेद्धातकीरसैः ॥२६९॥**
**काकोली मधुकं मांसी बलात्रयबिसेङ्गुदम्(दे) ।**
**द्राक्षापिप्पलि(ल)वन्दाकं वरी पर्णीचतुष्टयम् ॥२७०॥**
**परूषकं कसेरुश्च मधूकं वानरी तथा ।**
**भावयित्वा रसैरेषां शोषयित्वा विचूर्णयेत् ॥२७१॥**
**एला त्वक्पत्रकं मांसी लवङ्गागु(ग)रुकेशरम् ।**
**मुस्तं मृगमदः कृष्णा जलञ्चन्द्रश्च मिश्रयेत् ॥२७२॥**

**एतच्चूर्णैः शाणमितै रसं कन्दर्पसुन्दरम् ।**
**खादेच्छाणमितं रात्रौ सिता धात्री विदारिका ॥२७३॥**
**एतासां कर्षचूर्णेन सर्पिःकर्षैसुसंयुतम् ।**
**तस्यानु द्विपलं क्षीरं पिबेत् सुस्थितमानसः ॥२७४॥**
**रमणी रमयेद्बह्वीः शुक्रहानिर्न जायते (र्न हानिं क्वापि गच्छति) ।**

पारोको भस्म, हिराको भस्म, नागभस्म, मोतिभस्म, रतजभस्म, स्वर्णभस्म र कालो अभ्रखको भस्म यी सबै एक एक कर्ष लिनू । सबैलाई खलमा हाली खयरको बोक्राको रसमा घोट्नू । यसमा मुगाको धुलो र गन्धक दुई दुई कर्ष मिसाउनू । अनि अश्वगन्धाको रसमा घोट्नू । अनि यसलाई हरिणको सिङमा भरी त्यसलाई कपडाले बेरेर माटोले लिप्नू । अनि आगोमा मन्द आँचमा पोल्नू । सेलाएपछि झिकी पुन खलमा हाल्नू । अनि धयैँराको फूल, काकोली (नभए अश्वगन्धा), जेठीमधु, जटामसी, तीन किसिमका बला, कमलको कन्द, चिउरी, दाख, पिप्ला, मोथे, कुरिलो, चार थरी पर्णी (माष, मुद्ग, पृष्ठ, शाल), फाल्सा, सेतो मोथे, महुवा र काउछोका गेडाको रसमा बेग्ला बेग्लै घोटेर सुकाउनू । यसलाई कन्दर्पसुन्दर

रस भनिन्छ । यसपछि यो रस एक शाणमा अलैंची, दालचिनी, तेजपात, वंशलोचन, ल्वाङ, धूपी, केशर, नागरमोथे, कस्तूरी, पिप्ला, खस र कपूर यी सबैको धुलो एक शाण मिसाउनू । यसलाई एक कर्ष घिउमा मिसाएर अमला र कुभिण्डोको धुलो एवं मिश्री यी एक एक कर्ष समेत मिसाई रातमा पिउनू । त्यही बेला प्रसन्न मनले दुई पल गाईको तताएर सेलाएको दूध पिउनू । यसपछि अनेक स्त्रीरमण गर्दा पनि धातु खिइन्न । मानिस अद्भुत वीर्यशाली हुन्छ ।

लोहरसायन

शुद्धं रसेन्द्रं भागैकं द्विभागं शुद्धगन्धकम् ॥२७५॥
क्षिपेत्कज्जलिकां कुर्यात्तत्र तीक्ष्णभवं रजः ।
क्षिप्त्वा कज्जलिकातुल्यं प्रहरैकं विमर्दयेत् ॥२७६॥
ततः कन्याद्रवैः खल्वे त्रिदिनं परिमर्दयेत् ।
ततः सञ्जायते तस्य सोष्णो धूमोद्गमो महान् ॥२७७॥
अत्यन्तं पिण्डितं कृत्वा ताम्रपात्रे निधापयेत् ।
मध्ये धान्यकुशूलस्य त्रिदिनं धारयेद् बुधः ॥२७८॥
उद्धृत्य तस्मात् खल्वे च क्षिप्त्वा घर्मे निधाय च ।
रसैः कुठारच्छिन्नायास्त्रिवेलं परिभावयेत् ॥२७९॥
संशोष्य घर्मे क्वाथैश्च भावयेत् त्रिकटोस्त्रिधा ।
वासाऽमृताचित्रकाणां रसैर्भाव्यं क्रमात्त्रिधा ॥२८०॥
लोहपात्रे ततः क्षिप्त्वा भावयेत्त्रिफलाजलैः ।
निर्गुण्डीदाडिमत्वग्भिर्बिसभृङ्गकुरण्टकैः ॥२८१॥ पलाशकदलीद्रावैर्बीजकस्य शृतेन च ।
नीलिकाऽलम्बुषाद्रावैर्बब्बूलफलिकारसैः ॥२८२॥
भावयेत्त्रित्रिवेलञ्च ततो नागबलारसैः ।
शतावरीगोक्षुरुभिः पातालगरुडीद्रवैः ॥२८३॥
त्रित्रिवेलं यथालाभं भावयदेभिरौषधैः ।

ततः प्रातर्लिहेत्क्षौद्र घृताभ्यां कोलमात्रकम् ॥२८४॥
पलमात्रं वराक्वाथं पिबेदस्यानुपानकम् ।
मासत्रयं शीलितं स्याद्वलीपलितनाशनम् ॥२८५॥
मन्दाग्निं श्वासकासौ च पाण्डुतां कफमारुतौ ।
पिप्पलीमधुसंयुक्तं हन्यादेतन्न संशयः ॥२८६॥
वातास्र(स्रं)मूत्रदोषाँश्च ग्रहणीं गुदजां रुजम् ।
अण्डवृद्धिं जयेदेतच्छिन्नासत्त्वमधुप्लुतम् ॥२८७॥
बलवर्णकरं वृष्यमायुष्यं परमं स्मृतम् ।
जयेत् सर्वामयान्कालादिदं लोहरसायनम् ॥२८८॥
प्रलेपौषधमेतस्मिन् प्रदद्यात्कोलमात्रकम् ।
कूष्माण्डं तिलतैलञ्च माषान्नं राजिकां तथा ॥२८९॥
मद्यमम्लरसञ्चैव त्यजेल्लोहस्य सेवकः ।



प्रशोधित पारो एक भाग र प्रशोधित गन्धक दुई भाग मिसाएर ओखलमा पिँध्नू । यसमा यी दुई जति नै स्टिलको धुलो मिसेर पिसी एक प्रहरसम्म राख्नू । यसपछि घिउकुमारीको रसमा पिसेर तीन दिन राख्नू । जब यो ओखतीबाट तात्तातो धुवाँ निस्कन थाल्दछ तब यसलाई डल्लो बनाई तामाको भाँडामा राख्नू । अनि धानमा गाड्नू । चौथो दिन झिकी त्यो गोलोलाई धुलो पारी घाममा राखेर बनतुलसीको रसमा तीन पुट दिनू । अनि सुठो, कालोमरिच र पिप्लाको बेग्लाबेग्लै काँढापानी बनाई क्रमैले एक रसको तीन तीन पुट दिनू । यसपछि असुरो, गुर्जो र चितूको रसमा बेग्लाबेग्लै तीन तीन पुट दिनू । यसपछि यसलाई फलामको कराहीमा हाली हर्रो, बर्रो, अमला, नेवारी, दारिमको बोक्रा, कमलकन्द, भाङ, पहेँलो कपुरनली, पलाँश, केराको कन्द, विजयसाल, नीरको फूल, गोरखमुण्डी र बबुरको बोक्राको बेग्लाबेग्लै रस निकाली क्रमैले एक एक रसमा तीन तीन पुट दिनू । यसपछि यो रसायन एक कोल मह र घिउ मिसाएर त्योसँग खानू । त्यसपछि तुरुन्त त्रिफलाको काँढापानी पिउनू । यसरी यो ओखती तीन महिनासम्म खानाले शरीरमा अत्यन्त तागत र फुर्ति आउँदछ । फुलेका कपाल काला हुन्छन् । मह र पिप्लासँग खानाले मन्दाग्नि, दम, खोकी, पाण्डु, कफविकार र वायुविकार नाश हुन्छ । गुर्जोको सारसँग मिसाएर खानाले

**वातरक्त, मूत्रविकार, ग्रहणी र र मलद्वारका रोग निको हुन्छ । अण्डशोध साम्य हुन्छ । यो लोहरस चमक दिने, बलदायक र रति चाहना वर्धक हुन्छ । आयु बढाउँदछ समय अनुसारका सबै रोग नाश गर्दछ । यो ओखती खाने व्यक्तिले कुभिण्डो, तिलको तेल, माष, रायो, मद्य र अमिलो रस खान हुँदैन ।**

ᘛ इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां संहितायां चिकित्सास्थाने मध्यमखण्डे रसकल्पनो नाम द्वादशोऽध्यायः ᘚ

ᘛ✷ᘚ

ᘛ श्रीशार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत बाह्रौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो ᘚ

ᘛ✷ᘚ

शुरुदेखिको श्लोकको संख्याः-१,४५६.५+२८९.५=१,७४६

ᘛ✷ᘚ

# प्रक्षिप्त श्लोक

## ग्रन्थमा पछि थपिएका केही श्लोकहरू

### अजयपाल प्रशोधन

**जैपालं रहितं त्वगङ्कुररसज्ञाभिर्मले माहिषे**
**निक्षिप्तं त्र्यहमुष्णतोयविमलं खल्वे सवासोऽदितम् ।**
**लिप्तं नूतनखर्परेषु विगतस्नेहं रजःसन्निभं**
**निम्बूकाम्बुविभावितञ्च बहुशः शुद्धं गुणाढ्यं भवेत्॥१॥**

अजयपालको गेडा लिई बाहिरी छाला निकालेर अङ्कुरको भित्र हुने जिभ्री हटाउनू र कपडामा पोको पारी तीन दिनसम्म भैंसीको गोबरमा राख्नू । चौथो दिन निकाली तातोपानीले पखाल्नू । पुनः अर्को उत्तम कपडामा पोको पारी कपडा सहित धुल्याउनू । जब राम्ररी धुलो बन्दछ तब निकालेर नयाँ खबटोमा लिप्नू । यसले चिल्लो हटी धुलो जस्तै बन्दछ । अनि यसलाई कागती रसमा दुई पुट दिनू । यो शुद्ध अजयपाल विशेष गुणको हुन्छ ।



### वत्सनाभ विष प्रशोधन

**विषन्तु खण्डशः कृत्वा वस्त्रखण्डेन बन्धयेत् ।**
**गोमूत्रमध्ये निक्षिप्य स्थापयेदातपे त्र्यहम्॥२॥**
**गोमूत्रञ्च प्रदातव्यं नूतनं प्रत्यहं बुधैः ।**
**त्र्यहेऽतीते समुद्धृत्य शोषयेन्मृदु पेषयेत्॥३॥**
**शुद्ध्यत्येवं विषं तच्च योग्यं भवति चातिजित् ।**

वत्सनाभ विषलाई टुक्रा पारी कपडामा पोको पार्नू । यसपछि एउटा घैंटोमा यो डुब्नेजति गहुँत हालेर पोको त्यसभित्र हाली तीन दिनसम्म घाममा राख्नू । गहुँत फेरिरहने गर्नू । चौथो दिन वत्सनाभलाई बाहिर झिकी घाममा सुकाउनू । अनि राम्ररी धुलो बनाउनू । यो परम शुद्ध र रोगनाशक हुन जान्छ ।

अथवा

**खण्डीकृत्य विषं वस्त्रपरिबद्धन्तु दोलया ॥४॥**
**अजापयसि संस्विन्न यामतः शुद्धिमाप्नुयात् ।**
**अजादुग्धाभावतस्तु गव्यक्षीरेण शोधयेत् ॥५॥**

अथवा वत्सनाभका टुक्रालाई कपडामा पोको पारी दोलायन्त्रका बाख्रीको दुधमा हाली एक प्रहरसम्म तताउनू । बाख्रीको दूध नपाए गाईको दूधमा तताउनू । (एक तोला वत्सनाभका लागि एक सेर दुध लिनू । मन्द आँचमा पकाउनू । वत्सनाभ शुद्ध हुन्छ ।

इति क्षेपक श्लोकाः

✷

श्रीशार्ङ्गधर संहिताको मध्यखण्ड अन्तर्गत पछि थपिएका श्लोकहरू भएको खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

इति श्रीशार्ङ्गधरसंहितायामध्यमखण्डं संपूर्णम्



✷

श्रीशार्ङ्गधर संहिता अन्तर्गत मध्यखण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्या:-१,७४६+५=१,७५१

✷

# अथ उत्तरखण्डः
# अथ प्रथमोऽध्यायः
## पहिलो अध्याय

### चिल्ला पदार्थ

**स्नेहश्चतुर्विधः प्रोक्तो घृतन्तैलं वसा तथा (तथा वसा) ।**
**मज्जा च तं पिबेन्मर्त्यः किञ्चिदभ्युसिते रवौ ॥१॥**

घिउ, तेल, बोसो र मासी गरी चिल्लो चार प्रकारको हुन्छ । चिल्लो सूर्योदय भएको केही समय पछि पिउनू पर्दछ ।

### चिल्लो पदार्थका श्रोत

**स्थावरो जङ्गमश्चैव द्वियोनिः स्नेह उच्यते ।**

**तिलतैलं स्थावरेषु जङ्गमेषु घृतं वरम् ॥२॥**

स्थावर (रुख आदिबाट आउने ) र जङ्गम (जीवबाट आउने) गरी चिल्लो पदार्थ दुई प्रकारको हुन्छ । स्थावर चिल्लोमा तिलको तेल र जङ्गम चिल्लोमा घिउ उत्तम हुन्छ ।

### चिल्लोको सम्मिश्रणको नाम

**द्वाभ्यां त्रिभिश्चतुर्भिस्तैर्यमकस्त्रिवृतो महान् ।**

घिउ र तेल मिसाएपछि त्यसलाई यमक भनिन्छ । घिउ, तेल र बोसो मिसाएपछि त्यसलाई त्रिवृत् भनिन्छ ।

### चिल्लो पिउने अवधि

**पिबेत् त्र्यहं चतुरहं पञ्चाहं षडहं तथा ॥३॥**

घिउ तीन दिन, तेल चार दिन, बोसो पाँच दिन र मासी छ दिन पिउनू ।

चिल्लोको सात्म्य अवधि

**सप्तरात्रात्परं स्नेहः सात्मीभवति सेवितः ।**

सात दिन बितेपछि खाएको चिल्लो अरु खाना सरह सात्म्य हुन्छ । अनि यसको लाभ हानी केही हुँदैन ।

खाने चिल्लोको मात्रा

**दोषकालाग्निवयसां बलं दृष्ट्वा प्रयोजयेत् ॥४॥**
**हीनाञ्च मध्यमां ज्येष्ठां मात्रां स्नेहस्य बुद्धिमान् ।**

रोग र रोगीको अवस्था, समय, पाचनशक्ति र तागत हेरेर मात्रा निर्धारण गर्नू । हीन मात्रा (दुई कर्ष), मध्यम मात्रा (तीन कर्ष) र ज्येष्ठ मात्रा (एक पल) खान दिनू ।



जथाभावी चिल्लो खाँदा हुने हानी

**अमात्रया तथा काले मिथ्याहारविहारतः ॥५॥**
**स्नेहः करोति शोफार्शस्तन्द्रानिद्राविसंज्ञथाः ।**
**प्रकुर्याल्लङ्घनं तत्र स्वेदं ज्ञात्वा विरेचनम् ॥६॥** (यो आधा श्लोक कुनै प्रतिमा छैन)

चिल्लो पानका विधि र परिमाण नमानेर कमबढी पिउनाले, मन लागेका बेलामा पिउनाले र पिएपछि जथाभावी खानपिन वा गतिविधि गर्नाले सुजन, अल्काई, तन्द्रा, निद्रा र शरीरका अङ्ग लाटो हुने (एक प्रकारको बेहोसी) जस्ता समस्या हुन्छन् । (मिथ्या विहार : जुन कर्म गर्ने शक्ति नभएर पनि बलजफ्ति गरिन्छ) । यसबेला पसिना निकाल्ने, दिसा लगाउने र लङ्घन गर्ने काम गर्नुपर्दछ ।

### चिल्लो खाने मात्रा

**देया दीप्ताग्नये मात्रा स्नेहस्य पलसम्मिता ।**
**मध्यमाय त्रिकर्षा स्याज्जघन्याय द्विकार्षिकी ॥७॥**

जुन मानिसका पाचकाग्नि बलिरहेको हुन्छ उसलाई एक पल, जसको पाचकाग्नि मध्यम खालको छ उसलाई तीन कर्ष र जसको पाचन शक्ति कमजोर छ उसलाई दुई कर्ष बराबर चिल्लो खान दिनु पर्दछ ।

### चिल्लो खाने मात्राका बारेमा अन्य तरिका

**अथवा स्नेहमात्राः स्युस्तिस्रोऽन्या सर्वसम्मताः ।**
**अहोरात्रेण महती जीर्यत्यह्नि तु मध्यमा ॥८॥**
**जीर्यत्यल्पा दिनार्धेन सा विज्ञेया सुखावहा ।**

चिल्लो खुवाउने सम्बन्धमा वैद्यहरुको सर्वसम्मत मान्यता छ कि यो मात्रा तीन किसिमको हुन्छ । जति खुवाउँदा आठ प्रहरमा पच्दछ त्यसलाई महती मात्रा भनिन्छ । यो एक पलको हुन्छ । जति चिल्लो एक दिनमा पच्दछ त्यसलाई मध्यम मात्रा भनिन्छ र यो तीन कर्षको हुन्छ । जति दुई प्रहरमा पच्दछ त्यसलाई अल्प मात्रा भनिन्छ र यो दुई कर्षको हुन्छ । मात्राको यो नियम सुखदायी हुन्छ ।

### मात्रा अनुसार चिल्लो खानुका फाइदा

**अल्पा स्याद्दीपनी वृष्या स्वल्पदोषेषु पूजिता ॥९॥**
**मध्यमा स्नेहनी ज्ञेया बृंहणी भ्रमहारिणी ।**
**ज्येष्ठा कुष्ठविषोन्मादग्रहापस्मारनाशिनी ॥१०॥**

अल्प मात्राको चिल्लो खानाले जठराग्नि बाल्दछ र रति चाहनामा वृद्धि गर्दछ । यसले वात आदिका सामान्य विकारलाई पनि नाश गर्दछ । मध्यम मात्राको चिल्लो खानाले शरीरलाई पुष्ट बनाउँदछ, धातु वृद्धि गर्दछ र भ्रमलाई नाश गर्दछ । उच्च मात्राको चिल्लो

खानाले कुष्ठरोग, विषका दोष, उन्माद (पागलपन), भूत, ग्रह आदिका पीडा र अपस्मार नाश गर्दछ ।

दोष अनुसार चिल्लो खाने नियम

**केवलं पैत्तिके सर्पिर्वातिके लवणान्वितम् ।**
**पेयं बहुकफे वापि व्योषक्षारसमन्वितम् ॥११॥**

पित्त विकारमा घिउ मात्र पिउन दिनू । वातविकार छ भने घिउमा सिधेनुन हालेर पिउन दिनू । कफको रोगी छ भने घिउमा सुठो, मरिच र पिप्लाको धुलो तथा जवाखार हालेर पिउन दिनू ।

घिउ पिउन योग्य मानिस

**रूक्षक्षतविषार्तानां वातपित्तविकारिणाम् ।**
**हीनमेधास्मृतीनाञ्च सर्पिष्पानं प्रशस्यते ॥१२॥**



रुखो शरीर भएका, अत्यधिक परिश्रमले छातीमा समस्या भएका, विषको असर भएका, वातका रोगी, पित्तका रोगी, धारणा शक्ति वा बौद्धिक क्षमता घटेका मानिस र स्मरणशक्ति घटेका मानिसलाई घिउ पिउन दिनु उत्तम हुन्छ ।

तेल पिउन योग्य मानिस

**कृमिकोष्ठानिलाविष्टाः प्रवृद्धकफमेदसः ।**
**पिबेयुस्तैलसात्म्या ये तैलं दीप्ताग्नयस्तु (दार्ढ्यार्थिनस्तु) ये ॥१३॥**

पेटमा कीरा परेका, पेटका रोगी, वातका रोगी, धेरै कफ बढेका रोगी र धेरै बोसो भएका मानिसलाई तेल पिउन दिनू । साथै, जसको शरीरले तेल सहन्छ वा जसलाई तेल रुच्दछ तिनलाई एवं बलियो पाचन शक्ति हुने मानिसलाई पनि तेल पिउन दिनू ।

### बोसो पिउन योग्य मानिस

**व्यायामकर्शि(र्षि)ताः शुष्करेतोरक्त(क्ता)महारुजः ।**
**महाग्निमारुतप्राणा वसायोग्या नराः स्मृताः ॥१४॥**

व्यायाम वा परिश्रमले शरीर लखतरान भएका, वीर्य कम भएका, रगत कम भएका, शरीरमा कडा खालको रोग लागेका वा घाउचोटपटक भएका र बलियो पाचन शक्ति भएका मानिसलाई बोसो पिउन दिनू ।

### मासी पिउन योग्य मानिस

**क्रूराशयाः क्लेशसहा वातार्ता दीप्तवह्नयः ।**
**मज्जानञ्च पिबेयुस्ते सर्पिर्वा सर्वतो हितम् ॥१५॥**

अति कडा पाचनशक्ति हुने, धेरै दुःख सहने, वातविकारका रोगी र बलियो पाचन शक्ति हुने मानिसलाई मासी वा घिउ पिउन दिनाले शरीरलाई सुख दिन्छ ।



### चिल्लो पिउने समय

**शीतकाले दिवा स्नेहमुष्णकाले पिबेन्निशि ।**
**वातपित्ताधिके रात्रौ वातश्लेष्माधिके दिवा ॥१६॥**

जाडो मौसममा चिल्लो दिउस पिउनू । गर्मी मौसममा वात र पित्त बलियो हुने हुँदा रातमा पिउनू । कफ विकार र वातविकार हुनेले भने यो बेलामा पनि दिउस नै पिउनू ।

### तेल र घिउको प्रयोग

**नस्याभ्यञ्जनगण्डूषमूर्धकर्णाक्षितर्पणे(णैः) ।**
**तैलं घृतं वा युञ्जीत दृष्ट्वा दोषबलाबलम् ॥१७॥**

नस हाल्न, मालिश गर्न, कुल्ला गर्न, टाउकामा दल्न वा आँखामा हाल्न वात आदि विकार विचार गरेर तेल अथवा घिउको प्रयोग गर्नू ।

चिल्लो खाएपछि पिउनु पर्ने कुरा

**घृते कोष्णजलं पेयं तैले यूषः प्रशस्यते ।**
**वसामज्ज्ञोः पिबेन्मण्डमनुपानं सुखावहम् ॥१८॥**

घिउ खाएपछि तातोपानी पिउनू, तेल खाएपछि यूष पिउनू तथा बोसो र मासी खाएपछि मण्ड (माड) पिउनू । यसरी अनुपान गर्नाले शरीरलाई सुखी बनाउँदछ ।

चिल्लो मन नपर्ने आदिलाई चिल्लो खुवाउने विधि

**स्नेहद्विषः शिशून्वृद्धान्सुकुमारान्कृशानपि ।**
**उष्णकामानुष्णकाले सह भक्तेन पाययेत् ॥१९॥**



चिल्लो नरुचाउने, बालक, वृद्ध, कमजोर र तिर्खाएका मानिसलाई गर्मी मौसममा भातमा हालेर घिउ आदि चिल्लो खुवाउनु पर्दछ ।

शरीरमा चाँडै चिल्लोको मात्रा आपूर्ति गर्ने पेयः यवागू

**सर्पिष्मती बहुतिला यवागूः स्वल्पतन्दुला(तण्डुला) ।**
**सुखोष्णा सेव्यमाना तु सद्यः स्नेहनकारिणी ॥२०॥**

तिललाई पिँधेर त्यसमा अकिति चामल हाली घिउ र पानीमा पकाएर लद्रो भएपछि झिकेर पिइने पदार्थलाई यवागू भनिन्छ । यो यवागू मनतातो पिउनाले शरीरमा चाँडै चिल्लोको मात्रा आपूर्ति हुन्छ ।

शरीरमा चाँडै चिल्लोको मात्रा आपूर्ति गर्ने अन्य विधि

**शर्कराचूर्णसम्भृष्टे(संघृष्टे) दोहनस्थे घृते तु गाम् ।**

## दुग्ध्वा क्षीरं पिबेदुष्णं सद्यः स्नेहनमुच्यते ॥२१॥

मिस्रीलाई पिँधी घिउमा मिसाउनू । यो घिउलाई केही तताएर गाईको दूध हालिएको कुनै भाँडामा हाल्नू । अनि त्यो भाँडोबाट दूध निकाली तात्तातो पिउनू । शरीरमा चाँडै चिल्लोको मात्रा आपूर्ति हुन्छ ।

चिल्लो नपच्दा गर्नुपर्ने उपाय

## मिथ्याचाराद्बहुत्वाद्वा यस्य स्नेहो न जीर्यति ।
## विष्टभ्य वाऽपि जीर्येत वारिणोष्णेन वामयेत् ॥२२॥

चिल्लो खाएपछि गलत आहारविहार गर्नाले वा नगर्नुपर्ने कुरा धेरै गर्नाले वा धेरै चिल्लो खानाले चिल्लो पचेन भने अथवा कब्जियत गराएर पच्यो भने पनि यस्ता मानिसलाई तातो पानी पिउन लगाएर बान्ता गराउनू, चिल्लोजन्य अजीर्ण नाश हुन्छ ।

चिल्लो नपचेको उपचार



## स्नेहस्याजीर्णशङ्कायां पिबेदुष्णोदकं नरः ।
## तेनोद्गारो(रे) भवेच्छुद्धो भक्तं प्रति रुचिस्तथा ॥२३॥

खाएको चिल्लो पचेन कि भनी शङ्का लागे तातोपानी पिउनू । शुद्ध र उत्तम डकार आई भोक लागे चिल्लोको अजीर्ण नाश भयो भनी जान्नू ।

चिल्लो खाएर तिर्खा लागेकोमा उपचार

## स्नेहेन पैत्तिकस्याग्निर्यदा तीक्ष्णतरीकृतः ।
## तदास्योदीरयेत्तृष्णां विषमां तस्य पाय(वाम)येत् ॥२४॥
## शीतञ्जलं वाम(पाय)येच्च पिपासा तेन शाम्यति ।

जुन मानिसको पित्तप्रकृति हुन्छ त्यस्ता मानिसको पाचन शक्ति घिउ आदि चिल्लो खानाले अति नै बलियो भई धेरै तिर्खा लगाउने बन्दछ । यस्तो अवस्थामा चिसो पानी

पिउन दिनु पर्दछ । ठिक नभए बान्ता गराउनु पर्दछ, तिर्खा शान्त हुन्छ । (पुस्तकान्तर अनुसार भने वमन गराई चिसो पानी पिउन दिनु पर्दछ) ।

चिल्लो खान नहुने अवस्था

अजीर्णी वर्जयेत्स्नेहमुदरी तरुणज्वरी ॥२५॥
दुर्बलोऽरोचकी स्थूलो मूर्च्छार्तो मदपीडितः ।
दत्तवस्तिर्विरि(र)क्तश्च वान्तस्तृष्णाश्रमान्वितः ॥२६॥
अकालप्रसवा नारी दुर्दिने च विवर्जयेत् ।

खाएको नपच्ने र पेटका रोग जसलाई छ, जसलाई भर्खर जरो आउन थालेको छ, जो कमजोर छ, जसलाई केही खान मन लाग्दैन, जो धेरै मोटो छ, जो बेलाबेलामा बेहोस हुन्छ, जसलाई नसा लागेजस्तो झुम्म भइरहन्छ, जसले ओखतीको प्रयोग गरी बान्ता वा दिसा गरेको छ, जसलाई वाकवाकी लागि रहन्छ, जसलाई तिर्खा लागिरहन्छ, तथा समयमा नभई जो अघि वा पछि सुत्केरी भएकी छे : यिनले र खराब दिनमा चिल्लो खान हुँदैन ।



चिल्लो खान योग्य मानिस

स्वेद्यसंशोध्यमद्यस्त्रीव्यायामासक्तचिन्तकाः(मानसाः) ॥२७॥
वृद्धा बालाः कृशा रूक्षाः क्षीणास्राः क्षीणरेतसः ।
वातार्तितिमिरार्ता ये तेषां स्नेहनमुत्तमम् ॥२८॥

औषधी गरेर पसिना निकालेकाले, मद्य सेवन गर्नेले, स्त्रीमा आशक्त हुनेले, व्यायाममा आशक्त हुनेले, चिन्ता गरिरहनेले, वृद्धले, बालकले, दुब्लाले, रुखो शरीर भएकाले, रगत कमजोर हवा कम हुनेले, वातविकारका रोगीले र रतन्धोका रोगीले चिल्लोमा घिउ पिउनु योग्य हुन्छ ।

### शरीरमा चिल्लो पुगे नपुगेको लक्षण

**वातानुलोम्यं दीप्तोऽग्निर्वर्चः स्निग्धमसंहतम् ।**
**मृदुस्निग्धाङ्गता ग्लानिः स्नेहावेगोऽङ्ग(थ) लाघवम् ।।२९।।**
**विमलेन्द्रियता सम्यक् स्निग्धे रूक्षे विपर्ययः ।**

घिउ आदि चिल्लो पिउनाले शरीरको रुखोपन हटी मानिस चिल्लो हुन्छ । वायु आफ्नो बाटोबाट बहन थाल्दछ । पाचकाग्नि बलियो हुन्छ । दिसा चिल्लो र सफा हुन्छ । शरीर कोमल, चिल्लो र ग्लानि रहित हुन्छ । घिउ आदि चिल्लो फेरी खाउँ खाउँ लाग्दछ । शरीर हलुका हुन्छ । इन्द्रियहरु निर्मल हुन्छन् । यी शरीरमा चिल्लो पुगेका लक्षण हुन् । यसको उल्टो लक्षण हुँदा वा रुखोपन आदि हुँदा शरीरमा चिल्लो पुगेन भनी थाहा हुन्छ ।

### धेरै चिल्लो खाई शरीरमा चिल्लोको मात्रा बढी भएको लक्षण

**भक्तद्वेषो मुखस्रावो गुदे दाहः प्रवाहिका ।।३०।।**
**तन्द्राऽतिसारः पाण्डुत्वं भृशं स्निग्धस्य लक्षणम् ।**

जो घिउ आदि चिल्लो धेरै खान्छ उसलाई खाना खान मन लाग्दैन, मुखबाट पानी झर्न थाल्दछ, मलद्वार पोल्दछ, प्रवाहिका, तन्द्रा, अतिसार र पाण्डुरोग जस्तो धेरै चिल्लो खाएर समेत हुने रोगहरू देखा पर्न सक्दछन् ।

### रुखो र अति चिल्लो शरीरको उपचार

**रूक्षस्य स्नेहनं स्नेहैरतिस्निग्धस्य रूक्षणम् ।।३१।।**
**श्यामाकचणकाद्यैश्च तक्रपिण्याकसक्तुभिः ।**

रुखो शरीर भएको थाहा पाउना साथ तुरुन्त नौनी निकालेको दहीको सार आदि चिल्लोमा तिलको धुलो मिसाएर फिटी खानु पर्दछ भने धेरै चिल्लो शरीर भएका मानिसले सामा धान, चना आदि रुखा कुरा खानु पर्दछ ।

### चिल्लो पिउनुका लाभ

**दीप्ताग्निः शुद्धकोष्ठश्च पुष्टधातुर्जितेन्द्रियः ।।३२।।**
**निर्जरो बलवर्णाढ्यः स्नेहसेवी भवेन्नरः ।**

स्नेहपान गर्नाले मानिसको पाचकाग्नि बल्दछ, पेट सफा हुन्छ, शरीरका रस आदि धातु पुष्ट हुन्छन्, मानिस जितेन्द्रिय हुन सक्दछ, अकालका बुढ्यौली आउँदैन तथा बल र कान्ति बढ्दछ ।

### चिल्लो खानेले बार्नुपर्ने कुराहरू

**स्नेहे व्यायामसंशीतवेगाघातप्रजागरान् ।।३३।।**
**दिवास्वप्नमभिष्यन्दि रूक्षान्नञ्च विवर्जयेत् ।**

चिल्लो खाने मानिसले परिश्रम गर्न, अति चिसो कुरा खानपिन गर्न, मलमूत्र आदिको वेग रोक्न, नसुती बस्न, दिउस सुत्न, कफ बढाउने कुरा खान र रुखो कुरा खान हुँदैन ।



इति श्रीशार्ङ्गधरसंहितायामुत्तरखण्डे स्नेहपानविधिर्नाम प्रथमोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत पहिलो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-१,७५१+३३.५=१,७८४.५

✷

# अथ द्वितीयोऽध्यायः

## दोश्रो अध्याय

### पसिना निकाल्ने (स्वेद) विधि
### पसिना निकाल्ने तरिकाहरू

**स्वेदश्चतुर्विधः प्रोक्तस्तापोष्मौ(ष्म) स्वेदसंज्ञितौ(संज्ञकौ) ।**
**उपनाहो द्रवः स्वेदः सर्वे वातार्तितहारिणः ॥१॥**

ताप, उष्म, उपनाह र द्रव गरी चार किसिमका पसिना निकाल्ने विधि हुन्छन् । यी चारै विधिले वातका रोगीलाई पीडा कम हुन्छ ।

व्याख्या : बालुवा र आदिको पोकोले शरीर तताएर एवं चिल्लो समेतको प्रयोग गरेर पसिना निकाल्ने विधिलाई "ताप" भनिन्छ । काँढापानी आदिको बाफ लिएर पसिना निकाल्ने विधिलाई "ऊष्म" भनिन्छ । ओखती आदिको पोको बाँधेर पसिना निकाल्ने विधिलाई "उपनाह" भनिन्छ । माड आदि पातला पदार्थको प्रयोग गरी पसिना निकाल्नुलाई "द्रव" भनिन्छ ।

### दोष अनुसार पसिना निकाल्ने विधिको प्रयोग

**स्वेदौ तापोष्मजौ प्रायः श्लेष्मघ्नौ समुदीरितौ ।**
**उपनाहस्तु वातघ्नः पित्तसङ्गे द्रवो हितः ॥२॥**

विशेषतः ताप र ऊष्म विधिले कफ नाश गर्दछ । उपनाहले वात नाश गर्दछ । द्रवले पित्त र वात नाश गर्दछ ।

### पसिना निकाल्ने मात्रा

**महाबले महाव्याधौ शीते स्वेदो महान्स्मृतः ।**
**दुर्बले दुर्बलः स्वेदो मध्ये मध्यतमो मतः ॥३॥**

शरीरमा कडा वातरोग हुनेले जाडो मौसममा धेरै पसिना निकाल्नु पर्दछ । अलिअलि वातरोग हुनेले अलि कम पसिना निकाल्नु पर्दछ । शरीरमा रोगको प्रकृति मध्यम भए मध्यम पसिना निकाल्नु पर्दछ ।

रोग विशेषमा पसिना निकाल्ने विधि

**बलासे रूक्षणः स्वेदो (रूक्षणस्वेदो) रूक्ष स्निग्धः (रूक्षस्निग्धं) कफानिले ।**
**कफमेदा(दो)वृते वाते कोष्णं गेहं रवेः करान् ॥४॥**
**नियुद्धं मार्गगमनं गुरुप्रावरणं ध्रुवम् (क्षुधः) ।**
**चिन्ताव्यायामभाराँश्च सेवेतामयमुक्तये ॥५॥**

कफका रोगमा बालुवा आदि रुखा पदार्थले पसिना निकाल्नू । कफ र वायुका रोगमा चिल्ला र रुखा दुवै पदार्थ प्रयोग गरी पसिना निकाल्नू । कफ र बोसोजन्य वातका रोगमा रोगीले पसिना निकाल्न गर्मी हुने घरमा बस्नू र सहन सकिने सम्मको गर्मी सहनू, घाम ताप्नू, कुस्ती खेल्नू, केही बेर हिँड्नू, कम्बल आदि ओढ्नू, चिन्ता गर्नू, बिहान बिहान बसि नरहनू, परिश्रम गर्नू, कुनै एक अङ्गमा भारी बोक्नू । यी उपायले पसिना निकाल्नाले कफ र बोसोजन्य वातको रोग नाश हुन्छ ।



पहिला पसिना निकाल्नु पर्ने अवस्था

**येषां नस्यं विधातव्यं वस्तिश्चापि हि देहिनाम् ।**
**शोधनीयाश्च ये केचित् पूर्वं स्वेद्याश्च ते मताः ॥६॥**

नस हाल्न योग्य र वस्तिकर्म गर्न योग्य मानिस छ भने पहिला पसिना निकालेपछि नस आदि हाल्ने काम गर्नु पर्दछ ।

**स्वेद्याः पूर्वं त्रयः प्लीहभगन्दर्यर्शसस्तथा ।**
**अश्मर्यश्चातुरो जन्तुः समये शस्त्रकर्मणः ॥७॥**

फियोका रोग, भगन्दर, अल्काई र पत्थरी रोग भएका रोगीलाई चिरफार गर्नु अघि पहिला पसिना निकाल्न लगाउनु पर्दछ किन कि पसिना निकाल्नाले उसको शरीर नरम भई चिरफार गर्न योग्य हुन जान्छ ।

अरु उपचार पहिला गरेपछि पसिना निकाल्नुपर्ने रोगी

**पश्चात्स्वेद्या गते शल्ये मूढगर्भगदे तथा ।**
**काले प्रजाताऽकाले वा पश्चात् स्वेद्या नितम्बिनी ॥८॥**

जुन स्त्रीको गर्भाशयमा शूल भएर गर्भपतन हुन्छ, जुन स्त्रीको मृतगर्भ पतन हुन्छ, जुन स्त्रीको नौ महिनाभन्दा पछि वा पहिले प्रसव हुन्छ, त्यस्ता स्त्रीको शरीरबाट पसिना निकाल्नु पर्दछ ।

पसिना निकाल्ने स्थान र समय

**सर्वान् स्वेदान्निवाते च जीर्णाहारे च कारयेत् ।**



चारै विधिका पसिना निकाल्ने काम खाएको खानपिन पचेपछि जुन स्थानमा अलिअलि पनि हावा चल्दैन त्यो ठाउँमा बसेर गर्नु पर्दछ ।

पसिना निकालेपछिका लाभ

**स्वेदाद्धातुस्थिता दोषाः स्नेहक्लिन्नस्य देहिनः ॥९॥**
**द्रवत्वं प्राप्य कोष्ठान्तर्गता यान्ति विरेच(क)ताम् ।**

पसिना निकाल्नाले वा कुनै ठूलो भाँडोमा तेल भरेर त्यसमाथि बस्नाले रस आदि धातुमा भएको वात विकार पेटमा गई पातलिएर मलद्वार मार्फत बाहिर निस्कन्छ । व्याख्याः यसरी तेलमा बस्दा नाइटोभन्दा चार अमल तलसम्म तेल आउनु पर्दछ ।

### पसिना निकालेपछि दिसा लागे त्यसको उपचार

**स्विद्यमानशरीरस्य हृदयं शीतलैः स्पृशेत् ॥१०॥**
**स्नेहाभ्यक्तशरीरस्य शीतैराच्छाद्य चक्षुषी ।**

मानिसलाई पसिना निकाल्न लगाएपछि रोगका विकार पेटमा पातलो भएर मलद्वार मार्फत दिसाबाट बाहिर निस्कन्छ । यसपछि छातीमा सेतोचन्दनको लेप दल्नु पर्दछ, स्वस्थ हुन्छ । तेलमा बसेर पसिना निकाल्नेलाई दिसा लागेपछि आँखामा कमल फूलका पत्ति वा केराका पात राख्नू , आराम हुन्छ ।

### पसिना निकाल्न नहुने मानिस

**अजीर्णी दुर्बलो मेही क्षतक्षीणः पिपासितः ॥११॥**
**अतिसारी रक्तपित्ती पाण्डुरोगी तथोदरी ।**
**मदार्तो गर्भिणी चैव न हि स्वेद्या विजानता ॥१२॥**

**एतानपि मृदुस्वेदैः स्वेदसाध्यानुपाचरेत् ।**

खाएको नपच्ने, कमजोर, प्रमेहका रोगी, परिश्रमले छाती दुखेका, धेरै तिर्खाएका, अतिसारका रोगी, रक्तपित्तका रोगी, पाण्डुरोगी, पेटका रोगी र मदविकारका रोगी तथा गर्भवती स्त्री पसिना निकाल्नका लागि योग्य हुँदैनन् । यी मानिस पसिना निकाल्नाले स्वस्थ हुने अवस्था देखिए हलुका किसिमले थोरै पसिना निकाल्नू ।

### हलुका पसिना निकाल्न मिल्ने अङ्ग

**मृदुस्वेदं प्रयुञ्जीत तथा हृन्मुष्कदृष्टिषु ॥१३॥**

मुटु वा छाती, अण्डकोश र आँखाबाट पसिना निकाल्नु पर्दा थोरै मात्र निकाल्नू ।

### धेरै पसिना निकाल्दा हुने असर र उपचार

**अतिस्वेदात् सन्धिपीडा दाहस्तृष्णा क्लमो भ्रमः ।**

**पित्तासृक्पिटिका(डका)कोपस्तत्र शीतैरुपाचरेत्॥१४॥**

शरीरबाट धेरै पसिना निस्के शरीरका सबै जोर्नीहरू दुख्दछन् । शरीर भतभती पोल्न थाल्दछ । धेरै तिर्खा लाग्दछ । मन खिन्न र थकित हुन्छ । भ्रम हुन थाल्दछ । शरीरका नाक, मुख आदिबाट रगत निस्कन सक्दछ । शरीरका कुनै भागमा खटिरा निस्कन सक्दछ । यसबाट जोगिन शीत-उपचार तुरुन्त गर्नुपर्दछ ।

ताप विधि

**तेषु तापामिधः स्वेदो वालुकावस्त्रपाणिभिः ।**
**कपालकन्दुकाङ्गारैर्यथायोग्यं(ग्यः) प्रजायते(प्रयुज्यते) ॥१५॥**

ताप विधिबाट पसिना निकाल्न बालुवा, कपडा, हात, कुनै भाँडो वा खबटो र भित्र हावा भरिएका वा कपडाका भकुण्डो आदिको यथायोग्य प्रयोग गर्नु पर्दछ ।



व्याख्या : बालुवाले सेक्ने तरिका :- खयर आदि धुवाँ नआउने दाउरा बाली बालुवालाई कराही आदिमा हाली तताउनू । अनि यो बालुवालाई अरिडका काँचो पातमा पोको पारी शरीर सेक्नू । यसरी पनि शरीरबाट पसिना निस्कन्छ ।

ऊष्म विधि

**ऊष्मस्वेदः प्रयोक्तव्यो लोहपिण्डैष्टकादिभिः (लोहपिण्डेष्टकाश्मभिः) ।**
**प्रतप्तैरम्लसिक्तैश्च कार्ये रल्लक(नक्तक)वेष्टिते ॥१६॥**
**अथवा वातनिर्णाशिद्रव्यक्वाथरसादिभिः ।**
**उष्णैर्घटं पूरयित्वा पार्श्वे छिद्रं निधाय च ॥१७॥**
**विमृ(मु)द्यास्यं त्रिखण्डाञ्च धातुजां काष्ठवंशजाम् ।**
**षडङ्गुलास्कां(स्यां) गोपुच्छां नलीं युञ्ज्याद् द्विहस्तिकाम्॥१८॥**
**सुखोपविष्टं स्वभ्यक्तं गुरुप्रावरणावृतम् ।**

**हस्तिशुण्डिकया नाड्या(नाड्यां) स्वेदयेद्वातरोगिणम् ॥१९॥**
**पुरुषायाममात्रां वा भूमिमुत्कीर्य खादिरैः ।**
**काष्ठैर्दग्ध्वा तथाऽभ्युक्ष्य क्षीरधान्याम्लवारिभिः ॥२०॥**
**वातघ्नपत्रैराच्छाद्य शयानं स्वेदयेन्नरम् ।**
**एवं माषादिभिः स्विन्नैः शयानं स्वेदमाचरेत् ॥२१॥**

उष्म विधिले पसिना निकाल्न फलामको डल्लो वा ईँट (तेलीय) तताई त्यसमा थोरै मोही आदि अमिलो पदार्थ छर्की रोगीलाई कम्बल ओढाई त्यो डल्लो वा ईँट कपडामा बेरी सहँदो तातोले सेक्दा पसिना निस्कन्छ । अथवा दशमूल आदि वातनाशक ओखतीको काँढापानी वा ती ओखतीको रस पकाएर कुनै काटोको भाँडामा हाली मुख टम्म माटाले समेत टाली बन्द गर्नू । त्यसपछि त्यो भाँडाको कोखमा प्वाल पारी त्यो पालमा काठको वा बाँसको वा धातुको दुई हात लामो नली (पाइप) जोड्नू । त्यो नलीमा तीन ठाउँमा जोरन (गाँस्ने ठाउँ) बनाउनू । पाइपको मुख छ अमल लामो अग्लो र गाइको पुच्छरजस्तो हुनु पर्दछ । यो नलीको आकार हात्तीको सुँडजस्तो भए यसलाई हस्तिशुण्ड नाडी भनिन्छ । अनि यो नलीलाई प्वालमा घुसाई जोर्नी नरसाउने गरी टाल्नू । यसपछि रोगीलाई आरामसँग बसाई वा सुताई शरीरमा तेल वा घिउ दली, कम्बल ओढाई यो पाइपको अर्को मुखले सेक्दै पसिना निकाल्नू । अथवा साडे तीन हात वा चार हात लामो खाडल खनी त्यसमा खयरको दाउरा भरेर बाल्नू । भुङ्ग्रो भएपछि त्यसलाई तुरुन्त बाहिर निकाली खाल्डोमा दूध, धानको भुस वा काँजी छर्कनू । यसपछि त्यहाँ वातरोग नाश गर्ने खालका आँक आदिका पात ओछ्याउनू र त्यसमाथि रोगीलाई सुताई उसका शरीरबाट पसिना निकाल्नू । अथवा माष केही उमालेर आधा पाकेपछि भुइँमा खन्याएर फिँजाउनू, त्यसमाथि अरिड आदि वातनाशक ओखतीका पात ओछ्याई रोगीलाई सुताउनू र कम्बलले पूरै शरीर छोप्नू । यसरी विभिन्न तरिकाले ऊष्म विधि मार्फत पसिना निकाल्न सकिन्छ ।



उपनाह विधि

**अथोपनाहस्वेदश्च कुर्याद्वातहरौषधैः ।**
**प्रदिह्य देहं वातार्तं क्षीरमांसरसान्वितैः ॥२२॥**
**अम्लपिष्टैः सलवणैः सुखोष्णैः स्नेहसंयुतैः ।**

दशमूल आदि वातनाशक ओखती कुटेर धुलो बनाई त्यसमा दूध तथा हरिण आदि मासुको चिल्लो मिसाई केही तातो पारी वातविकार भएको अङ्गमा, सहन सक्ने तातो लेप दली त्यसमाथि कपडा आदिको पट्टी बाँध्नू र पसिना निकाल्नू अथवा वातनाशक ओखतीको धुलो कुनै अमिलोमा पिसी सिधेनुन र तिलको तेल हाली केही तताई लेप दलेर कपडा बाँधी पसिना निकाल्नू । यसलाई उपनाह विधि भनिन्छ ।

### महाशाल्वण विधि

**उपग्राम्यानूपमांसैर्जीवनीयगणेन च ॥२३॥**
**दधिसौवीरकक्षारैर्वीरतर्वादिना तथा ।**
**कुलत्थमाषगोधूमैरतसीतिलसर्षपैः ॥२४॥**
**शतपुष्पादेवदारुशेफालीस्थूलजीरकैः ।**
**एरण्डमूल(लं)बीजैश्च रास्नामूलकशिग्रुभिः ॥२५॥**
**मिशिकृष्णाकुठेरैश्च लवणैरम्लसंयुतैः ।**
**प्रसारिण्यश्वगन्धाभ्यां बलाभिर्दशमूलकैः ॥२६॥**
**गुडूचीवानरीबीजैर्यथालाभं समाहृतैः ।**
**क्षुण्णैः स्विन्नैश्च वस्त्रेण बद्धैः संस्वेदयेन्नरम् ॥२७॥**
**महाशाल्वणसंज्ञोऽयं योगः सर्वानिलार्तिजि(हृ)त् ।**

गाउँले जीव (कुखुरो, बोको, भेडो आदि) को मासु, आनूप मांस ( पानी कुखुरा, चखेवा, माछा आदि जलचर जीवको मासु), जीवनीय गणका ओखती, गाईको दही, सौवीर (काँचो वा भुटेको जौको गेडा केलाई पानीमा हालेर तीन दिन राखेपछिको रसलाई सौवीर भनिन्छ), सज्जीखार, जवाखार, वीरतर्वादि ओखती, गहत, माष, गहुँ, आलस, तिल, सर्सिउँ, सुप, देवदारु, नेवारी, कलौंजी, अरिडको जरा, अरिडका गेडा, फ्याक्सेकन्द, मूला, सैजन, सुप (मिशि ?), पिप्ला, बनतुलसी, पाँच थरी नुन, दारिमका दाना, बिरी, अश्वगन्धा, बलुको बोक्रा, दशमूल, गुर्जो र काउछोका गेडामध्ये जे जे ओखती पाइन्छन्

ती जम्मा पारी कुट्नू । अनि तताएर कपडामा पोको पारी रोगीका अङ्गमा सेक्नू । यसबाट सबै खालका वातजन्य पीडा नाश हुन्छ । यो विधिलाई महाशाल्वण विधि भनिन्छ ।

### द्रव स्वेदका लक्षण

द्रवस्वेदस्तु वातघ्नो द्रव्यक्वाथेन पूरिते(तम्) ॥२८॥
कटाहे(हं) कोष्ठके(कं) वाऽपि सूपविष्टोऽवगाहयेत् ।
नाभेः षडङ्गुलं यावन्मग्नः क्वाथस्य धारया ॥२९॥
कोष्णया स्कन्धयोः सिक्तस्तिष्ठेत्स्निग्धतनुर्नरः ।
एवं तैलेन दुग्धेन सर्पिषा स्वेदयेन्नरम् ॥३०॥
एकान्तरे(रो) द्व्यन्तरे(रो) वा स्नेहो युक्तोऽवगाहने ।
शि(सि)रामुखैर्लो(रो)मकूपैर्धमनीभिश्च तर्पयेत् ॥३१॥
शरीरे बलमाधत्ते युक्तः स्नेहोऽवगाहने ।
जलसिक्तस्य वर्धन्ते यथा मूलेऽङ्कुरास्तरोः ॥३२॥

तथा धातुविवृद्धिर्हि स्नेहसिक्तस्य जायते ।
नातः परतरः कश्चिदुपायो वातनाशनः ॥३३॥

दशमूल आदि वातनाशक ओखतीको काँढापानी पकाउनू । रोगीका शरीरमा घिउ वा तेल दली मालिश गर्नू । यसपछि रोगीलाई कुनै ठूलो तामा आदिका बाटा आदिमा ढाड सिधा हुने गरी पलेंटी कसी बसाएर अघि पकाइएको सहँदो तातो काँढापानीले करुवा आदिबाट रोगीका दुबै काँधमा धारा खसाल्नू । पलेटी कसेर बाटामाथि बसेको रोगीको नाइटो नजिक वा सतबहबाट छ अमल माथि नआउँदासम्म खसालिरहनू । शुरुमा यो कार्य उकछिन गर्नू त्यसपछि भने अधिकतम यो कार्य चार प्रहरसम्म गर्नू । यसरी नै तलको, दूधको वा घिउको धारा दिई उसलाई तताउनू । यसरी एक दिन वा दुई दिन बिराएर गर्नाले नसाका मुख र रौंका प्वाल हुँदै अथवा नाडी हुँदै यी ओखती शरीर भित्र छिर्दछन् र शरीरमा बल उत्पन्न गर्दछन् । यस विषयमा रुखको उदाहरण दिइएको छ र भनिएको छ कि फेदमा जल सेचन गर्नाले जसरी रुखविरुवा हुर्कन्छ त्यसरी नै यो विधिले उपचार गर्नाले मानिसका

सात धातु बढ्छन् र सबै खालका वातविकार नष्ट हुन्छन् । वातविकार नाश गर्ने योभन्दा उत्तम अरु कुनै उपाय नै छैन ।

नोट : संस्कारहरु लहडमा चलाइएका होइनन् । माथिको जानकारी पढेपछि तपाईँलाई पनि झाडा टारेर कुनै संस्कार चलाउन मन लाग्ने छैन । विधिविधान के हो भनेर खोज्न मन लाग्नेछ । कतै गन्धक मिसिएको तातोपानी ( सिन्धुपाल्चोक, म्याग्दी आदि स्थानका) मा गएर नुहाउँदै हुनु हुन्छ भने पनि यी कुरा ख्याल राख्नु होस् पूरै शरीर डुबाउने वा खलल नुहाउने होइन । माथि बताए जसरी नुहाउन वा उपचार गर्न सकियो भने वा नुहाउने व्यवस्था मिलाइयो भने त्यसले अति नै फाइदा दिनेछ । विवाहमा खड्कौलामा बसाली बुकुवा दलेर मनतातो पानीले वरवधुलाई नुहाइ दिने चलनका पछाडी पनि यही रहस्य लुकेको छ ।

### पसिना निकाल्ने अवधि

**शीतशूलाद्युपरमे स्तम्भगौरवनिग्रहे ।**
**दीप्ताग्नौ मार्दवे जाते स्वेदनाद्विरतिर्मता ॥३४॥**

शरीरका अङ्गबाट शर्दी र शूल ठिक भएपछि, कुनै नचल्ने भाग चल्न थालेपछि, गह्रौं भाग हलुका भएपछि, पाचन शक्ति बलियो भएपछि र शरीरको त्यो अङ्ग नरम भएपछि रोगीका शरीरबाट पनि निकाल्न बन्द गर्नु पर्दछ ।



### पसिना निकालेपछि गर्नुपर्ने कुरा

**सम्यक् स्विन्नं विमृदितं स्नानमुष्णाम्बुभिः शनैः ।**
**भोजयेच्चानभिष्यन्दि व्यायामञ्च न कारयेत् ॥३५॥**

उपरोक्त विधिले जसका शरीरबाट पसिना निकालिएको हुन्छ उसलाई तथा जसका शरीरमा तेलले मालिश गरिएको हुन्छ उसले बिस्तार बिस्तार तातो पानीले नुहाइ दिनू । कफ बढाउने कुरा खान नदिनू । परिश्रम वा व्यायाम गर्न नदिनू ।

इति श्रीशार्ङ्गधरसंहितायामुत्तरखण्डे स्वेदविधिर्नाम द्वितीयोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत दोश्रो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्या:-१,७८४.५+३५=१,८१९.५

✷

# अथ तृतीयोऽध्यायः

## तेश्रो अध्याय

### वमनविधि

### वमन र विरेचन गर्ने समय

**शरत्काले वसन्ते च प्रावृट्काले च देहिनाम् ।**
**वमनं रेचनञ्चैव कारयेत्कुशलो भिषक् ॥१॥**

शरद् ऋतुमा, वसन्त ऋतुमा र वर्षा ऋतुको शुरुमा कुशल वैद्यले रोगीलाई बान्ता हुने ओखती खुवाएर बान्ता गराउनू । (वमन र विरेचन नजान्ने वैद्य मार्फत नगराउनू, ज्यान जान सक्दछ) ।

### बान्ता गराउन योग्य बिरामी

**बलवन्तं कफव्याप्तं हृल्लासार्तिनिपीडितम् ।**

**तथा वमनसात्म्यञ्च धीरचित्तञ्च वामयेत् ॥२॥**
**विषदोषे स्तन्यरोगे मन्देऽग्नौ श्लीपदेऽर्बुदे ।**
**हृद्रोगकुष्ठवीसर्पमेहाजीर्णभ्रमेषु च ॥३॥**
**विदारिकाऽपचीकासश्वासपीनसवृद्धिषु ।**
**अपस्मारे ज्वरोन्मादे तथा रक्तातिसारिषु ॥४॥**
**नासाताल्वोष्ठपाकेषु कर्णस्रावे द्विजिह्वके ।**
**गलशुण्ड्यामतीसारे पित्तश्लेष्मगदे तथा ॥५॥**
**मेदोगदेऽरुचौ चैव वमनं कारयेद्भिषक् ।**

बलियो मानिस जो कफविकारले पीडित छ, जसको मुखबाट ज्याल चुहिने गर्दछ, जसले बान्ता गराउँदा सहन सक्दछ, जो धैर्यशाली छ, जसका शरीरमा विषले असर गरेको छ, जसलाई स्तनसम्बन्धी रोग छ, जसको पाचन शक्ति कमजोर छ; जसलाई हात्तीपाइले, अर्बुद, मुटुको रोग, कुष्ठ, विसर्प, प्रमेह, अजीर्ण, भ्रम, विदारिका, अपची, खोकी, दम,

पिनास, अण्डवृद्धि, अपस्मार, जरो, उन्माद, रक्तातिसार, नाक पाक्ने रोग, तालु पाक्ने रोग, ओठ पाक्ने रोग, कानबाट पीप बहने रोग, द्विजिह्वक (रोग विशेष ?), लिगलिगे वा किलकिलेको रोग, अतिसार, पित्तविकार, कफविकार, बोसोका रोग र अरुचीका रोगीलाई वैद्यले बान्ता गराउनू ।

बान्ता गराउन नहुने मानिस

**न वामनीयस्तिमिरी न गुल्मी नोदरी कृशः ॥६॥**
**नातिवृद्धो गर्भिणी च न स्थूलो न क्षता(क्षुधा)तुरः ।**
**मदार्तो बालको रूक्षः क्षुधितश्च निरूहितः ॥७॥**
**उदावर्त्यूर्ध्वरक्ती च दुश्छर्दिः केवलानिली ।**
**पाण्डुरोगी कृमिव्याप्तः पठनात्स्वरघातकः ॥८॥**

रतन्धो, गुल्म र पेटका रोग हुने; धेरै दुब्लो, धेरै वृद्ध, गर्भवती स्त्री, धेरै मोटो मानिस, छातीमा घाउ भएको मानिस, मद्यपानका रोगी, बालक, रुखो शरीर भएका, भोको, मलद्वारमा पिचकारी दिएर ओखती गरिएका, उदावर्तका रोगी, मुख नाक आदिबाट रगत बहने रोगी, बान्ता सहन नसक्ने, वात मात्रका रोगी, पाण्डुरोगी, पेटमा कीरा परेका र वेद आदि शास्त्र धेरै कराएर पढी स्वर बसेका मानिसलाई बान्ता नगराउनू ।



बान्ता गराउन नहुनेलाई पनि बान्ता गराउन सकिने व्यवस्था

**एतेऽप्यजीर्णव्यथिता वाम्या ये विषपीडिताः ।**
**कफव्याप्ताश्च ते वाम्या मधुकक्वाथ (मधुक्वाथस्य) पानतः ॥९॥**

यदि यी (माथि बान्ता गराउन नहुने भनिएका) रोगी अजीर्ण, कफ र विषबाट पीडित भए यिनलाई महुवाको बोक्राको काँढापानी वा मह मिसाइएको काँढापानी पिउन लगाई बान्ता गराउनू ।

बान्ता गराउन अयोग्य मानिस

**सुकुमारं कृशं बालं वृद्धं भीरुं न वामयेत् ।**

अत्यन्त नाजुक, दुब्लो, बालक, वृद्ध र डरछेरुवालाई बान्ता नगराउनू ।

बान्ता गराउन प्रयोग हुने ओखती

**पीत्वा यवागूमाकण्ठं क्षीरतक्रदधीनि च (वा) ॥१०॥**
**असात्म्यैः श्लेष्मलैर्भोज्यैर्दोषानुत्क्लिश्य देहिनः ।**
**स्निग्धस्विन्नाय वमनं दत्तं सम्यक्प्रवर्तते ॥११॥**

जुन मानिसलाई बान्ता गराउनु छ उसलाई पहिले पेटभरी यवागू, दूध, तक्र वा दही पिउन दिनू । जुन कुरा उसको शरीरले सहँदैन वा जुन कुराले कफ बढाउँदछ त्यस्ता कुरा खान दिनाले मानिसका दोषलाई उद्वेलित पार्दछ, यसो हुँदा बान्ता गर्न सजलो हुन्छ । जसले घिउ अदि चिल्लो पिएर पसिना निकालेको हुन्छ उसलाई एक दिन पछि मात्र बान्ता गराउनाले उत्तम तरिकाले बान्ता हुन्छ ।

बान्ता गराउन सहयोगी पदार्थ



**वमनेषु च सर्वेषु सैन्धवं मधु वा हितम् ।**
**बीभत्सं वमनं दद्याद्विपरीतं विरेचनम् ॥१२॥**

बान्ता गराउने सबै ओखतीमा सिधेनुन वा मह मिसाउनु फाइदाजनक हुन्छ । बान्ता गराउनु पर्दा उसलाई मन नपर्ने कुरा र दिसा लगाउनु पर्दा उसलाई मन पर्ने कुरा ओखतीका रूपमा खानपिउन दिनु पर्दछ । व्याख्या : बान्ता गराउने ओखतीमा घिउ मिलाउनुलाई बीभत्स वमन भनिन्छ ।

बान्ता गराउने प्रयोजनका लागि काँढापानी बनाउने विधि

**क्वाथ्यद्रव्यस्य कुडवं श्रपयित्वा जलाढके ।**
**अर्धभागावशिष्टञ्च वमनेष्ववचारयेत् ॥१३॥**

बान्ता गरोउने ओखती करिब सोह्र तोला लिनू । त्यसलाई कुटेर करिब दुई सय छपन्न तोला पानीमा हालेर पकाउनू । आधा पानी बाँकी भएपछि झिकेर छान्नू र बान्ता गराउन पिउन दिनू ।

बान्ता गर्न पिइने काँढापानीको परिमाण

**क्वाथपाने नवप्रस्था ज्येष्ठा मात्रा प्रकीर्तिता ।**
**मध्यमा षण्मिता प्रोक्ता त्रिप्रस्था च कनीयसी ॥१४॥**

जसलाई बान्ता गर्नु छ उसलाई अधिकतम करिब नौ प्रस्थ काँढापानी पिउन दिनू । छ प्रस्थ काँढापानी पिउनु मध्यम र तीन प्रस्थ पिउनु अल्प मात्रा हो ।

बान्ता गराउन प्रयोग गरिने ओखतीको मात्रा

**कल्कचूर्णावलेहानां त्रिपलं श्रेष्ठमात्रया ।**
**मध्यमं द्विपलं विद्यात्कनीयस्तु पलं भवेत् (या पलसंमिता) ॥१५॥**

चटनी जस्तो, धुलो र लेप ओखती अधिकतम तीन पल लिनू । दुई पल मध्यम मात्रा र एक पल अल्प मात्रा हुन्छ ।

बान्ताको वेग

**वमने चापि(चाऽपि) वेगाः स्युरष्टौ पित्तान्तमुत्तमाः ।**
**षड्वेगा मध्यमा वेगाश्चत्वारस्त्ववरे मताः ॥१६॥**

जसलाई बान्ता गराउने ओखती खुवाएपछि सात पटकसम्म बान्तासँगै विकार र आठौं पटकमा पित्त निस्कन्छ त्यसलाई उत्तम वेग भनिन्छ । पाँच पटकसम्म विकार निस्केर छैटौं पटकमा पित्त निस्किए मध्यम वेग हुन्छ । तीन पटकसम्म विकार निस्केर चौथो पटकमा पित्त निस्किए त्यो अल्प वा हीनवेग हुन्छ ।

बान्ताको लागि प्रस्थको परिमाण

**वमने च विरेके च तथा शोणितमोक्षणे ।**
**सार्धत्रयोदशपलं प्रस्थमाहुर्मनीषिणः ॥१७॥**

बान्ता गराउन वा दिसा लगाउन जहाँ ओखती प्रस्थमा बताइएको हुन्छ त्यहाँ साडे तेह्र पलको एक प्रस्थ भनी जान्नू । यसैगरी रगत बगाउनु पर्दा पनि जान्नू ।

बान्तामा रोग अनुसार ओखतीको प्रयोग

**कफं कटुकतीक्ष्णोष्णैः पित्तं स्वादु हिमैर्जयेत् ।**
**सस्वादुलवणाम्लोष्णैः संसृष्टं वायुना कफम् ॥१८॥**

पिरो र तिक्खर ओखतीले कफलाई, गुलियो र शीतल ओखतीले पित्तलाई तथा गुलियो, नुनिलो, अमिलो र गर्मी गर्ने ओखतीले वातमिश्रित कफलाई जित्नू । व्याख्या : सुठो, मरिच, पिप्ला, रायो आदिलाई तिक्खर ओखती भनिन्छ ।



बान्ता मार्फत् कफ निकाल्ने ओखती

**कृष्णा राठफलं सिन्धु कफे कोष्णजलैः पिबेत् ।**
**पटोलवासानिम्बैश्च पित्ते शीतजलं पिबेत् ॥१९॥**
**सश्लेष्मवातपीडायां सक्षीरं मदनं पिबेत् ।**
**अजीर्णे कोष्णपानीयैः सिन्धु पीत्वा वमेत्सुधीः ॥२०॥**

पिप्ला, मैनफल र सिधेनुनको धुलो बनाई तातोपानीसँग खुवाउनाले बान्ताहुँदा सँगसँगै कफ पनि निस्कन्छ । पित्तका रोगमा पर्बलका पात, असुरो र नीमका पातको धुलो चिसो पानीमा मिसाएर खुवाउनाले बान्ता हुँदा पित्त समेत निस्कन्छ । कफवातको रोगमा मैनफलको धुलो दूधमा हालेर पिउन दिनाले कफवायुको पीडा नाश हुन्छ । अजीर्णमा तातोपानीमा सिधेनुन हालेर पिउन दिई बान्ता गराउनाले अजीर्ण रोग नाश हुन्छ ।

### बान्ता गराउने विधि

**वमनं पाययित्वा च जानुमात्रासने स्थितम् ।**
**कण्ठमेरण्डनालेन स्पृशन्तं वामयेद्भिषक् ॥२१॥**
**ललाटं वमतः पुंसः पार्श्वौ द्वौ च प्रबोधयेत् (पार्श्वे द्वे च प्रदापयेत्) ।**

रोगीलाई बान्ता गराउने ओखती पिउन दिएपछि घुँडासम्म अग्लो आसनमा राख्नू र अँडिरको डाँठ उसको मुखमा हाली हलुकासँग कफ छोए जसरी उसका घाँटीमा यताउता हल्लाउनू । यसरी भित्र बाहिर हल्लाई बान्ता गराउनू । बान्ता गर्ने मानिसको टाउको र दुबै कोखा बिस्तारै मालिश गर्नू ।

### खराब बान्ताका लक्षण

**प्रसेकी(को) हृद्ग्रहः कोढः कण्डूर्दुश्छर्दितोद्भवेत् (छर्दिते भवेत्) ॥२२॥**

विधि नमिली बान्ता गराउँदा मुखबाट र्‍याल आउन थाल्दछ, मुटु वा छाती दुख्दछ र शरीमा डाबर आई चिलाउन थाल्दछ ।



### चाहिनेभन्दा बढी बान्ता हुँदाका लक्षण

**अतिवान्ते भवेत्तृष्णा हिक्कोद्गारौ विसंज्ञ(ज्ञि)ता ।**
**जिह्वानिःसर्पण चाक्ष्णोर्व्यावृत्तिर्हनुसंयतिः ॥२३॥**
**रक्तच्छर्दिः ष्ठीवनञ्च कण्ठे पीडा च जायते ।**

आवश्यकताभन्दा धेरै बान्ता हुँदा धेरै तिर्खा लाग्दछ, बाडुली र डकार आउँदछ, होश कम हुन्छ, जिभ्रो मुखबाट काहिर निस्कन्छ, आँखा खुलै भएर चञ्चल हुन्छन्, भैम हुन्छ, चिउँडो अड्किन्छ वा दुख्दछ, मुखबाट रगत आउँदछ, बारम्बार थुक्दछ र घाँटी दुख्दछ ।

### धेरै बान्ता हुँदाको उपचार

**वमनस्यातियोगी(गे) तु मृदु कुर्याद्विरेचनम् ॥२४॥**

यदि मानिसलाई धेरै बान्ता हुन्छ भने उसलाई अलिअलि दिसा लगाउनू ।

धेरै बान्ता गर्दागर्दै जिभ्रो भित्र दबिएको उपचार

**वमनान्तः प्रविष्टायां जिह्वायां कवलग्रहः ।**
**स्निग्धाम्ललवणैर्हृद्यैर्घृतक्षीररसैर्हितः ॥२५॥**
**फलान्यम्लानि खादेयुस्तस्य चान्येऽग्रतो नराः ।**

धेरै बान्ता गर्दागर्दै रोगीको जिभ्रो मुखभित्र दबिन गए मनलाई प्रसन्न पार्ने खालका चिल्ला, अमिला, नुनिला कुराको रस तथा घिउ र दूध मुखमा हालेर एकछिन लिई अनि थुक्नू । यस्ता मानिसका अगिल्तिर अर्को मानिसले कागती वा सुन्तला चुसी चुसी खानू, जिभ्रो आफ्नो ठाउँमा आउँदछ र स्वच्छ हुन्छ ।

धेरै बान्ता गर्दा जिभ्रो बाहिर निस्किएको उपचार



**निःसृतान्तु तिलद्राक्षाकल्कैर्लिप्त्वा (कल्कं लिप्त्वा) प्रवेशयेत् ॥२६॥**

बान्ता गर्दा गर्दै जिभ्रो बाहिर आए र अड्किए तिल र दाख पिसी त्यसको लेप दलेर वैद्यले जिभ्रोलाई भित्र धकेलि दिनू ।

बान्ता गराउँदा आँखामा कुनै विकार आए त्यसको उपचार

**व्यावृत्तेऽक्षिण घृताभ्यक्ते पीडयेच्च शनैः शनैः ।**

बान्ता गर्दागर्दै आँखा बाहिर निस्की खुलेको खुल्यै हुन गए त्यसलाई हलुका हातले घिउ दलेर आफ्नो स्थानमा लैजानू ।

बान्ता गर्दा चिउँडो अड्किएको उपचार

**हनुमोक्षे स्मृतः स्वेदो नस्यञ्च श्लेष्मवातनु(हृ)त् ॥२७॥**

बान्ता गर्दागर्दै चिउँडो अड्किए उसका शरीरबाट पसिना निकाल्नू र कफवायु नाशक ओखतीको नस दिनू ठिक हुन्छ ।

बान्ता गर्दागर्दै रगत निस्किएको उपचार

**रक्तपित्तविधानेन रक्तच्छर्दिमुपाचरेत् ।**

बान्ता गर्दागर्दै मुखबाट रगत निस्किए रक्तपित्त रोगमा गर्ने उपचार गर्नू ।

धेरै बान्ता गरेर तिर्खा लागेको उपचार

**धात्रीरसाञ्जनोशीरलाजाचन्दनवारिभिः ॥२८॥**
**मन्थं कृत्वा पाययेच्च सघृतक्षौद्रशर्करम् ।**
**शाम्यन्त्यनेन तृष्णाद्याः पीडाश्छर्दिसमुद्भवाः ॥२९॥**

अमला, रसाञ्जन, खस, शाली धानको चामल, चन्दन र जटामसीको मन्थ बनाई त्यसमा घिउ, मह र मिस्री हाली पिउनाले बान्ताका कारण लाग्ने तिर्खा आदि जस्ता असर शान्त हुन्छन् ।



सही ढङ्गले बान्ता भएको लक्षण

**हृत्कण्ठशिरसां शुद्धिर्दीप्ताग्नित्वञ्च लाघवम् ।**
**कफपित्तविनाशश्च सम्यग्वान्तस्य चेष्टितम् (लक्षणम्) ॥३०॥**

जसले उत्तम खालको बान्ता गर्दछ उसका मुटु, घाँटी र टाउकोमा भएका कफविकार सबै नाश भई शुद्ध हुन्छन् । पाचकाग्नि बल्दछ, अङ्ग हलुका हुन्छन् तथा कफविकार र पित्तविकार नाश हुन्छन् ।

बान्ता गराएपछि खान दिने पथ्य कुरा

**ततोऽपराह्णे दीप्ताऽग्निं मुद्गषष्टिकशालिभिः ।**

**हृद्यैश्च जाङ्गलरसैः कृत्वा यूषञ्च भोजयेत् ॥३१॥**

रोगीलाई राम्ररी बान्ता गराएपछि तेश्रो प्रहरमा पाचकाग्नि सक्रिय भएपछि (भोक लागेपछि) मुगी, सठिया चामल र मनलाग्दा वनका मृग आदिका मासुको रस र यूष खान दिनू ।

उत्तम तरिकाले गरिएको बान्ताको फाइदा

**तन्द्रानिद्रास्यदौर्गन्ध्यं कण्डूश्च ग्रहणी विषम् ।**
**सुवान्तस्य न पीडायै भवन्त्येते कदाचन ॥३२॥**

जसले उत्तम तरिकाले बान्ता गरेको छ उसलाई तन्द्रा, निद्रा, मुखको दुर्गन्ध, शरीर चिलाउने समस्या, ग्रहणी र विषको असर कहिल्यै हुँदैन ।

बान्तामा बार्नुपर्ने कुराहरू

**अजीर्णं शीतपानीयं व्यायामं मैथुनन्तथा ।**

**स्नेहाभ्यङ्गं प्रकोपञ्च दिनैकं वर्जयेत्सुधीः ॥३३॥**

बान्ता गरेको दिन पचाउन कठिन हुने खानेकुरा खान, चिसो पानी पिउन, व्यायाम वा परिश्रम गर्न, मैथुन गर्न, शरीरमा तेल दलेर मालिश गर्न र रिसाउन हुँदैन ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां संहितायामुत्तरखण्डे
वमनविधिवर्णनं नाम तृतीयोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत तेश्रो अध्यायको मोहन
प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-१,८१९.५+३३=१,८५२.५

✷

# अथ चतुर्थोऽध्यायः

## चौथो अध्याय

### विरेचनविधि

**स्निग्ध स्विन्नस्य वान्तस्य दद्यात्सम्यग्विरेचनम् ।**

पहिला मानिसलाई चिल्लो खुवाउनू, त्यसपछि उसका शरीरबाट पसिना निकाल्नू, अनि बान्ता गराउनू र यसपछि मात्र ओखतीको प्रयोग गरी दिसा गराउनू ।

### वमन नगरी विरेचन गर्दा हुने खराबी

**अवान्तस्य त्वधः स्रस्तो ग्रहणीं छादयेत् कफः ॥१॥**
**मन्दाग्निं गौरवं कुर्याज्जनयेद्वा प्रवाहिकाम् ।**
**अथवा पाचनैरामं बलासञ्च विपाचयेत् ॥२॥**



बान्ता नगराई दिसा गराए रोगीका तल्लो भागमा गएको कफले ग्रहणी (भुँडी र सानो आन्द्रामा टाँसिएको एक अङ्ग) लाई ढाकि दिन्छ । यसले पाचनशक्ति कमजोर हुन्छ, शरीर भारी हुने र प्रवाहिका जस्ता रोगलाई जन्म दिन्छ । यदि बान्ता नगर्ने हो भने ( पहिले) तलतिर गएको कफ र आमरसलाई सुठो, अरिडको जराको रस आदि खाएर पचाउनू ।

### विरेचनको दोश्रो तरिका

**स्निग्धस्य स्नेहनैः कार्यं स्वेदैः स्विन्नस्य रेचनम् ।**

घिउ, दूध खादि खुवाएर शरीर चिल्लो बनाइएको मानिसलाई र विभिन्न विधिले पसिना निकालिएको मानिसलाई दिसा लगाउनू ।

विरेचन गर्ने समय

**शरदृतौ वसन्ते च देहशुद्ध्यै (देयं शुद्धौ) विरेचयेत्॥३॥**
**अन्यदात्ययिके काले (कार्ये) शोधनं शीलयेद् बुधः ।**

मानिसलाई शरद् वा वसन्त ऋतुमा शरीर शुद्ध बनाउन दिसा लगाउने ओखती खुवाएर दिसा लगाउँदा शरीर शुद्ध र उत्तम हुन्छ । यस बाहेकका समयमा रोग लागे सबैकुरा बिचार गरी वैद्यले रोगीलाई दिसा लगाउनू ।

विरेचन गर्न योग्य रोगहरू

**पित्ते विरेचनं युञ्ज्यादामोद्भूते गदे तथा॥४॥**
**उदरे च तथाऽऽध्माने कोष्ठशुद्ध्यै विशेषतः ।**

विशेषतः पित्तविकार,आमवात वा आमजन्य विकार, पेटका रोग, आध्मान र कब्जियतमा दिसा लगाउनु उत्तम हुन्छ ।



विरेचनको महत्व

**दोषाः कदाचित्कुप्यन्ति जिता लङ्घनपाचनैः॥५॥**
**ये तु संशोधनैः शुद्धा न तेषां पुनरुद्भवः ।**

वात आदि गरिएका दोष लङ्घन, पाचन आदि गरेपछि पनि पुनः हुन सक्दछन् तर जो वमन र विरेचन आदि गरी शुद्ध भएका हुन्छन् तिनलाई ती दोष पुनः उत्पन्न हुँदैन ।

विरेचन गर्न योग्य मानिस

**जीर्णज्वरी गरव्याप्तो वातरक्ती भगन्दरी॥६॥**
**अर्शःपाण्डूदरग्रन्थिहृद्रोगारुचिपीडिताः ।**
**योनिरोगप्रमेहार्ता गुल्मप्लीहव्रणार्दिताः॥७॥**

**विद्रधिच्छर्दिविस्फोटविषूचीकुष्ठसंयुताः ।**
**कर्णनासाशिरोवक्त्रगुदमेढ्रामयान्विताः ॥८॥**
**प्लीहशोथाक्षिरोगार्ताः कृमिक्षीणानिलार्दिताः ।**
**शूलिनो मूत्रघातार्ता विरेकार्हा नरा मताः ॥९॥**

पुरानो जरो, विष पीडा, वातरक्त, भगन्दर, अल्काई, पाण्डु, पेटका रोग, गाँठाका रोग, मुटुका रोग, अरुची, योनिरोग, प्रमेह, गुल्म, फियोका रोग, घाउखटिरा, विद्रधि, वाकवाकी, पिलो, हैजा, कुष्ठ, कानका रोग, नाकका रोग, टाउकाका रोग, मुखका रोग, पेटमा कीरा पर्ने रोग, मलद्वारका रोग, गुप्ताङ्गका रोग, कलेजो सुन्निने रोग, आँखाका रोग, कीराजन्य रोग, क्षारजन्य रोग, वातजन्य रोग, शूल र मूत्रघात आदिका रोगीलाई विरेचन गराउनू ।

विरेचन गराउन नहुने मानिस

**बालवृद्धावतिस्निग्धः क्षतक्षीणो भयान्वितः ।**

**श्रान्तस्तृषार्तः स्थूलश्च गर्भिणी च नवज्वरी ॥१०॥**
**नवप्रसूता नारी च मन्दाग्निश्च मदात्ययी ।**
**शल्यार्दितश्च रूक्षश्च न विरेच्या विजानता ॥११॥**

बालक, वृद्ध, अति चिल्लो शरीर भएका, छातीमा घाउ भई दुब्लाएका, डरछेरुवा, थकित, तिर्खाएका, धेरै मोटा, गर्भवती, भर्खर जरो आउन शुरु भएका, भर्खर सुत्केरी भएका, पाचन शक्ति कमजोर हुने, मदात्ययका रोगी, भर्खर शल्यचिकित्सा (अप्रेशन) गरिएका र रुखो शरीर हुनेलाई विद्वान वैद्यले विरेचन नगराउनू ।

विरेचनमा पेटको अवस्था विचार

**बहुपित्तो मृदुः प्रोक्तो (कोष्ठो) बहुश्लेष्मा च मध्यमः ।**
**बहुवातः क्रूरकोष्ठो दुर्विरेच्यः स कथ्यते ॥१२॥**
**मृद्वी मात्रा मृदौ कोष्ठे मध्यकोष्ठे च मध्यमा ।**

**क्रूरे तीक्ष्णा मता द्रव्यैर्मृदुमध्यमतीक्ष्णकैः ॥१३॥**

जसको पेटभित्र धेरै पित्त हुन्छ त्यसलाई मृदुकोष्ठ, जसको पेटभित्र धेरै कफ हुन्छ त्यसलाई मध्यमकोष्ठ र जसका पेटमा धेरै वात हुन्छ त्यसलाई क्रूरकोष्ठ भनी जान । क्रूरकोष्ठ हुने मानिसलाई ओखती खुवाउँदा पनि तुरुन्त दिसा लाग्दैन । मृदुकोष्ठ हुनेलाई ओखती पनि मध्यम खालकै दिनू । क्रूरकोष्ठ हुनेलाई तीक्ष्ण मात्राको ओखती दिनू ।

पेट अनुसार विरेचनका ओखती

**मृदुर्द्राक्षा पयश्चञ्चुतैलैरपि विरिच्यते ।**
**मध्यमस्त्रिवृतातिक्ताराजवृक्षैर्विरिच्यते ॥१४॥**
**क्रूरः स्नुक्पयसा हेमक्षीरदन्तीफलादिभिः ।**

मृदुकोष्ठ हुनेलाई दाख, दूध र अरिडको तेलले नै दिसा लगाउन सक्दछ । मध्यम कोष्ठ हुनेलाई सेतो निशोध, कटुकी र राजवृक्षको गुदीले दिसा लगाउन सक्दछ । क्रूरकोष्ठ हुनेलाई सिउँडीको दूध, डुम्री, अजयपालका गेडा आदिले दिसा लगाउँदछ ।



विरेचनको परिमाण

**मात्रोत्तमा विरेकस्य त्रिंशद्वेगैः कफान्तिका (न्तगा) ॥१५॥**
**वेगैर्विंशतिभिर्मध्या हीनोक्ता दशवेगिका(गकैः) ।**

तीस पटक दिसा लागी अन्तमा कफ आए त्यसलाई उत्तम विरेचन भनी जान्नू । बीस पटक दिसा लागी कफ निस्के त्यो मध्यम र दश पटक दिसा लागी कफ निस्के त्यो हीन मात्राको विरेचन हुन्छ ।

विरेचनमा काँढापानीको मात्रा

**द्विपलं श्रेष्ठमाख्यातं मध्यमञ्च पलं भवेत् ॥१६॥**
**पलार्धे(र्धं) च कषायाणां कनीयस्तु विरेचनम् ।**

दुई पल काँढापानी खुवाएर दिसा लागे त्यो उत्तम हुन्छ । एक पल काँढापानीले दिसा लागे मध्यम र आधा पल काँढापानीले दिसा लागे त्यो कनिष्ठ हुन्छ ।

दिसा लगाउन कल्क आदिको परिमाण

**कल्कमोदकचूर्णानां कर्षं मध्वाज्यलेहतः ॥१७॥**
**कर्षद्वयं पलं वाऽपि वयोरोगाद्यपेक्षया ।**

कल्क, लड्डू र धुलो यी सबै एक कर्ष मह वा घिउमा मिसाएर दिसा गराउनका लागि खान दिनु पर्दछ । अथवा अवस्था र रोगको लक्षण हेरी दुई कर्ष वा एक पल दिनु पर्दछ ।

त्रिदोष अनुसार दिसा लगाउने ओखती

**पित्तोत्तरे त्रिवृच्चूर्णं द्राक्षाक्वाथादिभिः पिबेत् ॥१८॥**
**त्रिफलाक्वाथगोमूत्रैः पिबेद् व्योषं कफार्दितः ।**
**त्रिवृत्सैन्धवशुण्ठीनां चूर्णमम्लैः पिबेन्नरः ॥१९॥**
**वातार्दितो विरेकाय जाङ्गलानां रसेन वा ।**



पित्त बढी हुँदा सेतो निशोधको धुलो दाख आदिको काँढापानीमा मिसाएर पिउनू । कफको प्रकोप हुँदा त्रिफलाको काँढापानीमा गहुँत मिसाएर सुठो, मरिच र पिप्लाको धुलो खानू । वातरोगीले दिसा लगाउन सेतो निशोध, सिधेनुन र सुठोको धुलो कागतीको रससँग वा जङ्गली जीवको मासुको रससँग खानू ।

दिसा लगाउन अँडिरको तेलको प्रयोग

**एरण्डतैलं त्रिफलाक्वाथेन द्विगुणेन च ॥२०॥**
**युक्तं पीतं पयोभिर्वा न चिरेण विरिच्यते ।**

अँडिरको तेलको दोबर त्रिफलाको काँढापानी बनाई त्यसमा अरिडको तेल हाली खानाले अथवा अँडिरको तेल दूधमा मिलाएर खानाले दुरुन्त दिसा लाग्न थाल्दछ ।

वर्षा ऋतुमा दिसा लगाउने ओखती

**त्रिवृता कौट(कौटजं)बीजञ्च पिप्पली (पिप्पली) विश्वभेषजम् ॥२१॥**
**समृद्वीकारसक्षौद्रं वर्षाकाले विरेचनम् ।**

वर्षा ऋतुमा सेतो निशोध, इन्द्रजौ, पिप्ला, सुठो, दाखको रस र मह दिसा लगाउनका लागि खान दिनु पर्दछ ।

शरद ऋतुमा दिसा लगाउने ओखती

**त्रिवृद्दुरालभा मुस्ता शर्करा द्विव्यचन्दनम् (शर्करोदीच्यचन्दनम्) ॥२२॥**
**द्राक्षाम्बुना सयष्टीकं(ष्टाह्वं) शीतलञ्च घनात्यये ।**

शरद ऋतुमा सेतो निशोध, सिस्नु, नागरमोथे, मिस्री, उत्तम सेतो चन्दन र जेठीमधुको धुलो दाखको काँढापानीमा मिसाएर खानाले दिसा लाग्दछ र शीतल गर्दछ ।



हेमन्त ऋतुमा दिसा लगाउने ओखती

**त्रिवृतां चित्रकं पाठा ह्यजाजी सरला वचा ॥२३॥**
**हेमक्षीरीं च हेमन्ते चूर्णमुष्णाम्बुना पिबेत् ।** (कुनै प्रतिमा यो श्लोक छैन)

सेतो निशोध, चितू, गानेगुर्जो, जीरा, देवदार, बोझो र सत्यानासी झार (हेमक्षीरी) को जरा : यी सबैको धुलो तातोपानीसँग हेमन्त ऋतुमा खान दिनाले दिसा लाग्दछ ।

शिशिर एवं वसन्त ऋतुमा दिसा लगाउने ओखती

**पिप्पली नागरं सिन्धु श्यामा त्रिवृतया सह ॥२४॥**
**लिहेत् क्षौद्रेण शिशिरे वसन्ते च विरेचनम् ।**

पिप्ला, सुठो, सिधेनुन र कालो निशोधको धुलो महसँग मिसाएर चाट्नाले शिशिर र वसन्त ऋतुमा दिसा लाग्दछ ।

ग्रीष्म ऋतुमा दिसा लगाउने ओखती

त्रिवृता शर्करा तुल्या ग्रीष्मकाले विरेचनम् ॥२५॥

ग्रीष्म ऋतुमा सेतो निशोधको धुलो मिस्रीसँग मिसाएर खानाले दिसा लाग्दछ ।

सबै ऋतुका लागि हुने दिसा लगाउने ओखती

त्रिवृतां दन्ति हपुषां (हपुषां दन्तीं) सप्तलां कटुरोहिणीम् ।
स्वर्णक्षीरीञ्च सञ्चूर्ण्य गोमूत्रे भावयेत् त्र्यहम् ॥२६॥
एष सर्वर्तुको योगः स्निग्धानां मलदोषहा ।

सेतो निशोध, अजयपाल, हपुषा, हात्तीकाने (वा मुकुन्दराज ?), कुटकी र सत्यानासी झारको जराको धुलो गहुँतमा तीन दिन भिजाएर राख्नू । यो खान दिनाले मानिसलाई जहिलेसुकै पनि दिसा लगाउन सकिन्छ, हुन्छ ।



हर्रो आदिको लड्डू

अभया मरिचं शुण्ठीविडङ्गामलकानि च ॥२७॥
पिप्पली पिप्पलीमूलं त्वक्पत्रं मुस्तमेव च ।
एतानि समभागानि दन्ती च द्विगुणा भवेत् ॥२८॥
त्रिवृदष्टगुणा ज्ञेया षड्गुणा चात्र शर्करा ।
मधुना मोदकं कृत्वा (मोदकान्कृत्वा) कर्षमात्रप्रमाणतः ॥२९॥
एकैकं भक्षयेत्प्रातः शीतञ्चानु पिबेज्जलम् ।
तावद्विरिच्यते जन्तुर्यावदुष्णं न सेवते ॥३०॥
पानाहारविहारेषु भवेन्नियन्त्रणं(णः) सदा ।
विषमज्वरमन्दाग्निपाण्डुकासभगन्दरम्(रान्) ॥३१॥

**दुर्नाम कुष्ठगुल्मार्शोगलगण्डव्रणो(भ्रमो)दरान् ।**
**विदाहप्लीहमेहाँश्च यक्ष्माणं नयनामयम्(यान्) ॥३२॥**
**वातरोगं तथाध्मानं मूत्रकृच्छ्राणि चाश्मरीम् । पृष्ठपार्श्वोरुजघनजङ्घोदररुजं(जो) जयेत् ॥३३॥**
**सततं शीलनादेष(षां) पलितानि विना(प्रणा)शयेत् ।**
**अभयामोदका ह्येते रसायनवराः स्मृताः ॥३४॥**

हर्रो, कालो मरिच, सुठो, वायुविडङ्ग, अमला, पिप्ला, पिप्लाको जरा, दालचिनी, तेजपात र नागरमोथे यी सबै बराबर मात्रामा लिनू । यसमा अजयपाल तीन भाग, सेतो निशोध आठ भाग र सक्खर वा मिस्री छ भाग मिसाई मोल्नू । अनि एक एक कर्षका गोली वा लड्डू बनाउनू । यो एउटा गोली बिहान दिसा लगाउन खानू र त्यसपछि अलिकति चिसो पानी पिउनू । (यसपछि दिसा लाग्न शुरु हुन्छ) । जबसम्म दिसा लाग्दछ तबसम्म तातो कुरा नखानू । अन्य खानपिन र परिश्रम आदि कुरा पनि बार्नू । यसले विषमज्वर, मन्दाग्नि, पाण्डु, खोकी, भगन्दर, कुष्ठ, गुल्म, अल्काई, गलगाँड, भ्रम, पेटका रोग, डाह, फियोका रोग, प्रमेह, क्षयरोग, आँखाका रोग, वातरोग, आध्मान, मूत्रकृच्छ्र, पत्थरी जस्ता रोग तथा ढाड, गोडा, कम्मर, तिघ्रा, पिँडुला र पेट दुख्ने जस्ता रोग पनि ठिक हुन्छ । यो लड्डूलाई अभयादिमोदक भनिन्छ । नियमित यो लड्डू खानाले उमेर नपुग्दै फुलेको कपाल पनि कालो हुन्छ । यो एक उत्तम रसायन हो ।



दिसा लगाउने ओखती खुवाएपछि गर्नुपर्ने अन्य कुरा

**पीत्वा विरेचनं शीतजलैः संसिच्य चक्षुषी ।**
**सुगन्धिं किञ्चिदाघ्राय ताम्बूलं शीलयेन्नरः(द्वरम्) ॥३५॥**

रोगीलाई दिसा लगाउने ओखती खुवाए पछि उसका आँखामा चिसो पानी छम्कनू र अत्तर आदि सुगन्धित वस्तु सुँघाउनू । पानको विडा खान दिनू । यसो गर्नाले उत्तम तरिकाले दिसा लाग्दछ ।

दिसा लागेपछि बार्नुपर्ने नियम

**निर्वा(वा)तस्थो न वेगाँश्च धारयेन्न स्वपेत्तथा ।**
**शीताम्बु न स्पृशेत् क्वापि कोष्णनीरं पिबेन्मुहुः ॥३६॥**

ओखती खाएर दिसा भएपछि हावा चल्ने ठाउँमा नबस्नू । अपानवायु, मल, मूत्र आदिको वेगलाई नरोक्नू । नसुत्नू, चिसो पानी नछुनू र तातोपानी पटक पटक पिइरहनू । (तर हर्रोको लड्डू खाएको भए तातोपानी नपिउनू) ।

दिसामा निस्कने पदार्थ

**बलासौषधपित्तानि वायुर्वान्ते यथा व्रजेत् ।**
**रेकात्तथा मलं पित्तं भेषजञ्च कफो व्रजेत् ॥३७॥**

जसरी ओखती खाएर बान्ता गर्दा बान्तामा खाइएको ओखती, पित्त, कफ र वायु जस्ता पदार्थ बाहिर निस्कन्छ त्यसरी नै ओखती खाएर दिसा गर्दा पनि दिसा, पित्त, खाइएको ओखती र कफ मलद्वारबाट बाहिर निस्कने गर्दछ ।



उपयुक्त तरिकाले दिसा नभएको लक्षण

**दुर्विरिक्तस्य नाभेस्तु स्तब्धत्वं कुक्षिशूलता ।**
**पुरीषवातसङ्गश्च कण्डूमण्ड(ढ)लगौरवम्(वः) ॥३८॥**
**विदाहोऽरुचिराध्मानं भ्रमश्छर्दिश्च जायते ।**

राम्ररी दिसा नभए नाइटोमा भारीपन वा लाटोपन हुन्छ, कोखा सुन्निन्छन्, दिसा र अपानवायु नियमित हुँदैन, शरीर चिलाउन थाल्दछ, छालामा डाबर देखिन थाल्दछ, शरीर भारी हुन्छ, डाह हुन्छ, खान मन लाग्दैन, आध्मान हुन्छ, भ्रम र बान्ता हुन्छ ।

उपयुक्त तरिकाले दिसा नलागी हुने असरको उपचार

**तं पुनः पाचनैः स्नेहैः पक्त्वा संस्नेह्य रेचयेत् ॥३९॥**

**तेनाऽस्योपद्रवा यान्ति दीप्तोऽग्नि(दीप्ताग्ने)र्लघुता भवेत् ।**

यस्ता रोगीलाई पचाउने ओखती खुवाएर आमरसलाई पचाउनु पर्दछ । चिल्लो खुवाई पुनः दिसा लगाउने प्रयाश गर्नु पर्दछ । यसो गर्नाले सबै असर नाश भई जठराग्नि बल्दछ र शरीर हलुका हुन्छ ।

धेरै दिसा लागेको लक्षण

**विरेकस्यातियोगेन मूर्च्छा भ्रंशो गुदस्य च ॥४०॥**
**शूलं कफातियोगः स्यान्मांसधावनसन्निभम् ।**
**मेदोनिभं जलाभासं रक्तं चापि(वाऽपि) विरिच्यते ॥४१॥**

धेरै दिसा लागे बेहोस हुने, मलद्वार दुख्ने, शूल तथा दिसाबाट कफ धेरै झर्ने, मासु पखालेको झोलजस्तो वा बोसो जस्तो वा पानी जस्तो दिसा हुने र रगत समेत निस्कने गर्दछ ।



धेरै दिसा लागेको उपचार

**तस्य शीताम्बुभिः सिक्तं शरीरं तन्दुलां(तण्डुलाम्)बुभिः ।**
**मधुमिश्रैस्तथा शीतैः कारयेद्वमनं मृदु ॥४२॥**

धेरै दिसा लागे रोगीका शरीरमा चिसो पानी छम्कनू । चौलानी पानीमा मह फिटेर पिउन दिनू अथवा थोरै बान्ता गराउनू ।

दिसा रोक्ने ओखती

**सहकारत्वचः कल्को दध्ना सौवीरकेण वा ।**
**पिष्टो नाभिप्रलेपेन हन्त्यतीसारमुल्बणम् ॥४३॥**

आँपको रुखको बोक्रा गाईको दहीमा अथवा काँजीमा पिसी लेप बनाएर दिसा रोक्नुपर्ने रोगीको नाइटोभन्दा माथितिर दल्नू, लागिरहेको दिसा बन्द हुन्छ ।

### दिसा रोक्ने अन्य उपाय

**अजाक्षीरं पिबेद्वाऽपि वैष्किरं हारिणन्तथा ।**
**शालिभिः षष्टिकैः स्वल्पं मसूरैर्वाऽपि भोजयेत् ॥४४॥**
**शीतैः सङ्ग्राहिभिर्द्रव्यैः कुर्यात् सङ्ग्रहणं भिषक् ।**

बाख्रीको दूध पिउनू अथवा विष्किर वर्गका चराको वा मृगको मासुको रस खानू । रस खाँदा सठिया चामलको भातसँग वा मुसुरोको दालसँग खानू । अथवा अनार आदि ग्राही (कब्जियत गर्ने) पदार्थ खानू । दिसा लाग्न बन्द हुन्छ ।

### राम्रोसँग दिसा लागेको लक्षण

**लाघवे(वं) मनसस्तुष्टाव(ष्टिर)नुलोमे गतेऽनिले ॥४५॥**
**सुविरिक्तं नरं ज्ञात्वा पाचनं पाययेन्निशि ।**

जसको शरीर दिसा भई हलुका भएको छ, मन प्रसन्न भएको छ, वायु आफ्नो बाटोमा स्वाभाविक गतिमा हिँड्न थालेको छ, उसलाई दिसा लगाएको फाइदा भयो भनी जान्नू । यस्ता मानिसलाई रातमा पचाउने ओखती खुवाउनू पर्दछ । (पाचन ओखतीमा अरिडको जरा, सुठो र धनियाको काँढापानीले पाचकको उत्कृष्ट काम गर्दछ) ।

### दिसा लगाउनुका फाइदा

**इन्द्रियाणां बलं बुद्धेः प्रसादो वह्निदीपनम् ॥४६॥**
**धातुस्थैर्यं वयःस्थैर्यं भवेद्रेचनसेवनात् ।**

दिसा लगाउनाले इन्द्रियमा बल आउँदछ, बुद्धि प्रसन्न हुन्छ, पाचकाग्नि बल्दछ तथा धातु र उमेरमा स्थिरता आउँदछ ।

**दिसा लगाएपछि बार्नुपर्ने कुरा**

**प्रवातसेवां(वा) शीताम्बु स्नेहाभ्यङ्गमजीर्णताम् ॥४७॥**
**व्यायामं मैथुनञ्चैव न सेवेत विरेचितः ।**

दिसा भएपछि (कम्तीमा त्यो दिन) धेरै हावा खान हुँदैन, चिसो पानी पिउन र तेलले मालिश गर्न हुँदैन, अजीर्ण हुने कुरा खान, परिश्रम गर्न र मैथुन गर्न हुँदैन ।

**विरेचन पछि खाने पथ्य कुराहरू**

**शालिषष्टिकमुद्गाद्यैर्यवागूं भोजयेत्कृताम् ॥४८॥**
**जाङ्गलैर्विष्किराणां (जङ्गालविष्किराणां) वा रसैः शाल्योदनं हितम् ।**

दिसा लगाएपछि रोगीलाई सठिया चामल, मुगी आदिको यवागू खुवाउनू । जङ्गली हरिण आदिको मासुको रस वा विष्किर वर्गका चराको मासुको रस वा कुखुराको मासुको रससँग भात खुवाउनू ।



इति श्रीशार्ङ्गधरसंहितायामुत्तरखण्डे विरेचनविधिर्नाम चतुर्थोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत चौथो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-१,८५२.५+४८.५=१,९०१

✷

# अथ पञ्चमोऽध्यायः

## पाँचौं अध्याय

### वस्तिको परिभाषा र किसिम

**वस्तिर्द्विधाऽनुवासाख्यो निरूहश्च ततः परम् ।**
**वस्तिभिर्दीयते यस्मात्तस्माद् वस्तिरिति स्मृतः ॥१॥**
**यः स्नेहैर्दीयते स स्यादनुवासननामकः ।**
**कषायक्षीरतैलैर्यो निरूहः स निगद्यते ॥२॥**

मलद्वारबाट पेटभित्र पचका हाल्नुलाई वस्ति भनिन्छ । वस्ति दुई किसिमको हुन्छ : अनुवासन र निरूह । घिउ, तेल आदि चिल्ला कुराको पचका दिनुलाई अनुवासन वस्ति र काँढापानी, दूध र तेल आदि मिसाएर पचका दिनुलाई निरूह वस्ति भनिन्छ ।

### अनुवासन वस्ति



**तत्रानुवासनाख्यो हि वस्तिर्यः सोऽत्र कथ्यते ।**
**पूर्वमेव ततो वस्तिर्निरूहाख्यो भविष्यति ॥३॥**
**निरूहादुत्तरश्चैव वस्तिः स्यादुत्तराभिधः ।**
**अनुवासनभेदश्च मात्रावस्तिरुदीरितः ॥४॥**

पहिला अनुवासन वस्तिका बारेमा बताएर त्यसपछि निरूह वस्ति र उत्तरवस्तिका बारेमा बताइन्छ । अनुवासन वस्तिको एउटा विधि मात्रा-वस्ति हो ।

### मात्रा-वस्तिमा चिल्लोको मात्रा

**पलद्वयं तस्य मात्रा तस्मादर्धाऽपि वा भवेत् ।**

मात्रावस्तिमा हालिने चिल्लोको मात्रा दुई पल वा एक पल हुन्छ भनी जान्नू ।

### अनुवासन वस्ति गराउन योग्य मानिस

**अनुवास्यस्तु रूक्षः स्यात्तीक्ष्णाग्निः केवलानिली ॥५॥**

शरीर रुखो हुने तर पाचकाग्नि बलियो हुने र वात मात्रका रोगीलाई अनुवासन वस्ति गराउन उपयुक्त हुन्छ ।

### अनुवासन वस्ति गर्न नहुने मानिस

**नानुवास्यस्तु कुष्ठी स्यान्मेही स्थूलस्तथोदरी ।**
**अ(ना)स्थाप्या नानुवास्याः स्युर(श्चा)जीर्णोन्मादतृड्यु(डर्दि)ताः ॥६॥**
**शोकमूर्च्छाऽरुचिभयश्वासकासक्षयातुराः ।**

कुष्ठरोगी, प्रमेहका रोगी, मोटो र पेटको रोगीलाई अनुवासन वस्ति गराउन हुन्न । अजीर्णका रोगी, उन्मादका रोगी, तिर्खाएका, शोकग्रस्त, बेहोस हुने, अरुची भएका, डराउने वा डराएका, दमका रोगी, खोकी लागेका र क्षयरोगीलाई निरूह वस्ति दिन उचित हुन्छ अनुवासन वस्ति नदिनू ।



### वस्ति-यन्त्रको मुख बनाउने तरिका

**नेत्रं कार्यं सुवर्णादिधातुभिर्वृक्षवेणुभिः ॥७॥**
**नलैर्दन्तैर्विषाणाग्रैर्मणिभिर्वा विधीयते ।**

मलद्वारमा पचका दिने नली सुन आदि धातुको, नरकट आदिको, हात्ती आदीको दाँतको, सिङको टुप्पोको, वा सूर्यकान्त मणि आदिको बनाउनु पर्दछ ।

### आयु अनुसार वस्ति-नलीको नाप

**एकवर्षात्तु षड्वर्षं यावन्मानं षडङ्गुलम् ॥८॥**
**ततो द्वादशकं यावन्मानं स्यादष्टसंयु(मि)तम् ।**
**ततः परं द्वादशभिरङ्गुलैर्नेत्रदीर्घता ॥९॥**

एकदेखि छ वर्षसम्मका मानिसका लागि छ अमल, छदेखि बाह्र वर्षसम्मका लागि आठ अमल र त्यसभन्दा बढी उमेरका मानिसहरूका लागि बाह्र अमल लामो नली बनाउनु पर्दछ ।

नलीको प्वालको नाप

**मुद्गच्छिद्रं कलायाभं छिद्रं कोलास्थिसन्निभम् ।**
**यथासङ्ख्यं भवेन्नेत्रं श्लक्ष्णं गोपुच्छसन्निभम् ॥१०॥**
**आतुराङ्गुष्ठमानेन मूले स्थूलं विधीयते ।**
**कनिष्ठिकापरीणाहमग्रे च गुटिकामुखम् ॥११॥**
**तन्मूले कर्णिके द्वे च कार्ये भागाच्चतुर्थकात् ।**
**योजयेत्तत्र वस्तिञ्च बन्धद्वयविधानतः ॥१२॥**

छ अमलको नलीमा मुगको दाना छिर्ने जत्रो, आठ अमलको नलीमा केराउको दाना छिर्ने जत्रो र बाह्र अमलको नलीमा वयरको भित्री गेडा छिर्ने जत्रो प्वाल बनाउनु पर्दछ । नली चिल्लो र गाईको पुच्छर जस्तो आकारको हुनु पर्दछ । नलीको फेद रोगीको बूढी औंला जति मोटो र टुप्पो कान्छी औंला जति मोटो हुनु पर्दछ । मुख गोलो हुनु पर्दछ । त्यो नलीलाई बराबर चार भाग नापी चौथो भागको फेदमा कमलपत्र आकारका दुई कान बनाई त्यसमा हरिण आदिको अण्डकोषको वस्ति (पेटको छाला) बाँधेर मिलाई जोड्नु पर्दछ ।



वस्तिका लागि प्रयोग गरिने अण्डकोष

**मृगाजशूकरगवां महिषस्यापि वा भवेत् ।**
**मूत्रकोश(ष)स्य वस्तिस्तु तदलाभेन चर्मजः ॥१३॥**
**कषायरक्तः सुमृदुर्वस्तिः स्निग्धो दृढो हितः ।**

मृग, बोको, सुँगुर, साँढे वा राँगोको अण्डकोषको थैलोको वस्ति बनाउनू । यी नपाउँदा मृग आदिको छालाको बनाउनू । यो वस्ति बबुर आदिको काँढापानीमा रङ्गाइएको, चिल्लो र बलियो हुनु पर्दछ ।

घाउको वस्तिमा लगाइने नलीको नाप

**व्रणवस्तेस्तु नेत्रं स्याच्छ्लक्ष्णमष्टाङ्गुलोन्मितम् ॥१४॥**
**मुद्गच्छिद्रं गृध्रपक्षनलिकापरिणाहि च ।**

व्रणवस्तिमा जोडिने नली आठ अमल लामो र प्वाल मुगीको दाना जत्रो हुनु पर्दछ । यसको मोटाई गिद्धको प्वाँख जति हुनु पर्दछ ।

वस्तिको फाइदा

**शरीरोपचयं वर्णं बलमारोग्यमायुषः ॥१५॥**
**कुरुते परिवृद्धिञ्च वस्तिः सम्यगुपासितः ।**

उत्तम तरिकाले वस्तिको प्रयोग गर्नाले शरीर, वर्ण, बल, आरोग्यता र आयु वृद्धि हुन्छ ।



वस्तिको प्रयोग गर्ने समय

**दिवासान्ते (दिवा शीते) वसन्ते च स्नेहवस्तिः प्रदीयते ॥१६॥**
**ग्रीष्मवर्षाशरत्काले रात्रौ स्यादनुवासनम् ।**

वसन्त ऋतुमा स्नेहवस्ति साँझपख दिनू । ग्रीष्म, वर्षा र शरद ऋतुमा रातमा दिनू ।

वस्तिकालमा भोजनका नियम

**न चातिस्निग्धमशनं भोजयित्वाऽनुवासयेत् ॥१७॥**

रोगीलाई धेरै चिल्लो वा धेरै रुखो कुरा खुवाएर वस्तिको प्रयोग गर्न हुन्न ।

नमिल्दो भोजनमा वस्ति गर्दा हुने असर

**मदं मूर्च्छाञ्च जनयेद् द्विधा (द्विधि) स्नेहः प्रयोजितः ।**

**रूक्षं भुक्तवतोऽत्यन्तं(न्नं) बलं वर्णञ्च हीयते ॥१८॥**

धेरै चिल्लो खुवाएर वस्ति गर्दा नसा लाग्ने र बेहोस हुने समस्या हुन सक्दछ । धेरै रुखो खुवाएर वस्तिकर्म गर्दा बल र तेज दुबै नाश हुन्छ ।

वस्तिकर्ममा मात्राको फल

**हीनमात्रावुभौ वस्ती नातिकार्यकरौ स्मृतौ ।**
**अतिमात्रौ तथाऽऽनाहक्लमातीसारकारकौ ॥१९॥**

अनुवासनवस्ति र निरूहवस्तिमा मात्र कम हुँदा त्यसले गर्नुपर्ने काम गर्दैन अर्थात् रोग राम्रोसँग नाश हुँदैन । यसैगरी मात्रा धेरै भए आनाह, थकित हुने र अतिसार हुने गर्दछ ।

वस्तिको मात्रा

**उत्तमस्य पलैः षड्भिर्मध्यमस्य पलैस्त्रिभिः ।**

**पलाद्य(पलस्या)र्धेन हीनस्य युक्ता मात्राऽनुवासने ॥२०॥**

बलिया मानिसलाई छ पल, मध्यम खालकालाई तीन पल र निर्धा मानिसलाई एक पल अनुवासन वस्ति दिनु पर्दछ ।

स्नेह वस्तिमा ओखतीको मात्रा

**शताह्वा सैन्धवाभ्याञ्च देयं स्नेहे च चूर्णकम् ।**
**तन्मात्रोत्तममध्यान्त्याः षट्चतुर्द्वयमाषकैः ॥२१॥**

अनुवासन वस्तिमा सुप र सिधेनुन छ मासा हाल्नु उत्तम हुन्छ । यसैगरी यसको चार मासा मध्यम र दुई मासा न्यून मात्रा हुन्छ ।

## दिसा लगाएपछि वस्ति दिने विधान

**विरेचनात्सप्तरात्रे गते जातबलाय च ।**
**भुक्तान्नायानुवास्याय वस्तिर्देयोऽनुवासनः ॥२२॥**

दिसा लगाउने ओखती खुवाई दिसा लगाएको एक हप्ता बितेपछि जब रोगीका शरीरमा बल आउँदछ तब योग्य मानिसलाई अनुवासन वस्तिको प्रयोग गर्नु पर्दछ ।

### वस्ति प्रयोग गर्ने विधि

**अथानुवास्यं स्वभ्यक्तमुष्णाम्बुस्वेदितं शनैः ।**
**भोजयित्वा यथाशास्त्रं कृतचङ्क्रमणन्ततः ॥२३॥**
**उत्सृष्टानिलविण्मूत्रं योजयेत् स्नेहवस्तिना ।**
**सुप्तस्य वामपार्श्वेन वामजङ्घप्रसारिणः ॥२४॥**
**कुञ्चितापरजङ्घस्य नेत्रं स्निग्धगुदे न्यसेत् ।**
**बद्ध्वा वस्तिमुखं सूत्रैर्वामहस्तेन धारयेत् ॥२५॥**
**पीडयेद्दक्षिणेनैव मध्यवेगेन धीरधीः ।**
**जृम्भाकासक्षवादींश्च वस्तिकाले न कारयेत् ॥२६॥**

अनुवासन वस्तिका लागि योग्य मानिसलाई शरीरमा तेल घसी तातोपानीले उसका शरीरबाट हलुका पसिना निकाल्नू । यसपछि तोकिएको भोजन (चामलको पातलो पेया वा खोले) खान दिनू । अनि एकछिन यताउता टहलिन लगाउनू । यसपछि दिसा पिसाब लागे गराउनू । अपानवायु आए छाड्न लगाउनू । अनि वस्तिकर्म गर्नू । रोगीलाई देब्रेतिर कोल्टो सुताई देब्रे गोडा पसार्न लगाउनू । दाहिने गोडो खुम्च्याई मलद्वारमा घिउ दलेर चिल्लो बनाउनू । वस्तिको मुखमा धागो बाँध्नू र विस्तारै नली गुदद्वारबाट भित्र छिराउनू । कुशल वैद्यले नलीलाई देब्रे हातले समाई दाहिने हातले धकेल्नू र मध्यम वेगले पचका हाल्नू । यस अवधिमा रोगीले हाई गर्न, खोक्न र हाच्छिउँ गर्न हुँदैन ।

### वस्ति दिने समय

**त्रिंशन्मात्रामितः कालः प्रोक्तो वस्तेस्तु पीडने ।**
**ततः प्रणिहितः स्नेह उत्तानो वाक्शतं भवेत् ॥२७॥**

पचका दिने अधिकतम समय तीस मात्रासम्म हो । चिल्लो भित्र छिराइए पछि सय अङ्क गनिन्जेलसम्म रोगीलाई उत्तानो पारेर सुताइरहनू ।

### वस्तिमा मात्राको परिभाषा

**जानुमण्डलमावेष्ट्य कुर्याच्छोटिकया युतम् ।**
**एकमात्रा भवेदेषा सर्वत्रैष विनिश्चयः ॥२८॥**

घुँडामा हात दल्दै चुटकी बजाउन लाग्ने जति समयलाई एक मात्रा भनिन्छ । सबैतिर यही नियम जान्नू ।



### वस्ति पछिका कर्म

**प्रसारितैः सर्वगात्रैर्यथावीर्यं विसर्पति ।**
**ताडयेत्तलयोरेनं त्रीन्वाराँश्च शनैः शनैः ॥२९॥**
**स्फिजोश्चैवं ततः श्रोणीं शय्यां चैवोत्क्षिपेत्ततः ।**
**जाते विधाने तु ततः कुर्यान्निद्रां यथासुखम् ॥३०॥**

पचका हालेपछि रोगीलाई हात, गोडा सबै लुला बनाएर पसार्न लगाउनू । यसो गर्नाले रस आदि शरीर भित्रका धातु आआफ्ना स्थानमा जान्छन् । यसपछि रोगीका हत्केला र पैंतालामा विस्तार विस्तार हत्केलाले तीन तीन पटक हिर्काउनू । यसैगरी तिघ्रा र कम्मरको पछिल्तिरको भागमा पनि तीन तीन पटक हिर्काउनू । यसपछि रोगीलाई बसाउनू र केही बेरपछि रोगीलाई सुखपूर्वक सुत्न लगाउनू ।

वस्तिले काम गरेको लक्षण

**सानिलः सपुरीषश्च स्नेहः प्रत्येति यस्य तु(वै) ।**
**उपद्रवं विना शीघ्रं स सम्यगनुवासितः ।।३१।।**

मलद्वारबाट भित्र गएको चिल्लो हावा र दिसासँग मिसिई कुनै वाधा नभई तुरुन्त बाहिर निस्किए त्यो वस्तिकर्म उत्तम वा सफल भयो भनी जान्नू ।

वस्तिकर्म पछि शरीरमा चिल्लोको परिपूर्ति

**जीर्णान्नमथ(स्त्वथ) सायाह्ने स्नेहे प्रत्यागते पुनः ।**
**लघ्वन्नं भोजयेत्कामं दीप्ताग्निस्तु नरो यदि ।।३२।।**

वस्तिकर्म गर्दा मलद्वार मार्फत शरीरको चिल्लो निखिएर बाहिर आई जठराग्नि बलेमा साँझ रोगीलाई (एक वर्ष) पुरानो अन्न दैनिक खानेभन्दा कम खान दिनू ।



वस्तिकर्म पछि शरीरमा चिल्लोको असरको उपचार

**अनुवासिताय देयं स्यादि(दातव्यमि)तरेऽह्नि सुखोदकम् ।**
**धान्यशुण्ठीकषायो(यं) वा स्नेहव्यापत्तिनाशनम् ।।३३।।**

दोश्रो दिन तातोपानी पिउन दिनू । अथवा धनिया र सुठोको काँढापानी पकाएर पिउन दिनू । यसले चिल्लोजन्य विकार नष्ट हुन्छ ।

वस्तिमा पचका दिने मात्रा

**अनेन विधिना षड्वा सप्त चाष्टौ नवाऽपि वा ।**
**विधेया वस्तयस्तेषामन्ते चैव(न्तरा तु) निरूहणम् ।।३४।।**

यसरी छ, सात, आठ वा नौ पटक पचका दिनू । यसपछि उसलाई निरूहण वस्ति दिने योजना बनाउनू ।

पचकाको सङ्ख्या अनुसार वस्तिका लाभ

(दत्तस्तु प्रथमो वस्तिः स्नेहयेद्वस्तिवङ्क्षणे‌ः ।
सम्यग्दत्तो द्वितीयस्तु मूर्धस्थमनिलञ्जयेत् ॥३५॥
बलं वर्णञ्च जनयेत्तृतीयस्तु प्रयोजितः ।
चतुर्थपञ्चमौ दत्तौ स्नेहयेतां रसासृजी ॥३६॥
षष्ठो मांसं स्नेहयति सप्तमो मेद एव च ।
अष्टमो नवमश्चापि मज्जानञ्च यथाक्रमम् ॥३७॥
एवं शुक्रगतान्दोषान्द्विगुणः साधु साधयेत् ।
अष्टादशाष्टादशकान्वस्तीनां यो निषेवते ॥३८॥
स कुञ्जरबलोऽप्यश्वं जयेत्तुल्योऽमरप्रभः ।

पहिलो पटकको पचकाले अण्डकोषको जोर्नी हुँदै शरीरमा चिल्लोको मात्रा आपूर्ति हुन्छ अर्थात् धातु बढाउँदछ । दोश्रो पटकको पचकाले टाउकाको वायु नाश हुन्छ । तेश्रो पचकाले शरीरमा बल र तेज आउँदछ । चौथो र पाँचौं पचकाले शरीरमा रस र रगत वृद्धि हुन्छ । छैटौं र सातौं पचकाले मासु र बोसोमा चिल्लोपन आउँदछ । आठौं र नवौं पचकाले मासी र शुक्रमा चिल्लोपन आउँदछ । यसरी अठार पचका दिनाले शुक्रजन्य विकार नाश हुन्छ । जसले छत्तीस पचका लिन्छ त्यो मानिसमा हात्तीको जस्तो बल प्राप्त हुन्छ र वेगमा घोडालाई समेत जित्दछ । उसको तेज देवताको समान चम्किलो हुन्छ ।



वस्ति दिन योग्य मानिस

रूक्षाय बहुवाताय स्नेहवस्तिर्दिनेदिने ॥३९॥
दद्याद्वैद्यस्तथाऽन्येषामन्यां बाधामपाहरेत् ।
स्नेहोऽल्पमात्रो रूक्षाणां दीर्घकालमनत्ययः ॥४०॥
तथा निरूहः स्निग्धानामल्पमात्रः प्रशस्यते । : प्रक्षिप्त श्लोक)

शरीर रुखो भई वातविकारले पीडित भएका मानिसलाई वैद्यले दिनहुँ स्नेहवस्ति दिनू ।

अन्य मोटा आदि मानिसलाई निरूहवस्ति दिनहुँ दिनाले वातरोग नाश हुन्छ । रुखो शरीरका रोगीलाई बिस्तारै बिस्तारै पचका दिनु पर्दछ । यो कार्य निरन्तर गर्नु पर्दछ । चिल्लो शरीर भएका मानिसलाई निरूहण वस्ति अलिकति मात्र दिनु पर्दछ ।

वस्तिकर्ममा चिल्लो मात्र बाहिर आए त्यसको उपचार

**अथवा यस्य तत्कालं स्नेहो निर्याति केवलः ॥४१॥**
**तस्यान्योऽन्य(ल्प)तरो देयो न हि स्निग्धस्य(ह्यत्य) तिष्ठति ।**

चिल्लो शरीर भएका मानिसको वस्तिकर्म गर्दा तुरुन्त चिल्लो बाहिर आउने र भित्र नबस्ने भएमा यस्तालाई तुरुन्त स्नेहवस्ति गरेपछि निरूहवस्ति गर्नू ।

चिल्लो बाहिर ननिस्किएमा उपचार

**अशुद्धस्य मलोन्मिश्रः स्नेहो नैति यदा पुनः ॥४२॥**
**तदा शैथिल्यमाध्मानं शूलं श्वासश्च जायते ।**

**पक्वाशये गुरुत्वञ्च तत्र दद्यान्निरूहणम् ॥४३॥**
**तीक्ष्णं तीक्ष्णौषधैर्युक्ताफलवर्तिर्हिता तथा ।**
**यथाऽनुलोमनं वायुर्मलं स्नेहश्च जायते ॥४४॥**
**तथा विरेचनं दद्यात्तीक्ष्णं नस्यञ्च शस्यते ।**

बान्ता, विरेचन गरेर शुद्ध नपारिएका मानिसलाई वस्तिकर्म गर्दा मल मिसिएको चिल्लो बाहिर आएन भने उसलाई शरीर शिथिल हुने, आध्मान हुने, शूल हुने, दम हुने र पक्वाशय भारी हुने जस्ता समस्या देखिन्छन् । यसलाई हटाउन तीक्ष्ण निरूह वस्ति दिनु पर्दछ । उसलाई यस्तो तीक्ष्ण ओखती मिसाइएको वस्ति दिनू जसले गर्दा वायु तलतिर सर्ने भई दिसा मिसिएको चिल्लो मलद्वारबाट बाहिर आओस् । अनि उसलाई दिसा लगाउने कडा ओखती र नस समेत दिनू ।

असर नगर्ने खालको स्नेहवस्ति

**यस्य नोपद्रवं कुर्यात्स्नेहवस्तिरनिस्सृतः ॥४५॥**

सर्वोऽल्पो वाऽऽवृते रौक्ष्यादुपेक्ष्यः स विजानता ।

तर, पचका दिएर दिसा र चिल्लो ननिस्किए पनि यदि त्यसले शूल आदि कुनै असर गरेको छैन भने लामो समयसम्म त्यत्तिकै रहन दिनू ।

एक दिन र रात बितेपछि पनि चिल्लो बाहिर नआए त्यसको उपचार

अनायातं त्वहोरात्रे स्नेहं संशोधनैर्हरेत् ।।४६।।
स्नेहवस्तावनायाते नान्यः स्नेहो विधीयते ।

एक दिनरात बितेपछि पनि पचका गरी हालिएको चिल्लो मलद्वारबाट बाहिर नआए दिसा लगाउने ओखती खुवाएर बाहिर निकाल्नु पर्दछ । पहिले पचका हालिएको चिल्लो बाहिर निस्केन भनी पुनः पचका दिनु हुँदैन ।

दिसा लगाउने उपाय



कुष्ठक्रमुककल्कन्तु पाययेच्चाम्लसंयुतम् ।।४७।।
औष्ण्यात्तैक्ष्ण्याच्च सात्म्याच्च वस्तिः सोऽस्यानुलोमयेत् ।
गोमूत्रेण त्रिवृत्पथ्याकल्कं मात्रानुलोमनम् ।।४८।।

यस्तो अवस्थामा कुट र रातो लोधको बोक्रामा अमिली मिसाएर खुवाउनू । अथवा गहुँतमा सेतो निशोध वा हर्रोको लेप बनाई खान दिनू ।

अनुवासन तेल

गुडूच्येरण्डपूतीकभार्ङ्गी वृषकरोहिषम् ।
शतावरीं सहचरं काकनासा(सां) पलोन्मित(ता)म् ।।४९।।
यवमाषातसीकोलकुलत्थान्प्रसृतोन्मितान् ।
चतुर्द्रोणाम्भसा(द्रोणेऽम्भसः) पक्त्वा द्रोणशेषेण तेन च ।।५०।।
पचेत्तैलाढके(कं) पेष्यैर्जीवनीयैः पलोन्मितैः ।
अनुवासनमेतद्धि सर्ववातविकारनुत् ।।५१।।

गुर्जो, अरिडको जरा, लेकपाङ्गोको बोक्रा, भारङ्गी, असुरो, रोहिष झार, कुरिलो, पहेँलो कपुरनली र कौवाठोरी यी सबै एक एक पल लिनू । जौ, माष, आलस, बयरको गुदी र गहत दुई दुई पल लिनू । सबै मिसाएर कुट्नू र चार द्रोण जलमा हाली उमाल्नू । एक द्रोण जल बाँकी भएपछि झिकेर छान्नू । अनि यसमा तिलको तेल एक आढक हाली फेरी उमाल्नू । जब पानी सुकेर तेलमात्र बाँकी रहन्छ तब झिकेर सेलाएपछि त्यो तेल कुनै भाँडामा हाल्नू । यसलाई अनुवासन तेल भनिन्छ । यो अनुवासन तेलले सबै प्रकारका वातका रोग नाश गर्दछ ।

अनुवासन वस्ति नमिली असर गरेमा उपचार

**षट्सप्ततिव्यापदस्तु जायन्ते वस्तिकर्मणः ।**
**दूषितात्समुदायेन ताश्चिकित्स्यास्तु सुश्रुतात् ॥५२॥**

वस्तिकर्म गर्दा अकिति मात्र तरिका नमिले छयहत्तर किसिमका रोग हुन सक्दछ । यसको उपचार विधि सुश्रुत संहितामा बताइएको छ, त्यसै अनुसार गर्नू ।



वस्तिकर्ममा पथ्य कुरा

**पानहारविहाराश्च परिहाराश्च कृत्स्नशः ।**
**स्नेहपानसमाः कार्या नात्र कार्या विचारणा ॥५३॥**

चिल्लो पान गर्दा (स्नेहपान विधि) जेजस्ता खानपिन र विहार गर्नुपर्ने बताइएको छ त्यही कुरा यो स्नेहवस्तिमा पनि गर्नु पर्दछ । यसमा अरु कुरा नसोच्नू ।

इति श्रीशार्ङ्गधरसंहितायामुत्तरखण्डे स्नेहविधिर्नाम पञ्चमोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत पाँचौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्या:-१,९०१+५३=१,९५४

✷

# अथ षष्ठोऽध्यायः

## छैटौं अध्याय

### निरूहवस्ति

**निरूहवस्तिर्बहुधा भिद्यते कारणान्तरैः ।**
**तैरेव तस्य नामानि कृतानि मुनिपुङ्गवैः ॥१॥**

निरूहवस्ति कारण (प्रयोजन) अनुसार अनेक किसिमको हुने गर्दछ । प्रयोजन अनुसारकै मुनिजनले यसका नाम राखेका छन् ।

### निरूहवस्तिको दोश्रो नाम

**निरूहस्यापरं नाम प्रोक्तमास्थापनं बुधैः ।**
**स्वस्थानस्थापनाद्दोषधातूनां स्थापनं मतम् ॥२॥**



निरूहवस्तिको अर्को नाम आस्थापन हो । दोष र धातुलाई आआफ्ना स्थानमा बसाउने हुनाले यसलाई आस्थापन भनिएको हो । वात आदि विकार हटाउने हुनाले यसलाई निरूह वस्ति भनिएको हो ।

### निरूहवस्तिमा काँढापानीको मात्रा

**निरूहस्य प्रमाणञ्च प्रस्थं पादोत्तरं परम् ।**
**मध्यमं प्रस्थमुद्दिष्टं हीनस्य कुडवास्त्रयः ॥३॥**

निरूहवस्तिमा काँढापानी आदिको सवा प्रस्थलाई उत्तम, एक प्रस्थलाई मध्यम र तीन कुडवलाई कनिष्ठ मात्रा भनी जान्नू ।

### निरूहवस्ति गर्न नहुने मानिस

**अतिस्निग्धोत्क्लिष्टदोषौ क्षतोरस्कः कृशास्तथा ।**

आध्मानच्छर्दिहिक्काऽर्शः कासश्वासप्रपीडितः ।।४।।
गुदशोफातिसारार्तो विषूचीकुष्ठसंयुतः ।
गर्भिणी मधुमेही च नास्थाप्यश्च जलोदरी ।।५।।

अति नै चिल्लो शरीर भएका, रोग वा विकार शरीरको माथि माथि सरिरहेका, छातीमा घाउ भएका, दुब्ला, आध्मान भएका, वाकवाकी लागेका, बाडुली लागेका, अल्काई भएका, खोकी लागेका, दम भएका, मलद्वारका रोगी, शरीर सुन्निएका, अतिसारका रोगी, हैजा लागेका, कुष्ठरोगी, गर्भवती स्त्री, मधुमेहका रोगी र पेटमा पानी जमेका मानिस निरूहवस्तिका लागि योग्य हुँदैनन् ।

निरूहवस्तिका लागि योग्य मानिस

वातव्याधावुदावर्ते वातासृग्विषमज्वरे ।
मूर्च्छातृष्णोदरानाहमूत्रकृच्छ्राश्मरीषु च ।।६।।
वृद्धासृग्दरमन्दाग्निप्रमेहेषु निरूहणम् ।
शूलेऽम्लपित्ते हृद्रोगे योजयेद्विधिवद् बुधः ।।७।।

वात, उदावर्त, वातरक्त, विषमज्वर, मूर्छा, जलोदर बाहेकका पेटका रोग, आनाह, मूत्रकृच्छ्र, पत्थरी, पुरानो रक्तप्रदर, कमजोर पाचनशक्ति, मधुमेह बाहेकका प्रमेह, शूल, अम्लपित्त र मुटुका रोगी निरूहवस्तिका लागि योग्य हुन्छन् ।

निरूहवस्ति विधि

उत्सृष्टानिलविण्मूत्रं स्निग्धस्विन्नमभोजितम् ।
मध्याह्ने गृहमध्ये च यथायोग्यं निरूहयेत् ।।८।।
स्नेहवस्तिविधानेन बुधः कुर्यान्निरूहणम् ।
जाते निरूहे च ततो भवेदुत्कटकासनः ।।९।।
तिष्ठेन्मुहूर्तमात्रन्तु निरूहागमनेच्छया ।
अनायातं मुहूर्तन्तु निरूहं शौ(शो)धनैर्हरेत् ।।१०।।

जसले दिसापिसाब गरिसकेको छ, जसको चिल्लो खाई पसिना निकाली सकिएको छ, जसले केही खाएको छैन यस्ता मानिसलाई मध्याह्नमा घरको बीचमा सबै कुरा विचार गरी विधिपूर्वक निरूहवस्ति दिनू । यो कर्म सकिएपछि दिइएका निरूह बाहिर आओस् भनी एक मुहूर्तसम्म घुँडा टेकाएर रोगीलाई बसाउनू । यसबेलासम्म पनि निरूह बाहिर नआए शोधन गरेर बाहिर निकाल्ने प्रयाश गर्नू ।

शोधन विधि

निरूहैरेव मतिमान्क्षारमूत्राम्लसैन्धवैः ।

जवाखार, गहुँत, कागतीको वा ज्यामिरको रस र सिधेनुन मिसाएर मलद्वारबाट पुनः निरुहवस्ति दिनू । निरूह बाहिर निस्कन्छ ।

उत्तम तरिकाले निरूहवस्ति भएको लक्षण

यस्य क्रमेण गच्छन्ति विट्पित्तकफवायवः ॥११॥
लाघवञ्चोपजायेत सुनिरूढं तमादिशेत् ।

वस्ति दिएका मानिसको मलद्वारबाट दिसा, पित्त, कफ र वायु क्रमशः बाहिर निस्किई शरीर हलुका भयो भने निरूहवस्ति सफल भयो भनी जान्नू ।

उत्तम तरिकाले निरूहवस्ति नभएको लक्षण

यस्य स्याद्वस्तिरल्पाल्पवेगो हीनमलानिलः ॥१२॥
मूत्रार्तिजाड्यारुचिमान् दुर्निरूढं तमादिशेत् ।

निरूहवस्ति दिएपछि त्यो थोरै बाहिर आए, मूत्राशय वरिपरि दुःखे, शरीर भारी भए र खान मन नलागे निरूहवस्तिले काम गरेन भनी जान्नू ।

### उत्तम निरूहवस्ति र स्नेहवस्तिका लक्षण

**विविक्तता मनस्तुष्टिः स्निग्धता व्याधिनिग्रहः ॥१३॥**
**आस्थापनस्नेहवस्त्योः सम्यग्दाने तु लक्षणम् ।**
**अनेन विधिना युञ्ज्यान्निरूहं वस्तिदानवि(व)त् ॥१४॥**

रोगीको शरीरमा हलुकापन आए, मन प्रसन्न भए, शरीरमा चिल्लो पर्याप्त भए तथा रोग निको भए अस्थापन सफल भयो भनी जान्नू । यसरी वस्तिकर्मको विधि जान्ने वैद्यले निरूहवस्ति दिनू ।

### निरूहवस्तिको परिमाण

**द्वितीयं वा तृतीयं वा चतुर्थं वा यथोचितम् ।**
**सस्नेह एकः पवने पित्ते द्वौ पयसा सह ॥१५॥**
**कषायकटुरूक्षाद्याः कफे कोष्णास्त्रयो म(हि)ताः ।**
**पित्तश्लेष्मानिलाविष्टं क्षीरयूषरसैः क्रमात् ॥१६॥**
**निरूहं यो(भो)जयित्वा च ततस्तद(म)नुवासयेत् ।**

रोग अनुसार दुई, तीन वा चार पटक वैद्यले रोगीलाई निरूहवस्ति दिनू । वातरोगमा चिल्लोहितको वस्ति एक पटक दिनू । पित्तरोग भए दूध सहितको निरूहवस्ति दुई पटक दिनू । कफ रोग भए टर्रो (हर्रो, अमला आदि), पिरो (सुठो, मरिच आदि) र रुखो .गहत, जौ आदि) ओखती जम्मा पारी केही तातो बनाएर तीन पटक निरूहवस्ति दिनू । पित्त र कफका रोगमा दूध, यूष र मासुको रसको क्रमैले निरूहवस्ति दिनू र अन्तमा अनुवासन वस्ति वा चिल्लोले पचका हान्नू ।

### हलुका वस्ति दिन योग्य मानिस

**सुकुमारस्य वृद्धस्य बालस्य च मृदुर्हितः ॥१७॥**

**वस्तिस्तीक्ष्णः प्रयुक्तस्तु तेषां हन्याद् बलायुषी ।**

सुकुमार (नाजुक), वृद्ध र बालकलाई हलुका पचका हाल्नू । यिनलाई तिब्र पचका हाल्दा बल र आयु नाश हुन्छ ।

वस्तिको शुरु, मध्य र अन्तिम प्रयोग

**दद्यादुत्क्लेशनं पूर्वं मध्ये दोषहरन्ततः ॥१८॥**
**पश्चात्संशमनीयञ्च दद्याद्वस्तिं विचक्षणः ।**

पहिले दोषलाई विचलित बनाउने खालका ओखतीको वस्ति दिनू । बीचमा दोष नाश गर्ने ओखतीको वस्ति दिनू र अन्तमा संशमनीय वा आआफ्ना स्थानमा दोषलाई लगेर बसाउने खालका ओखतीको वस्ति दिनू ।

उत्क्लेशन वस्ति



**एरण्डबीजं मधुकं पिप्पली सैन्धवं वचा ॥१९॥**
**हपुषाफलकल्कश्च(कं च) वस्तिरुत्क्लेशनः स्मृतः ।**

अँडिरका गेडा, महुवाको फल, पिप्ला, सिधेनुन, बोझो, हपुषाका पात र मैनफल यी ओखती बराबर मात्रामा लिई कुटी लेदो बनाउनू । अनि रोगलाई विचलित बनाउन यसको उत्क्लेशन वस्ति दिनू ।

दोष नाशक वस्ति

**शताह्वा मधुकं बिल्वं कौटजं फलमेव च ॥२०॥**
**सकाञ्जिकः सगोमूत्रो वस्तिर्दोषहरः स्मृ(म)तः ।**

ज्वानु, जेठीमधु, बेलको गुदी र इन्द्रजौ बराबर मात्रामा लिई काँजीमा राम्ररी पिँधी गहुँत मिसाएर वस्ति दिनू । यसले वात विकार शान्त हुन्छ । यसलाई दोषहर वस्ति भनिन्छ ।

### विकार शोधन (प्रशोधन) वस्ति

**शोधनद्रव्यनिक्वाथैस्तत्कल्कैः स्नेहसैन्धवैः ॥२१॥**
**युक्त्या खजेन मथिता वस्तयः शोधनाः स्मृताः ।**

सेतो निशोध आदि शोधक ओखतीको काँढापानी बनाई तिनै शोधन ओखतीको लेप र सिधेनुन उक्त काँढापानीमा मिसाउनू र मदानीले मथ्नू । दोष शोधनका लागि यसको वस्ति दिनू ।

### शमन (विकार दबाउने) वस्ति

**प्रियङ्गुर्मधुको मुस्ता (प्रियङ्गु मधुकं मुस्तं) तथैव च रसाञ्जनम् ॥२२॥**
**सक्षीरः शस्यते वस्तिर्दोषाणां शमनः स्मृतः ।**

दहीगुयैँलोको फूल, महुवाको फूल, नागरमोथे र रसाञ्जन बराबर मात्रामा लिई दूधमा राम्ररी पिस्नू । दोष शमन गर्न (दबाउन) यसको वस्ति दिनू ।



### लेखन वस्ति

**त्रिफलाक्वाथगोमूत्रक्षौद्रक्षारसमायुताः ॥२३॥**
**ऊषकादिप्रतीवापैर्वस्तयो लेखनाः स्मृताः ।**

त्रिफलाको काँढामा गहुँत, मह, जवाखार तथा उषकादि गण (सिधेनुन, शिलाजित, हिराकसी आदि) का ओखतीको धुलो मिसाएर वस्ति दिनुलाई लेखन वस्ति भनिन्छ ।

### बृंहण वस्ति

**बृंहणद्रव्यनिक्वाथः(निष्क्वाथः) कल्कैर्मधुरकैर्युतः ॥२४॥**
**सर्पिर्मांसरसोपेता वस्तयो बृंहणाः म(स्मृ)ताः ।**

बृंहण ओखती (मुसलीकन्द, ओदानेकौँडो आदि)को काँढापानीमा महुवाको पात, दाख र दारिम तथा घिउ र मासुको रस हाली मिसाएर दिइएको वस्तिले बृंहणको काम गर्दछ ।

### पिच्छिल वस्ति

बदर्यैरावतीशेलुशाल्मलीधन्वनागराः ॥२५॥
क्षीरसिद्धाः क्षौद्रयुक्ता नाम्ना पिच्छिलसंज्ञिताः ।
अजोरभ्रैणरुधिरैर्युक्ता देया विचक्षणैः ॥२६॥
मात्रा पिच्छिलवस्तिनां पलैर्द्वादशभिर्मता ।

वयरको बोक्रा, सुन्तला, लप्सीको बोक्रा, सिमलको बोक्रा, सिस्नु र सुठो बराबर मात्रामा मिसाई दूधमा पिँध्नू । यसमा बोका, भेडा र हरिणको रगत मिसाउनू । कुशल वैद्यले यो बाह्र पल पिच्छिल वस्ति रोगीलाई दिनू ।

### निरूहण वस्ति



दत्त्वादौ सैन्धवस्याक्षं मधुनः प्रसृतिद्वयम् ॥२७॥
विनिर्मथ्य ततो दद्यात्स्नेहस्य प्रसृतिद्वयम् ।
एकीभूते ततः स्नेहे कल्कस्य प्रसृतिं क्षिपेत् ॥२८॥
सम्मूर्च्छिते कषाये तु चतुःप्रसृतिसम्मितम् ।
क्षिप्त्वा विमथ्य दद्याच्च निरूहं कुशलो भिषक् ॥२९॥
वाते चतुष्पलं क्षौद्रं दद्यात्स्नेहस्य षट्पलम् ।
पित्ते चतुष्पलं क्षौद्रं स्नेहस्य च (स्नेहं दद्यात)पलत्रयम् ॥३०॥
कफे च षट्पलं क्षौद्रं क्षिपेत्स्नेहं चतुष्पलम् ।

सिधेनुन एक कर्ष, मह दुई प्रसृति मिलाएर घोट्नू । यसमा घिउ वा तेल छ पल मिसाउनू । यसपछि यसमा कल्कका ओखतीको कल्क बनाई त्यसमा मिसाउनू । यसपछि कल्कमा प्रयोग भएकै ओखतीको काँढापानीमा यो मिसाउनू । कुशल वैद्यले यसले वस्ति दिनू । यो निरूह वस्तिको सामान्य विधि हो । यदि रोगी वातको रोगी छ भने चार पल मह र चिल्लो

छ पल लिनू र वस्ति दिनू । पित्तरोगी भए मह चार पल र चिल्लो तीन पल मिसाएर वस्ति दिनू । कफ रोग भए मह छ पल र चिल्लो चार पल मिसाएर वस्ति दिनू ।

मधुतैलिक वस्ति

**एरण्डक्वाथतुल्यांशं मधु तैलं पलाष्ट(लांश)कम् ॥३१॥**
**शतपुष्पापलार्धेन सैन्धवार्धेन संयुतम् ।**
**मधुतैलिकसंज्ञोऽयं वस्तिः खजविलोडितः ॥३२॥**
**मेदोगुल्मकृमिप्लीहमलोदावर्तनाशनः ।**
**बलवर्णकरश्चैव वृष्यो बृंहणदीपन(दीपनबृंहण): ॥३३॥**

अरिडको जराको काँढापानी आठ पल, मह र तेल चार चार पल, सुप र सिधेनुन आधा आधा पल मिसाएर मथ्नू । यसले दिइने वस्तिलाई मधुतैलिक वस्ति भनिन्छ । यो वस्ति दिनाले बोसोका रोग, गुल्म, पेटका कीरा, फियोका रोग, दिसा सम्बन्धी समस्या र उदावर्त रोग नाश हुन्छ । यसले बल र तेज बढाई रतिचाहना, धातु र पाचकाग्नि वृद्धि गर्दछ ।



दीपन वस्ति

**क्षौद्राज्यक्षीरतैलानां प्रसृतिः प्रसृतिर्भवेत् (प्रसृतं प्रसृतं भवेत्) ।**
**हपुषा सैन्धवाक्षांशौ वस्तिः स्याद्दीपनः परः ॥३४॥**

मह, घिउ र दूध दुई दुई पल तथा हपुषा र सिधेनुन एक कर्ष मिसाई पिँध्नू । यसलाई मह, घिउ र दूधमा भिजाई जठराग्नि बाल्न रोगीलाई वस्ति दिनू ।

युक्तरथ वस्ति

**एरण्डमूलनिः(ष)क्वाथो मधुतैलं ससैन्धवम् ।**
**एष युक्तरथो वस्तिः सवचापिप्पलीफलः ॥३५॥**

अरिडको जराको काँढापानी पकाएर त्यसमा मह र तेल हाल्नू । अनि सिधेनुन, पिप्ला, र मैनफल बराबर मात्रामा मिसाई धुलो पारेर मिसाउनू र पचका दिनू । यसलाई युक्तरथ वस्ति भनिन्छ र यसले सबै रोगमा फाइदा गर्दछ ।

### सिद्ध वस्ति

पञ्चमूलस्य निष्क्वाथस्तैलं मागधिका मधु ।
ससैन्धवः समधुकः सिद्धवस्तिरिति स्मृतः ॥३६॥

बृहत् पञ्चमूलको काँढापानी पकाएर त्यसमा पिप्लाको धुलो, मह, सिधेनुन, महुवाको काठको भित्री गुदी र जेठीमधु मिसाएर वस्ति दिनू । यसलाई सिद्धवस्ति भनिन्छ । यसलाई सबै रोगमा दिन हुन्छ ।

### पथ्य र अपथ्य

स्नानमुष्णोदकैः कुर्याद्दिवास्वप्नमजीर्णताम् ।
वर्जयेदपरं सर्वमाचरेत् स्नेहवस्तिवत् ॥३७॥



वस्तिकर्म गरिएको मानिसलाई तातोपानीले नुहाउनू, दिउस सुत्न नदिनू, अजीर्ण हुन नदिनू तथा अन्य नियम स्नेह वस्तिका जसरी नै पालना गर्नू ।

इति श्रीदामोदरसूनुशार्ङ्गधरेण विरचितायां संहितायामुत्तरखण्डे
चिकित्सास्थाने निरूहणवस्तिविधिर्नाम षष्ठोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत छैटौं अध्यायको मोहन
प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-१,९५४+३७=१,९९१

✷

# अथ सप्तमोऽध्यायः

## सातौँ अध्याय

### उत्तरवस्ति विधि

**अतः परं प्रवक्ष्यामि वस्तिमुत्तरसञ्ज्ञितम् ।**
**द्वादशाङ्गुलकं नेत्रं मध्ये च कृतकर्णिकम् ॥१॥**
**मालतीपुष्पवृन्ताभं छिद्रं सर्षपनिर्गम(सन्निभ)म् ।**

अब यसपछि उत्तरवस्तिका बारेमा बताउँदछु । बाह्र अमल लामो नलीको बीचमा कमल फूलको पत्ती आकारको गट्टो बनाउनू । यो नली चमेली फूलको भेट्नु जति मोटो हुनु पर्दछ र यसको प्वाल सर्सिउँको गेडा छिर्ने जत्रो हुनु पर्दछ ।

### उत्तरवस्तिमा चिल्लोको मात्रा

**पञ्चविंशतिवर्षाणामधो मात्रा द्विकार्षिकी(का) ॥२॥**
**तदूर्ध्वं पलमात्रा च स्नेहस्योक्ता भिषग्वरैः ।**

विज्ञ वैद्यले पच्चीस वर्ष सम्मका मानिसलाई यो वस्तिकर्मका लागि स्नेह दुई कर्ष र त्यसभन्दा बढी उमेरका मानिसलाई एक पल दिनू ।

### उत्तरवस्तिको विधि

**अथास्थापनशुद्धस्य तृप्तस्य स्नानभोजनैः ॥३॥**
**स्थितस्य जानुमात्रे च पीठे त्विष्ट(पीठेऽन्विष्य)शलाकया ।**
**स्निग्धया मेढ्रमार्गे च ततो नेत्रं नियोजयेत् ॥४॥**
**शनैः शनैर्घृताभ्यक्तं मेढ्ररन्ध्रेऽङ्गुलानि षट् ।**
**ततोऽवपीडयेद्वस्तिं शनैर्नेत्रञ्च निर्हरेत् ॥५॥**
**ततः प्रत्यागते स्नेहे स्नेहवस्तिक्रमो हितः ।**

आस्थापन वस्ति गरी शुद्ध भएको तथा नुहाएर र खाना खाएर अघाएको मानिसलाई घुँडा टेकाएर बसाई यथायोग्य चिल्लो सहित यो नली मूत्रद्वारबाट छिराउनू । अनि हलुकासँग तल्लोपेट माड्दै विस्तारै पचका दिनू । अनि बिस्तारै नली तानेर बाहिर निकाल्नू । जब भित्र पचका हालिएको चिल्लो बाहिर आउँदछ तब उत्तरवस्ति सफल हुन्छ । यही नै उत्तरवस्तिको विधि हो ।

स्त्रीको उत्तरवस्ति विधि

**स्त्रीणां कनिष्ठिकास्थूलं नेत्रं कुर्याद्दशाङ्गुलम् ॥६॥**
**मुद्गप्रवेशं(श) योज्यं(ग्यं) च योन्यन्तश्चतुरङ्गुलम् ।**
**द्व्यङ्गुलं मूत्रमार्गे च सूक्ष्मं नेत्रं नियोजयेत् ॥७॥**

स्त्रीका लागि कान्छी औंलाजति मोटो नली बनाउनू । यो दश अमल लामो र मुगीका गेडा छिर्ने जत्रो प्वाल भएको हुनु पर्दछ । यो नलीलाई स्त्रीको जननेन्द्रिय भित्र चार अमल छिराउनू र ओखती मिश्रित पचका दिनू । यसैगरी स्त्रीको मूत्रमार्गमा सावधानीपूर्वक दुई अमल नली भित्र छिराएर पचका दिनू ।



बालकलाई उत्तरवस्ति दिने विधि

**मूत्रकृच्छ्रविकारेषु बालानां त्वेकमङ्गुलम् ।**
**शनैर्निष्कम्पमाधेयं सूक्ष्मनेत्रं विचक्षणै(ण): ॥८॥**

बालकलाई मूत्रकृच्छ्र रोग भएमा विज्ञ वैद्यले हात नकमाई अति साबधानीपूर्वक बिस्तारै एक अमल नली मूत्रमार्गमा छिराउनू र पचका दिनू ।

स्त्री तथा बालकलाई उत्तरवस्तिमा दिइने चिल्लोको मात्रा

**योनिमार्गेषु नारीणां स्नेहमात्रा द्विपालिकी ।**
**मूत्रमार्गे पलोन्माना बालानाञ्च द्विकार्षिकी ॥९॥**

स्त्रीको योनिमार्गबाट वस्ति दिन दुई पल र मूत्रमार्गबाट वस्ति दिन एक पल चिल्लो लिनू । बालकका लागि दुई कर्ष लिनू ।

स्त्रीलाई उत्तरवस्ति दिने विधि

**उत्तानायै स्त्रियै दद्यादूर्ध्वजान्वे(वै) विचक्षणः ।**
**अप्रत्यागच्छति भिषग्वस्तावुत्तरसंज्ञके(ज्ञिते) ॥१०॥**

कुशल वैद्यले स्त्रीलाई सिधा बसाएर घुँडा माथि उठाउन लगाउनू वा उठाएर समाउनू अनि उत्तरवस्ति दिनू । यदि चिल्लो बाहिर आएन भने तलको विधि गर्नू ।

चिल्लो बाहिर नआएकोमा उपचार

**भूयो वस्तिं निदध्याच्च संयुक्तैः शोधनैर्गु(र्ग)णैः ।**
**फलवर्तिं न(नि)दध्याद्वा योनिमार्गे दृढां भिषक् ॥११॥**
**सूत्रैर्विनिर्मितां स्निग्धां शोधनद्रव्यसंयुताम् ।**
**दह्यमाने तथा वस्तौ दद्याद्वस्तिं विचक्षण(शारद्)ः ॥१२॥**
**क्षीरिवृक्षकषायेण पयसा शीतलेन च ।**
**वस्तिः शुक्ररुजः पुंसां स्त्रीणामार्तवजा(जां) रुजः(म्) ॥१३॥**
**हन्यादुत्तरवस्तिस्तु नोचितो मेहिनां क्वचित् ।**

उत्तरवस्ति दिँदा पचका गरी भित्र पठाइएको चिल्लो एकछिन पछि बाहिर नआए (अरिडको तेल आदि) शोधन ओखती को वस्ति दिनू । अथवा अरिडको गेडा आदिको ओखती कपासको सुत्लो बनाई दलेर योनिमा छिराई चिल्लो निकाल्नू । यो वस्तिकर्ममा डाह भए बयर आदि दूध आउने रुखको काँढापानी पकाई वस्ति दिनू । अथवा दूधको वस्ति दिनू, वस्ति दिइएको स्थान शुद्ध हुन्छ । उत्तरवस्तिले पुरुषका शुक्रधातु सम्बन्धी पीडा तथा स्त्रीका रजस्वलासम्बन्धी पीडा नाश गर्दछ । प्रमेहका रोगीलाई भने यसबाट कहिल्यै कुनै फाइदा हुँदैन ।

### सफल उत्तरवस्तिका लक्षण

**सम्यग्दत्तस्य लिङ्गानि व्यापदः क्रम एव च ।**
**वस्तेरुत्तरसंज्ञस्य समानं स्नेहवस्तिना ॥१४॥**

उत्तरवस्ति सफल भउका, विगार गरेका तथा त्यसको उपचारका विधि स्नेहवस्तिको जस्तै हो भनी जान्नू ।

### फलवर्ती

**घृताभ्यक्ते गुदे क्षेप्या श्लक्ष्णा स्वाङ्गुष्ठसन्निभा ।**
**मलप्रवर्तिनी वसर्तः फलवर्तिश्च सा स्मृता ॥१५॥**

मलद्वारमा घिउ दली रोगीको बूढीऔंला जत्रो अलि कडा खालको बत्ती वा सुप्लोमा अरिड आदि रेचक ओखतीका गेडाको लेप दलेर दिसा लगाउन भित्र छिराउनू । यसलाई फलवर्ती भनिन्छ ।



इति श्रीशार्ङ्गधरसंहितायामुत्तरखण्डे उत्तरवस्तिविधिर्नाम सप्तमोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत सातौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्या:-१,९९१+१५=२,००६

✷

# अथाष्टमोऽध्यायः
## आठौं अध्याय

### नस्य विधि

**नस्यं तत्कथ्यते धीरैर्नासाग्राह्यं यदौषधम् ।**
**नावनं नस्यकर्मेति तस्य नामद्वयं मतम् ॥१॥**

नाकमा हालिने ओखतीलाई नस्य भनिन्छ । यसलाई नावन वा नस्यकर्म : यी दुई नामले पनि चिनिन्छ ।

### नस्यका प्रकार

**नस्यभेदो द्विधा प्रोक्तो रेचनं स्नेहनन्तथा (नस्तथा) ।**
**रेचनं कर्षणं प्रोक्तं स्नेहनं बृंहणं मतम् ॥२॥**



नस्यका रेचक र स्नेहन गरी दुई विधि हुन्छन् । यिमध्ये रेचकले वात आदि विकारलाई टुक्रा पार्दछ भने स्नेहन विधिले धातुलाई बढाउँदछ ।

### नस्य दिने समय

**कफपित्तानिलध्वंसे पूर्वमध्यापराह्णके ।**
**दिने तु गृह्यते नस्यं रात्रावप्युत्कटे गदे ॥३॥**

कफका रोग नाश गर्न बिहान, पित्तका रोग नाश गर्न मध्याह्नमा र वातका रोग नाश गर्न अपराह्नमा नस्य दिनू । रोग कडा भए रातमा नस्य दिनू ।

### नस्य दिन नहुने मानिस र समय

**नस्यं त्यजेद्भोजनान्ते दुर्दिने चापतर्पणे ।**
**तथा नवप्रतिश्यायी गर्भिणी गरदूषितः ॥४॥**

अजीर्णी दत्तवस्तिश्च पीत्तस्नेहोदकासवः ।
क्रुद्धः शोकाभिभूतश्च तृषार्तो वृद्धबालकौ ॥५॥
वेगावरोधी स्नातश्च स्नातुकामश्च वर्जयेत् ।

खाना खानासाथ नस नहाल्नू । आकाश बादलले ढाकेको दिन नाकमा नस नहाल्नू । भर्खर पिनास लाग्न शुरु भएका, गर्भवती, विषविकारका रोगी, अजीर्णका रोगी, वस्तिकर्म गरेका मानिस, नियमित चिल्लो र मदिरा पिउने मानिस; रिस, शोक र तिर्खाले ग्रस्त मानिस; वृद्ध र बालक; वायु, मल मूत्र आदि वेग रोकिएका मानिस तथा भर्खर नुहाएको वा नुहाउनु पर्ने मानिसले नाकमा नस नहाल्नू ।

**नस्य हाल्ने उमेर**

अष्टवर्षस्य बालस्य नस्यकर्म समाचरेत् ॥६॥
अशीतिवर्षादूर्ध्वञ्च नावनं नैव दीयते ।



नस्यकर्म आठ वर्षको बालकको गर्नू । अस्सी वर्षभन्दा माथिकालाई नस्य दिइन्न ।

**विरेचन नस्य**

अथ वैरेचनं नस्यं ग्राह्यं तैलैः सुतीक्ष्णकैः ॥७॥
तीक्ष्णभेषजसिद्धैर्वा स्नेहैः क्वाथै रसैस्तथा ।

विरेचन (सफा गर्ने) नस्य ज्वानु, रायो आदि तिक्खर ओखतीका तेलमा हाली दिनुपर्दछ । अथवा तिक्खर ओखती मात्रैको तेल सिद्ध गरेर पनि दिन सकिन्छ । अथवा तिक्खर ओखतीको काँढापानी पकाएर अथवा यस्तो ओखतीको रसमा स्नेह सिद्ध गरेर पनि नस्य दिन सकिन्छ ।

**नस्यको मात्रा**

नासिकारन्ध्रयोरष्टौ षट् चत्वारश्च बिन्दवः ॥८॥

**प्रत्येकं रेचने योज्या मुख्यमध्यान्त्यमात्रया ।**

रेचनका लागि नाकका दुबै प्वालमा ओखतीको आठ थोपा हाल्नु उत्तम, छ थोपा हाल्नु मध्यम र चार थोपा हाल्नु अल्प मात्रा हो ।

नस्यकर्ममा ओखतीको मात्रा

**नस्यकर्मणि दातव्यं शाणैकं तीक्ष्णमौषधम् ॥९॥**
**हिङ्गुस्याद्यावमात्रन्तु माषैकं सैन्धवं स्मृ(म)तम् ।**
**क्षीरं चैवाष्टशाणं स्यात् पानीयञ्च त्रिकार्षिकम् ॥१०॥**
**कार्षिकं मधुरं द्रव्यं नस्यकर्मणि योजयेत् ।**

नस्यकर्मका तिक्खर ओखती भए एक शाण, हिङ हाल्ने भए एक यव, सिधेनुन दुई मासा, दूध आठ शाण, पानी तीन कर्ष र दारिम आदि गुलिया कुरा एक कर्ष हाली नस्य तयार पार्नु पर्दछ ।



टाउको सफा गर्ने नस्यका प्रकार

**अवपीडः प्रधमनं द्वौ भेदावपरौ स्मृतौ ॥११॥**
**शिरोविरेचनस्यात्र तौ तु देयौ यथायथम् ।**

टाउका सफा गर्ने नस्य अवपीड र प्रधमन गरी दुई प्रकारका हुन्छन् । आवश्यकता अनुसार टाउको सफा गर्न यी दुई नस्य दिनू ।

अवपीड नस्यका लक्षण

**कल्कीकृतादौषधाद्यः पीडितो निःसृतो रसः ॥१२॥**
**सोऽवपीडः समुद्दिष्टस्तीक्ष्णद्रव्यसमुद्भवः ।**

तिक्खर खालको ओखती (सुठो, मरिच आदि) पिसी लेदो बनाएर निचोर्नू । यस्तो रसलाई अवपीड भनिन्छ ।

प्रधमन नस्यका लक्षण

**षडङ्गुला द्विवक्त्रा वा नाडी चूर्णन्तया धमेत् ॥१३॥**
**तीक्ष्णं कोलमितं वक्त्रवातैः प्रधमनं हि तत् ।**

छ अमल लामो र दुई मुखे नली बनाई त्यस मार्फत तिक्खर ओखतीको धुलो एक कोल हाली मुखले फुकेर नाक भित्र छिराउनुलाई प्रधमन नस्य भनिन्छ ।

रोग अनुसार नस्यको प्रयोग

**ऊर्ध्वजत्रुगते रोगे कफजे स्वरसङ्क्षये ॥१४॥**
**अरोचके प्रतिश्याये शिरःशूले च पीनसे ।**

**शोफापस्मारकुष्ठेषु नस्यं वैरेचनं हितम् ॥१५॥**
**भीरुस्त्रीकृशबालानां नस्यं स्नेहेन दीयते(शस्यते) ।**

घाँटी (खँगाल्नु) भन्दा माथिका रोगमा, कफजन्य स्वरसम्बन्धी रोगमा, अरुचीमा, रुघामा, पिनासमा, सुजनमा, अपस्मारमा र कुष्ठरोगमा रेचक नस्य दिनु लाभदायक हुन्छ । डराएको मानिस, स्त्री, दुब्लो र बालकलाई चिल्लो मिसाइएको नस्य दिनू ।

अवपीडन नस्य दिन योग्य मानिस

**गलरोगे सन्निपाते निद्रायां विषमज्वरे ॥१६॥**
**मनोविकारे कृमिषु युज्यते चावपीडनम् ।**

घाँटीका रोग, सन्निपात, धेरै निद्रा लाग्दा, विषमज्वर, मनको विकार र पेटका कीरा सम्बन्धी रोगमा अवपीडन नस्य दिनु पर्दछ ।

### प्रधमन नस्य दिन योग्य मानिस

**अत्यन्तोत्कटदोषेषु विसंज्ञेषु च दीयते ॥१७॥**
**चूर्णं प्रधमनं धीरैस्तद्धि तीक्ष्णतरं यतः ।**

अति कडा खालका मूर्छा, छारेरोग तथा होस हराउने जस्ता रोगमा तिक्खर खालका ओखतीको धुलोले प्रधमन नस्य दिनु पर्दछ ।

### सुठो आदिको नस

**नस्यं स्याद्गुडशुण्ठीभ्यां पिप्पल्या सैन्धवेन च ॥१८॥**
**जलपिष्टेन तेनाक्षिकर्णनासाशिरोगदाः ।**
**मन्याहनुगलोद्भूता नश्यन्ति भुजपृष्ठजाः ॥१९॥**

सुठोलाई तातोपानीमा भिजाएर सक्खर मिसाई नस बनाएर नाकमा हाल्नाले अथवा पिप्ला र सिधेनुनलाई तातोपानी उमालेर नस बनाई नाकमा हाल्नाले आँखा, कान, नाक र टाउकाका रोग नाश गर्दछ ।

### महुवा आदिको नस

**मधूकसारकृष्णाभ्यां वचामरिचसैन्धवैः ।**
**नस्यं कोष्णजले पिष्टं दद्यात् सञ्ज्ञाप्रबोधनम् ॥२०॥**
**अपस्मारे तथोन्मादे सन्निपातेऽपतन्त्रके ।**

महुवाको काठको गुदी, पिप्ला, बोझो, मरिच र सिधेनुनलाई तातोपानीमा पिसेर नस हाल्नाले छारेरोग, पागलपन, सन्निपात र अपतन्त्रका कारण हराएको शुद्धि पुनः प्राप्त भई मानिस सचेत हुन थाल्दछ ।

### तन्द्रा आदिमा नस

**सैन्धवं श्वेतमरिचं सर्षपाः कुष्ठमेव च ॥२१॥**

वस्तमूत्रेण पिष्ठानि नस्यं तन्द्रा निवारणम् ।

सिधेनुन, सेतो मरिच, सेतो सर्सिउँ र कूट बोकाको मूत्रमा पिसी नस हाल्नाले तन्द्रा (र पहिले बताइएका छारे आदि रोग) नाश हुन्छन् ।

तन्द्रा आदिमा मरिच आदिको नस

रोहितमत्स्यपित्तेन भावितं सैन्धवं वचा ॥२२॥
मरिचं पिप्पली शुण्ठी कङ्कोलं लशुनं पुरम् ।
कट्फलश्चेति तच्चूर्णन्देयं प्रधमनं बुधैः ॥२३॥

सिधेनुन, बोझो, कालो मरिच, पिप्ला, सुठो, फलकपूर, लसुन, गोकुलधूप र काफलको धुलो बनाई रहुमाछाको पित्तमा घोट्नू । यसपछि सुकाउनू । सुकेपछि यो धुलालाई प्रधमन नस्यका रूपमा प्रयोग गर्नू । यसले पनि माथि बताइएका तन्द्रा आदि रोग नाश हुन्छ । यसलाई विद्वानले प्रधमन भनी नाम दिएका छन् ।



बृंहण नस्य

अथ बृंहणनस्यस्य कल्पना कथ्यतेऽधुना ।
मर्शश्च प्रतिमर्शश्च द्वौ भेदौ स्नेहनौ मतौ ॥२४॥
मर्शस्य तर्पणी मात्रा मुख्या शाणैः स्मृताऽष्टभिः ।
मध्यमा च चतुःशाणैर्हीना शाणमिता स्मृता ॥२५॥
एकैकस्मिँस्तु मात्रेयं देया नासापुटे बुधैः ।
मर्शस्य द्वित्रिवेलं वा वीक्ष्य दोषबलाबलम् ॥२६॥
एकान्तरं द्व्यन्तरं वा नस्यं दद्याद्विचक्षणः ।
त्र्यहं पञ्चाहमथवा सप्ताहं वा सुयन्त्रितम् ॥२७॥

अब यसपछि म धातु बढाउने खालको नस्यका बारेमा बताउँदछु । बृंहण नस्य मर्श र प्रतिमर्श गरी दुई किसिमको हुन्छ । यसलाई चिल्लोयुक्त नस्यका रूपमा लिनु पर्दछ । मर्श नस्यको उत्तम मात्रा आठ शाणको, मध्यम मात्रा चार शाणको र अल्प मात्रा एक शाणको हुन्छ । रोगी र रोगको अवस्था हेरी मात्रा तय गर्नू । मानिसलाई वस्त्रले छोपी एक एक मात्रा नाकमा हाल्नू अथवा दुई वा तीन दिन बिराएर नस हाल्नू । यसपछि पाँचौ वा सातौं दिनमा नस हाल्नू ।

### मर्श नस्यका लाभ

**मर्शे शिरोविरेके च व्यापदो विविधाः स्मृताः ।**
**दोषोत्क्लेशात्क्षयाच्चैव विज्ञेयास्ता यथाक्रमम् ॥२८॥**
**दोषोत्क्लेशनिमित्तासु युञ्ज्याद्वमनशोधनम् ।**
**अथ क्षयनिमित्तासु यथास्वं बृंहणं हितम् ॥२९॥**

मात्रा मिलाएर दिइएको मर्श नस्यले शरीरका धातुलाई तृप्त पार्दछ । यो बढी भएर असर गरेमा तथा टाउकामा विरेचन नस्यको मात्रा बढी भई बोसो आदि खिइएमा अनेक किसिमको पीडा हुन्छ । यसमध्ये जुन कुरा (नस्य)ले असर गरेको हो त्यसलाई हटाउन बान्ता गराउने वा दिसा लगाउने ओखती खुवाउनु पर्दछ । खिइएर हुने पीडा कम गर्न बृंहण ओखतीको नस हाल्नु वा यस्ता ओखती खान दिनु पर्दछ ।



### बृंहण नस्य दिनयोग्य मानिस

**शिरोनासाक्षिरोगेषु सूर्यावर्तार्द्धभेदके ।**
**दन्तरोगे बले हीने मन्याबाह्वंसजे गदे ॥३०॥**
**मुखशोषे कर्णनादे वातपित्तगदे तथा ।**
**अकालपलिते चैव केशश्मश्रुप्रपातने ॥३१॥**
**युज्यते बृंहणं नस्यं स्नेहैर्वा मधुरद्रवैः ।**

टाउको, नाक र आँखाका रोग; सूर्यावर्त र अधा दुख्ने; दाँतका रोग; कमजोर भई गर्दन, काँध, हात दुख्ने समस्या; मुख सुक्ने, कानमा आवाज गुञ्जने, वातपित्त सम्बन्धी रोग,

उमेर नपुगी कपाल फुल्ने तथा कपाल, जुँगा, दाह्री झर्ने इन्द्रलुप्त रोगमा घिउ आदि चिल्लो पदार्थ तथा सक्खर वा मिस्री आदि मिसाएर बृंहण नस्य दिने तयारी गर्नू ।

बृंहण नस्य

**सशर्करं पयःपिष्टं भृष्टमाज्येन कुङ्कुमम् ।।३२।।**
**नस्यप्रयोगतो हन्याद्वातरक्तभवा रुजः ।**
**भ्रूशङ्खाक्षिशिरः कर्णसूर्यावर्तार्धभेदकान् ।।३३।।**
**नस्यं स्याद्‌बु(दणु)तैलेन तथा नारायणेन वा ।**
**माषादिना वापि सर्पिस्तत्तद्भेषजसाधितैः ।।३४।।**

दूधमा सक्खर पिसेर अथवा घिउमा केशर पिसेर अथवा केशर र सक्खर दूधमा पिसी घिउमा पकाएर नस दिनू । यसले वातरक्तको समस्या समाधान हुन्छ । अरिडको तेल अथवा नारायण तेल अथवा माषादि तेल अथवा यी तेल बनाउन प्रयोग हुने ओखती हालेर सिद्ध गरिएको घिउको नस हाल्नाले कञ्चट, आँखा, टाउको र कानका रोग तथा सूर्यावर्त र अधा दुख्ने रोग नाश हुन्छ ।



दोष अनुसारका तैलीय नस्य

**तैलं कफे स्याद्वाते च केवले पवने वसा(साम्) ।**
**दद्यान्नस्यं सदा पित्ते सर्पिर्मज्जानमेव च ।।३५।।**

कफसम्बन्धी रोगमा तेलको र वातसम्बन्धी रोगमा बोसोको नस दिनू । पित्तको मात्र रोग भए घिउ र मासी मिसाएर नस दिनू ।

पक्षाघात आदिमा माष आदिको नस्य

**माषात्मगुप्तारास्नाभिर्बलारुबुकरोहिषैः ।**
**कृतोऽश्वगन्धया क्वाथो हिङ्गुसैन्धवसंयुतः ।।३६।।**
**कोष्णनस्यप्रयोगेण पक्षाघातं सकम्पनम् ।**

**जयेदर्दितवातञ्च मन्यास्तम्भापबाहुकौ ॥३७॥**

माष, काउछोका गेडा, सिस्नु, बलुको जरा, अँडिरको जरा, रोहिष झार र अश्वगन्धा बराबर मिसाई काँढापानी पकाउनू । यसमा भुटेको हिङ र सिधेनुन मिसाई सहँदो तातो हुँदै नस दिनू । यो नसले शरीरको कम्पन सहितको पक्षाघात (प्यारालाइसिस), शरीरको आधा वा एक भाग नचल्ने पक्षाघात, वायुसम्बन्धी अन्य रोग, गर्दनको नसा अड्किने समस्या र पाखुरा सुक्ने रोग नाश हुन्छ ।

**प्रतिमर्श नस्यको मात्रा**

**प्रतिमर्शस्य मात्रा तु द्विद्विबिन्दुमिता मता ।**
**प्रत्येकशो नयन(नस्तक)योः स्नेहेनेति विनिश्चितम् ॥३८॥**

घिउ आदि चिल्लो पदार्थका दुई दुई थोपा एक एक नयनमा (वा नाकका प्वालमा) हाल्नुलाई प्रतिमर्श नस्यको विन्दुरुपी मात्रा भनी थाहा पाउनु पर्दछ ।



**विन्दु (वा थोपा) को परिभाषा**

**स्नेहे ग्रन्थिद्वयं यावन्निमग्ना चोद्धृता ततः ।**
**तर्जनी यं स्रवेद्बिन्दुं सा मात्रा बिन्दुसंज्ञिता ॥३९॥**
**एवं विधैर्बिन्दुसंज्ञैरष्टभिः शाण उच्यते ।**
**स देयो मर्शनस्ये तु प्रतिमर्शो द्विबिन्दुकः ॥४०॥**

घिउ तेल आदि चिल्लोमा दुई आँख्ली डुब्ने गरी चोर औंलो डुबाएर बाहिर निकाली चुहाउँदा एक पटकमा जति झर्दछ त्यसलाई एक बिन्दु भनिन्छ । यस्तो आठ बिन्दुको एक शाण हुन्छ । यस्तो एक शाण नस्य मर्श नस्यमा दिनू । प्रतिमर्श नस्यमा भने दुई बिन्दु मात्र दिनु पर्दछ ।

**प्रतिमर्श नस्य हाल्ने समय**

**समयाः प्रतिमर्शस्य बुधैः प्रोक्ताश्चतुर्दश ।**

**प्रभाते दन्तकाष्ठान्ते गृहान्निर्गमने तथा ॥४१॥**
**व्यायामाध्वव्यवायान्ते विण्मूत्रान्तेऽञ्जने कृते ।**
**कवलान्ते भोजनान्ते दिवासुप्तोत्थिते तथा ॥४२॥**
**वमनान्ते तथा सायं प्रतिमर्शः प्रयुज्यते ।**

प्रतिमर्श नस्य हाल्ने समय चौध वटा हुन्छन् । बिहान, दाँत माझेपछि, घर बाहिर जाने बेलामा, कुनै परिश्रम गर्दा त्यसको अन्तमा, कतै डुलेर आएपछि, ग्राम्यधर्म पछि, दिसा गरि सकेपछि, पिसाब गरि सकेपछि, आँखामा गाजल आदि लगाइ सकेपछि, सुतेर उठेपछि, मुखमा ओखती पानी लिएर थुकेपछि, खाना पछि, दिनमा सुतेर उठेपछि, बान्ता गरि सकेपछि र साँझमा । यी समयमा प्रतिमर्श नस्य दिइन्छ ।

प्रतिमर्श नस्यले काम गरेको लक्षण

**ईषदुच्छिङ्कनात्स्नेहो यदा वक्त्रं प्रपद्यते ॥४३॥**
**नस्ये निषिक्तं तं विद्यात्प्रतिमर्शप्रमाणतः ।**

**उच्छिन्दन्न पिबेच्चैतन्निष्ठीवेन्मुखमागतम् ॥४४॥**

नस हालेपछि हलुका हाच्छिउँ आई हालिएको नस मुखबाट बाहिर आए प्रतिमर्श नस सफल भयो भनी थाहा पाउनू । नस लिनेले नस लिएपछि मुखमा आएको चिल्लो ननिल्नू, खकारेर थुक्नू ।

प्रतिमर्श नस्य दिन हुने मानिस

**क्षीणे तृष्णास्यशोषार्ते बाले वृद्धे च युज्यते ।**
**प्रतिमर्शेन शाम्यन्ति रोगाश्चैवोर्ध्वजत्रुजाः ॥४५॥**
**वलीपलितनाशश्च बलमिन्द्रियजं भवेत् ।**

शरीरका धातु खिइएका मानिस, तिर्खाले वा मुख सुकेर आकुल भएका मानिस तथा बालक र वृद्धलाई प्रतिमर्श नस्य दिनू । घाँटीभन्दा माथिका रोग हुने, छाला शिथिल हुने, उमेर

नपुग्दै कपाल फुल्ने जस्ता रोगमा प्रतिमर्श नस्य दिनाले रोग निको हुन्छ । यो नस्यले आँखा आदि इन्द्रियमा बल समेत आउँदछ ।

उमेर नपुग्दै कपाल फुलेकोमा नस्य

**बिभीतनिम्बगम्भारी शिवा शेलुश्च काकिनी ॥४६॥**
**एकैकतैलनस्येन पलितं नश्यति ध्रुवम् ।**

बर्रो, नीमको बोक्रा, खमारी, हर्रो, लप्सी र कौवाठोरीको गेडा भित्रको गुदीको तेल बेग्लाबेग्लै निकाल्नू । अनि एक एक गरेर बेग्लाबेग्लै नस हाल्नू । यसबाट फुलेको कपाल पनि तरुनो अवस्थाको जस्तै कालो हुन्छ ।

नस्य हाल्ने विधि

**अथ नस्यविधिं वक्ष्ये नस्यग्रहणहेतवे ॥४७॥**
**देशे वातरजोमुक्ते कृतदन्तनिघर्षणम् ।**
**विशुद्धं धूमपानेन स्विन्नभालगलन्तथा ॥४८॥**
**उत्तानशायिनं किञ्चित् प्रलम्बशिरसं नरम् ।**
**आस्तीर्णहस्तपादश्च वस्त्राच्छादितलोचनम् ॥४९॥**
**समुन्नमितनासाग्र(ग्रं) वैद्यो नस्येन योजयेत् ।**
**कोष्णमच्छिन्नधारश्च हेमतारादिशुक्तिभिः ॥५०॥**
**शुक्त्या वा यन्त्रयुक्त्या वा प्लोतैर्वा नस्यमाचरेत् ।**

अब नस हाल्ने तरिका बताउँदछु । जुन ठाउँमा हावा चल्दैन, धुलो उड्दैन त्यहाँ नस हाल्ने व्यक्तिलाई दाँत माझी धूमपान गराएर, कपाल र घाँटी शुद्ध पार्न लगाएर, पसिना निकाल्न लगाई उत्तानो पारेर सुताउनू । टाउको केही तन्काउन लगाउनू । गोडा पसार्न लगाउनू । कपडाले आँखा छोप्नू । त्यसपछि वैद्यले नाक केही ठाडो पारी हल्का तातो नसको धारा (वा थोपा) नाकमा एकनासले खसाल्नू । धारो हाल्दा सुन, चाँदी, सिपी वा कौडीका भाँडाले वा कपडाका टुक्राले हाल्नू ।

नस्य लिएपछिका नियम र नियम पालना नगर्दाको असर

नस्येष्वासिच्यमानेषु शिरो नैव प्रकम्पयेत् ॥५१॥
न कुप्येन्न प्रभाषेत नोच्छिन्देन्न हसेत्तथा ।
एतैर्हि विहितः स्नेहो नैवान्तः सम्प्रपद्यते ॥५२॥
ततः कासप्रतिश्यायशिरोऽक्षिगदसम्भवः ।

नाकमा नस हालेपछि टाउको नहल्लाउनू, नरिसाउनू, कसैसँग नबोल्नू, बल गरी गरी हाच्छिउँ नगर्नू, नहाँस्नू । यदि यी काम गरियो भने हालिएको नसको चिल्लो टाउकाको भित्रसम्म पुग्दैन । यसबाट उल्टो खोकी लाग्ने, पिनास हुने (वा बढ्ने) तथा टाउको र आँखा दुख्ने जस्ता समस्या देखिन्छन् ।

शृङ्गाटकमभिप्लाव्य स्थापयेन्न गिलेद् द्रवम् ॥५३॥
पञ्च सप्त दशैव स्युर्मात्रा नस्यस्य धारणे ।

उपविश्याथ निष्ठीवेन्नासावक्त्रगतं द्रवम् ॥५४॥
वामदक्षिणपार्श्वाभ्यां निष्ठीवेत्सम्मुखे न हि ।

नस दिएपछि नसलाई वा कपास आदिमा भिजाइएको नसलाई दुई आँखीभुइँको बीच चारपाटे परेको भागमा राख्नू । यो राख्ने अवधि पाँच, सात वा दश मात्राको हुन्छ । यसपछि नस दिएको मानिसलाई बस्न लगाउनू र नाकमुखबाट झरेको पदार्थलाई दायाँ वा बायाँ थुक्न लगाउनू, सोझै अगाडि थुक्नु हुन्न ।

नस्य पछि गर्न नहुने कुरा

नस्ये नीते (नीते नस्ये) मनस्तापं रजः क्रोधञ्च सन्त्यजेत् ॥५५॥
शयीत निद्रां त्यक्त्वा च उत्तानो वाक्छतं नरः ।
तथा वैरेचनस्य(श्च)न्ते धूमो वा कवलो हितः ॥५६॥

नस हालेपछि मनमा पीर नलिनू, धुलो उड्ने ठाउँमा नबस्नू, नरिसाउनू, ननिदाउने गरी सय गनिन्जेलसम्म उत्तानो सुत्नू । विरेचन नस्य हालिएको भए नस्यको अन्तमा धूमपान र मुख कुल्ला नगराउनू ।

नस्यका तीन लक्षण

**नस्ये त्रीण्युपदिष्टानि लक्षणानि प्रयोगतः ।**
**शुद्धिहीनातियोगानि विशेषाच्छास्त्रचिन्तकैः ॥५७॥**

शास्त्र जान्ने विद्वान् वैद्यहरूले नस्यकर्ममा शुद्धि, हीनयोग र अतियोग गरी तीन लक्षण हुन्छन् भनी बताएका छन् ।

शुद्धिका लक्षण

**लाघवं मनसः शुद्धिः स्रोतसां व्याधिसङ्क्षयः ।**
**चित्तेन्द्रियप्रसादश्च शिरसः शुद्धिलक्षणम् ॥५८॥**



नस हाली टाएको सफा भए शरीर हलुका हुन्छ, नसाहरु शुद्ध भई खुल्दछन्, मुख-नाक-कान र मलद्वार आदि मल उत्सर्जन हुने द्वारहरु शुद्ध भई खुल्दछन्, टाउकाका रोगहरू नाश हुन्छन् र मन तथा इन्द्रिय प्रसन्न हुन्छन् ।

हीनयोगका लक्षण

**कण्डूपदेहो(हौ)गुरुता स्रोतसां कफसंस्रवः ।**
**मूर्ध्नि हीनविशुद्धे तु लक्षणं परिकीर्तितम् ॥५९॥**

नस हालेर टाउको राम्ररी सफा नभए शरीर चिलाउने, भारी हुने र च्याटच्याट लाग्ने हुन्छ । यसका साथै मुख र नाकबाट कफ बग्न थाल्दछ ।

अतियोगका लक्षण

**मस्तुलुङ्गागमो वातवृद्धिरिन्द्रियविभ्रमः ।**

**शून्यता शिरसश्चापि मूर्ध्नि गाढं विरेचिते ॥६०॥**

नस हालेर टाउको अति धेरै सफा भए गिदी समेत पग्लेर नाक आदिबाट बाहिर निस्कन थाल्दछ, शरीरमा वातविकार बढ्दछ, इन्द्रियलाई भ्रम हुन थाल्दछ र टाउको पनि लाटो हुन्छ ।

हीनयोग र अतियोग भएको उपचार

**हीनातिशुद्धे शिरसि कफवातघ्नमाचरेत् ।**
**सम्यग्विशुद्धे शिरसि सर्पिर्नस्ये निषेचयेत् ॥६१॥**

हीनयोग अतियोगको नस्यमा कफवात नाशक नस्य दिनू । अतियोगमा भने घिउको नस हाल्नू ।

नस हालेपछि टाउकोमा धेरै चिल्लो भएको लक्षण



**कफप्रसेकः शिरसो गुरुतेन्द्रियविभ्रमः ।**
**लक्षणं तदतिस्निग्धे तत्र रूक्षं प्रदापयेत् ॥६२॥**

नस हालेर टाउको भित्र चिल्लो बढी भए सास फेर्दा नै कफ मिसिएर आउन थाल्दछ । टाउको भारी हुन्छ । इन्द्रिय भ्रमित हुन्छन् । यस बेला उसलाई रुखो पदार्थको नस दिनु पर्दछ ।

नस हालेपछि खान हुने कुरा

**भोजयेच्चानभिष्यन्दि नस्याचारिकमादिशेत् ।**

नस हालेपछि भैंसीको दही आदि अभिष्यन्दी वा कफवर्धक पदार्थ नखानू । नस लिनेले शिष्टजनका कुरा मानेर त्यस अनुसार आचरण गर्नु पर्दछ ।

**पञ्चकर्म**

## वमनं रेचनं नस्यं निरूहश्चानुवासनम् ॥६३॥
## एतानि पञ्चकर्माणि कथितानि मुनीश्वरैः ।

आयुर्वेदमा वमन, विरेचन, नस्य, निरूह वस्ति र अनुवासन वस्ति गरी पाँच कर्मलाई पञ्चकर्म भनिन्छ ।

इति श्रीदामोदसुनूशार्ङ्गधरेण विरचितायां संहितायामुत्तरखण्डे
नस्यविधिर्नामाष्टमोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत आठौं अध्यायको मोहन
प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-२,००६+६३.५=२,०६९.५

✷

# अथ नवमोऽध्यायः

## नवौं अध्याय

### धूमपान

#### धूमपानका प्रकार

**धूमस्तु षड्विधः प्रोक्तः शमनो बृंहणस्तथा ।**
**रेचनः कासहा चैव वामनो व्रणधूपनः ॥१॥**

शमन (रोग शान्त पार्ने), बृंहण (शरीरमा बल बढाउने), रेचन (विकार बाहिर निकाल्ने), कासहा (खोकी निको पार्ने), वामन (बान्ता गराउने) र व्रणधूपन (घाउमा धुवाँ दिने) गरी धूमपान छ प्रकारका हुन्छन् ।

#### शमन आदि धूमपानका पर्यायवाची शब्दहरू

**शमनस्य तु पर्यायौ मध्यः प्रायोगिकस्तथा ।**

**बृंहणस्यापि पर्यायौ स्नेहनो मृदुरेव च ॥२॥**
**रेचनस्यापि पर्यायौ शोधनस्तीक्ष्ण एव च ।**

शमन धूमपानका मध्य र प्रयोगिक दुई पर्याय हुन्छन् । बृंहण धूमपानका स्नेहन र मृदु दुई पर्याय हुन्छन् । यसैगरी रेचन धूमपानका शोधन र तीक्ष्ण दुई पर्यायवाची नाम हुन्छन् ।

#### धूमपान गर्न नहुने मानिस

**अधूमार्हाश्च खल्वेते श्रान्तो भीतश्च दुःखितः ॥३॥**
**दत्तवस्तिर्विरिक्तश्च रात्रौ जागरितस्तथा ।**
**पिपासितश्च दाहार्तस्तालुशोषी तथोदरी ॥४॥**
**शिरोऽभितापी तिमिरी छर्द्याध्मानप्रपीडितः ।**
**क्षतोरस्कः प्रमेहार्तः पाण्डुरोगी च गर्भिणी ॥५॥**
**रूक्षः क्षीणोऽभ्यवहृतक्षीरक्षौद्र घृतासवः ।**

**भुक्तान्नदधिमत्स्यश्च बालो वृद्धः कृशस्तथा ॥६॥**

थकित, डराएको वा डरछेरुवा, दुःखी, वस्तिकर्म गरिएका (डुस लिएका), दिसा लगाउने ओखती खाई दिसा लगाएर पेट खाली गरिएका, रातमा नसुत्ने वा नसुतेका, तिर्खाएका, शरीरमा डाह हुने, तालु सुकेका, पेटका रोगी, टाउको दुख्ने वा टाउकामा चोटपटक भएका, रतन्धोका रोगी, वाकवाकी लागेका, आध्मान रोग भएका, उरक्षतका रोगी, पाण्डुरोगी, गर्भवती स्त्री, रुखो शरीर हुने, दुब्ला, भर्खर दुध-मह-घिउ-मदिरा-खाना र माछा खाएका, बालक, वृद्ध र कमजोर मानिसलाई धूमपानका लागि अयोग्य मानिस भनी जान्नू ।

बेला न कुबेला तथा धेरै धूमपान गर्दाको असर

**अकाले चातिपीतश्च धूमः कुर्यादुपद्रवान् ।**

बेला न कुबेला र धेरै धूमपान गर्नाले रोग लाग्दछ ।

धूमपानबाट हुने असरको उपचार



**तत्रेष्टं सर्पिषः पानं नावनाञ्जनतर्पणम् ॥७॥**
**सर्पिरिक्षुरसं द्राक्षां पयो वा शर्कराम्बु वा ।**
**मधुराम्लौ रसौ वापि शमनाय प्रदापयेत् ॥८॥**

धूमपानले असर गरेमा त्यो मानिसलाई घिउ खान दिनू । नाकमा नस हाल्नू । आँखामा गाजल लगाइ दिनू । शरीरलाई तृप्त पार्ने खालका खानपिन दिनू । घिउ, उखुको रस, दाख, दूध, शर्वत, सक्खर, पानी आदि पदार्थ वा गुलिया र अमिला पदार्थ खान दिँदा धूमपानले गरेको असर ठिक हुन्छ ।

धूमपान गर्ने समय (उमेर) र गुण

**धूमस्तु द्वादशाद्वर्षाद्गृह्यतेऽशीतिकान्न च ।**
**कासश्वासप्रतिश्यायान्मन्याहनुशिरोरुजः ॥९॥**

**वातश्लेष्मविकाराँश्च हन्याद्धूमः सुयोजितः ।**

बाह्र वर्षदेखि अस्सी वर्षसम्मका मानिसलाई धूमपान गराउन हुन्छ, अरुलाई हुन्न । विधिपूर्वक गरिएको धूमपानले दम, खोकी, पिनास, गर्दन-चिउँडो र टाउकोका पीडा र वात एवं कफ सम्बन्धी विकार पूरै नष्ट हुन्छ ।

### धूमपान पछि देखिने लक्षण

**धूमप्रयोगात्पुरुषः प्रसन्नेन्द्रियवाङ्मनाः ॥१०॥**
**दृढकेशद्विजश्मश्रुः सुगन्धिवदनो भवेत् ।**

धूमपान पछि मानिसका आँखा आदि इन्द्रिय, बोली र मन प्रसन्न हुन्छ । कपाल, दाँत, जुँगा र दाह्री बलिया हुन्छन् । मुख सुगन्धित हुन्छ ।

### धूमपान गर्ने नली



**धूमनाडी भवेत्तत्र त्रिखण्डा च त्रिपर्विका ॥११॥**
**कनिष्ठिकापरीणाहा राजमाषागमान्तरा ।**
**धूमनाडी भवेद्दीर्घा शमने रोगिणोऽङ्गुलैः ॥१२॥**
**चत्वारिंशन्मितैस्तद्वद् द्वात्रिंशद्भिर्मृदौ स्मृ(म)ता ।**
**तीक्ष्णे चतुर्विंशतिभिः कासघ्ने षोडशोन्मितैः ॥१३॥**
**दशाङ्गुलैर्वामनीये तथा स्याद् व्रणनाडिका ।**
**कलायमण्डलस्थूला कुलत्थागमरन्ध्रिका ॥१४॥**

धूमपानका लागि तीन खण्ड भएको, तीन गाँठा भएको, कान्छी औंलो जति मोटो र राजमाष छिर्ने जत्रो प्वाल भएको नली बनाउनू । यस्तो नली चालीस अमल लामो हुनु पर्दछ । मृदु धूमपानका लागि बत्तीस अमल लामो, तीक्ष्ण धूमपानका लागि दश अमल लामो, कास धूमपानका लागि सोह्र अमल लामो, वामन धूमपानका लागि दश अमल लामो तथा घाउमा धुवाँ दिनका लागि दश अमल लामो नलीको प्रयोग गर्नु पर्दछ । व्रणका लागि बनाइने यस्तो नली केराउ जत्रो मोटो र गहत छिर्ने जत्रो प्वाल भएको हुनु पर्दछ ।

### धूमपान विधि

अथेषिकां प्रलिम्पेच्च सुश्लक्ष्णां द्वादशाङ्गुलाम् ।
धूमद्रव्यस्य कल्केन लेपश्चाष्टाङ्गुलः स्मृतः ॥१५॥
कल्कं कर्षमितं लिप्त्वा छायाशुष्कञ्च कारयेत् ।
ईषिकामपनीयाथ स्नेहाक्तां वर्तिमादरात् ॥१६॥
अङ्गारैर्दीपितां कृत्वा धृत्वा नेत्रस्य रन्ध्रके ।
वदनेन पिबद्धूमं वदनेनैव सन्त्यजेत् ॥१७॥
नासिकाभ्यां ततः पीत्वा मुखेनैव वमेत् सुधीः ।
शरावसम्पुटे क्षिप्त्वा कल्कमङ्गारदीपितम् ॥१८॥
छिद्रे नेत्रं निवेश्याथ व्रणं तेनैव धूपयेत् ।

बाह्र अमल लामो छेस्कोमा धूमपानका लागि तयार पारिएका ओखती पिसेर लेदो बनाई एक कर्ष लेदो त्यो छेस्कोको आठ अमलसम्म लिप्नू । अनि छेस्कोलाई सुकाउनू । सुकेपछि छेस्को सरक्क निकाल्नू । ढुङ्ग्रो जस्तो सुकेको लेप बाँकी हुन्छ । अनि यसभित्र चिल्लो दलिएको बत्ती वा सुप्लो हाली माथि फिलिङ्गो हालेर सल्काउनू । अनि यसलाई नलीमा राख्नू । यसपछि त्यसको धुवाँ नलीले मुखमा तान्नू र मुखबाटै बाहिर फाल्नू । यसपछि नाकबाट धुवाँ तानी मुखबाट फाल्नू । घाउमा धुवाँ दिने भए कुनै बिर्को सहितको भाँडामा माथ्लो भागमा सानो प्वाल पारी त्यसभित्र भुङ्ग्रो राख्नू । भुङ्ग्रोमा ओखतीको लेदो हाल्नू । बिर्को बन्द गरी त्यसमा बनाइएको प्वालमा नली जोडनू र घाउमा धुनी दिनू ।



### रोग अनुसार धूमपानमा प्रयोग गरिने ओखती

एलादिकल्कं शमने स्निग्धं सर्जरसं मृदौ ॥१९॥
रेचने तीक्ष्णकल्कञ्च कासघ्नं क्षुद्रिकोषणम् ।
वामने स्नायुचर्माद्यं दद्याद् धूमस्य पानकम् ॥२०॥
व्रणे निम्बवचाद्यञ्च धूपनं सम्प्रचक्ष(संप्रशस्य)ते ।

शमन धूमपानमा अलैंची आदि ओखतीको लेप प्रयोग गर्नू । मृदु धूमपानमा घिउ आदि चिल्लोमा शिलाजित मिसाएर लेप बनाउनू । रेचक धूमपानमा रायो, सर्सिउँ आदि तिक्खर ओखतीको लेप प्रयोग गर्नू । कासहा धूमपानमा ठूलो कण्टकारी, कालो मरिच आदिको लेप बनाउनू । वामन धूमपानमा हरिण आदिको नसा, छाला आदिको लेप बनाउनू । व्रण धूमपानमा नीम र बोझ्रोको लेप प्रयोग गर्नू ।

बालग्रह आदि दोष हटाउन दिइने धूप

**अन्येऽपि धूमा गेहेषु कर्तव्या रोगशान्तये ॥२१॥**
**मयूरपिच्छं निम्बस्य पत्राणि बृहतीफलम् ।**
**मरिचं हिङ्गु मांसी च बीजं कार्पाससम्भवम् ॥२२॥**
**छागरोमाहिनिर्मोकं विष्ठा वैडालिकी तथा ।**
**गजदन्तश्च तच्चूर्णं किञ्चिद्घृतविमिश्रितम् ॥२३॥**
**गेहेषु धूपनं दत्तं सर्वान्बालग्रहाञ्जयेत् ।**
**पिशाचान्राक्षसाञ्जित्वा सर्वज्वरहरं भवेत् ॥२४॥**



बालग्रह आदि दोष हटाउन घरमा मयुरपिच्छ नामक धुनी दिइन्छ । यसमा मयुरको प्वाँख, नीमका पात, ठूलो कण्टकारीको फल, कालो मरिच, हिङ, जटामसी, कपासका गेडा, बोकाको रौं, सर्पको काँचुली, बिरालोको दिसा र हात्तीको दाह्रा मिसाएर धुलो बनाई अलिकति घिउ मिसाएर घरमा धूप बाल्नाले सबै खालका बालग्रह, पिशाच, राक्षस आदिको दुष्प्रभाव नाश हुन्छ र सबै खालको जरो समेत भाग्दछ ।

धूमपानमा पथ्य खानपिन

**परिहारस्तु धूमेषु कार्यो रेचननस्यवत् ।**
**नेत्राणि धातुजान्याहुर्नलवंशादिजान्यपि ॥२५॥**

रेचक नस्यमा जे जे कुरा खानु वा बार्नु भनिएको छ धूमपानमा पनि ती कुरा बार्नू । नलीको मुख सुन आदि धातुको बनाउनू । नली निगालो, बाँस आदिको बनाउनू ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां संहितायामुत्तरखण्डे धूमपानविधिर्नाम नवमोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत नवौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-२,०६९.५+२५=२,०९४.५

✷

# अथ दशमोऽध्यायः

## दशौं अध्याय

### मुख कुल्ला गर्ने आदि
### गण्डूषका प्रकार

**चतुर्विधः स्याद्गण्डूषः स्नैहिकः शमनस्तथा ।**
**शोधनो रोपणश्चैव कवलश्चापि तद्विधः ॥१॥**

स्नैहिक, शमन, शोधन र रोपण गरी गण्डूषका चार प्रकार हुन्छन् ।

### स्नैहिक आदि गण्डूषको व्याख्या

**स्निग्धोष्णैः(ग्धैस्तु) स्नैहिको वाते स्वादुशीतैः प्रसादनः ।**
**पित्ते कट्वम्ललवणैरुष्णैः संशोधनः कफे ॥२॥**
**कषायतिक्तमधुरैः कदुष्णो रोपणो व्रणे ।**
**चतुष्प्रकारो गण्डूषः कवलश्चापि कीर्तितः ॥३॥**

चिल्लो र तातो पदार्थ मिसाएर गरिने गण्डूषलाई स्नैहिक भनिन्छ । यो गण्डूष वातसम्बन्धी रोगमा गर्नू । गुलिया र शीतल पदार्थ मिसाएर गरिने गण्डूषलाई शमन भनिन्छ । यो गण्डूष पित्तरोगमा गर्नू । पिरो, अमिलो, नुनिलो र तातो पदार्थ मिसाएर गरिने गण्डूषलाई शोधन भनिन्छ । यो गण्डूष कफरोगमा गर्नू । टर्रो, तितो, गुलियो र तातो पदार्थ मिसाएर गरिने गण्डूषलाई रोपण भनिन्छ । यो घाउखटिरा आउँदा गर्नू । यसरी गण्डूष चार थरीको हुन्छ भनी बताइयो । यसैगरी कवल पनि चार थरीको हुन्छ ।

### गण्डूष र कवलमा फरक

**असञ्चारी मुखे पूर्णे गण्डूषः कवलश्चरः ।**
**तत्र द्रवेण गण्डूषः कल्केन कवलः स्मृतः ॥४॥**

काँढापानी आदि तरल पदार्थ मुखमा लिई नहल्लाई एकछिन पछि मुखबाट बाहिर निकाल्नुलाई गण्डूष भनिन्छ । यस्ता पदार्थ मुखमा हाली यताउता हल्लाएर एकछिन राखी बाहिर निकाल्नुलाई कवल (कुल्ला गर्नु) भनिन्छ ।

**गण्डूष र कवलमा ओखतीको मात्रा**

**दद्याद् द्रवेषु चूर्णञ्च गण्डूषे कोलमात्रकम् ।**
**कर्षप्रमाणः कल्कश्च दीयते कवले बुधैः ।।५।।**

गण्डूषका लागि बनाइने काँढापानी आदि तरल पदार्थमा हाल्ने ओखतीको मात्रा एक कोल हुन्छ भने कवलका लागि बनाइएकोमा एक कर्ष हुन्छ ।

**गण्डूषका लागि उपयुक्त उमेर र मात्रा**

**धार्यन्ते पञ्चमाद्वर्षाद्गण्डूषकवलादयः ।**
**गण्डूषान्सुस्थितः कुर्यात्स्विन्नभालगलादिकः ।।६।।**

**मनुष्यस्त्रींस्तथा पञ्च सप्त वा दोषनाशनात् ।**

पाँच वर्षको उमेर बितेपछि मात्र मानिसले गण्डूष र कवल गर्नु पर्दछ । मानिसले प्रसन्न भई बसेर रोग हटाउन गाला र गलाको शब्द निकाल्दै अनुहारमा हलुका पसिना नआउँदासम्म तीन, पाँच वा सात पटक गण्डूष गर्नु पर्दछ । अथवा रोग निको नहुँदासम्म गर्नु पर्दछ ।

**गण्डूष सम्बन्धी अर्को नियम**

**कफपूर्णास्यता यावच्छेदो दोषस्य वा भवेत् ।।७।।**
**नेत्रघ्राणस्रुतिर्यावत्तावद्गण्डूषधारणम् ।**

मुखका हालिएको ओखती मिश्रित पानीमा कफ नभरियुञ्जेलसम्म अथवा रोगलाई नछेड्दासम्म अथवा आँखा, नाक आदिबाट पानी नआउँदासम्म गण्डूष गर्नु पर्दछ ।

स्नैहिक गण्डूष

**तिलकल्कोदकं क्षीरं स्नेहो वा स्नैहिके हितः ॥८॥**

तिलको लेप, पानी, दूध तथा तेल आदि चिल्ला पदार्थ स्नैहिक गण्डूषका लागि मिसाउनु पर्दछ ।

डाह नाशक गण्डूष

**तिला नीलोत्पलं सर्पिः शर्करा क्षीरमेव च ।**
**सक्षौद्रो हनुवक्त्रस्थो गण्डूषो दाहनाशनः ॥९॥**

तिल, नीलकमल, घिउ, मिस्री र दूधमा मह हाली गण्डूष गर्नाले चिउँडो र मुखमा हुने पित्तसम्बन्धी डाह नाश हुन्छ ।

मुखका घाउ आदिमा महको गण्डूष



**वैशद्यञ्जनयत् यास्ये सन्दधाति मुखव्रणान् ।**
**दाहतृष्णाप्रशमनं मधुगण्डूषधारणम् ॥१०॥**

महलाई पानीमा मिसाएर गण्डूष गर्नाले मुखका घाउ, छाला गएको र डाह तथा तिर्खा-रोग निको भई मुख स्वच्छ हुन्छ ।

विष आदिको असरमा गण्डूष

**विषक्षाराग्निदग्धे च सर्पिर्धार्यं पयोऽथवा ।**

विषविकार, क्षारविकार, आगोले पोलेको घाउ आदिमा घिउ अथवा दूधले गण्डूष गर्नू ।

दाँत हल्लिएकोमा गण्डूष

**तैलसैन्धवगण्डूषो दन्तचाले प्रशस्यते ॥११॥**

तिलको तेलमा सिधेनुन मिसाएर गण्डूष गर्नाले हल्लिएका दाँत पनि पुनः जमेर बलिया हुन्छन् ।

मुख सुकेकोमा गण्डूष

**शोषं मुखस्य वैरस्यं गण्डूषः काञ्जिको जयेत् ।**

मुख सुकेमा वा मुखको स्वाद बिग्रेमा काँजीले गण्डूष गर्नाले ठिक हुन्छ ।

कफविकारमा गण्डूष

**सिन्धुत्रिकटुराजीभिरार्द्रकेण कफे हितः ॥१२॥**

सिधेनुन, सुठो, मरिच, पिल्ला र रायो बराबर मात्रामा मिसाई धुलो पारेर अदुवाको रसमा मिसाएर गण्डूष गर्नाले कफजन्य विकार नाश हुन्छ ।



कपविकार र रक्तपित्तमा गण्डूष

**त्रिफलामधुगण्डूषः कफासृक्पित्तनाशनः ।**

त्रिफलाको धुलोमा मह मिसाएर गण्डूष गर्नाले कफविकार र रक्तपित्त नाश हुन्छ ।

मुख पाकेकोमा गण्डूष

**दार्वी गुडूची त्रिफला द्राक्षा जात्याश्च पल्लव(वा): ॥१३॥**
**यवासश्चेति तत् क्वाथः षष्ठांशक्षौद्रसंयुतः ।**
**शीतो मुखे धृतो हन्यान्मुखपाकं त्रिदोषजम् ॥१४॥**

चुत्रो, गुर्जो, त्रिफला, दाख, चमेलीको पात र सिन्नु बराबर मात्रामा जम्मा पारी हालेर काँढापानी पकाउनू । काँडापानीमा छ भागको एक भाग मह मिसाउनू । सेलाइएपछि

गण्डूष गर्नाले त्रिदोषका कारण मुख पाक्ने वा मुख भित्रको छाला जाने समस्या भए त्यो ठिक हुन्छ ।

मञ्जन र कवलमा हाल्ने ओखती

**यस्यौषधस्य गण्डूषस्तस्यैव प्रतिसारणम् ।**
**कवलश्चापि तस्यैव ज्ञेयोऽत्र कुशलैर्नरैः ॥१५॥**

गण्डूषमा बताइएकै ओखती मञ्जन र कवलमा पनि प्रयोग हुन्छन् भनी चतुर मानिस (वैद्य) ले थाहा पाउनू ।

कफवातजन्य अरुचीमा कवल

**केशरं मातुलुङ्गस्य सैन्धवोषणसंयुतम् ।**
**हन्यात् कवलतो जाड्यमरुचिं कफवातजाम् ॥१६॥**



बिमिरोका केशर, सिधेनुन, सुठो, मरिच र पिप्ला बराबर मात्रामा मिसाई कवल गर्नाले मुखको लाटोपन र कफवातजन्य अरुची नाश हुन्छ ।

प्रतिसारण (मञ्जन)
मञ्जनका प्रकार

**कल्कोऽवलेहश्चूर्णं च त्रिविधं प्रतिसारणम् ।**
**अङ्गुल्यग्रगृहीतञ्च यथास्वं मुखरोगिणा(ण)म् ॥१७॥**

चन्दन, लेप र धुलो गरी मञ्जन तीन थरी हुन्छ । यसलाई रोग अनुसार औंलामा लिई माख्लो आँख्लीले जिभ्रो तथा मुख भरी दल्नू ।

विभिन्न रोगमा धुलो मञ्जन

**कुष्ठं दार्वी समङ्गा च पाठा तिक्ता च पीतिका ।**
**तेजनी मुस्तलोध्रे च चूर्णं स्यात् प्रतिसारणम् ॥१८॥**

**रक्तस्रुतिं दन्तपीडां शोथं दाहञ्च नाशयेत् ।**

कूट, चुत्रो, लज्जावती झार, गानेगुर्जो, कुटकी, मजिठो, हलेदो, नागरमोथे र लोध बराबर मात्रामा मिसाई धुलो बनाउनू । यो धुलोलाई औँलाको टुप्पाले मुखभरी रगड्नू । यसो गर्नाले गिजाबाट रगत आउने, दाँत दुख्ने, गिजा आदि सुन्निने र मुखमा डाह हुने समस्या ठिक हुन्छ । यो धुलोलाई प्रतिसारण वा मञ्जन भनिन्छ ।

### मात्रा नपुगेको गण्डूष आदिको लक्षण

**हीनयोगात् कफोत्क्लेशो रसाज्ञानारुची तथा ॥१९॥**
**अतियोगान्मुखे पाकः शोषस्तृष्णा क्लमो भवेत् ।**

गण्डूष आदिको मात्रा पुगेन भने कफ धेरै आउँदछ । जिभ्रोले गुलियो आदि रसको स्वाद थाहा पाउन छाड्दछ । अन्न आदिमा अरुची हुन्छ । मात्रा बढी भयो भने मुख पाकेर छाला जान थाल्दछ । मुख सुन्निन्छ, तिर्खा लाग्दछ र त्यत्तिकै मानिस थकित हुने गर्दछ ।



### गण्डूष सफल भएको लक्षण

**व्याधेरपचयस्तुष्टिर्वैशद्यं वक्त्रलाघवम् ॥२०॥**
**इन्द्रियाणां प्रसादश्च गण्डूषे शुद्धिलक्षणम् ।**

सही तरिकाले सही मात्रामा गण्डूष गरिए यसले रोग नाश हुन्छ, मन आनन्दित हुन्छ, मुख निर्मल र हलुको हुन्छ तथा जिभ्रो आदि इन्द्रिय प्रसन्न हुन्छन् । यही नै सफल गण्डूषको लक्षण हो ।

इति श्रीशार्ङ्गधरसंहितायामुत्तरखण्डे गण्डूषादिविधिर्नाम दशमोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत दशौँ अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-२,०९४.५+२०.५=२,११५

✷

# अथैकादशोऽध्यायः

## एघारौं अध्याय

### लेप

#### लेपका नाम र प्रकार

**आलेपस्य च नामानि लिप्तो लेपश्च लेपनम् ।**
**दोषघ्नो विषहा वर्ण्यो मुखलेपस्त्रिधा मतः ॥१॥**

लेपलाई आलेप, लिप्त र लेपन पनि भनिन्छ । रोग नाशक, विष नाशक र वर्णमा चमक लेराउने गरी लेप (मलम) तीन प्रकारको हुन्छ ।

#### लेपको मात्रा

**त्रिप्रमाणश्चतुर्भागस्त्रिभागोऽधाङ्गुलोन्नतः ।**
**आद्रो व्याधिहरः स स्याच्छुष्को दूषयतिच्छविम् ॥२॥**



लेप लगाउने विधि तीन प्रकारका हुन्छन् । एक अमल बाक्लो लेप रोग नाश गर्नका लागि, पौने अमल लेप विषको असर नाश गर्नका लागि र वर्णमा निखार लेराउनका लागि आधा अमल बाक्लो लेप दलिन्छ । गिलो वा नरम लेपले रोग नाश गर्दछ भने सुक्खा वा कडा लेपले शरीरको चमकलाई दूषित पार्दछ भनी जान्नू ।

#### सुन्निएको बसाउने लेप

**पुनर्नवां दारुशुण्ठीं सिद्धार्थं शिग्रुमेव च ।**
**पिष्ट्वा चैवारनालेन प्रलेपः सर्वशोथहा(जित्) ॥३॥**

पुनर्नवा, देवदार, सुठो, सेतो सर्सिउँ र सैजनको बोक्रा बराबर मात्रामा जम्मा पारी काँजीमा पिसेर मलम बनाई सुन्निएको ठाउँमा दल्नाले सबै प्रकारको सुजन बस्दछ ।

डाह नाश गर्ने लेप

**बिभीतफलमज्जाक्त(या) लेपो दाहार्तिनाशनः ।**

बर्रोको गुदीलाई राम्ररी पिसेर मलम बनाई दल्नाले डाह नाश हुन्छ ।

दशाङ्ग लेप

**शिरीषं मधुयष्टी च तगरं रक्तचन्दनम् ॥४॥**
**एला मांसी निशायुग्मं कुष्ठं बालकमेव च ।**
**इति सञ्चूर्ण्य लेपोऽयं पञ्चमांशघृतप्लुतः ॥५॥**
**जलेन क्रियते सुज्ञैर्दशाङ्ग इति संज्ञितः ।**
**विसर्पान्विषविस्फोटशोथदुष्टव्रणाञ्जयेत् ॥६॥**

शिरिषको बोक्रा, जेठीमधु, तगर, रक्तचन्दन, अलैंची, जटामसी, हलेदो, चुत्रो, कूट र सुगन्धवाल बराबर मात्रामा लिई बेग्लाबेग्लै पिँधेर धुलो बनाउनू । अनि यसलाई जलमा घोटेर पाचौं भाग घिउ मिसाएर मलम बनाई दल्नाले विसर्प, विषदोष, विस्फोट, सुजन र खराब खटिरा ठिक हुन्छ । यसलाई जानिफकारहरूले दशाङ्ग लेप भनी बताएका छन् ।



भलायो उब्रिएको वा भलायोले सुन्निएकोमा लेप

**अजादुग्धतिलैर्लेपो नवनीतेन संयुतः ।**
**शोथमारुष्करं हन्ति लेपो वा कृष्णमृत्तिकैः ॥७॥**

तिललाई बाख्रीको दूधमा पिसेर त्यसमा नौनी मिसाई मलम बनाएर दल्नू अथवा कालोमाटो र तिल मिसाएर पिँधी नौनी मिसाएर लेप बनाई दल्नू, भलायोजन्य सुजन ठिक हुन्छ ।

कीराले टोकेकोमा लेप

**लाङ्गल्यतिविषाऽलाबु जालिनी बीजमूलक(मूलबीजकै): ।**
**लेपो धान्याम्बुसम्पिष्टः कीटविस्फोटनाशनः ॥८॥**

हलहले, उत्तिस, तीते लौकाको गेडा, तीते घिरौँलाका गेडा र मूलाका गेडा बराबर मात्रामा लिई  काँजीमा पिँधेर कीराले टोकेको ठाउँमा र चाल्ने खटिरोमा दल्नाले विष विकार नाश गर्दछ ।

अनुहार चम्किलो बनाउने लेप

**रक्तचन्दनमञ्जिष्ठा लोध्रकुष्ठप्रियङ्गवः ।**
**वटाङ्कुरा मसूराश्च व्यङ्गघ्ना मुखकान्तिदाः ॥९॥**

रक्तचन्दन, मजिठो, लोध, कूट, कागुनो, बर्रोका मुना र मसुरो बराबर मात्रामा लिई पानीमा पिँधेर लेप कनाउनू । यो लेप दल्नाले व्यङ्ग रोग नाश भई अनुहारमा चमक आउँदछ ।



अनुहार चम्किलो बनाउने अर्को लेप

**मातुलुङ्गजटा सर्पिः शिला गोशकृतो रसः ।**
**मुखकान्तिकरो लेपः पिटिकाव्यङ्गकास(ल)जित् ॥१०॥**

बिमिरोको जरा, घिउ, मनशिला र गाईको गोबरको रस बराबर मात्रामा जम्मा पारी पिँधेर लेप बनाई अनुहारमा दल्नाले अनुहार चम्किलो हुन्छ । खटिरा, व्यङ्ग र कास (?) यो लेप दल्नाले नाश हुन्छ ।

डण्डिफोर हटाउने लेप

**लोध्रधान्यवचालेपस्तारुण्यपिटिकापहः ।**
**तद्वद्गोरोचनायुक्तं मरिचं मुखलेपनात्(नम्) ॥११॥**

## सिद्धार्थकवचालोध्रसैन्धवैश्च प्रलेपनम् ।

लोध, धनियाँ र बोझो बराबर मात्रामा बटुली पानीमा पिँधेर लेप बनाई दल्नू । अथवा गोरोचन र कालो मरिच पानीमा पिसेर लेप बनाई दल्नू । अथवा सेतो सर्सिउँ, बोझो, लोध र सिधेनुन पानीमा पिसेर लेप बनाई दल्नू । अनुहारमा आएको डण्डिफोर नाश हुन्छ ।

व्यङ्ग नाशक लेप

## व्यङ्गेषु चार्जुनत्वग्वा मञ्जिष्ठा वा समाक्षिकः(का) ॥१२॥
## लेपः सनवनीतो वा श्वेताश्वखुरजा मषी ।

खरीको बोक्राको धुलो अथवा मजिठोको धुलो अथवा सेतो घोडाको खुरको खरानीलाई बेग्लाबेग्लै मह र नौनीमा मिसाई लेप बनाएर बेग्लाबेग्लै दल्नाले व्यङ्ग रोग नाश हुन्छ ।

मुखको कालोपोतो नाशक लेप



## अर्कक्षीरहरिद्राभ्यां मर्दयित्वा विलेपनात् ॥१३॥
## मुखकार्ष्ण्यं शमं याति चिरकालोद्भवं ध्रुवम् ।

आँकको दूधमा हलेदो पिसेर लेप बनाई दल्ने गर्नाले अनुहारमा आएको पुरानो कालोपोतो निश्चय नै नाश हुन्छ ।

डण्डिफोर आदि नाशक लेप

## वटस्य पाण्डुपत्राणि मालती रक्तचन्दनम् ॥१४॥
## कुष्ठं कालीयकं लोध्रमेभिर्लेपं प्रयोजयेत् ।
## तारुण्यपिटिकाव्यङ्गनीलिकादि विनाशनम् ॥१५॥

बरोका पहेँला पात, चमेलीको फूल, रक्तचन्दन, कूट, चुत्रो र लोध बराबर मात्रामा मिसाई पिँधेर लेप बनाई  दल्नाले डण्डिफोर, व्यङ्ग र नीलो डाम वा फोका निको हुन्छ ।

अरुषिका नाशक लेप

**पुराणमथ पिण्याकं पुरीषं कुक्कुटस्य च ।**
**मूत्रपिष्टः प्रलेपोऽयं शीघ्रं हन्यादरुँषिकाम् ॥१६॥**

तिलको पुरानो पिना र कुखुराको सुलीलाई गहुँतमा पिँधेर लेप बनाई दल्नाले अरुषिका चाँडै निको हुन्छ ।

अरुषिका नाशक अर्को लेप

**खदिरारिष्टजम्बूनां त्वग्भिर्वा मूत्रसंयुतैः ।**
**कुटजत्वक्सैन्धवञ्च लेपो हन्यादरुँषिकाम् ॥१७॥**

खयर, नीम र जामुनु यी तीन थरी बोक्रालाई धुलो बनाएर गहुँतमा पिँधी लेप बनाउनू । अथवा ठूलोकुरोको बोक्रा र सिधेनुन गहुँतमा पिसी लेप बनाउनू । यी दुई थरी लेपले पनि अरुषिका नाश हुन्छ ।



दारुणक (चाया विशेष) नाशक लेप

**प्रियालबीजमधुककुष्ठमाषैः ससैन्धवैः ।**
**कार्यो दारुणके मूर्ध्नि प्रलेपो मधुसंयुतः ॥१८॥**

चिरौँजीका गेडा, जेठीमधु, कूट, माष र सिधेनुन बराबर मात्रामा लिई राम्ररी पिसेर लेप बनाई टाउकामा दल्नाले दारुणक रोग निको हुन्छ ।

दारुणक (चाया विशेष) नाशक अन्य लेप

**दुग्धेन खाखसं बीजं प्रलेपाद्दारुणञ्जयेत् ।**
**आम्रबीजस्य चूर्णन्तु शिवाचूर्णसमं द्वयम् ॥१९॥**
**दुग्धपिष्टः प्रलेपोऽयं दारुणं हन्ति दारुणम् ।**

अफिमका गेडालाई दूधमा पिसेर लेप बनाई दल्नाले अथवा आँपको कोया भित्रको गुदी र हर्रो बराबर मात्रामा मिसाई दूधमा पिसेर लेप बनाई दल्नाले टाउकाको कडाभन्दा कडा चाया (दारुणक) पनि नाश हुन्छ ।

**इन्द्रलुप्त रोग नाशक लेप**

**रसस्तिक्तपटोलस्य पत्राणां तद्विलेपनात् ॥२०॥**
**इन्द्रलुप्तं शमं याति त्रिभिरेव दिनैर्ध्रुवम् ।**

तिते पर्बल (र) का पातको रस निकाली लेप बनाएर तीन दिनसम्म दल्नाले इन्द्रलुप्त रोग निश्चय नै नाश हुन्छ ।

**इन्द्रलुप्त रोग नाशक अन्य लेप**

**इन्द्रलुप्तापहो लेपो मधुना बृहतीरसः ॥२१॥**
**गुञ्जामूलं फलं वाऽपि भल्लातकरसोऽपि वा ।**

ठूलो कण्टकारीको रस निकाली मह मिसाई लेप बनाएर दल्नाले अथवा रातीगेडीको जरा वा रातीगेडीको रस महमा मिसाएर लेप बनाई दल्नाले अथवा भलायोको पातको रस निकाली मह मिसाएर लेप बनाई दल्नाले पनि इन्द्रलुप्त रोग निको हुन्छ ।

**कपाल बढाउने लेप**

**गोक्षुरस्तिलपुष्पाणि तुल्ये च मधुसर्पिषी ॥२२॥**
**शिरः प्रलेपनं तेन केशसम्वर्धनं परम् ।**

ओदानेकाँडो र तिलको फूल बराबर मात्रामा बटुली पिध्नू । यसमा मह र घिउ बराबर मात्रामा मिसाई लेप बनाएर टाउकामा दले कपाल बढ्दछ ।

### रौं उमार्ने लेप

**हस्तिदन्तमषीं कृत्वा छागीदुग्धं रसाञ्जनम् ॥२३॥**
**रोमाण्यनेन जायन्ते लेपात् पाणितलेष्वपि ।**

हात्तीको दाँतलाई डढाएर खरानी बनाउनू । यो खरानी र रसाञ्जनलाई बाख्रीको दूधमा घोटेर लेप बनाउनू । यो लेप जहाँ जहाँ रौं झरेको छ त्यहाँ त्यहाँ लगाउने गर्नू, रौं उम्रन्छ । यो लेप हत्केलामा दलेपनि त्यहाँ रौं उम्रन्छ । (यो लेप लगाउन नाङ्गो हातको प्रयोग नगर्नू) ।

### इन्द्रलुप्त रोग नाशक अन्य लेप

**यष्टीन्दीवरमृद्वीकातैलाज्यक्षीरलेपनैः ॥२४॥**
**इन्द्रलुप्तं शमं याति केशाः स्युः सघना दृढाः ।**

जेठीमधु, कमल र दाख बराबर मात्रामा लिई यसलाई तिलको तेल, गाईको दूध र घिउमा पिस्नू । यो लेप दल्नाले इन्द्रलुप्त रोग नाश भई कपाल बाक्लो र बलियो हुन्छ ।



### कपाल उमार्ने अन्य लेप

**चतुष्पदानां त्वग्रोमनखशृङ्गास्थिभस्मभिः ॥२५॥**
**तैलेन सह लेपोऽयं रोमसञ्जननः परः ।**

चारखुट्टे जनावरको छाला, रौं, नङ, सिङ र हाडको खरानीमा तिलको तेल मिसाएर बनाइएको लेप नयाँ कपाल उमार्न अति उपयोगी हुन्छ ।

### कपाल कालो बनाउने लेप

**इन्द्रवारुणिकाबीजतैलेनाभ्यङ्गमाचरेत् ॥२६॥**
**प्रत्यहं तेन कालाभ्रसन्निभाः कुन्तला ह्यलम् (जायन्ते कुन्तला भृङ्गसन्निभाः) ।**

पातालयन्त्रबाट ऐरेलुका गेडाको तेल निकाली दिनहुँ उमेर नपुगी फुलेको कपालमा दल्ने गरेमा कपाल भमरा जस्तै कालो भएर आउँदछ ।

कपाल कालो बनाउने अन्य लेप

अयोरजो भृङ्गराजस्त्रिफला कृष्णमृत्तिका ॥२७॥
स्थितमिक्षुरसे मासं लेपनात् पलितञ्जयेत् ।

फलामको धुलो, भृङ्गराज, त्रिफला र कालोमाटो बराबर मात्रामा जम्मा पारी धुलो बनाएर उखुको रसमा हाली एक महिनासम्म राख्नू । त्यसपछि यो लेप झिकेर दल्नाले उमेर नपुग्दै फुलेको कपाल कालो हुन्छ ।

कपाल कालो बनाउने अन्य लेप

धात्रीफलत्रयं पथ्ये द्वे तथैकं बिभीतकम् ॥२८॥

पञ्चाम्रमज्जा लोहस्य कर्षैकञ्च प्रदीयते ।
पिष्ट्वा लोहमये भाण्डे स्थापयेदुषितं निशि ॥२९॥
लेपोऽयं हन्ति न चिरादकालपलितं महत् ।

तीनवटा अमला, दुई वटा हर्रो, एउटा बर्रो, आँपको कोया भित्रको गुदी पाँच र फलामको धुलो एक कर्षलाई फलामको कराहीमा हाली राम्ररी पिसेर रातभर त्यही भाँडामा त्यत्तिकै रहन दिनू । भोलिपल्ट यो लेप लगाउने गर्नाले उमेर नहुँदै फुलेको कपाल तुरुन्त कालो हुन्छ ।

कपाल कालो बनाउने उत्तम लेप

त्रिफला नीलिकापत्रं लोहं भृङ्गरजः समम् ॥३०॥
अजा(वि)मूत्रेण सम्पिष्टं लेपात् कृष्णीकरं स्मृतम् ।

त्रिफला, नीरको पात, फलामको धुलो र भृङ्गराज बराबर मात्रामा जम्मा पारी बाख्रीको मुत्रमा पिसेर लेप बनाउनू । यो लेप दल्नाले उमेर नपुग्दै फुलेको कपाल उत्तम तरिकाले कालो हुन्छ ।

कपाल कालो बनाउने अन्य लेप

त्रिफला लोहचूर्णञ्च दाडिमत्वग्बिसन्तथा ॥३१॥
प्रत्येकं पञ्चपलिकञ्चूर्णं कुर्याद्विचक्षणः ।
भृङ्गराजरसस्यापि प्रस्थषट्कं प्रदापयेत् ॥३२॥
क्षिप्त्वा लोहमये पात्रे भूमिमध्ये निधापयेत् ।
मासमेकन्ततः कुर्याच्छागीदुग्धेन लेपनम् ॥३३॥
कूर्चे शिरसि रात्रौ च सम्वेष्ट्यैरण्डपत्रकैः ।
स्वपेत् प्रातस्ततः कुर्यात् स्नानन्तेन च जायते ॥३४॥
पलितस्य विनाशश्च त्रिभिर्लेपैर्न संशयः ।

त्रिफला, फलामको धुलो, दारिमको बोक्रा र कमलको कन्द सबै पाँच पाँच पल लिनू । सबैलाई राम्ररी पिँधेर भृङ्गराजको छ प्रस्थ रस फलामको कराहीमा हाली त्यो लेप समेत हालेर फिट्नू । अनि एक महिनासम्म जमिनमा गाडी दिनू । यसपछि बाहिर निकाली बाख्रीको दूध मिसाएर रातमा टाउकामा दल्नू । लेपमाथि अरिडको पात बाँधेर सुत्नू । बिहान उठेर नुहाउनू । यसरी तीन पटक लेप गर्नाले जवानीमै फुलेका कपाल एकदम चाँडै कालो हुन्छ ।

कपाल खुइल्याउने लेप

शङ्खचूर्णस्य भागौ द्वौ हरितालञ्च भागिकम् ॥३५॥
मनःशिला चार्धभागा स्वर्जिका चैकभागिका ।
लेपोऽयं वारिपिष्टस्तु केशानुत्पाट्य दीयते ॥३६॥
अनया लेपयुक्त्या च सप्तवेलं प्रयुक्तया ।

**निर्मूलं केशस्थानं स्यात् क्षपणस्य शिरो यथा ॥३७॥**

शङ्खको धुलो दुई भाग, हरिताल एक भाग, मनशिला आधा भाग र सज्जिखार एक भाग मिसाएर पानीमा पिस्नू । यसरी तयार पारिएको लेपलाई जुन ठाउँको कपाल (वा रौं) खुइल्याउनु छ त्यो ठाउँको रौं खौरी दल्नू । यसरी सात पटक लेप दल्नाले कपाल उम्रने ठाउँ निर्मूल हुन्छ र त्यहाँ पुनः कपाल उम्रदैन । त्यो ठाउँ सन्यासीको टाउको जस्तै मुडुलो र चिल्लो हुन्छ ।

कपाल खुइल्याउने अन्य लेप

**तालकं शाणयुग्मं स्यात् षट् शाणं शङ्खचूर्णकम् ।**
**द्विशाणिकं पलाशस्य क्षारं दत्त्वा प्रमर्दयेत् ॥३८॥**
**कदलीदण्डतोयेन रविपत्ररसेन वा ।**
**अस्यापि सप्तभिर्लेपै रोम्णां शातनमुत्तमम् ॥३९॥**



हरिताल दुई शाण, शङ्खको धुलो छ शाण र पलाशको क्षार दुई शाण मिसाई केराको भेट्नुको रसमा अथवा आँकको पातको रसमा घोटेर लेप बनाउनू । यो लेप कपाल हटाउनु पर्ने स्थानमा दल्नू । सात पटक लेप दल्नाले कपाल उम्रदैन । कपाल खुइल्याउनका लागि यो अति उत्तम विधि हो ।

श्वेतकुष्ठ नाशक लेप

**सुवर्णपुष्पी कासीसं विडङ्गानि मनः शिला ।**
**रोचना सैन्धवञ्चैव लेपनाच्छिव्त्रनाशनम् ॥४०॥**

पहेँलो चमेली, हिराकसी, वायुविडङ्ग, मनशिला, गोरोचन र सिधेनुन बराबर मिसाई गहुँतमा पिसेर दल्नाले श्वेतकुष्ठ रोग निको हुन्छ ।

श्वेतकुष्ठ नाशक अन्य लेप

**वायस्येडगजाकुष्ठकृष्णाभिर्गुटिका कृता ।**

**वस्तमूत्रेण सम्पिष्टा प्रलेपाच्छ्वित्रनाशिनी ॥४१॥**

कौवाठोडी, ताप्रे (एडगज), कूट र पिप्ला बराबर मात्रामा मिसाएर बाख्रीको मूत्रमा पिसी दल्नाले पनि श्वेतकुष्ठ नाश हुन्छ ।

श्वेतकुष्ठ नाशक अन्य लेप

**तालकं शाणमात्रं स्याच्चतुःशाणा च वाकुची ।**
**गोमूत्रपिष्टं तच्चूर्णं लेपनाच्छ्वित्रनाशनम् ॥४२॥**

हरताल एक शाण र बकुची चार शाण मिसाई गहुँतमा पिसेर दल्नाले पनि श्वेतकुष्ठ नाश हुन्छ ।

श्वेतकुष्ठ नाशक अन्य लेप

**बाकुची वेतसो लाक्षा काकोदुम्बरिका कणा ।**

**रसाञ्जनमयश्चूर्णं तिलाः कृष्णास्तदेकतः ॥४३॥**
**चूर्णयित्वा गवां पित्तैः पिष्ट्वा च गुटिका कृता ।**
**अस्याः प्रलेपाच्छ्वित्राणि प्रणश्यन्त्यतिवेगतः ॥४४॥**

बकुची, अम्लवेत, लाहा, खोस्रेटो, पिप्ला, रसाञ्जन, फलामको धुलो र कालो तिल बराबर मात्रामा जम्मा पारी धुलो बनाउनू । अनि गाईको पित्तमा भिजाएर गोली बनाउनू । अनि यो गाली घोट्दै दल्नू, श्वेतकुष्ठ चाँडै निको हुन्छ ।

दुबी नाशक लेप

**धात्री सर्जरसश्चैव यवक्षारश्च चूर्णितैः ।**
**सौवीरेण प्रलेपोऽयं प्रयोज्यः सिध्मनाशने ॥४५॥**

अमला, सालधूप र जवाखार बराबर मात्रामा लिई काँजीमा वा सौवीर (काँजी विशेष) मा घोटेर दल्नाले दुबी निको हुन्छ ।

### दुबी नाशक अन्य लेप

**दार्वी मूलकबीजानि तालकं सुरदारु च ।**
**ताम्बूलपत्रं सर्वाणि कार्षिकाणि पृथक्पृथक् ॥४६॥**
**शङ्खचूर्णं शाणमात्रं सर्वाण्येकत्र कारयेत् ।**
**लेपोऽयं वारिणा पिष्टः सिध्मनां नाशनः परः ॥४७॥**

चुत्रो, मूलाका गेडा, हरिताल, देवदार र पानका पात एक एक कर्ष बटुली शङ्खको धुलो एक शाण समेत जम्मा पार्नू । यी सबैको धुलो पानीमा घोटेर लगाउनाले पनि दुबी राम्ररी ठिक हुन्छ ।

### आँखाको रोगमा लेप

**हरीतकी सैन्धवञ्च गैरिकञ्च रसाञ्जनम् ।**
**विडालको जले पिष्टः सर्वनेत्रामयापहः ॥४८॥**

हर्रो, सिधेनुन, गेरु र रसाञ्जन बराबर मात्रामा लिई पानीमा पिसेर लेप बनाउनू । विडालक नामक यो लेप आँखाको बाहिरी भागमा लगाउनाले आँखाका सबै किसिमका रोग नाश हुन्छन् ।

### आँखाको अन्नो रोगमा लेप

**रसाञ्जनं व्योषयुतं सम्पिष्टं वटकीकृतम् ।**
**कण्डूं पाकान्वितां हन्ति लेपादञ्जननामिकाम् ॥४९॥**

रसाञ्जन, सुठो, मरिच र पिप्ला बराबर मात्रामा लिई पानीमा पिँधेर गोली बनाउनू । यो गोली पानीमा घोटी लगाउने गर्दा चिलाउने र पाक्ने अन्नो रोग ठिक गर्दछ ।

शरीर चिलाउने, दाद र लुतोमा लेप

**प्रपुन्नाटस्य बीजानि वाकुची सर्षपास्तिलाः ।**
**कुष्ठं निशाद्वयं मुस्तं पिष्ट्वा तक्रेण चैकतः ॥५०॥**
**प्रलेपादस्य नश्यन्ति दद्रूकण्डूविचर्चिकाः ।**

ताप्रेका गेडा, बकुची, सर्सिउँ, तिल, कूट, हलेदो, चुत्रो र नागरमोथे बराबर मात्रामा लिई धुलो बनाउनू । यो धुलोलाई तक्रमा पिसेर लेप बनाई दल्ने गर्नाले शरीर चिलाउने, दाद र लुतो निको हुन्छ ।

लुतो आदिमा लेप

**हेमक्षीरी विडङ्गानि दरदं गन्धकस्तथा ॥५१॥**
**दद्रूघ्नः कुष्ठसिन्दूरे सर्वाण्येकत्र मर्दयेत् ।**
**धत्तूरनिम्बताम्बूलीपत्राणां स्वरसैः पृथक् ॥५२॥**

**अस्य प्रलेपमात्रेण पामादद्रूविचर्चिकाः ।**
**कण्डूश्च रसकश्चैव प्रशमं यान्ति वेगतः ॥५३॥**

सत्यानासी झार, वायुविडङ्ग, हिङ, गन्धक, ताप्रे, कूट र सिन्दूर बराबर मात्रामा लिई धतुरोको पात, नीमको पात र पानको पातको रसमा बेग्लाबेग्लै घोट्नू । अनि पालैपालो यो लेप दल्नू । यो लेप दल्नाले लुतो, दाद र विचर्चिका निको हुन्छ । यसले शरीर चिलाउने रोग र रसक (?) समेत छिटो निको हुन्छ ।

लुतो आदिमा अन्य लेप

**दूर्वाऽभया सैन्धवञ्च चक्रमर्दः कुठेरकः ।**
**एभिस्तक्रयुतो लेपः कण्डूपामाविनाशनः ॥५४॥**

दूबो, हर्रो, सिधेनुन, ताप्रे र कालो पात हुने बाबरी बराबर मात्रामा लिई तक्रमा पिसी लेप बनाएर दल्नाले शरीर चिलाउने रोग र लुतो ठिक हुन्छ ।

लुतो आदिमा अन्य लेप

**दूर्वानिशायुतो लेपः कण्डूपामाविनाशनः ।**
**कृमिदद्रुहरश्चैव शीतपित्तापहः स्मृतः ॥५५॥**

दूबो र हलेदो बराबर मात्रामा मिसाएर पिसी लेप बनाएर दल्नाले पनि शरीर चिलाउने र लुतो नाश हुन्छ । यसले कीरा, दाद र शीतपित्त समेत नाश गर्दछ ।

रक्तपित्तजन्य टाउको दुखाईमा लेप

**चन्दनोशीरयष्ट्याह्वाबलाव्याघ्रनखोत्पलैः ।**
**क्षीरपिष्टैः प्रलेपः स्याद्रक्तपित्तशिरोरुजि ॥५६॥**

रक्तचन्दन, खस, जेठीमधु, बलुको जरा, समुद्रकर्कटी र चन्द्रकमल बराबर मात्रामा लिई दूधमा पिसेर लेप बनाई दल्नाले रक्तपित्तका कारण दुख्ने टाउको ठिक हुन्छ ।



उदर्दमा लेप

**सिद्धार्थरजनीकुष्ठप्रपुन्नाटतिलैः सह ।**
**कटुतैलेन सम्मिश्रमुदर्दघ्नं प्रलेपनम् ॥५७॥**

सेतो सर्सिउँ, हलेदो, कूट, तापेका गेडा र तिल बराबर मात्रामा जम्मा पारी बेग्लाबेग्लै धुलो बनाएर सर्सिउँको तेलमा मिलाई लेप बनाएर दल्नाले एक प्रकारको रक्तपित्तका कारण टाउको दुख्ने रोग (उदर्द) ठिक हुन्छ ।

वातविसर्प रोगमा लेप

**रास्ना नीलोत्पलं दारु चन्दनं मधुकं बला ।**
**घृतक्षीरयुतो लेपो वातवीसर्पनाशनः ॥५८॥**

फ्याक्सेकन्द, नीलकमल, देवदार, रक्तचन्दन, जेठमिधु र बलुको जरा बराबर मात्रा लिई धुलो बनाएर दूध वा घिउमा पिसी लेप बनाएर दल्नाले वातजन्य विसर्प रोग ठिक हुन्छ ।

### पित्तविसर्पमा लेप

**मृणालं चन्दनं लोध्रमुशीरं कमलोत्पलम् ।**
**सारिवामलकं पथ्या लेपः पित्तविसर्पनुत् ॥५९॥**

कमलको डाँठ, रक्तचन्दन, लोध, खस, कमल, चन्द्रकमल, अनन्तमूल, अमला र हर्रो बराबर मात्रामा लिई धुलो बनाएर पानीमा पिसी लेप बनाएर दल्नाले पित्तजन्य विसर्प रोग निको हुन्छ ।

### कफविसर्पमा लेप

**त्रिफलापद्मकोशीर(रं)समङ्गा करवीरकम् ।**
**नलमूलमनन्ता च लेपः श्लेष्मविसर्पहा ॥६०॥**



त्रिफला, पैयुँ, खस, मजिठोको फूल, करवीर, निगालोको जरा र सिस्नु बराबर मात्रामा लिई पानीमा पिसेर लेप बनाई दल्नाले कफजन्य विसर्प रोग नाश हुन्छ ।

### पित्तजन्य वातरक्त रोगमा लेप

**मूर्वा नीलोत्पलं पद्मं शिरीषकुसुमैः सह ।**
**प्रलेपः पित्तवातास्रे शतधौतघृतप्लुतः ॥६१॥**

मरुई लहरो, नीलकमल, पैयुँ र शिरिषको फूल बराबर मात्रामा लिई धुलो बनाउनू । यसलाई सय पटक पखालिएको घिउमा हालेर पिस्नू । यो लेप लगाउनाले पित्तजन्य वातरक्त निको हुन्छ ।

### नाकबाट रगत बहने रोग नाशक लेप

**आमलं घृतभृष्टन्तु पिष्टं काञ्जिकवारिभिः ।**

## जयेन्मूर्ध्नि प्रलेपेन रक्तं नासिकया स्रु(सृ)तम् ॥६२॥

अमलालाई घिउमा भुटी काँजीमा पिस्नू । यो लेप निधारमा दल्नाले नाकबाट रगत बहने रोग निको हुन्छ ।

वातजन्य टाउको दुखाइमा लेप

## कुष्ठमेरण्डतैलेन लेपात्काञ्जिकपेषितम् ।
## शिरोर्तिं वातजां हन्यात्पुष्पं वा मुचुकुन्दजम् ॥६३॥

कूट वा मुचुकुन्दका फूललाई काँजीमा पिँधेर अरिडको तेल मिसाएर लेप बनाई निधारमा दल्नाले वातजन्य टाउको दुखाइ रोग ठिक हुन्छ ।

वातजन्य टाउको दुखाइमा अर्को लेप

## देवदारुनतं कुष्ठं नलदं विश्वभेषजम् ।

## सकाञ्जिकः स्नेहयुक्तो लेपो वातशिरोऽर्तिनुत् ॥६४॥

देवदार, तगर, कूट, जटामसी र सुठो बराबर मात्रामा लिई काँजीमा पिस्नू । यसमा अरिडको तेल मिसाएर निधारमा दल्नाले पनि वातजन्य टाउको दुखाइ ठिक हुन्छ । (कसैले नलदको अर्थ सुगन्धवाल पनि लगाएका छन्) ।

रक्तपित्त नाशक लेप

## धात्रीकसेरुह्रीबेरपद्मपद्मकचन्दनैः ।
## दूर्वोशीरनलानाञ्च मूलैः कुर्यात् प्रलेपनम् ॥६५॥
## शिरोर्तिं पित्तजां हन्याद्रक्तपित्तरुजन्तथा ।

अमला, सेतो मोथे विशेष, सुगन्धवाल, कमल, पैयुँ, रक्तचन्दन, दुबोको जरा, खस र निगालोको जरा पानीमा पिँधेर लेप बनाई निधारमा लगाउनाले रक्तपित्तजन्य टाउको दुखाइ ठिक हुन्छ ।

कफजन्य टाउको दुखाई नाशक लेप

**हरेणुनतशैलेयमुस्तैलागरुदारुभिः ॥६६॥**
**मांसीरास्नारुबूकैश्च कोष्णो लेपः कफार्तिनुत् ।**

शीतलचिनी, तगर, शिलाकुङ्कुम, नागरमोथे, अलैंची, धूपी, देवदार, जटामसी, फ्याक्सेकन्द र रातो अरिडको जरा बराबर मात्रामा लिई जलमा पिसेर लेप बनाई निधारमा दल्नाले कफजन्य टाउको दुख्ने रोग निको हुन्छ ।

कफजन्य टाउको दुखाई नाशक अन्य लेप

**शुण्ठीकुष्ठप्रपुन्नाटदेवकाष्ठैः सरोहिषैः ॥६७॥**
**मूत्रपिष्टैः सुखोष्णैश्च लेपः श्लेष्मशिरोऽर्तिनुत् ।**

सुठो, कूट, ताप्रे, देवदार र रोहिष झार बराबर मात्रामा लिई गहुँतमा पिसेर तात्तातै निधारमा दल्नाले पनि कफजन्य टाउको दुखाई ठिक हुन्छ ।



सूर्यावर्त रोग र अधा दुखेको ठिक गर्ने लेप

**सारिवाकुष्ठमधुक वचाकृष्णोत्पलैस्तथा ॥६८॥**
**लेपः सकाञ्जिकस्नेहः सूर्यावर्तार्धभेदयोः ।**

अनन्तमूल, कूट, जेठीमधु, बोझो, पिप्ला र नीलकमल बराबर मात्रामा लिई काँजीमा पिस्नू र अरिडको तेल मिसाएर लेप बनाउनू । यो लेप निधारमा दल्नाले सूर्यावर्त रोग र अधा दुखेको ठिक हुन्छ ।

टाउकाका सबै रोगमा काम लाग्ने लेप

**वरी नीलोत्पलं दूर्वा तिलाः कृष्णा पुनर्नवा ॥६९॥**
**शङ्खकेऽनन्तवाते च लेपः सर्वशिरोऽर्तिजित् ।**

कुरिलो, नीलकमल, दुबो, कालो तिल र पुनर्नवा बराबर मात्रामा लिई पानीमा पिसेर लेप बनाउनू । यो लेप कञ्चटमा दल्ने गर्नाले कञ्चट दुख्ने, कडा खालको वातका कारण कपाल दुख्ने रोग र टाउकाका सबै रोग ठिक गर्दछ ।

लेपका प्रकार

अथ लेपविधिश्चान्यः प्रोच्यते सुज्ञसम्मतः ॥७०॥
द्वौ तस्य कथितौ भेदौ प्रलेपाख्यप्रदेहकौ ।
चर्मार्द्रं माहिषं यद्वत्प्रोन्नतं स(सा)मितिस्तयोः ॥७१॥
शीतस्तनुर्विशोषी च प्रलेपः परिकीर्तितः ।
आर्द्रो घनस्तथोष्णः स्यात्प्रदेहः श्लेष्मवातहा ॥७२॥

विद्वानहरूले प्रलेप र प्रदेह गरी लेपका दुई प्रकार बताएका छन् । यी दुबै लेप भैंसीको छाला जति बाक्लो हुनु पर्दछ । यिमध्ये प्रलेपले शीतल गर्ने, सूक्ष्म तरिकाले शरीरभित्र छिरी रोगलाई रोक्ने र ठिक गर्ने गर्दछ भने गिलो र बाक्लो तथा तातो प्रदेश नामक लेपले कफविकार र वायुविकार नाश गर्दछ ।



दुबै लेप लगाउने विधि

रोमाभिमुखमादेयौ प्रलेपाख्यप्रदेहकौ ।
वीर्यं सम्यग्विशत्याशु रोमकूपैः शिरामुखैः ॥७३॥

दुबै लेप रौंलाई हर्षित बनाएर वा ठाडो बनाएर लगाउनु पर्दछ । यसो गर्नाले रौंको फेदमा हुने प्वाल मार्फत ओखती राम्ररी शरीरभित्र छिर्दछ । (राम्ररी माडेर सफा नगरी कतै पनि लेप नलगाउनू, काम गर्दैन)

रातमा लेप दल्न र सुकेको लेप दल्न हुँदैन

न रात्रौ लेपनं कुर्याच्छुष्यमाणन्न धारयेत् ।
शुष्यमाणमुपेक्षेत प्रदेहं पीडनं प्रति ॥७३॥

रातमा लेप नदल्नू । सुकेको लेप नदल्नू । सुकेको लेप दल्नाले शरीरमा पीडा हुन्छ । पीडा वा रोग हटाउन लगाउने लेपले उल्टो पीडा दिन्छ भने त्यस्तो सुकेको लेप किन लगाउनू ? नलगाउनू ।

रातमा लेप लगाउन नहुने कारण

**तमसा पिह(हि)तो ह्यूष्मा रोमकूपमुखे स्थितः ।**
**विना लेपेन निर्याति रात्रौ नो लेपयेत्त(द)तः ॥७४॥**

रातको अन्धकारले शरीरको तेज वा तातोपन ढाकेको हुन्छ । यसबेला यो तातोपन वा तेज रौंका प्वाल मार्फत शरीरबाट बाहिर निस्किरहेको हुन्छ । लेप दल्नाले यी प्वाल टालिन्छन् र शरीको गर्मी वा तेज बाहिर निस्कन पाउँदैन । यसैले रातमा शरीरमा लेप नदल्नू ।

रातमा लेप दल्न हुने रोग विशेष



**रात्रावपि प्रलेपादिविधिः कार्यो विचक्षणैः ।**
**अपाकिशोथे गम्भीरे रक्तश्लेष्मसमुद्भवे ॥७५॥**

जुन सुजन बसेको वा पाकेको छैन, जुन सुजन माथि खतरनाक खालका खटिरा आएको छ वा रगत वा कफविकारका कारण जसको शरीरमा सुजन भएको छ त्यस्ता रोगमा बुद्धिमान् वैद्यले रातमा पनि लेप दल्ने कार्य गर्न सक्दछ ।

घाउखटिरामा लेप दल्ने नियम

**आदौ शोथहरो लेपो द्वितीयो रक्तसेचनः ।**
**तृतीयश्चोपनाहः स्याच्चतुर्थः पाटनक्रमः ॥७६॥**
**पञ्चमः शोधनो भूयात् षष्ठो रोपण इष्यते ।**
**सप्तमो वर्णकरणो व्रणस्यैते क्रमा(क्रमान्) मताः ॥७७॥**

घाउखटिराका कारण भएको सुजन ठिक गर्न पहिलो लेप दल्नू । त्यसपछि घाउखटिरामा जमेको रगत पगाल्नका लागि दोश्रो लेप दल्नू । अनि पसिना निकाल्नका लागि तेश्रो लेप दल्नू । घाउखटिरा फुटाउनका लागि चौथो लेप दल्नू । घाउखटिराको पिप आदि सुकाउन वा सफा गर्न पाँचौं लेप दल्नू । घाउखटिरा भर्नका लागि छैटौं लेपको प्रयोग गर्नू । घाउखटिरा आएका स्थानमा चमक लेराउन सातौं लेपको प्रयोग गर्नू । यसरी घाउखटिरामा दलिने लेपको क्रम जान्नू ।

घाउखटिराको वातजन्य सुजन नाशक लेप

**बीजपूरजटामांसी(हिंस्रा) देवदारु महौषधम् ।**
**रास्नाग्निमन्थो लेपोऽयं वातशोथविनाशनः ॥७८॥**

बिमिरोको जरा, जटामसी, देवदार, सुठो, फ्याक्सेकन्द र अरणी (गिनेरी)को जरा बराबर मात्रामा जम्मा पारी पानीमा पिँधेर लेप बनाई घाउखटिराको वातजन्य सुजन ठिक गर्न दल्नू ।



घाउखटिराको पित्तजन्य सुजन नाशक लेप

**मधुकं चन्दनं मूर्वा नलमूलञ्च पद्मकम् ।**
**उशीरं बालकं पद्मं पित्तशोथे प्रलेपनम् ॥७९॥**

जेठीमधु, रक्तचन्दन, मरुई लहरो, निगालोको जरा, पैयुँ, खस, सुगन्धवाल र कमल बराबर मात्रामा जम्मा पारी पानीमा पिसेर लेप बनाई घाउखटिराको पित्तजन्य सुजन ठिक गर्न दल्नू ।

घाउखटिराको कफजन्य सुजन नाशक लेप

**कृष्णा पुराणपिण्याकं शिग्रुत्वक्सिकता शिवा ।**
**मूत्रपिष्टः सुखोष्णोऽयं प्रदेहः श्लेष्मशोथहृत्(हा) ॥८०॥**

पिप्ला, पुरानो पिना, सैजनको बोक्रा, मिस्री र हर्रो बराबर मात्रामा लिई गहुँतमा पिसेर लेप बनाउनू र  घाउखटिराको कफजन्य सुजन ठिक गर्न यो प्रदेह नामक लेप दल्नू ।

आगन्तुक र रक्तजन्य सुजनको लेप

**द्वे निशे चन्दने द्वे च शिवा दूर्वा पुनर्नवा ।**
**उशीरं पद्मकं लोध्रं गैरिकञ्च रसाञ्जनम् ।।८१।।**
**आगन्तुके रक्तजे च शोथे कुर्यात् प्रलेपनम् ।**

हलेदो, चुत्रो, चन्दन, रक्तचन्दन, हर्रो, दूबो, पुनर्नवा, खस, पैयुँ, लोध, गेरु र रसाञ्जन बराबर मात्रामा लिई जलमा पिसेर बनाइएको लेप आगन्तुक र रक्तजन्य सुजन हटाउनका लागि दल्नू ।

घाउखटिरा पकाउने लेप

**शणमूलकशिग्रूणां फलानि तिलसर्षपाः ।।८२।।**

**सक्तवः किण्वमतसी प्रदेहः पाचनः स्मृतः ।**

सनपाटको गेडा, मूलाका गेडा, सैजनका गेडा, तिल, सर्सिउँ, जौको सातू, फलामको किट र आलसका गेडा बराबर मात्रामा लिई पिसेर लेप बनाई घाउखटिरा पकाउन दल्नू ।

घाउखटिरा फुटाउने लेप

**दन्ती चित्रकमूलत्वक्स्नुह्यर्कपयसी गुडः ।।८३।।**
**भल्लातकश्च(कास्थि) कासीसं सैन्धवं दारणे(णः) स्मृतः ।**

अजयपालको जरा, चितूको बोक्रा, दालचिनी, सिउँडीको दूध, सक्खर, भलायो, हिराकसी र सिधेनुन सबै बराबर मात्रामा मिसाएर धुलो पारी सिउँडी अथवा आँकको दूधमा पकाएर लेप बनाउनू र घाउमा दल्नू, घाउ फुट्‌दछ ।

घाउखटिरा फुटाउने अर्को लेप

**चिरबिल्लोऽग्निको दन्ती चित्रको हयमारकः ॥८४॥**
**कपोतकङ्कगृध्राणां मलं लेपेन दारणम् ।**

कुबेराक्षका गेडा, भलायो, अजयपालको जरा, चितूको बोक्रा र करवीरको जरा बराबर मात्रामा मिसाएर धुलो पार्नू । यसमा परेबा, कन्याङकुरुङ र गिद्धको विष्ठा बराबर मात्रामा मिसाउनू र लेप बनाई दल्नू । पाकेको खटिरो तुरुन्त फुट्दछ ।

घाउखटिरा फुटाउने तेश्रो लेप

**सर्जिकायावशूकाढ्याः क्षारा लेपेन दारणाः ॥८५॥**
**हेमक्षीर्यास्तथा लेपो व्रणे परमदारणः ।**

सज्जिखार र यवक्षारको लेप खटिरा फुटाउनका लागि प्रयोग गर्नू । यसैगरी सत्यानासी झार पिसेर दल्नाले पनि खटिरा फुट्दछ ।



घाउ सफा गर्ने लेप

**तिलसैन्धवयष्ट्याह्वनिम्बपत्रनिशायुगैः ॥८६॥**
**त्रिवृद्घृतयुतैः पिष्टैः प्रलेपो व्रणशोधनः ।**

तिल, सिधेनुन, जेठीमधु, नीमका पात, हलेदो, चुत्रो र सेतो निशोध बराबर मात्रामा लिई बेग्लाबेग्ले कुटेर धुलो पार्नू । त्यसपछि घिउमा मिसाएर लेप बनाई दल्नू । फुटेपछिको खटिरा सफा हुन्छ ।

घाउ सफा गर्ने र भर्ने लेप

**निम्बपत्रघृतक्षौद्रदार्वीमधुकसंयुतः ॥८७॥**
**तिलैश्च सह संयुक्तो लेपः शोधनरोपणः ।**

नीमको पात, घिउ, मह, चुत्रो, जेठीमधु र तिल मिसाएर लेप बनाई दल्नाले घाउ सफा भई चाँडै भरिन्छ ।

घाउखटिरामा पर्ने कीरा नाशक लेप

**करञ्जारिष्टनिर्गुण्डीलेपो हन्याद् व्रणकृमीन् ॥८८॥**
**लशुनस्याथवा लेपो हिङ्गुनिम्बभवोऽथवा ।**

कुबेराक्ष, नीम र नेवारी : यी तीन वटैको पातलाई पिँधेर दल्नाले घाउका कीरा मार्दछ । अथवा लसुन मात्र पिँधेर दल्नाले अथवा हिङ र नीमका पात मिसाएर पिसी दल्नाले खटिरामा पर्ने कीरा मर्दछ ।

घाउ सफा गर्ने र भर्ने दोश्रो लेप

**निम्बपत्रं तिला दन्ती त्रिवृत्सैन्धवमाक्षिकम् ॥८९॥**
**दुष्टव्रणप्रशमनो लेपः शोधनरोपणः ।**



नीमका पात, तिल, अजयपाल, सेतो निसोध र सिधेनुन बराबर मात्रामा लिई महमा मिसाएर लेप बनाई दल्नाले खराब खटिरामा दल्नाले खटिरा शान्त हुने, सफा गर्ने र भर्ने काम गर्दछ ।

शूल नाशक लेप

**मदनस्य फलं तिक्तां पिष्ट्वा काञ्जिकवारिणा ॥९०॥**
**कोष्णं कुर्यान्नाभिलेपं शूलशान्तिर्भवेत्ततः ।**

मैनफल र कुटकी बराबर मात्रामा लिई काँजीमा पिँधेर लेप बनाई नाइटोमा दल्नू पेटको शूल ठिक हुन्छ ।

वातजन्य विद्रधि नाशक लेप

**शिग्रुशेफालिकैरण्डयवगोधूममुद्गकैः ॥९१॥**

**सुखोष्णो बहलो लेपः प्रयोज्यो वातविद्रधौ ।**

सैजनको बोक्रा, नेवारीको पात, अरिडको जरा, जौ, गहुँ र मुगी बराबर मात्रामा लिई पानीमा पिँधेर लेप बनाउनू । यसलाई तताएर सहँदो तातो लेप बनाई वातजन्य विद्रधिमा दल्नू ।

पित्तजन्य विद्रधि नाशक लेप

**पैत्तिके सर्पिषा लाजामधुकैः शर्करान्वितैः ॥९२॥**
**प्रलिम्पेत् क्षीरपिष्टैर्वा पयस्योशीरचन्दनैः ।**

बासमती धानको लाजा र जेठीमधुको धुलो तथा मिस्री घिउमा साँधेर लेप बनाएर दल्नू । अथवा दूधे कल्छे लहरो (नपाउँदा अश्वगन्धा), खस र रक्तचन्दनलाई दूधमा पिँधेर लेप बनाई दल्नाले पित्तजन्य विद्रधि रोग नाश हुन्छ ।

कफजन्य विद्रधि नाशक लेप



**इष्ट(ष्टि)का सिकता लोहकिट्टं गोशकृता सह ॥९३॥**
**सुखोष्णश्च (णः स्यात) प्रदेहोऽयं मूत्रैः स्याच्छ्लेष्मविद्रधौ ।**

ईँट, बालुवा, फलामको कीट र गाईको गोबर बराबर मात्रामा लिई गहुँतमा पिँधेर प्रदेह नामक लेप बनाउनू । यो लेप दल्नाले कफजन्य विद्रधि निको हुन्छ ।

आगन्तुक विद्रधि नाशक लेप

**रक्तचन्दनमञ्जिष्ठानिशामधुकगैरिकैः ॥९४॥**
**क्षीरेण विद्रधौ लेपो रक्तागन्तुनिमित्तजे ।**

रक्तचन्दन, मजिठो, हलेदो, जेठीमधु र गेरु बराबर मात्रामा जम्मा पारी दूधमा पिँधी लेप बनाउनू । यो लेप चोटपटक आदिले रगत बिग्रेर हुने विद्रधिमा दल्नू ।

वातजन्य गलगाँड नाशक लेप

निचुलः शिग्रुबीजानि दशमूलमथापि वा ॥९५॥
प्रदेहो वातगण्डेषु सुखोष्णः सम्प्रदीयते ।

भुइँबेत र सैजनका गेडाको पानीमा रगडेर बनाइएको प्रदेह नामक लेप सहन सक्ने तातो बनाएर वातजन्य गलगाँड ठिक गर्नका लागि दल्नू । अथवा दशमूल पिँधेर लेप बनाई दल्नू ।

कफजन्य गलगाँड नाशक लेप

देवदारु विशाला च कफगण्डे प्रदेहकः ॥९६॥

देवदार र ऐरेलुको जरा पानीमा पिसेर बनाइएको प्रदेह नामक लेप कफजन्य गलगाँडमा दल्नू ।



अपची नाशक लेप

सर्षपारिष्टपत्राणि दग्ध्वा भल्लातकैः सह ।
छागमूत्रेण सम्पिष्टमपचीघ्नं प्रलेपनम् ॥९७॥

सर्सिउँ, नीमका पात र भलायो बराबर मात्रामा लिई पोलेर खरानी बनाउनू । तब यो खरानीलाई बोकाको मूत्रमा पिसेर अपचीरोग ठिक गर्न दल्नू ।

गण्डमाला आदि रोगमा दलिने लेप

सर्षपाः शिव(ग्रु)बीजानि शणबीजातसीयवान्(वाः) ।
मूलकस्य च बीजानि तक्रेणाम्लेन पेषयेत् ॥९८॥
गण्डमालाऽर्बुदं गण्डं लेपेनानेन शाम्यति ।

सर्सिउँ, मौलसिरीका गेडा, सनपाटका गेडा, आलसका गेडा, जौ र मूलाका गेडा बराबर मात्रामा जम्मा पारी तक्रमा पिसेर लेप बनाउनू । यो लेपलाई गण्डमाला, अर्बुद र गलगाँड ठिक गर्न दल्नू ।

गृध्रसी आदि रोगमा दलिने लेप

तक्षयित्वा क्षुरेणाङ्गं केवलानिलपीडितम् ॥९९॥
तत्र प्रदेहं दद्याच्च पिष्टं गुञ्जाफलैः कृतम् ।
तेनापबाहुजा पीडा विश्वाची गृध्रसी तथा ॥१००॥
अन्याऽपि वातजा पीडा प्रशमं याति वेगतः ।

वातरोगले मात्र पीडित भएका मानिसको पीडा हुने अङ्गमा रौं खौरनू र रातीगेडीलाई पानीमा घोटेर लेप बनाई दल्नू । यसले अपबाहुक, विश्वाची, गृध्रसी र अन्य वातरोगका पीडा पनि अति चाँडो नाश गर्दछ ।



हात्तीपाइले रोगमा दलिने लेप

धत्तूरैरण्डनिर्गुण्डीवर्षाभूशिग्रुसर्षपैः ॥१०१॥
प्रलेपः श्लीपदं हन्ति चिरोत्थमपि दारुणम् ।

धतुरोको पात, अरिडको पात, नेवारीका पात, जरो सहितको पुनर्नवा, सैजनको बोक्रा र सर्सिउँ बराबर मात्रामा लिई पिँधेर लेप बनाई गोडा सुन्निने पुरानो रोग निको पार्न दल्नू ।

अण्डकोष वृद्धिमा दलिने लेप

आजाजीहपुषाकुष्ठमेरण्डबदरान्वितम् ॥१०२॥
काञ्जिकेन तु सम्पिष्टं कुरण्डघ्नं प्रलेपनम् ।

जीरा, हपुषा, कूट, अरिडको जरा र बर्रोको बोक्रा बराबर मात्रामा जम्मा पारी काँजीमा पिँध्नू र लेप बनाउनू । यो लेप अण्डकोष वृद्धि रोग हटाउन दल्नू ।

भिरिङ्गी रोगको लेप

**करवीरस्य मूलेन परिपिष्टेन वारिणा ॥१०३॥**
**असाध्याऽपि व्रजत्यस्तं लिङ्गोत्था रुक्प्रलेपनात् ।**

करवीर (कडेल) जरालाई पानीमा पिँधेर दल्नाले पुरुषको जननेन्द्रियमा हुने कडाभन्दा कडा भिरिङ्गी रोग पनि ठिक हुन्छ ।

भिरिङ्गी रोगको अर्को लेप

**दहेत्कटाहे त्रिफलां सा मषी मधुसंयुता ॥१०४॥**
**उपदंशे प्रलेपोऽयं सद्यो रोपयति व्रणम् ।**

त्रिफलालाई कराहीमा भुटेर डढाई खरानी बनाउनू । यो खरानी महमा मिसाएर लेप बनाई दल्नाले पनि भिरिङ्गीका घाउ तुरुन्त भरिन्छन् ।



भिरिङ्गी रोगको अर्को लेप

**रसाञ्जनं शिरीषेण पथ्यया च समन्वितम् ॥१०५॥**
**सक्षौद्रं लेपनं योज्यमुपदंशगदापहम् ।**

रसाञ्जन, शिरिषको बोक्रा र हर्रो बराबर मात्रामा लिई धुलो बनाउनू महमा फिटेर लेप बनाउनू । यो लेप दल्नाले भिरिङ्गी रोग निको हुन्छ ।

आगोले पोलेकोमा दलिने लेप

**अग्निदग्धे तुगाक्षीरीप्लक्षाचन्दनगैरिकैः ॥१०६॥**
**सामृतैः सर्पिषा स्निग्धैरालेपं कारयेद्भिषक् ।**
**तन्दुलीयकषायैर्वा घृतमिश्रैः प्रलेपयेत् ॥१०७॥**

वंशलोचन, पारिसपीपल, रक्तचन्दन, गेरु र गुर्जो बराबर मात्रामा जम्मा पारी धुलो बनाउनू । यो धुलोलाई घिउमा फिटेर लेप बनाई वैद्यले आगोले पोली घाउ भएका स्थानमा दल्नू । अथवा कालीकाठको काँढापानी पकाएर त्यसमा घिउ मिसाई लेप बनाएर दल्नू ।

### आगोले पोलेकोमा दलिने अन्य लेप

**यवान्दग्ध्वा मषी कार्या तैलेन युतया तथा ।**
**दद्यात् सर्वाग्निदग्धेषु प्रलेपो व्रणरोपणः ॥१०८॥**

जौलाई डढाएर खरानी बनाई त्यो खरानी तिलको तेलमा मिसाएर लेप बनाउनू । यो लेप दल्नाले आगोले पोलेर बनेका सबै किसिमका घाउ चाँडै भरिन्छ र जस्ताको तस्तै हुन्छ ।

### स्त्री जननेन्द्रियको लेप

**पलाशोदुम्बरफलैस्तिलतैलसमन्वितैः ।**
**मधुना योनिमालिम्पेद्गाढीकरणमुत्तमम् ॥१०९॥**



पलाश र डुम्रीका गेडा बराबर मात्रामा मिसाई धुलो बनाएर तिलको तेल र महमा फिट्नू । यो लेप दल्नाले स्त्रीको जननेन्द्रिय सक्रिय र साँघुरो हुन्छ ।

### स्त्री जननेन्द्रियको अर्को लेप

**माकन्दफलसंयुक्तमधुकर्पूरलेपनात् ।**
**गतेऽपि यौवने स्त्रीणां योनिर्गाढाऽतिजायते ॥११०॥**

आँपको कोया भित्रको गुदी र कपूर धुलो बनाई महमा मिसाएर दल्नाले बूढी स्त्रीको पनि जननेन्द्रिय साँघुरो र सक्रिय हुन्छ ।

### पुरुष जननेन्द्रिय तथा स्त्रीको स्तन वृद्धि गर्ने लेप

**मरिचं सैन्धवं कृष्णा तगरं बृहतीफलम् ।**

अपामार्गस्तिलाः कुष्ठं यवा माषाश्च सर्षपाः ॥१११॥
अश्वगन्धा च तच्चूर्णं मधुना सह योजयेत् ।
अस्य सन्ततलेपेन मर्दनाच्च प्रजायते ॥११२॥
लिङ्गवृद्धिः स्तनोत्सेधः संहतिर्भुजकर्णयोः ।

कालो मरिच, सिधेनुन, पिप्ला, तगर, ठूलो बिहीको फल, दतिवनका गेडा, कूट, जौ, माष, सर्सिउँ र अश्वगन्धा बराबर मात्रामा जम्मा पारी धुलो बनाउनू । यो धुलो महमा मिसाएर लेप बनाउनू । यो लेप सधैं दलेर मालिश गर्नाले पुरुषको जननेन्द्रिय मोटो हुन्छ । यसरी यसले स्त्रीका स्तन, हात र कान पनि माटो पार्दछ ।

पुरुष जननेन्द्रिय वृद्धि गर्ने अर्को लेप

सिताऽश्वगन्धासिन्धूत्थछागक्षीरैर्घृतं पचेत् ॥११३॥
तल्लेपान्मर्दनाल्लिङ्गवृद्धिः सञ्जायते परा ।



सेतो फूल फुल्ने अश्वगन्धा र सिधेनुन बराबर मात्रामा जम्मा पारी बेग्लाबेग्लै कुटेर धुलो बनाउनू । धुलोको चौबर घिउ र घिउको चौबर बाख्रीको दूध मिसाएर पकाउनू । जब दूध सुकेर घिउ मात्र बाँकी रहन्छ तब झिक्नू । यो घिउ दलेर मालिश गर्नाले पुरुषको जननेन्द्रिय मोटो हुन्छ ।

स्त्री जननेन्द्रिय सम्बन्धी लेप

इन्द्रवारुणिकापत्ररसैः सूतं विमर्दयेत् ॥११४॥
रक्तस्य करवीरस्य काष्ठेन च मुहुर्मुहुः ।
तल्लिप्तलिङ्गसंयोगाद्योनिद्रावोऽभिजायते ॥११५॥

ऐरेलुका पातका रस निकाली त्यसमा पारो मिसाउनू । यसलाई रातो फूल फुल्ने करवीरको काठले घोट्नू । यसरी पटकपटक गर्नाले अर्थात् रस सुक्दै जान्छ थप्दै पारो घोट्दै पाँच

सात पटक गरेपछि जुन लेप बन्दछ त्यो लेप पुरुषले आफ्नो जननेन्द्रियमा लेप गर्नू । यसपछि ग्राम्यधर्ममा संलग्न हुनासाथ पुरुषको भन्दा स्त्रीको चाँडो स्खलन हुन्छ ।

### शरीरको दुर्गन्ध हटाउने लेप

**ताम्बूलपत्रचूर्णन्तु चूर्णं कुष्ठशिवाभवम् ।**
**वारिणा लेपनं कुर्याद्गात्रदौर्गन्ध्यनाशनम् ॥११६॥**

पानको पात, कूट र हर्रो बराबर मात्रामा लिई धुलो बनाउनू । त्यसपछि पानीमा मिसाएर लेप बनाई शरीरमा दल्नाले शरीरको दुर्गन्ध नाश हुन्छ ।

### पसिनाको गन्ध हटाउने लेप

**कुलित्थसक्तवः कुष्ठं मांसी चन्दनजं रजः ।**
**सक्तवश्चणकस्यैव त्वक्चैवैकत्र कारयेत् ॥११७॥**
**स्वेददौर्गन्ध्यनाशश्च जायतेऽस्यावधूलनात् ।**

गहतको पिठो, कूट, जटामसी, सेतोचन्दन र चनाको सातू बराबर मात्रामा जम्मा पारी धुलो बनाउनू । यो धुलो दलेर शरीर मालिश गर्नाले पसिना आउन बन्द भई शरीरमा पसिना गनाउने समस्या समाधान हुन्छ ।

### वशीकरण लेप

**वचा सौवर्चलं कुष्ठं रजन्यौ मरिचानि च ॥११८॥**
**एतल्लेपप्रभावेण वशीकरणमुत्तमम् ।**

बोझो, सौंचर नुन, कूट, हलेदो, चुत्रो र कालो मरिच बराबर मात्रामा लिई पानीमा पिसेर लेप बनाउनू । यो लेप वशीकरणका लागि उत्तम हुन्छ ।

### टाउकामा तेल दल्ने विधि
### टाउकामा दल्ने तेलका प्रकार

**अभ्यङ्गः परिषेकश्च पिचुर्बस्तिरिति क्रमात् ॥११९॥**
**मूर्धतैलश्चतुर्धा स्याद्बलवच्च यथोत्तरम् ।**

अभ्यङ्ग (तेल दलेर माड्नू), परिषेक (तेल छर्कनू), पिचु (कपास वा कपडा तेलले भिजाएर बाँध्नू) र वस्ति (छालाको थैलो बनाएर तेल हाली बोक्नू) गरी चार किसिमका टाउकामा तेल दल्ने विधि हुन्छन् । यी क्रमशः प्रभावकारी हुन्छन् ।

### शिरोवस्ति

**त्रयोऽभ्यङ्गादयः पूर्वे प्रसिद्धाः सर्वतः स्मृताः ॥१२०॥**
**शिरोबस्तिविधिश्चात्र प्रोच्यते सुज्ञसम्मतः ।**

पहिला तीन विधि सबैतिर प्रसिद्ध छन् (त्यसैले थप बताइएन) । यसैले सबैतिर नबताइएको

विज्ञसम्मत शिरोवस्तिको विधिका बारेमा बताउँदछु ।

### शिरोवस्ति विधि

**शिरोवस्तिश्चर्मणःस्याद् द्विमुखो द्वादशाङ्गुलः ॥१२१॥**
**शिरः प्रमाणं तं बद्ध्वा मस्तके माषपिष्टकैः ।**
**सन्धिरोधं विधायादौ(सु) स्नेहैः कोष्णैः प्रपूरयेत् ॥१२२॥**

टाउकामा बोकिने वस्ति हरिण आदिको छालाको बनाउनू । टोपी जस्तो बाह्र अमल अग्लो थैलो बनाएर त्यसमा दुई मुख बनाउनू । यी दुई मुखमध्ये तल्लो मुख निधारमा आइपुगोस् र माथ्लो मुख सानो होस् । यो छालाको टोपीलाई लगाई दिएर टोपीका चारैतिर माषको पिठो दलेर जोर्नी बन्द गर्नू । यसपछि सहन सक्ने तातो चिल्लो त्यो वस्तिको माथ्लो भागमा भरी दिनू ।

### शिरोवस्ति राख्ने समय

**तावद्धार्यस्तु यावत्स्यान्नासानेत्रमुखस्रुतिः ।**
**वेदनोपशमो वाऽपि मात्राणां वा सहस्रकम् ॥१२३॥**

जबसम्म चिल्लो बगेर नाक, आँखा र मुखसम्म पुग्दैन तबसम्म अथवा टाउकोसम्बन्धी पीडा नाश नहुँदासम्म अथवा वस्तिसम्न्धी विधि बताइएको अध्यायको अनुवासन वस्ति गर्ने विधिमा भनेझैं एक हजार मात्रासम्म टाउकामा वस्ति धारण गर्नू ।

### शिरोवस्ति प्रयोग गर्ने समय

**विना भोजनमेवात्र शिरोवस्तिः प्रशस्यते ।**
**प्रयोज्यस्तु शिरोवस्तिः पञ्चसप्ताहमेव वा ॥१२४॥**

शिरोवस्ति खालीपेटमा गर्नु उत्तम हुन्छ । यो शिरोवस्तिको कार्य पाँच वा सात दिन बिराएर गर्नु पर्दछ ।



### शिरोवस्ति पछिका कर्म

**विमोच्य शिरसो वस्तिं गृह्णीयाच्च समन्ततः ।**
**उर्ध्वकायन्ततः कोष्णनीरैः स्नानञ्च कारयेत् ॥१२५॥**

शिरोवस्ति चारैतिरबाट एकैपटक निकाल्नु पर्दछ । यसरी वस्ति निकालेपछि मनतातो पानीले नुहाउनू ।

### शिरोवस्ति का फाइदा

**अनेन दुर्जया रोगा वातजा यान्ति सङ्क्षयम् ।**
**शिरः कम्पादयस्तेन सर्वकालेषु युज्यते ॥१२६॥**

शिरोवस्तिले उपचार गर्न कठिन हुने, टाउको काँप्ने आदि जस्ता वातजन्य रोग ठिक हुन्छ । यसैले यो उपचार जुनसुकै बेलामा पनि गर्न सकिन्छ ।

कानमा तेल आदि हाल्ने विधि

**स्वेदयेत् कर्णदेशन्तु किञ्चिन्नुः पार्श्वशायिनः ।**
**मूत्रैः स्नेहै रसैः कोष्णैस्ततः श्रोत्रं प्रपूरयेत् ॥१२७॥**

मानिसलाई केही कोल्टे पारेर सुताई कानका वरिपरि पसिना निकाल्नू । यसपछि गहुँत आदि वा ओखतीको रस सहन सक्ने तातो बनाएर कानमा हाल्नू ।

कानमा औषधी हालेर बस्ने अवधि

**कर्णं च पूरितं रक्षेच्छतं पञ्चशतानि वा ।**
**सहस्रं वाऽपि मात्राणां श्रोत्रकण्ठशिरोगदे ॥१२८॥**



कानका रोग, घाँटीका रोग र टाउकाका रोग ठिक गर्न कानमा हालिने यस्तो ओखती सय मात्रा, पाँच सय मात्रा अथवा एक हजार मात्रासम्म रहन दिनू ।

कानमा हालिने ओखतीमा मात्राको परिभाषा

**स्वजानुनः करावर्तं कुर्याच्छोटिकया युतम् ।**
**एषा मात्रा भवेदेका सर्वत्रैवैष निश्चयः ॥१२९॥**

आफ्ना घुँडाका चारेतिर हात घुमाई चुटकी बजाउन जति समय लाग्दछ त्यसलाई एक मात्रा भनिन्छ । यसलाई सर्वत्र लागू गर्नू ।

कानमा ओखती हाल्ने समय

**रसाद्यैः पूरणं कर्णे भोजनात्प्राक्प्रशस्यते ।**
**तैलाद्यैः पूरणं कर्णे भास्करेऽस्तमुपागते ॥१३०॥**

कानमा ओखतीको रस हाल्ने भए खाना खानु अघि हाल्नू । तेल आदि ओखती हाल्ने भए सूर्य अस्ताएर रात परेपछि हाल्नू ।

### कर्णशूल नाशक रस

**पीतार्कपत्रमाज्येन लिप्तं वह्नौ प्रतापयेत् ।**
**तद्रसः श्रवणे क्षिप्तः कर्णशूलहरः परः ॥१३१॥**

आँकका पहेँला पातमा घिउ दलेर आगोमा सेकाउनू । त्यसपछि यसको रस निकालेर कानमा हाल्नू । कान दुखेको निको हुन्छ ।

### कर्णशूलमा बोकाको मूत्रको प्रयोग

**कर्णशूलातुरे कोष्णं बस्तमूत्रं ससैन्धवम् ।**
**निःक्षिपेत्तेन शाम्यन्ति शूलपाकादिका रुजः ॥१३२॥**



बोकाको मूत्रमा सिधेनुन मिसाई हलुका तताउनू । यसलाई सहँदो तातोमै कानमा हाल्नाले पनि कानदुख्ने, घाउ हुने र पाक्ने रोग निको हुन्छ ।

### कर्णशूल नाशक अन्य विधिहरु

**शृङ्गबेरञ्च मधुकं मधु सैन्धवमामलम् ।**
**तिलपर्णीरसस्तैलं टङ्कणं निम्बुकद्रवम् ॥१३३॥**
**कदुष्णं कर्णयोर्देयमेतद्वा वेदनापहम् ।**

अदुवाको रस, जेठीमधु, मह, सिधेनुन, अमला, रक्तचन्दन, सर्सिउँको तेल, सुहागा र नीमको रस बराबर मात्रामा जम्मा पारी केही तताएर कानमा हाल्नू । कान दुख्न ठिक हुन्छ ।

**कपित्थमातुलुङ्गाम्लशृङ्गबेररसैः शुभैः ॥१३४॥**

**सुखोष्णैः पूरयेत्कर्णं कर्णशूलोपशान्तये ।**

खयरको फलको रस, बिमिरोको रस, अम्लवेतको रस (नपाउँदा चनाको खार) र अदुवाको रस  मिसाएर केही तताई कान दुखेको निको पार्न कानमा हाल्नू ।

**अर्काङ्कुरानम्लपिष्टाँस्तैलाक्ताँल्लवणान्वितान् ॥१३५॥**
**सन्निदध्यात् स्नुहीकाण्डे कोरितेतच्छदावृते ।**
**पुटपाकक्रमं कृत्वा रसैस्तच्च प्रपूरयेत् ॥१३६॥**
**सुखोष्णैस्तेन शाम्यन्ति कर्णपीडाः सुदारुणाः ।**

आँकका मुनाका कमला पातलाई कागतीको रसमा पिसेर त्यसमा अलिकति तिलको तेल र सिधेनुन हाली गोली बनाउनू । यसपछि आलो सिउँडीमा भित्र प्वाल पारी यो गोली त्यसभित्र राख्नू । यसको चारैतिर सिउँडीकै पात बेरी बाँध्नू । यसमाथि गिलो माटोले लेप्नू । एकछिन सुकाउनू । यसलाई कचौरा जस्ता दुई माटाका भाँडा लिई एउटामा राख्नू र अर्कोले मुख बन्द गरी मुख फेरी हिलो माटोले टाल्नू । फेरी एकछिन सुकाउनू । यसपछि मन्द आँचमा केहीबेर पकाउनू । अनि गोलीलाई बाहिर निकाल्नू र त्यसमा बेरिएका पात आदि हटाउनू ।  सिँउडी सहित निचोरेर रस निकाल्नू । यसलाई आगोमा हल्का तताएर कानमा हाल्नू । अत्यन्त धेरै कान दुख्ने रोग पनि ठिक हुन्छ ।



**महतः पञ्चमूलस्य काण्डान्यष्टाङ्गुलानि तु ॥१३७॥**
**क्षौमेणावेष्ट्य संसिच्य तैलेनापीड(दीप)येत्ततः ।**
**यत्तैलं च्यवते तेभ्यः सुखोष्णन्तेन पूरयेत् ॥१३८॥**
**ज्ञेयं तद्दीपिकातैलं सद्यो गृह्णाति वेदनाम् ।**
**एवं स्याद्दीपिकातैलं कुष्ठे देवतरौ तथा ॥१३९॥**

बृहत् पञ्चमूलको जरा आठ आठ अमल लिनू । त्यसलाई रेसमको कपडामा अथवा अन्य कपडामा बेरी तेलमा भिजाउनू र आगोमा पोल्नू । यसो गर्दा तेल तलतिर तप्कने गरी जरालाई ठाडो पारेर समाउनू । त्यो तेल थापी हलुका तातो पारेर कानमा हाल्नाले कानको

दुखाई तुरुन्त निको हुन्छ । यसलाई दीपिका तेल भनिन्छ । यसरी नै कूट वा देवदारको तेल निकालेर कानमा हाल्नाले पनि कानको दुखाई ठिक हुन्छ ।

**तैलं स्योनाकमूलेन मन्देऽग्नौ परिपाचितम् ।**
**हरेदाशु त्रिदोषोत्थं कर्णशूलं प्रपूरणात् ॥१४०॥**

टटेलोको जरालाई पिँधेर लेप बनाउनू । त्यसमा लेपको चौबर तिलको तेल तथा लेपको चौबर नै पानी हाली मन्द मन्द आँचमा पकाउनू । पानी सुकेर तेलमात्र बाँकी भएपछि झिक्नू र छानेर कुनै सिसिमा हाल्नू । यो तेल कानमा हाल्नाले त्रिदोषजन्य कानको दुखाई ठिक हुन्छ ।

### कान गुञ्जेको ओखती

**कल्कक्वाथेन यष्ट्याह्वकाकोलीमाषधान्यकैः ।**
**सूकरस्य वसां पक्त्वा कर्णनादार्तिहारिणी(नाशिनी) ॥१४१॥**



जेठीमधु, कल्छे लहरो (नपाउँदा अश्वगन्धा), माष र धनियाँ बराबर मात्रामा लिई काँढापानी पकाउनू र त्यो काँढापानीमा यिनै ओखती बराबर मात्रामा घोटेर मिसाउनू । यसपछि सुँगुरको बोसो हालेर पुनः पकाउनू । चिल्लो मात्र बाँकी भएपछि झिक्नू । यसलाई कानमा हाल्नाले कान गुञ्जन बन्द हुन्छ ।

### कानका रोगमा स्वर्जिकादि तेल

**सर्जिका मूलकं शुष्कं हिङ्गु कृष्णासमन्वितम् ।**
**शतपुष्पा च तैस्तैलं पक्वं शुक्तश्चतुर्गुणम् ॥१४२॥**
**प्रणादं शूलबाधिर्यं स्रावं कर्णस्य नाशयेत् ।**

सज्जिखार, सुकेको मूला, हिङ, पिप्ला र सुप बराबर मात्रामा लिई पिँधेर लेप बनाउनू । लेपको चौबर तिलको तेल यसमा मिसाउनू । पुनः लेपकै चौबर सूक्त पनि यसैमा मिसाउनू

। यसपछि यसलाई पकाउनू । तेलमात्र बाँकी भएपछि झिकेर छान्नू र कुनै उत्तम भाँडामा हाल्नू । यो तेल कानमा हाल्नाले कान बज्ने, दुख्ने र पाकेर पीप बग्ने रोग ठिक हुन्छ ।

बहिरोपनमा अपामार्गक्षार तेल

**अपामार्गक्षारजले तत्क्षारं कल्कितं क्षिपेत्॥१४३॥**
**तेन पक्वं जयेत्तैलं बाधिर्यं कर्णनादकम् ।**

दतिवन पोलेर खरानी बनाई कुनै माटाको भाँडामा हाल्नू । यसमा खरानीको चौबर पानी हाली रातको चार प्रहरसम्म त्यत्तिकै रहन दिनू । बिहान माथिको पानी सरक्क फलामको कराहीमा खन्याउनू । जति हुन्छ त्यसको एक चौथाई तिलको तेल हाल्नू । अनि मन्द आँचमा पकाउनू । जब तेलमात्र बाँकी हुन्छ तब झिकी छानेर कुनै भाँडामा हाली राख्नू । यो तेल कानमा हाल्नाले बहिरोपन र कान बज्ने समस्या ठिक हुन्छ ।

कानका खटिरामा शम्बूकतैल



**शम्बूकस्य तु मांसेन पचेत्तैलन्तु सार्षपम्॥१४४॥**
**तस्य पूरणमात्रेण कर्णनाडी प्रशाम्यति ।**

सिपी वा सानो शङ्ख, त्यसको मासु र मासुको चौबर सर्सिउँको तेल लिनू । तेलमा मासु हालेर पकाउनू । पाकेपछि मासु निकालेर तेलमात्र छान्नू । यो तेल हाल्नाले कानभित्र आउने खटिरा ठिक हुन्छ ।

कानबाट पीप आदि बगेको ओखती

**चूर्णं पञ्चकषायाणां कपित्थरसमेव च॥१४५॥**
**कर्णस्रावे प्रशंसन्ति पूरणं मधुना सह ।**

पाँच कषाय (तल बताइएका) को धुलो बनाउनू । यसलाई खयरको रसमा मिसाएर अलिकति मह हाली फिट्नू । कानबाट पीप आदि बहने रोग निको पार्न यसलाई कानमा हाल्नू ।

### पञ्च कषाय

**तिन्दुकान्यभया लोध्रः समङ्गा चामलक्यपि ॥१४६॥**
**ज्ञेयाः पञ्चकषायास्तु कर्मण्यस्मिन्भिषग्वरैः ।**

तिन्दु, हरो, लोध, मजिठो र अमलालाई कानका रोगका लागि पञ्चकषाय भनी श्रेष्ठ वैद्यले जान्नू ।

### कानबाट पीप आदि बग्दाको अर्को ओखती

**सर्जिकाचूर्णसंयुक्तं बीजपूररसं क्षिपेत् ॥१४७॥**
**कर्णस्रावरुजो दाहाः प्रणश्यन्ति न संशयः ।**

सज्जीखारको धुलोलाई बिमिरोको रसमा फिटेर कानमा हाल्नाले कानबाट पीप आदि बहने रोग र दुखाई ठिक हुन्छ ।



### कानबाट पीप आदि बग्दाको अर्को ओखती

**आम्रजम्बूप्रवालानि मधूकस्य वटस्य च ॥१४८॥**
**एभिः संसाधितं तैलं पूतिकर्णोपशान्तिकृत् ।**

आँप, जामुनु, महुवा र बरोंको कमला पातलाई पिँधेर लेप बनाउनू । यसमा लेपको चौबर तिलको तेल हालेर पकाउनू । तेलमात्र बाँकी भएपछि झिकेर छान्नू । यो तेल कानमा हाल्नाले कानबाट पीप आदि बग्ने रोग शान्त हुन्छ ।

### कानका कीरा नाशक ओखती

**पूरणं हरितालेन गवां मूत्रयुतेन च ॥१४९॥**
**अथवा सार्षपं तैलं कर्णकीटहरं परम् ।**

हरितालल्लाई गहुँतमा ढड्याएर घोटी कानमा हाल्नाले अथवा सर्सिउँको तेल कानमा हाल्नाले कानका कीरा मर्दछन् ।

कानका कीरा नाशक अन्य ओखती

**स्वरसं शिग्रुमूलस्य सूर्यावर्तरसन्तथा ॥१५०॥**
**त्र्यूषणञ्चूर्णितञ्चैव कपिकच्छूरसन्तथा ।**
**कृत्वैकत्र क्षिपेत्कर्णे कर्णकीटहरं परम् ॥१५१॥**

सैजनको बोक्राको रस, हुहुरेको रस, सुठो-मरिच र पिप्लाको रस तथा काउछोको जराको रस मिसाएर यसमा त्रिकटुको रस मिसाउनू । यो रस हाल्नाले कानका कीरा नाश हुन्छ ।

कानका कीरा नाशक अर्को ओखती

**सद्यो मद्यं निहन्त्याशु कर्णकीटं सुदारुणम् ।**
**सद्यो हिङ्गुनिहन्त्याशु कर्णकीटं सुदारुणम् ॥१५२॥** (कुनै प्रतिमा यो श्लोक छैन)

हिँग वा मद्यमध्ये कुनै एकको रस कानमा हाल्नाले पनि कानका कीरा मर्दछन् ।

इति श्रीदामोदरसूनुनाशार्ङ्गधरेण विरचितायां संहितायामुत्तरखण्डे लेपमूर्धतैलकर्णपूरणविधिर्नामैकादशोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत एघारौँ अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-२,११५+१५२=२,२६७

✷

# अथ द्वादशोऽध्यायः
## बाह्रौं अध्याय

### शरीरबाट रगत बगाउने (झिक्ने) कार्य

**शोणितं स्रावयेज्जन्तोरामयं प्रसमीक्ष्य च ।**
**प्रस्थं प्रस्थार्धकं वाऽपि प्रस्थार्धार्धमथापि वा ॥१॥**

मानिसको शरीरमा रगतजन्य कुष्ठरोग आदिजस्ता रोगलाई हेरी एक प्रस्थ, आधा प्रस्थ वा एक कुडव रगत झिक्नू ।

### रगत झिक्ने समय र यसबाट हुने फाइदा

**शरत्काले स्वभावेन कुर्याद्रक्तस्रुतिन्नरः ।**
**त्वग्दोषग्रन्थिशोथाद्या न स्यू रक्तस्रुतेर्यतः ॥२॥**



स्वभावतः शरीरबाट रगत निकाल्ने कार्य शरद् ऋतुमा गर्नू । यसरी रगत निकाल्नाले छालासम्बन्धी रोग, खटिरा आदि गाँठा तथा सुजन जस्ता रोग नाश हुन्छन् ।

### रगतको स्वरूप

**मधुरं वर्णतो रक्तमशीतोष्णन्तथा गुरु ।**
**शोणितं स्निग्धविस्रं स्याद्विदाहश्चास्य पित्तवत् ॥३॥**

रगत रसमा मिठो, वर्णमा रातो, मन्द तातो, अति चिल्लो र आम गन्धको हुन्छ । यसको विदाह गर्ने शक्ति पित्तको समान हुन्छ ।

### रगतमा हुने पञ्चमहाभूतका गुण

**विस्रता द्रवता रागश्चलनं विलयस्तथा ।**
**भूम्यादिपञ्चभूतानामेते रक्तगुणाः स्मृताः ॥४॥**

रगतमा आमको जस्तो गन्ध पृथ्वीको, तरलता एवं पातलोपन जलको, रातोपना अग्निको, गति वायुको र मिल्ने गुण आकाशको हुन्छ ।

### खराब रगतका लक्षण

**रक्ते दुष्टे वेदना स्यात्पाको दाहश्च जायते ।**
**रक्तमण्डलता कण्डूः शोथश्च पिटिकोद्गमः ॥५॥**

रगतमा खराबी भएपछि मानिसलाई जीउ दुख्ने, अङ्गमा पाकेको जसरी डाह हुने तथा शरीरमा रगतका चक्का जस्ता दाग देखिने, चिलाउने, सुन्निने फोका उठ्ने गर्दछ ।

### रगत बढेको लक्षण

**वृद्धे रक्ताङ्गनेत्रत्वं शिराणां पूरणन्तथा ।**
**गात्राणां गौरवं निद्रा मदो दाहश्च जायते ॥६॥**



शरीरमा रगतको मात्रा बढी भएपछि शरीर र आँखा राता हुन्छन्, धमनी आदि नसा भरिएका वा फुलेका देखिन्छन् । शरीर भारी हुन्छ, निद्रा लाग्दछ, झुम्म नसा लागेजस्तो हुने गर्दछ र डाह हुन्छ ।

### रगत कम भएको लक्षण

**क्षीणेऽम्लमधुराकाङ्क्षा मूर्च्छा च त्वचि रूक्षता ।**
**शैथिल्यञ्च शिराणां स्याद्वातादुन्मार्गगामिता ॥७॥**

शरीरमा रगत कम भएपछि अमिलो र गुलियो बढी खान मन लाग्दछ, बेहोस हुन्छ, छाला रुखो हुन्छ, नसाहरु कमजोर हुन्छन् र वायु माथितिर सर्ने गर्दछ ।

### वातविकारबाट दूषित रगतको लक्षण

**अरुणं फेनिलं रूक्षं परुषन्तनु शीघ्रगम् ।**

**अस्कन्दि सूचिनिस्तोदं रक्तं स्याद्वातदूषितम् ॥८॥**

वातविकारबाट रगत दूषित हुँदा रगत धेरै रातो, फिँजयुक्त, रुखो, खस्रो-मैलो-हलुका, चाँडै बग्ने र पातलो हुन्छ । शरीरमा सियोले घोचेजस्तो पीडा हुन्छ ।

पित्तविकारबाट दूषित रगतको लक्षण

**पित्तेन पीतं हरितं नीलं श्यावञ्च विस्रकम् ।**
**अस्कन्द्युष्णं मक्षिकाणां पिपीलानामनिष्टकम् ॥९॥**

पित्तविकारले रगत दूषित हुँदा रगत पहैँलो, नीलो वा कालो हुन्छ । यसबाट आउँ वा पीप जस्तो गन्ध समेत आउँदछ । तातो र चञ्चल हुन्छ । यस्तो रगतलाई कमिला र झिँगाले खाँदैनन् ।

कफविकारबाट दूषित रगतको लक्षण



**शीतञ्च (शीतलं) बहुलं स्निग्धं गैरिकोदकसन्निभम् ।**
**मांसपेशीप्रभं स्कन्दि मन्दगं कफदूषितम् ॥१०॥**

कफविकारले दूषित भएको रगत छाम्दा धेरै नै शीतल हुन्छ । चिल्लो भएर पनि गेरुजस्तो रङ्को हुन्छ । मांशपेशी जस्तो बाक्लो हुन्छ । गति मन्द हुन्छ ।

दुई वा तीन दोषले दूषित रगतको लक्षण

**द्विदोषदुष्टं संसृष्टं त्रिदुष्टं पूतिगन्धकम् ।**
**सर्वलक्षणसंयुक्तं काञ्जिकाभञ्च जायते ॥११॥**

दुई वटा दोषले विकृत रगतमा दुई वटै दोषका लक्षण देखिन्छन् । तीन वटा दोषले दूषित भएको रगतबाट सडेको गन्ध आउँदछ र यस्तो रगत काँजी जस्तो हुन्छ ।

### विषले दूषित भएको रगतको लक्षण

**विषदुष्टं भवेच्च्ट(छ)यावं नासिकोन्मार्गगं तथा ।**
**विस्रं काञ्जिकसङ्काशं सर्वकुष्ठकरं बहु ॥१२॥**

विषले दूषित भएको रगतको रङ कालो हुन्छ । रगत माथिको बाटो हुँदै नाकबाट बग्न थाल्दछ । आमरस जस्तो गनाउने र हेर्दा काँजी जस्तो देखिने गर्दछ । दूषित रगतले सबै खालका कुष्ठरोगलाई जन्माउँदछ ।

### शुद्ध रगतका लक्षण

**इन्द्रगोपप्रभं ज्ञेयं प्रकृतिस्थमसंहतम् ।**

शुद्ध रगतको रङ इन्द्रगोप (बर्खामा देखिने रातो रङको एक कीरा) कीराको रङजस्तो र पातलो हुन्छ ।



### रगत झिक्न हुने रोग

**शोथे दाहेऽङ्गपाके च रक्तवर्णेऽसृजः स्रुतौ ॥१३॥**
**वातरक्ते तथा कुष्ठे सपीडे दुर्जयेऽनिले ।**
**पाणिरोगे श्लीपदे च विषदुष्ट(ष्टे) च शोणिते ॥१४॥**
**ग्रन्थ्यर्बुदापचीक्षुद्ररोगरक्ताधिमन्थिषु ।**
**विदारीस्तनरोगेषु गात्राणां सादगौरवे ॥१५॥**
**रक्ताभिष्यन्दतन्द्रायां पूतिघ्राण(णा)स्य देहके ।**
**यकृत्प्लीहविसर्पेषु विद्रधौ पिटिकोद्गमे ॥१६॥**
**कर्णौष्ठघ्राणवक्त्राणां पाके दाहे शिरोरुजि ।**
**उपदंशे रक्तपित्ते रक्तस्रावः प्रशस्यते ॥१७॥**

शरीर सुन्निएर डाह हुने, शरीरका अङ्ग पाकेका, शरीर अधिक रातो भएका, नाकबाट रगत बहने, वातरक्तका रोगी, पीडादायक कुष्ठरोगी, कडा खालका वातरोगी, हातका रोगी, गोडा

सुन्निएका, विषले रगत प्रदूषित भएका, शरीरमा गाँठागुँठी हुने, अर्बुद रोगी, अपचीका रोगी, क्षुद्ररोगका रोगी, रक्तजन्य आँखाका रोगी (अधिमन्थ), विदारिकाका रोगी, स्तनका रोगी, अङ्ग शिथिल हुने, अङ्ग भारी हुने, रगतजन्य अभिष्यन्दका रोगी, तन्द्रा आइरहने, नाक-मुख र शरीर दुर्गन्धित हुने, कलेजो र फियोका रोगी, विसर्पका रोगी, विद्रधिका रोगी, शरीरमा खटिरा आएका, कान-ओठ-नाक र मुख पाक्ने रोग भएका, शरीरमा डाह हुने, टाउको दुख्ने, उपदंशका रोगी र रक्तपित्तका रोगीका शरीरबाट वैद्यले रगत निकाल्नू । यी रगत निकाल्न योग्य रोगी हुन् ।

#### रगत निकाल्ने साधन वा तरिका

**एषु रोगेषु शृङ्गैर्वा जलौकाऽऽलाबुकैरपि ।**
**अथवाऽपि शिरामोक्षैः कुर्याद्रक्तस्रुतिं नरः ॥१८॥**

माथि बताइएका रोगमा सिङ, पानी जूका, तुम्बा अथवा सोझै नसाबाट वैद्यले रगत निकाल्नू वा बगाउनू ।



#### रगत निकाल्न नहुने मानिस

**न कुर्वीत शि(सि)रामोक्षं कृशस्यातिव्यवायिनः ।**
**क्लीबस्य भीरोर्गर्भिण्याः सूतिकापाण्डुरोगिणः(णाम्) ॥१९॥**
**पञ्चकर्मविशुद्धस्य पीतस्नेहस्य चार्शसाम् ।**
**सर्वाङ्गशोथयुक्तानामुदरश्वासकासिनाम् ॥२०॥**
**छर्द्यतीसारदुष्टानामतिस्विन्नतनोरपि ।**
**ऊनषोडशवर्षस्य गतसप्ततिकस्य च ॥२१॥**
**आघातस्रुतरक्तस्य शि(सि)रामोक्षो न शस्यते ।**
**एषाञ्चात्या(त्य)यिके योगे जलौकाभिस्तु निर्हरेत् ॥२२॥**

दुब्लो, ग्राम्यधर्ममा अति नै आशक्त, नपुंसक, डरछेरुवा, गर्भवती, सुत्केरी, पाण्डुरोगी, बान्ता आदि पञ्चकर्म गराएर शरीर शुद्ध पारिएका, विधिपूर्वक चिल्लो खुवाइएका, अल्काईका

रोगी, शरीर पूरै सुन्निएका, पेटका रोग भएका, दमका रोगी, खोकी लागेका, बान्ता गर्ने, अतिसारका रोगी, शरीरबाट विधिपूर्वक पसिना निकालिएका, सोह्र वर्षभन्दा कम उमेरका, सत्तरी वर्षभन्दा माथिका र चोटपटक लागेर नाकबाट रगत बगाउने मानिसको रगत ननिकाल्नू । निकाल्नै परे पानी जूकालाई टोकाएर रगत निकाल्नू ।

विषविकारबाट पीडित हुँदा रगत निकाल्नमा छूट

**तथा च विषदुष्टानां शिरामोक्षोऽपि शस्यते ।**

माथिका रोगी पनि यदि विषविकारबाट पीडित छन् भने नसाबाट रगत निकाल्न हुन्छ ।

वात आदि विकार अनुसार रगत निकाल्ने विधि

**गोशृङ्गेण जलौकाभिरलाबुभिरपि त्रिधा ॥२३॥**
**वातपित्तकफैर्दुष्टं शोणितं स्रावयेद् बुधः ।**
**द्विदोषाभ्यान्तु सन्दुष्टं त्रिदोषैरपि दूषितम् ॥२४॥**

**शोणितं स्रावयेद्युक्त्या शि(सि)रामोक्षैः पदैस्तथा ।**

वातविकारका रोगीको सिङ मार्फत, पित्तविकारका रोगीको जूका मार्फत र कफविकारका रोगीको लौकाको तुम्बा मार्फत रगत निकाल्नू । दुई वा तीन दोषले युक्त भएका मानिसको नसाबाट वा गोडाबाट रगत निकाल्नू ।

सिङ आदिको रगत तान्ने वा शुद्ध पार्ने क्षमता

**गृह्णाति शोणितं शृङ्गं दशाङ्गुलमितं बलात् ॥२५॥**
**जलौका हस्तमात्रन्तु तुम्बी च द्वादशाङ्गुलम् ।**
**पदमङ्गुलमात्रेण शिरा सर्वाङ्गशोधिनी ॥२६॥**

सिङले दश अमल भित्रसम्मको, जूकाले एक हाथ भित्रसम्मको र तुम्बाले बाह्र अमल भित्रसम्मको रगत तानेर तथा गोडाबाट एक अमलसम्मको र नसाबाट पूरै शरीरको रगत तानेर शुद्ध बनाउन सकिन्छ ।

शरीरबाट रगत नआउने अवस्था

**शीते निरन्ने मूर्च्छार्तितन्द्राभीतिमदश्रमैः ।**
**युतानान्न स्रवेद्रक्तन्तथा विण्मूत्रसङ्गिनाम् ॥२७॥**

जाडोमा उपवास बसेका, बेलाबेलामा बेहोस हुने, उँग आइरहने, डराएका, नसामा रहेका, थकित र दिसापिसाब राम्ररी नगरेका मानिसका शरीरबाट रगत निस्कँदैन ।

रगत ननिस्किएकोमा उपचार

**अप्रवर्तिनि(त) रक्ते च कुष्ठचित्रकसैन्धवैः ।**
**मर्दयेद् व्रणवक्त्रञ्च तेन सम्यक् प्रवर्तते ॥२८॥**

नसाबाट रगत निकाल्न खोज्दा ननिस्किए रोगीलाई कूट, चितू र सिधेनुन मिसाएर धुलो बनाई मुखमा चपाउन लगाउनू, राम्ररी रगत निस्कन्छ ।



रगत निकाल्ने समय

**तस्मान्न शीते नात्युष्णे न स्विन्ने नातितापिते ।**
**पीत्वा यवागूं तृप्तस्य स्रावयेच्छोणितं बुधः ॥२९॥**

धेरै जाडो र गर्मी नहुने समयमा, शरीरबाट पसिना ननिकाली, शरीर धेरै नतताई र जौको यवागू खाएर अघाएका मानिसका शरीरबाट विद्वान वैद्यले रगत निकाल्नू ।

धेरै रगत निस्कनुको कारण

**अतिस्विन्नस्योष्णकाले तथैवातिशिराव्यधात् ।**
**अतिप्रवर्तते रक्तं तत्र कुर्यात् प्रतिक्रियाम् ॥३०॥**

शरीरबाट अत्यधिक पसिना निकालेर, गर्मी मौसममा तथा नसा धेरै काटिए रगत धेरै निस्कन्छ । यस्तो अवस्थामा तुरुन्त उपचार (निम्न) गर्नु पर्दछ ।

### धेरै रगत आएको उपचार

**अतिप्रवृत्ते रक्ते च लोध्रसर्जरसाञ्जनैः ।**
**यवगोधूमचूर्णैर्वा धवधन्वनगैरिकैः ॥३१॥**
**सर्पनिर्मोकचूर्णैर्वा भस्मना क्षौमवस्त्रयोः ।**
**मुखं व्रणस्य बध्वा च शीतैश्चोपचरेद्व्रणम् ॥३२॥**

नसाबाट धेरै रगत आएमा लोध, सालधूप र रसाञ्जनको धुलो अथवा जौ र गहुँको पिठो अथवा धयैंरो, दबेदबे (वृक्ष विशेष) र गेरुको धुलो अथवा सर्पको काँचुलीको धुलो अथवा रेसमका कपडाको खरानीमध्ये जे त्यतिखेर पाइन्छ त्यसले काटिएको नसाको मुख टाल्नू र हातले थिचेर बस्नू । अनि त्यसमाथि चन्दन आदि शीतल लेप दल्नू । रगत निस्कन बन्द हुन्छ ।

नोटः सर्पको काँचुली गाउँघरतिर ढोकाको ठेलो माथि सिउरेर राख्दथे । कारण सोद्धा भन्दथे "सर्प घरभित्र पस्दैन" । सही कुरा तिनलाई थाहा भएको भए हामीलाई पनि सही कुरा बताउँदथे होलान् । आउनु होस् यो अति महत्वपूर्ण जानकारी लिइ राख्नु होस् । हातहतियार नचलाई कृषकहरूको मात्र होइन अरुहरुको पनि दैनिकी चल्दैन । कहिलेकाहीँ विभिन्न कारणले यिनै हातहतियारले काटी शरीरमा चोटपटक लाग्दछ । अलि बढी गहिरो हुनेगरी काटेमा वा नसामै पर्ने गरी काटेमा रगत आउन बन्द हुँदैन । यसबेला रगत बन्द गर्ने अनेक उपाय वा ओखती मध्येको एउटा ओखती हुँदो रहेछ सर्पको काँचुली । सर्पको काँचुली माडेर धुलो बनाई काटिएको स्थानमा लपक्क टाँस्नू र हातले एकछिन थिचिरहनू । यसपछि अरु कसैलाई सेतोचन्दन घोट्न लगाउनू र त्यसमाथि त्यो चन्दनको लेप बाक्लो गरी दल्नू । सामान्यतः रगत आउन बन्द हुन्छ । दुर्घटना कतिखेर पर्दछ ठेगान हुँदैन त्यसैले सजिलै र सबैले भेटिने ठाउँमा अर्थात् ढोकाको ठेलो माथि सिउरिएर सर्पको काँचुली राख्ने प्रचलन चलाइएको रहेछ ।

### धेरै रगत आएको अन्य उपचार

**विध्येदूर्ध्वं शि(सि)रां ताञ्च दहेत् क्षारेण वाऽग्निना ।**
**व्रणं कषायः सन्धत्ते रक्तं स्कन्दयते हिमम् ॥३३॥**
**व्रणास्यं पाचयेत् क्षारो दाहः सङ्कोचयेच्छि(त्स)राम् ।**

यति गर्दा पनि रगत आउन नथाम्मिए पहिले काटिएको नसाभन्दा केही माथि पुनः नसा काट्नू अथवा पहिले काटिएको स्थानमा आगोले डाम्नू । यसरी रगत बन्द हुने कारणका बारेमा बताइन्छ । लोध आदि टर्रा ओखतीको धुलोले घाउको मुखलाई चपक्क समाउँदछ र शीतल उपचारले रगत थामिन्छ । क्षार पदार्थले रगत पच्दछ भने आगोले पोल्नाले नसा खुम्चिन्छ ।

### अण्डकोश सुजनमा नसा डाम्ने विशेष उपचार

**वामाण्डशोथे दक्षस्य करस्याङ्गुष्ठमूलजाम् ॥३४॥**
**दहेच्छि(त्स)रां व्यत्यये तु वामाङ्गुष्ठशि(सि)रां दहेत् ।**
**शि(सि)रादाहप्रभावेण मुष्कशोथः प्रशाम्य(णस्य)ति ॥३५॥**

मानिसको देब्रे अण्डकोश सुन्निएको छ भने दाहिने हातको बूढीऔंलाको फेदमा रहेको नसालाई डाम्नू । दाहिने अण्डकोश सुन्निएको छ भने देब्रे हातको बूढीऔंलाको फेदमा रहेको नसालाई डाम्नू । सुन्निएको अण्डकोश बस्दछ ।

### हैजामा पैताला डाम्नू

**विषूच्यां पाद(र्ष्णि)दाहेन जायतेऽग्ने प्रदीपनम् ।**
**सङ्कुचन्ति यतस्तेन रसश्लेष्मवहाः शि(सि)राः ॥३६॥**

विषूचिका हुँदा फलामको पाता अथवा कराही तताएर पैंतालामा डाम्नू । यसो गर्नाले रस र कफ बहने नसा खुम्चिएर पेटभित्रको अग्नि बल्दछ र हैजा निको हुन्छ ।

**बालकको कलेजो वा फियो अस्वाभाविक रूपमा बढेकोमा डामेर गरिने उपचार**

**यदावृद्धिर्यकृत्प्लीह्नोः शिशोः सञ्जायतेऽसृजः ।**
**तदा तत् स्थानदाहेन सङ्कुचन्त्यसृजः शि(सि)राः ॥३७॥**

वालकको कलेजो वा फियो अस्वाभाविक रूपमा बढेमा त्यही बेला त्यसमाथि डामी दिनू । बढ्न बन्द हुन्छ ।

**रगत धेरै ननिकाल्नू**

**रक्तेदुष्टेऽवशिष्टेऽपि व्याधिर्नैव प्रकुप्यति ।**
**अतः स्राव्यं सावशेषं रक्ते नातिक्रमो हितः ॥३८॥**

शरीरबाट खराब रगत निकाल्दा अलिकति बाँकी राखेर निकाले पनि रोग बढ्दैन । यसैले रगत निकाल्दा अलि अलि बाँकी रहने गरी निकाल्नू धेरै वा पूरै रगत निकाल्नू शरीरका लागि हितकारी हुँदैन ।



**धेरै रगत निकाल्दा हुने असर**

**आन्ध्यमाक्षेपकं तृष्णां तिमिरं शिरसो रुजम् ।**
**पक्षा(क्ष)घातं श्वासकासौ हिक्कां दाहञ्च पाण्डुताम् ॥३९॥**
**कुरुते विस्रुतं (ऽतिस्रुतं) रक्तं मरणं वा करोति च ।**

अत्यधिक रगत निकालियो भने आँखा नदेख्ने, आक्षेप हुने, तिर्खा लाग्ने, धमिलो देखिने, टाउको दुख्ने, पक्षाघात हुने, दम हुने, खोकी लाग्ने, बाडुली लाग्ने, डाह हुने र पाण्डुरोग हुने सम्भावना हुन्छ । यति मात्र होइन मानिसको मृत्यु समेत हुन सक्दछ ।

**रगतको महत्व**

**देहस्योत्पत्तिरसृजा देहस्तेनैव धार्यते ॥४०॥**
**विना तेन व्रजेज्जीवो रक्षेद्रक्तमतो बुधः ।**

रगतबाट नै शरीरको उत्पत्ति हुन्छ र शरीलाई बोक्ने काम पनि रगतले नै गर्दछ । यसैले रगत बिना प्राणी बाँच्न सक्दैन । अतः बुद्धिमान् वैद्यले सदैव रगतको रक्षा गर्नू ।

**रगत निकाल्न बनाइएको घाउमा विकार आए त्यसको उपचार**

**शीतोपचारैः कुपिते स्रुतरक्तस्य मारुते ।।४१।।**
**कोष्णेन सर्पिषा शोथं सव्यथं परिषेचयेत् ।**

रगत निकाल्न पारिएको घाउमा पित्तजन्य विकार आए चन्दन आदि शीतल कुरा दल्नू । वातविकारका कारण त्यो घाउ सुन्निएर दुख्न थाले घिउ थोरै तताएर लगाउनू ।

**रगत निकालेपछि खान दिइने पथ्य खानपिन**

**क्षीणस्यैणशशोरभ्रहरिणच्छागमांसजः ।।४२।।**
**रसः समुचितः पाने क्षीरं वा षष्टिका हिताः ।**



रगत निकालेर कमजोर भएका रोगीलाई ऐण मृग, खरायो, हरिण वा बोकाको मासुको विधिपूर्वक बनाइएको रस पिउन दिनू । सठिया चामल र गाईको दूध मिसाएर पकाइएको खीर खुवाउनू । अथवा गाईको दूध र सठिया चामलको भात खान दिनू । यी कुरा खान दिनु फाइदाजनक हुन्छ ।

**रगत निकाल्ने कार्य सफल भएको लक्षण**

**पीडाशान्तिर्लघुत्वञ्च व्याधेरुद्रेकसङ्क्षयः ।।४३।।**
**मनः स्वास्थ्यं भवेच्चिह्नं सम्यग्विस्राविते ऽसृजि ।**

रोगको पीडा ठिक हुन्छ, शरीर हलुका हुन्छ, रोगको बढ्दो प्रकोप ठिक तरिकाले नष्ट हुन्छ र मन प्रसन्न हुन्छ । उत्तम प्रकारले रगत निकालेपछि वा रगत निकाल्ने कार्य सफल हुँदा रोगीमा यी लक्षण देखिन्छन् ।

### रगत निकालेपछि रोगीले बार्नुपर्ने कुरा

**व्यायाममैथुनक्रोधशीतस्नानप्रवातकान् ।।४४।।**
**एकाशनं दिवास्वप्नं क्षाराम्लकटुभोजनम् ।**
**शोकं वादमजीर्णञ्च त्यजेदाबलदर्शनात् ।।४५।।**

रगत निकालेका रोगीले परिश्रम, मैथुन, रिस, चिसो पानीले नुहाउने काम, हावामा धेरैबेर बस्न, एकै खालको चामलको भात खान, दिउस सुत्न, यवखार आदि क्षार खान, अमिलो खान, पिरो खान, शोक गर्न, धेरै वादविवाद गर्न र अजीर्ण हुनेगरी खान हुँदैन । शरीरमा पूरा तागत नआउँदासम्म यी काम नगर्नू ।

इति श्रीदामोदरसूनुनशार्ङ्गधरेण विरचितायां संहितायामुत्तरखण्डे चिकित्सास्थाने रक्तमोक्षणविधिवर्णनं नाम द्वादशोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत बाह्रौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो



✷

शुरुदेखिको श्लोकको संख्या:-२,२६७+४५=२,३१२

✷

# अथ त्रयोदशोऽध्यायः

## तेह्रौं अध्याय

### आँखाको उपचार

**सेकं आश्चोतनं पिण्डी बिडालस्तर्पणन्तथा ।**
**पुटपाकोऽञ्जनश्चैभिः कल्पैर्नेत्रमुपाचरेत् ॥१॥**

सेक, आश्चोतन, पिण्डी, बिडाल, तर्पण, पुटपाक र अञ्जन गरी आँखाको उपचार गर्ने सात प्रकारका विधि बताइएका छन् । यथायोग्य विधिले आँखाको उपचार गर्नू ।

### सेक विधि

**सेकस्तु सूक्ष्मधाराभिः सर्वस्मिन्नयने हितः ।**
**मीलिताक्षस्य मर्त्यस्य प्रदेयश्चतुरङ्गुलम्(लात्) ॥२॥**



मानिसलाई आँखा बन्द गर्न लगाई दूध, घिउ, रस आदि सबै आँखामा चार अमल फरक पारी (माथिबाट) मसिनो धारा हाल्नुलाई "सेक" भनिन्छ ।

### दोष अनुसारका सेक विधि

**स चापि स्नेहनो वाते रक्ते पित्ते च रोपणः ।**
**लेखनश्च कफे कार्यस्तस्य मात्राऽधुनोच्यते ॥३॥**

वातरोगमा स्नेहन-सेक (दूध, घिउ आदि चिल्लोको सेक), रक्तपित्तमा रोपण-सेक (लोध, त्रिफला आदि ओखतीलाई दूध वा पानीमा पिँधेर त्यसले गरिने सेक) र कफरोगमा लेखन-सेक (सुठो, मरिच आदि ओखती पानीमा पिँधेर वा यी ओखतीको काँढापानी पकाएर त्यसले गरिने सेक) गर्ने योजना बनाउनू । मात्राका बारेमा तल बताइन्छ ।

सेक गर्ने अवधि

षड्वाक्शतैः स्नेहनेषु चतुर्भिश्चैव रोपणे ।
वाक्शतैश्च त्रिभिः कार्यः सेको लेखनकर्मणि ॥४॥

स्नेहन-सेक छ सय अङ्क गनिन्जेलसम्म, रोपण-सेक चार सय अङ्क गनिन्जेलसम्म र लेखन-सेक तीन सय अङ्क गनुन्जेलसम्म गर्नू ।

सेक गर्ने समय

कार्यस्तु दिवसे सेको रात्रौ चात्ययिके गदे ।

सेक-कर्म दिनमा गर्नू । रोगले धेरै च्यापेको अवस्थामा रातमा पनि गर्नू ।

वातजन्य अभिष्यन्द रोगमा सेक

एरण्डत्वक्पत्रमूलैः शृतमाजं पयो हितम् ॥५॥
सुखोष्णं सेचनन्नेत्रे वाताभिष्यन्दनाशनम् ।

अरिडको बोक्रा, पात र जरालाई बाख्रीको दूधमा पकाउनू । त्यसपछि मनतातो वा सहँदो तातो भएपछि छानेर वातजन्य अभिष्यन्द रोग ठिक गर्न आँखामा सेक गर्नू ।

वातजन्य अभिष्यन्द रोगमा दोश्रो सेक

परिषेकोहितोनेत्रे पयः कोष्णं ससैन्धवम् ॥६॥
रजनीदारुसिद्धं वा सैन्धवेनसमन्वितम् ।
वाताभिष्यन्दशमनं हितं मारुतपर्यये ॥७॥
शुष्काक्षिपाके च हितमिदं सेचनकं सदा ।

बाख्रीको दूधमा सिधेनुन मिसाई उमालेर सहँदो तातो दूधले आँखामा सेक गर्नू । अथवा हलेदो, देवदार र सिधेनुनको धुलोमा दूध हालेर उमाली सहँदो धारा हाल्दै सेक गर्नू । यसबाट

वातजन्य अभिष्यन्द, वातविपर्यय (आँखा टेढा र साना हुने रोग विशेष) र शुष्काक्षिपाक (सुक्खा भएर आँखा पाक्ने रोग विशेष) जस्ता आँखाका रोग ठिक हुन्छ ।

### रक्तपित्तजन्य र चोटपटकजन्य रोगमा सेक

**शा(सा)बरं मधुकं तुल्यं घृतभृष्टं सुचूर्णितम् ॥८॥**
**छागक्षीरे घृतं सेकात्पित्तरक्ताभिघातजित् ।**

लोध र जेठीमधु बराबर मात्रामा लिई घिउमा भुटेर धुलो बनाउनू । अनि बाख्रीको दूधमा घोली सेक गर्नू । यसबाट आँखाका पित्तविकार, रगतविकार र चोटपटकजन्य विकार नाश हुन्छन् ।

### रक्तजन्य अभिष्यन्द रोगमा सेक

**त्रिफलालोध्रयष्टीभिः शर्कराभद्रमुस्तकैः ॥९॥**
**पिष्टैः शीताम्बुना सेको रक्ताभिष्यन्दनाशनः ।**

त्रिफला, लोध, जेठीमधु, सक्खर वा मिस्री र नागरमोथे बराबर मात्रामा लिई पानीमा पिँध्नू र त्यो पानीले सेक गर्नू । यसले रक्तजन्य अभिष्यन्द रोग ठिक हुन्छ ।

### रक्तजन्य अभिष्यन्द रोगमा अर्को सेक

**लाक्षामधुकमञ्जिष्ठालोध्रकालानुसारिवाः ॥१०॥**
**पुण्डरीकयुतः सेको रक्ताभिष्यन्दनाशनः ।**

लाहा, जेठीमधु, मजिठो, लोध, अनन्तमूल र सेतो कमललाई पानीमा पिँधेर आँखामा सेक गर्नाले पनि रक्तजन्य अभिष्यन्द रोग निको हुन्छ ।

### नेत्रशूल नाशक सेक

**श्वेतलोध्रं घृते भृष्टञ्चूर्णितं पटविस्रुतम् ॥११॥**

**उष्णाम्बुना विमृदितं सेकाच्छूलघ्नमम्बके ।**

सेतो लोधलाई घिउमा भुटेर धुलो बनाउनू र कपडाले छानी तातोपानीमा पिँध्नू । यो जलले सेक गर्नाले आँखा दुख्न बन्द हुन्छ ।

आश्चोतन उपचारको समय

**अथ ह्याश्चोतनं कार्यं निशायान्न कथञ्चन ॥१२॥**

आश्चोतन उपचार रातमा कहिल्यै पनि नगर्नू ।

आश्चोतन विधि

**उन्मीलितेऽक्षिण दृङ्मध्ये बिन्दुभिर्द्व्यङ्गुलाद्धितम् ।**

मानिसका आँखा उघारी दुई अमल माथिबाट दूध, काँढापानी आदिको थोपा हाल्नुलाई आश्चोतन भनिन्छ ।



आश्चोतनको मात्रा

**बिन्दवोऽष्टौ लेखनेषु स्नेहने दश बिन्दवः ॥१३॥**
**रोपणे द्वादश प्रोक्तास्ते शीते कोष्णरूपिणः ।**
**उष्णे च शीतरूपाः स्युः सर्वत्रैवैष निश्चयः ॥१४॥**

लेखन-आश्चोतनमा आठ थोपा, स्नेहन-आश्चोतनमा दश थोपा र रोपण-आश्चोतनमा बाह्र थोपा हाल्नू । ओखती चिसो मौसम भए हल्का तताएर हाल्नू तथा गर्मी मौसम भए चिसो नै हाल्नू । यही नियम सबैतिर पालना गर्नू ।

दोष अनुसार आश्चोतनमा रस आदिको प्रयोग विधि

**वाते तिक्तन्तथा स्निग्धं पित्ते मधुरशीतलम् ।**
**तिक्तोष्णरूक्षञ्च कफे क्रमादाश्चोतनं हितम् ॥१५॥**

वातविकारमा तितो र चिल्लो, पित्तविकारमा गुलियो र चिसो तथा कफविकारमा तितो, तातो र रुखो पदार्थले आश्चोतन गर्नू लाभदायक हुन्छ ।

आश्चोतनको अवधि

**आश्चोतनानां सर्वेषां मात्रा स्याद्वाक्छतं हितम् ।**
**निमेषोन्मेषणं पुंसामङ्गुल्योश्छोटिकाऽथ वा ॥१६॥**
**गुर्वक्षरोच्चारणं वा वाङ्मात्रेयं स्मृता बुधैः ।**

मानिसको आँखाको पलक खोल्ने र बन्दगर्ने समय जति अथवा चुटकी बजाउन लाग्ने समयजति अथवा दीर्घ अक्षरको उच्चारण गर्न लाग्ने समय जति अथवा एक अङ्क उच्चारण गर्न लाग्ने समय जतिलाई एक वाङ्मात्रा भनिन्छ । यस्तो सय वाङ्मात्रा को समय नै सबै खालका आश्चोतनमा फाइदाजनक हुन्छ भनी विद्वानहरूले बताएका छन् ।

वातजन्य अभिष्यन्द रोगमा आश्चोतन



**बिल्वादिपञ्चमूलेन बृहत्यरण्डशिग्रुभिः ॥१७॥**
**क्वाथ आश्चोतने कोष्णो वाताभिष्यन्दनाशनः ।**

बेल आदि पाँच ओखतीको जरा, ठूलो बिही, अँडिरको जरा र सैजनको बोक्रा बराबर मात्रामा लिई काँढा पानी पकाउनू । यसलाई छानेर सहन सक्ने तातो थोपा आँखामा हाल्नाले वातजन्य अभिष्यन्द रोग नाश हुन्छ ।

वातजन्य तथा रक्तपित्तजन्य अभिष्यन्द रोगमा आश्चोतन

**अम्बुपिष्टैर्निम्बपत्रैस्त्वचं लोध्रस्य लेपयेत् ॥१८॥**
**प्रताप्य वह्निना पिष्ट्वा तद्रसो नेत्रपूरणात् ।**
**वातोत्थं रक्तपित्तोत्थमभिष्यन्दं विनाशयेत् ॥१९॥**

नीमका पातलाई पानीमा पिँधेर लोधको बोक्रामा दल्नू । अनि त्यो बोक्रालाई आगोमा तताएर पिँध्नू । अनि यसको रस निकालेर त्यसको थोपा आँखामा हाल्नाले वातजन्य तथा रक्तपित्तजन्य अभिष्यन्द ठिक हुन्छ ।

सबै खालका अभिष्यन्द नाशक आश्चोतन

**त्रिफलाश्चोतनं नेत्रे सर्वाभिष्यन्दनाशनम् ।**

त्रिफलाको काँढापानी पकाई त्यसको सहँदो तातो थोपा आँखामा हाल्नाले सबै खालका अभिष्यन्द रोग ठिक हुन्छन् ।

रक्तपित्त आदिले गर्दा आँखा दुखेकोमा आश्चोतन

**स्त्रीस्तन्याश्चोतनन्नेत्रे रक्तपित्तानिलार्तिजित् ॥२०॥**
**क्षीरसर्पिर्घृतं वाऽपि वातरक्तरुजञ्जयेत् ।**



स्त्रीको दूधको थोपा आँखामा हाल्नाले रक्तपित्त तथा वातजन्य आँखाको दुखाइ ठिक हुन्छ । यसैगरी दूध, नौनी, वा घिउको थोपा आँखामा हाल्नाले पनि वातरक्तसम्बन्धी कारणले दुखेको आँखा ठिक हुन्छ ।

पिण्डीको लक्षण

**पिण्डी कवलिका प्रोक्ता बध्यते पट्टवस्त्रकैः ॥२१॥**
**नेत्राभिष्यन्दयोग्या सा व्रणेष्वपि निबध्यते ।**

ओखतीलाई पिँधेर गोली बनाई आँखामा राखी रेशमको कपडाले आँखामा पट्टी बाँध्नू । यसलाई पिण्डी वा कवलिका भनिन्छ । यो आँखाको अभिष्यन्द रोगमा लाभदायक हुन्छ । घाउमा पनि यसलाई बाँध्ने गरिन्छ ।

कफजन्य अचिष्यन्दमा शिरो विरेचन

**अभिष्यन्देऽधिमन्थे च सञ्जाते श्लेष्मसम्भवे ॥२२॥**

**स्निग्धस्विन्नोत्तमाङ्गस्य शिरस्तीक्ष्णैर्विरेचयेत् ।**

कफजन्य अभिष्यन्द तथा अधिमन्थ रोगमा रोगीको टाउकामा तेल दली चिल्लो बनाउनू र पसिना निकाल्नू । अनि टाउकोलाई शुद्ध पार्न तीक्ष्ण ओखतीको नस हाल्नू ।

अधिमन्थ रोगको अन्तिम उपचार

**अधिमन्थेषु सर्वेषु ललाटे वेधयेच्छिराम् ॥२३॥**
**अशान्ते सर्वथा मन्थे भ्रुवोस्तु परि(भ्रुवोरुपरि)दाहयेत् ।**

सबै खालका अधिमन्थ रोगमा निधारको नसा काटी रगत निकाल्नू, यसबाट उक्त रोग ठिक हुन्छ । यसो गर्दा पनि रोग ठिक नभए आँखीभौंमा डामी दिनू ।

सबै अभिष्यन्द रोगमा गोलीको प्रयोग

**अभिष्यन्देषु सर्वेषु बध्नीयात्पिण्डिकां बुधः ॥२४॥**



सबै प्रकारका अभिष्यन्द रोगमा विद्वानले आँखामा हालिने ओखतीको ससाना गोली बनाई आँखामा राखेर पट्टी बाँध्नू ।

वाताभिष्यन्दमा गोलीको प्रयोग

**वाताभिष्यन्दशान्त्यर्थं स्निग्धोष्णा पिण्डिका भवेत् ।**
**एरण्डपत्रमूलत्वङ्निर्मिता वातनाशिनी ॥२५॥**

वातजन्य अभिष्यन्द रोगमा चिल्लो र तातो ओखतीको पिण्डी हुन्छ । यसका लागि अँडिरको पात, जरा र बोक्रा पिँधेर बनाइएको गोलीको प्रयोग गर्नू ।

पित्तजन्य अभिष्यन्दमा पिण्डी

**पित्ताभिष्यन्दनाशाय धात्रीपिण्डी सुखावहा ।**
**महानिम्बफलोद्भूता पिण्डी वा पित्तनाशिनी ॥२६॥**

पित्तजन्य अभिष्यन्द ठिक गर्न अमलालाई पिँधेर गोली बनाई पिण्डी गर्नू । अथवा बकाइनूका गेडालाई पिँधेर गोली बनाएर पिण्डी गर्नू ।

कफजन्य अभिष्यन्दमा पिण्डी

**शिग्रुपत्रकृता पिण्डी श्लेष्माभिष्यन्दनाशिनी ।**

सैजनका पातलाई पिँधी बनाइएको गोलीको पिण्डी लगाउनाले कफजन्य अभिष्यन्द रोग ठिक हुन्छ ।

कफपित्तजन्य अभिष्यन्दमा पिण्डी

**निम्बपत्रकृता पिण्डी श्लेष्मपित्तहरा भवेत् ॥२७॥**
**त्रिफलापिण्डिका प्रोक्ता नाशने श्लेष्मपित्तयोः ।**

नीमका पात पिँधेर बनाइएका वा त्रिफला पिँधेर बनाइएका गोलीको पिण्डीले कफपित्तजन्य अभिष्यन्द रोग ठिक हुन्छ ।

रक्तजन्य अभिष्यन्दमा पिण्डी

**पिष्ट्वा काञ्जिकतोयेन घृतभृष्टा च पिण्डिका ॥२८॥**
**लोध्रस्य हरति क्षिप्रमभिष्यन्दमसृग्भवम् ।**

लोधलाई काँजीमा पिँधेर घिउमा भुटी गोली बनाउनू । यसको पिण्डीले रगतजन्य अभिष्यन्द रोग ठिक हुन्छ ।

आँखाको सुजन र चिलाउने रोगमा पिण्डी

**शुण्ठीनिम्बदलैः पिण्डी सुखोष्णा स्वल्पसैन्धवा ॥२९॥**
**धार्या चक्षुषि संयोगाच्छोथकण्डूव्यथापहा ।**

सुठो र नीमका पात मिसाई पिँधेर त्यसमा अलिकति सिधेनुन हाली गोली बनाउनू र पिण्डी गर्नू । यसबाट आँखा सुन्निएको र चिलाएको ठिक हुन्छ ।

**बिडालक विधि**

## बिडालको बहिर्लेपो नेत्रे पक्ष्मविवर्जितः ॥३०॥
## तस्य मात्रा परिज्ञेया मुखलेपविधानवत् ।

आँखालाई बाँकी राखेर त्यसबाहिर पलकका चारैतिर लेप दल्नुलाई बिडालक भनिन्छ । यसमा दलिने लेपको मात्रा अनुहारमा दलिने लेपमा बताइए अनुसार नै हुन्छ भनी जान्नू ।

**आँखाका सबै रोगमा लगाइने लेप**

## यष्टीगैरिकसिन्धूत्थदार्वीतार्क्ष्यैः समांशकैः ॥३१॥
## जलपिष्टैर्बहिर्लेपः सर्वनेत्रामयापहः ।



जेठीमधु, गेरु, सिधेनुन, चुत्रो र रसाञ्जन बराबर मात्रामा लिई पानीमा पिँध्नू । यो लेप विडालक विधिले दल्नाले आँखाका सबै खालका रोग निको हुन्छन् ।

**आँखाका रोगमा लगाइने अर्को लेप**

## रसाञ्जनेन वा लेपः पथ्याविश्वदलैरपि ॥३२॥
## कुमारिकाग्निपत्रैर्वा दाडिमीपल्लवैरपि ।
## वचाहरिद्राविश्वै(र्निम्बै)र्वा तथा नागरगैरिकैः ॥३३॥

रसाञ्जनलाई अथवा हर्रो, सुठो र तेजपात लाई जलमा पिँधेर लेप बनाई आँखामा दल्नू । अथवा घिउकुमारी र चितूको पातलाई पानीमा पिँधेर लेप बनाई दल्नू । अथवा दारिमका पात पिँधेर दल्नू । अथवा बोझो, हलेदो र सुठो पानीमा पिसेर दल्नू । अथवा सुठो र गेरु जलमा पिँधेर दल्नू । (उल्लेखित लेप दल्नाले आँखाका रोग नाश हुन्छ ।)

### आँखाको दुखाई तुरुन्त निको पार्ने लेप

**दग्ध्वाग्नौ (दग्ध्वास) सैन्धवं लोध्रं मधूच्छिष्टयुते घृते ।**
**पिष्टमञ्जनलेपाभ्यां सद्यो नेत्ररुजापहम् ॥३४॥**

सिधेनुन र लोधलाई आगोमा पोलेर मैन र घिउमा हाली घोट्नू । अनि साधानीपूर्वक यसको गाजल लगाउनू र आँखाको बाहिरी भागमा यही ओखतीको लेप लगाउनू । यसबाट आँखाको दुखाई तुरुन्त ठिक हुन्छ ।

### आँखा दुखाई नाशक अर्को लेप

**लोहस्य पात्रे सङ्घृष्टे रसो निम्बफलोद्भवः ।**
**किञ्चिद्घनो बहिर्लेपान्नेत्रबाधां व्यपोहति ॥३५॥**

फलामको भाँडामा कागतीको रस हालेर घोट्नू केही बाक्लो भएपछि आँखाको बाहिरी भागमा यसको लेप लगाउनू । आँखा दुख्न ठिक हुन्छ ।



### अर्म रोग नाशक लेप

**सञ्चूर्ण्य मरिचं केशराजस्वरसमर्दनात् ।**
**लेपनादर्मणां नाशं करोत्येष प्रयोगराट् ॥३६॥**

भृङ्गराजको स्वरसमा कालो मरिचलाई पिँधेर लेप बनाई आँखामा दल्नाले अर्म रोग नाश हुन्छ ।

### अन्नोमा दलिने लेप

**स्विन्नां भित्वा विनिष्पीड्य भिन्नामञ्जननामिकाम् ।**
**शिलैलानतसिन्धूत्थैः सक्षौद्रैः प्रतिसारयेत् ॥३७॥**

अन्नोलाई पसिनायुक्त बनाई फोर्नू र चारैतिरबाट थिची निचोर्नू । अनि मनशिला, अलैंची, तगर र सिधेनुनको धुलो बनाई महसँग मिसाएर लेप बनाई त्यसमाथि मलम लगाउनू । यसो गर्नाले अन्नो ठिक हुन्छ ।

### तर्पण विधि
### तर्पण दिनयोग्य आँखा

**अथ तर्पणकं वच्मि नेत्रतृप्तिकरं परम् ।**
**यद्रूक्षं परिशुष्कञ्च नेत्रं कुटिलमाविलम् ॥३८॥**
**शीर्णपक्ष्मशिरोत्पातकृच्छ्रोन्मीलन संयुतम् ।**
**तिमिरार्जुनशुक्राद्यैरभिष्यन्दाधिमन्थकैः ॥३९॥**
**शुक्राक्षिपाकशोथाभ्यां युक्तं वातविपर्ययैः ।**
**तन्नेत्रं तर्पणे युक्तं नेत्ररोगविशारदैः ॥४०॥**

अब आँखालाई फाइदागर्ने तर्पणका बारेमा बताउँदछु । जसका आँखा : रुखा, सुक्खा, टेढा र धमिला हुने; परेला झर्ने रोग, शिरोत्पातक रोग (?), कृच्छ्रोन्मिलन रोग (?), अँध्यारो देखिने रोग, अन्नो, फुलो, अभिष्यन्द, अधिमन्थ, शुक्राक्षिपाक रोग (?), सुन्निने रोग र वातविकार हुन्छ तिनलाई विज्ञ वैद्यले आँखामा तर्पण गर्नू ।



### तर्पणमा बार्ने कुरा

**दुर्दिनात्युष्णशीतेषु चिन्तायासभ्रमेषु च ।**
**अशान्तोपद्रवे चाक्षिण तर्पणन्न प्रशस्यते ॥४१॥**

बादल टन्न लागेका दिन, धेरै घाम चर्केका दिन, धेरै जाडोमा, चिन्ताग्रस्त हुँदा, थकित हुँदा, भ्रम हुँदा र आँखाका रोग निको नहुँदा तर्पण गर्नु फाइदाजनक हुँदैन ।

### आँखाको तर्पण विधि

**वातातपरजोहीने देशे चोत्तानशायिनः ।**

**आधारौ माषचूर्णेन क्लिन्नेन परिमण्डलौ ॥४२॥**
**समौ दृढावसम्बाधौ कर्तव्यौ नेत्रकोशयोः ।**
**पूरयेद् घृतमण्डेन विलीनेन सुखोदकैः ॥४३॥**
**अथवा शतधौतेन सर्पिषा क्षीरजेन वा ।**

हावा नचल्ने, गर्मी नहुने र धुलो नउड्ने स्थानमा मानिसलाई उत्तानो पारेर सुताउनू । यसपछि उसका आँखाको वरिपरि माषको मुछिएको र गिलो पिठो बराबर र गोलाकार गरेर दल्नू । यसपछि उसलाई आँखा चिम्लन लगाई त्यो बीचको भागमा पग्लिएको वा पातलो घिउ अथवा माड अथवा उमालेर सेलाएको मनतातो पानी अथवा सय पटक पखालिएको घिउ अथवा दूध भर्नू ।

तर्पणको मात्रा

**निमग्नान्यक्षिपक्ष्माणि यावत्स्युस्तावदेव हि ॥४४॥**
**पूरयेन्मीलिते नेत्रे तत उन्मीलयेच्छनैः ।**



यसरी भर्दा पलक पूरै डुब्न भने हुँदैन । अनि उसलाई विस्तारै आँखा खोल्न लगाउनू ।

तर्पण राख्ने समय

**धारयेद्वर्त्मरोगेषु वाङ्मात्राणां शतं बुधः ॥४५॥**
**स्वच्छे कफे सन्धिरोगे मात्रापञ्चशतं हितम् ।**
**शुक्ले च षट्शतं कृष्णरोगे सप्तशतं मतम् ॥४६॥**
**दृष्टिरोगेष्वष्टशतमधिमन्थे सहस्रकम् ।**
**सहस्रं वातरोगेषु धार्यमेवं हि तर्पणम् ॥४७॥**

आँखाका पलकका रोगमा सय गनिन्जेलसम्म, कफजन्य सन्धिरोगमा पाँच सय गनिन्जेलसम्म, आँखाको सेतो भागमा रोग हुँदा छ सय गनिन्जेलसम्म, पुतलीमा रोग हुँदा

सात सय गनिन्जेलसम्म, दृष्टिरोगमा आठ सय गनिन्जेलसम्म र अधिमन्थ रोगमा तथा वातरोगमा एक हजार गनिन्जेलसम्म तर्पण राख्नू ।

तर्पणले गर्दा कफ बढेमा त्यसको उपचार

**स्विन्नेन यवपिष्टेन स्नेहवीर्यैरितन्ततः ।**
**यथास्वं धूमपानेन कफमस्य विशोधयेत् ॥४८॥**

तर्पणको चिल्लोले गर्दा कफ बढेमा जौको पिठोलाई चिलिममा राखेर तमाखु ताने जसरी तान्नू । यसरी कफविकार नाश गर्नू ।

तर्पण गर्ने अवधि

**एकाहं वा त्र्यहं वाऽपि पञ्चाहञ्चेष्यते परम् ।**

एकदिन, तीन दिन वा बढीमा पाँच दिनसम्म तर्पण गर्नु उत्तम हुन्छ ।



तर्पणे विधिले काम गरेको लक्षण

**तर्पणे तृप्तिलिङ्गानि नेत्रेष्वेतानि भावयेत् ॥४९॥**
**सुखस्वप्नावबोधत्वं वैशद्यं वर्णपाटवम् ।**
**निवृत्तिर्व्याधिशान्तिश्च क्रियालाघवमेव च ॥५०॥**

आनन्दसँग निद्रा लाग्नु, समयमै उठ्नु, आँखा चम्किला हुनु, दृष्टि सफा हुनु, रोग ठिक हुनु र आँखा खोल्न र बन्द गर्न हलुका हुनु तर्पण विधि सफल भएका लक्षण हुन् ।

तर्पणको मात्रा र समय धेरै भएमा देखिने लक्षण

**अथ साश्रु गुरु स्निग्धं नेत्रं स्यादतितर्पितम् ।**

तर्पणको मात्रा बढी भए आँखाबाट पानी बग्ने, आँखा भारी हुने र चिल्लो देखिने गर्दछ ।

### तर्पणको मात्रा र समय कम भएमा देखिने लक्षण

**रूक्षमस्राविलं रुग्णं नेत्रं स्याद्धीनतर्पितम् ।।५१।।**

तर्पणको मात्रा कम भए आँखामा चमक हुने, राता हुने, दुख्ने र रोग देखिने जस्ता लक्षण देखिन्छ ।

### बढी वा कम मात्राको तर्पणमा उपचार

**रूक्षस्निग्धोपचाराभ्यामेतयोः स्यात्प्रतिक्रिया ।**

धेरै चिल्लो भए रुखोले र रुखो भए चिल्लोले उपचार गर्नू ।

### आँखाको उपचारमा पुटपाक विधि

**अत ऊर्ध्वं प्रवक्ष्यामि पुटपाकस्य साधनम् ।।५२।।**
**द्वौ बिल्वमात्रौ मांसस्य पिण्डौ स्निग्धौ सुपेषितौ ।**
**द्रव्याणां बिल्वमात्रन्तु द्रवाणां कुडवो मतः ।।५३।।**
**तदेकस्थं समालोड्य पत्रैः सुपरिवेष्टितम् ।**
**पुटपाकेन तत्पक्त्वा गृह्णीयात्तद्रसं बुधः ।।५४।।**
**तर्पणोक्त विधानेन यथावदुपचारयेत् ।**

अब यसपछि आँखामा हालिने पुटपाक बनाउने विधिका बारेमा बताउँदछु । हरिण आदिको मासु दुई बिल्व लिई घिउ आदि चिल्ला कुरामा मिसाएर पिस्नू । यसमा मिसाइने सुक्खा ओखती एक बिल्व लिनू । दूध, आदि जस्ता तरल पदार्थ एक कुडव लिनू । यी सबै कुरा मिसाएर त्यो मासुको डल्लो बनाउनू । अनि यो डल्लोलाई आँप वा जामुनुका हरिया पातले बेरी त्यसमाथि सबैतिर गिलो माटोले लेप्नू । यसपछि पुटपाकको विधिले त्यसलाई पोल्नू वा पकाउनू । यसपछि त्यो डल्लो झिकी माटो र पात पन्छाउनू । अनि डल्लो निचोरेर रस निकाल्नू । तर्पण विधिमा बताइए जसरी नै उपचार गर्नू ।

### पुटपाक रस आँखामा हाल्ने विधि

**दृष्टिमध्ये निषेच्यः स्यान्नित्यमुत्तानशायिनः ।**
**स्नेहनो लेखनश्चैव रोपणश्चेति स त्रिधा ॥५५॥**

यसरी निचोरिने पुटपाक विधिको  रस स्नेहन, लेखन र रोपण गरी तीन किसिमको हुन्छ । यो रस मानिसलाई उत्तानो पारी सुताएर आँखाको दृष्टिखण्डको बीचमा पर्नेगरी दिनहुँ हाल्नू पर्दछ ।

### आँखाको अवस्था हेरी गरिने पुटपाकको विधान

**हितः स्निग्धोऽतिरूक्षस्य स्निग्धस्यापि हि लेखनः ।**
**दृष्टेर्बलार्थमितरः पित्तासृग्व्रणवातनुत् ॥५६॥**

रुखो आँखा भए चिल्लो पुटपाक, चिल्लो आँखा भए लेखन पुटपाक र दृष्टिशक्ति बढाउनु पर्ने भए रोपण पुटपाकको तयारी गर्नू । यस्तो पुटपाकले आँखाको खराब रगत, घाउ, खटिरा र वायुविकार नाश गर्दछ ।



### स्नेहन पुटपाक

**सर्पिर्मांसवसामज्जामेदःस्वाद्वौषधैः कृतः ।**
**स्नेहनः पुटपाकस्तु धार्यो द्वे वाक्शते दृशोः ॥५७॥**

हरिण आदिको मासु, बोसो, मासी र भित्री बोसो सबैलाई घिउमा मिसाएर पिँध्नू । यसमा कल्छे लहरोको गणका ओखतीको धुलो मिसाएर माथि बताए अनुसार डल्लो बनाई पुटपाक गर्नू । यस्तो पुटपाक रस आँखामा हाली दुई गनिन्जेलसम्म राख्नू । यसलाई स्नेहन पुटपाक भनिन्छ ।

### लेखन पुटपाक

**जाङ्गलानां यकृन्मांसैर्लेखनद्रव्यसंयुतैः ।**

**कृष्णलोहरजस्ताम्रशङ्खविद्रुमसिन्धुजैः ॥५८॥**
**समुद्रफेनकासीसस्रोतोजदधिमस्तुभिः ।**
**लेखनो वाक्छतं धार्यस्तस्यैतावद्विधारणम् ॥५९॥**

हरिण आदिको कलेजोको मासु, लेखन पदार्थ अर्थात् फलामको धुलो, तामाको धूलो, शङ्ख, मुगा, सिधेनुन, समुद्रफेन, हिराकसी, गाजल र बाख्रीको दहीलाई धुलो हुनेजतिलाई धुलो पारेर सबैलाई मासुमा मिसाउनू । यसपटि माथि बताइएकै विधिले पुटपाक रस निकाली सय गनिन्जेलसम्म आँखामा हाली लिइ रहनू । यसलाई लेखन पुटपाक भनिन्छ ।

**रोपण पुटपाक र पुटपाकको असरको उपचार**

**स्तन्यजाङ्गलमध्वाज्यतिक्तकद्रव्यपाचितः ।**
**लेखनात्त्रिगुणो धार्यः पुटपाकस्तु रोपणः ॥६०॥**
**वितरेत्तर्पणोक्तान्तु क्रियां व्यापत्तिदर्शने ।**



स्त्रीको दूध, हरिण आदिको मासु, मह, घिउ र कुटकी मिसाएर पूर्वोक्त विधिले तयार पारिएको पुटपाक रस तीन सय गनिन्जेलसम्म आँखामा हालेर बस्नू । यसलाई रोपण पुटपाक भनिन्छ । पुटपाकको मात्रा नमिली कुनै असर देखिए तर्पणकै असरमा गरिने विधिले उपचार गर्नू ।

**गाजल विधि**
**गाजल लगाउने समय**

**अथ सम्पक्वदोषस्य प्राप्तमञ्जनमाचरेत् ॥६१॥**
**हेमन्ते शिशिरे चैव मध्याह्नेऽञ्जनमिष्यते ।**
**पूर्वाह्णे चापराह्णेच ग्रीष्मे शरदि चेष्यते ॥६२॥**
**वर्षासु नाभ्रे नात्युष्णे वसन्ते च सदैव हि ।**

आँखाको रोग छिप्पिएपछि वा परिपक्व भएपछि (दुख्न शुरु भएको पाँच दिन पछि) गाजल आदि लगाउने काम गर्नू । सामान्यतः हेमन्त (मंसिर र पुष) तथा शिशिर (माघ र फागुन) ऋतुमा दिउस मध्याह्नमा आँखामा गाजल लगाउनू । ग्रीष्म (जेठ र असार) र शरद् (असोज

र कात्तिक) ऋतुमा विहान अथवा बेलुकीपख गाजल लगाउनू । वर्षा (साउन र भदौ) मा आँखामा गाजल नलगाउनू । वसन्त (चैत र वैशाख) ऋतुमा जतिखेर पनि गाजल लगाउन हुन्छ ।

गाजलका प्रकारहरू

लेखनं रोपणञ्चैव तथा स्यात् स्नेहनाञ्जनम् ॥६३॥
लेखनं क्षारतीक्ष्णाम्लरसैरञ्जनमिष्यते ।
कषायतिक्तरसयुक्सस्नेहं रोपणं मतम् ॥६४॥
मधुरं स्नेहसम्पन्नमञ्जनञ्च प्रसादनम् ।

लेखन, रोपण र स्नेहन गरी गाजलका तीन प्रकार हुन्छन् । क्षारयुक्त, तिक्खर र अमिला ओखती हालेर बनाइएको गाजललाई लेखन गाजल भनिन्छ । टर्रो, तितो र चिल्लो ओखती हालेर बनाइएको गाजललाई रोपण गाजल भनिन्छ । गुलियो र चिल्लो ओखती हालेर बनाइएको गाजललाई प्रसादन वा स्नेहन गाजल भनिन्छ ।



ओखतीको गोली आदि अनुसार बनाइने गाजलको प्रकार

गुटिकारसचूर्णानि त्रिविधान्यञ्जनानि च ॥६५॥
कुर्याच्छलाकयाऽङ्गुल्या हीनानि च यथोत्तरम् ।

गोली, तरल पदार्थ र धुलो मिसाएर बनाइने गरी गाजल तीन किसिमका हुन्छन् । गोलीको भन्दा रसको र रसको भन्दा धुलोको गाजल कम गुणस्तरको हुन्छ । काँटी अथवा औंलाले आँखामा गाजल लगाउनू ।

गाजल लगाउन नहुने मानिस

श्रान्ते प्ररुदिते भीते पीतमद्ये नवज्वरे ॥६६॥
अजीर्णे वेगघाते च नाञ्जनं सम्प्रचक्षते ।

परिश्रम गरेर थाकेको, रोएको वा रोइरहने, डरछेरुवा, भर्खर जरो आउन शुरु भएका, खाएको खानपिन नपच्ने अजीर्णका रोगी र पिसाबको वेगसम्बन्धी रोग हुनेले गाजल नलगाउनू ।

गाजल बनाउनका लागि बालिने बत्तीको नाप

**हरेणुमात्रां कुर्वीत वर्तिं तीक्ष्णाञ्जने भिषक् ॥६७॥**
**प्रमाणं मध्यमेऽध्यर्धां द्विगुणन्तु मृदौ भवेत् ।**

आँखालाई अत्यन्त पोल्ने वा दुखाउने खालको अर्थात् कडा गाजल बनाउन केराउको गेडाजत्रो मोटो बत्ती बनाउनू । मध्यम खालको गाजल बनाउन केराउको एक र आधा गेडा (डेड) जत्रो तथा नरम खालको बनाउन दुई वटा केराउका दाना जत्रा बत्तीको प्रयोग गर्नू ।

रसिलो गाजल हाल्ने वा लगाउने मात्रा

**रसक्रिया तूत्तमा स्यात्त्रिविडङ्गमिता हिता ॥६८॥**
**मध्यमा द्विविडङ्गा स्याद्धीना त्वेकविडङ्गिका ।**



तरल गाजल आँखामा हाल्ने हो भने वायुविडङ्गका तीन गेडाजतिलाईउत्तम, दुई गेडाजतिलाई मध्यम र एक गेडाजतिलाई अल्प मात्रा भनिन्छ ।

आँखाबाट विकारलाई आँशु मार्फत बाहिर निकाल्न लगाइने धुलो गाजलको मात्रा

**वैरेचनिकचूर्णन्तु द्विशलाकं विधीयते ॥६९॥**
**मृदौ तु त्रिशलाकं स्याच्चतस्रः स्नैहिकेऽञ्जने ।**

धुलो गाजल दुई पटक काँटीले चोबेर दल्नू । नरम खालको ओखतीको धुलो भए तीन पटक दल्नू र चिल्लो मिसाइएको गाजल भए चार पटक दल्नू । (गाजल काँटी धेरै पटक घोटेर नलगाउनू) ।

गाजल लगाउने काँटी

**मुखयोः कुण्ठिता श्लक्ष्णा शलाकाऽष्टाङ्गुलोन्मिता ॥७०॥**

**अश्मजा धातुजा वा स्यात् कलायपरिमण्डला ।**

गाजल लगाउने काँटी ढुङ्गाको अवा सुन आदि धातुको आठ अमल लामो हुनु पर्दछ । यसको टुप्पो केराउको दानाजस्तै गोलो र सुन्दर हुनु पर्दछ ।

गाजल अनुसारको काँटी

**ताम्रलोहाश्मसञ्जाता शलाका लेखने मता ।।७१।।**
**सुवर्णरजतोद्भूता शलाका स्नेहने मता ।**
**अङ्गुली च मृदुत्वेन कथिता रोपणे बुधैः ।।७२।।**

लेखन-गाजलमा तामा, फलाम अथवा पत्थरको; स्नेहन-गाजलमा सुन अथवा चाँदीको तथा नरमपन हुनाले रोपण-गाजलमा हातका औंलाको प्रयोग गर्नू ।

गाजल लगाउने समय र स्थान



**सायम्प्रातश्चाञ्जनं स्यात्तत्सदा नैव कारयेत् ।**
**नातिशीतोष्णवाताभ्रवेलायां सम्प्रशस्यते ।।७३।।**
**कृष्णभागादधः कुर्यादपाङ्गं यावदञ्जनम् ।**

बिहान वा बेलुकी गाजल लगाउनू, जतिखेर मन लाग्यो त्यतिखेर नलगाउनू । धेरै जाडोमा, धेरै गर्मीमा, धेरै हावा चल्दा र बादल लागेका बेलामा गाजल नलगाउनू । गाजल आँखाको तल्लो पलकमा लगाउनू पर्दछ ।

चन्द्रोदया गोली

**शङ्खनाभिर्बिभीतस्य मज्जा पथ्या मनःशिला ।।७४।।**
**पिप्पली मरिचं कुष्ठं वचा चेति समांशकम् ।**
**छागीक्षीरेण सम्पिष्य वर्तिं कुर्याद्यवोन्मिताम् ।।७५।।**
**हरेणुमात्रां सङ्घृष्य जलैः कुर्यादथाञ्जनम् ।**

**तिमिरं मांसवृद्धिञ्च काचं पटलमर्बुदम् ॥७६॥**
**रात्र्यन्ध्यं वार्षिकं पुष्पं वर्तिश्चन्द्रोदया जयेत् ।**

शङ्खको नाइटो, बर्रोको गुदी, हर्रो, मनशिला, पिप्ला, मरिच, कूट र बोझो बराबर मात्रामा बटुली बाख्रीको दूधमा पिँधेर जौका आकारको गोली बत्ती जस्तै लामो बनाउनू । यसलाई चन्द्रोदया वर्ती भनिन्छ । यसलाई केराउको गेडाजत्रै मात्रामा पानीमा घोटी आँखामा गाजल लगाउनाले आँखा अगिल्तिर अँध्यारो देखिने, आँखाभित्र मासु पलाउने, काच ( आँखाको एक रोग), पलकमा मासु पलाउने, अर्बुद, रतन्धो र एक वर्ष पुरानो फुलो रोग निको हुन्छ ।

आँखाको फुलोमा गोली

**पलाशपुष्पस्वरसैर्बहुशः परिभाविता ॥७७॥**
**करञ्जीबीजवर्तिस्तु शुक्रादीञ्छस्त्रवल्लिखेत् ।**

कुबेराक्षका गेडालाई पलाँशको फूलको स्वरसमा अनेक पटक घोट्दै सुकाउँदै बत्तीजस्तै लामो गोली बनाउनू । यो गोलीलाई घोटेर आँखामा दल्ने गर्नाले आँखामा परेको फुलो र पलाएको मासु हतियारले खुर्केजसरी नै नाश हुन्छ ।

समुद्रफेन आदिको गोली

**समुद्रफेनसिन्धूत्थशङ्खदक्षाण्डवल्कलैः ॥७८॥**
**शिग्रुबीजयुतैर्वर्त्तिः शुक्रादीञ्छस्त्रवल्लिखेत् ।**

समुद्रफेन, सिधेनुन, शङ्ख, कुखुराको फुलको बोक्रा र सैजनका गेडा सबै बराबर मात्रामा लिई पिँधेर बत्ती जस्तै लामो चक्की बनाउनू । यो चक्की घोटेर गाजल लगाउनाले पनि आँखामा परेको फुलो आदि हतियारले खुर्केर फले जसरी निको हुन्छ ।

फुलो रोगमा दन्तगोली

**दन्तैर्हस्तिवराहोष्ट्रगोहयाजखरोद्भवैः ॥७९॥**

**शङ्खमुक्ताम्भोधिफेनयुतैः सर्वैर्विचूर्णितैः ।**
**दन्तवर्तिः कृता श्लक्ष्णा शुक्राणां नाशिनी परा ॥८०॥**

हात्ती, बनेल, उँट, साँढे, घोडा, बोका र गधाको दाँत तथा शङ्ख, मोती र समुद्रफेन इ सबैको धुलो पानीमा पिँधेर बत्ती जस्तै लामो चक्की बनाउनू । यसलाई दन्तवर्ती भनिन्छ । यसलाई घोटेर आँखामा गाजल लगाउनाले पनि फुलो ठिक हुन्छ ।

तन्द्रा नाशक गोली

**नीलोत्पलं शिग्रुबीजं नागकेशरकन्तथा ।**
**एतत्कल्कैः कृता वर्तिरतितन्द्रां विनाशयेत् ॥८१॥**

नीलकमल, सैजनका गेडा र नागकेसर बराबर मात्रामा मिसाई पानीमा घोटेर लामा गोली बनाउनू । यसलाई पानीमा घोटेर लगाउनाले उँग वा तन्द्रा नाश हुन्छ ।

आँखाका रोगमा पुष्प-गोली



**तिलपुष्पाण्यशीतिः स्युः षष्टिसङ्ख्याः कणाकणाः ।**
**जातीकुसुम पञ्चाशन्मरिचानि च षोडश ॥८२॥**
**सूक्ष्मं पिष्ट्वा जले वर्तिः कृता कुसुमिकाभिधा ।**
**तिमिरार्जुनशुक्राणां नाशिनी मांसवृद्धिहृत् ॥८३॥**
**एतस्याश्चाञ्जने मात्रा प्रोक्ता सार्धहरेणुका ।**

अस्सी वटा तिलको फूल, पिप्लाका गेडा साठी, चमेलीका फूल पचास र कालोमरिच सोह्र बटुली पानी पिँधेर बत्तीजस्तै लामो गोली बनाउनू । यसलाई कुसुमिकावर्ती भनिन्छ । करि डेड केराउको गेडाजति यो चक्की घोटेर आँखामा गाजल लगाउनाले आँखा अगिल्तिर धमिलो देखिने, अन्नो, फुलो परेको र मासु पलाएको ठिक हुन्छ ।

### रतन्धो नाशक रसाञ्जन बत्ती

**रसाञ्जनं हरिद्रे द्वे मालतीनिम्बपल्लवाः ॥८४॥**
**गोशकृद्रससंयुक्ता वर्तिर्नक्तान्ध्यनाशिनी ।**

रसाञ्जन, हलेदो, चुत्रो, चमेलीका पात र नीमका पात बराबर मात्रामा बटुली गाईको गोबरमा पिँधेर लामा गोली बनाउनू , यसलाई पानीमा घोटेर आँखामा लगाउनाले रतन्धो रोग ठिक हुन्छ ।

### आँखाबाट पानी बहने रोगमा अमला आदिको बत्ती

**धात्र्यक्षपथ्याबीजानि ह्येकद्वित्रिगुणानि च ॥८५॥**
**पिष्ट्वा वर्तिं जलैः कुर्यादञ्जनं द्विहरेणुकम् ।**
**नेत्रस्रावं हरत्याशु वातरक्तरुजन्तथा ॥८६॥**

अमलाको भित्री गेडा एक भाग, बर्रोका बीज दुई भाग र हर्रोको बीज तीन भाग बटुली राम्ररी पानीमा पिँधेर लामा गोली बनाउनू । यसबाट केराउका दुईवटा गेडाजत्ति घोटेर आँखामा गाजल लगाउनाले आँखाबाट पानी बहन तुरुन्त बन्द हुन्छ र वातरक्त पनि निको हुन्छ ।

### आँखाको रोगमा गाजल

**तुत्थमाक्षिकसिन्धूत्थं सिताशङ्खमनःशिलाः ।**
**गैरिकोदधिफेनञ्च मरिचञ्चेति चूर्णयेत् ॥८७॥**
**संयोज्यं मधुना कुर्यादञ्जनार्थं रसक्रियाम् । वर्त्मरोगार्मतिमिरकाचशुक्रहरां पराम् ॥८८॥**

नीलोतुथो, सुनामखी, सिधेनुन, मिस्री, शङ्ख, मनशिला, गेरु, समुद्रफेन र कालो मरिच बराबर मात्रामा बटुली धुलो बनाएर महमा घोटी आँखामा गाजल लगाउनाले आँखाका पटलका रोग, अर्म रोग, आँखा अगिल्तिर अँध्यारो देखिने रोग, अन्नो र फुलो निको हुन्छ ।

फुलो परेकोमा पुष्पहरी गाजल

**वटक्षीरेण संयुक्तो मुख्यः कर्पूरजः कणः ।**
**क्षिप्रमञ्जनतो हन्ति कुसुमन्तु द्विमासिकम् ॥८९॥**

बरोंको दूधमा कपुर घोटेर आँखामा गाजल लगाउनाले दुई महिना पुरानो फुलो पनि ठिक हुन्छ ।

अतिनिद्रा नाशक गाजल

**क्षौद्राश्वलालासङ्घृष्टैर्मरिचैर्नेत्रमञ्जयेत् ।**
**अतिनिद्रा शमं याति तमः सूर्योदयादिव ॥९०॥**

घोडाको र्‍याल र महमा कालो मरिच पिसेर अति निद्रा लाग्नेका आँखामा गाजल लगाइ दिनाले जसरी सूर्य उदाए पछि रात नाश हुन्छ त्यसरी नै अतिनिद्रा नाश हुन्छ ।



तन्द्रा नाशक गाजल

**जातीपुष्पं प्रवालञ्च मरिचं कटुकी वचा ।**
**सैन्धवं बस्तमूत्रेण पिष्टन्तन्द्राघ्नमञ्जनम् ॥९१॥**

चमेलीको फूल, चमेलीको मुना, कालो मरिच, कुटकी, बोझो र सिधेनुन बराबर मात्रामा बटुली बाख्रीको दूधमा घोटेर आँखामा गाजल लगाउनाले उँग वा तन्द्रा नाश हुन्छ ।

होस लेराउने गाजल

**शिरीषबीजगोमूत्रकृष्णामरिचसैन्धवैः ।**
**अञ्जनं स्यात् प्रबोधाय सरसोनशिलावचैः ॥९२॥**

शिरिषका गेडा, पिप्ला, कालो मरिच, सिधेनुन, लसुन, मनशिला र बोझो बराबर मात्रामा लिई गहुँतमा पिसेर सन्निपात रोगले बेहास भएका मानिसका आँखामा गाजल लगाइ दिंदा तुरुन्त होस आउँदछ ।

चुत्रो आदिको गाजल

दार्वी पटोलं मधुकं सनिम्बं पद्मकोत्पलम् ।
प्रपौण्डरीकञ्चैतानि पचेत्तोये चतुर्गुणे ॥९३॥
विपाच्य पादशेषन्तु शृतन्नीत्वा पुनः पचेत् ।
शीते तस्मिन्मधुसितां दद्यात् पादांशिकां नरः ॥९४॥
रसक्रियैषा दाहाश्रुरक्तरोगरुजो हरेत् ।

चुत्रो, पर्बलको पात, जेठीमधु, नीमका बोक्रा, पैयुँ, कमल र सेतो कमल बराबर मात्रामा जम्मा पारी पानीमा पिँध्नू । जति हुन्छ त्यसको चौबर पानीमा हालेर पकाउनू । एक चौथाई बाँकी भएपछि झिकेर छान्नू र छानेको रस पुनः पकाउनू । लद्रो भएपछि झिक्नू र त्यसमा एक चौथाई मह र मिस्री मिसाई आँखामा गाजल लगाउनू । यसले आँखा पोल्ने तथा पानी रगत आदिले आँखा रातो हुने जस्ता आँखाका रोग ठिक हुन्छ ।



रसाञ्जन आदिको गाजल

रसाञ्जनं सर्जरसो जातीपुष्पं मनःशिला ॥९५॥
समुद्रफेनो लवणं गैरिकं मरिचानि च ।
एतत्समांशंमधुना पिष्ट्वा प्रक्लिन्नवर्त्मनि ॥९६॥
अञ्जनं क्लेदकण्डूघ्नंपक्ष्मणाञ्च प्ररोहणम् ।

रसाञ्जन, सालधूप, चमेलीको फूल, मनशिला, समुद्रफेन, सिधेनुन, गेरु र कालो मरिच बराबर मात्रामा लिई धुलो बनाएर महमा मिसाई गाजल लगाउनाले आँखाका वर्त्म जस्ता पलकका रोग, आँखाको मैलोपन र आँखा चिलाउने रोग नाश हुन्छ । झरेका परेला पुनः पलाउँदछन् ।

गुर्जो आदिको गाजल

गुडूचीस्वरसः कर्षः क्षौद्रं स्यान्माषकोन्मितम् ॥९७॥

**सैन्धवं क्षौद्र तुल्यं स्यात् सर्वमेकत्र मर्दयेत् ।**
**अञ्जयेन्नयनं तेन पिल्लार्मतिमिरं जयेत् ॥९८॥**
**काचं कण्डूं लिङ्गनाशं शुक्लकृष्णगतान्गदान् ।**

गुर्जोको एक कर्ष स्वरसमा मह र सिधेनुन एक एक मासा मिसाउनू र घोट्नू । यो गाजल आँखामा लगाउनाले चिप्रा सहितको अर्मरोग, अगाँडी अँध्यारो देखिने आँखाको रोग, अन्नो, चिलाउने रोग, रङ्ग पहिचान गर्ने शक्ति हराउने रोग तथा कालो र सेतो भागमा हुने रोग नाश हुन्छ ।

**पुनर्नवा आदिको गाजल**

**दुग्धेन कण्डूं क्षौद्रेण नेत्रस्रावञ्च सर्पिषा ॥९९॥**
**पुष्पं तैलेन तिमिरं काञ्जिकेन निशान्ध्यताम् ।**
**पुनर्नवा जयेदाशु भास्करस्तिमिरं यथा ॥१००॥**



पुनर्नवालाई दूधमा पिँधेर आँखामा लगाउनाले आँखा चिलाउन बन्द हुन्छ । महमा घोटेर लगाउनाले आँखाबाट पानी बग्न बन्द हुन्छ । घिउमा घोटेर लगाउनाले फुलो परेको ठिक हुन्छ । तेलमा घोटेर लगाउनाले आँखा अगिल्तिर अँध्यारो देखिने रोग निको हुन्छ । काँजमा घोटेर लगाउनाले रतन्धो ठिक हुन्छ । जसरी सूर्यले अन्धकारलाई तुरुन्त नाश गर्दछन् त्यरी नै पुनर्नवाले तुरुन्त रोगलाई नाश गर्दछ ।

**बबुरको गाजल**

**बब्बूलदलनिःक्वाथो लेहीभूतस्तदञ्जनात् ।**
**नेत्रस्रावं जयत्येष मधुयुक्तो न संशयः ॥१०१॥**

बबुरको पातको काँडापानी लदरो हुँदासम्म पकाउनू । यसपछि झिकेर मह मिसाएर गाजल लगाउनू । यसले आँखाबाट पानी बहन अवश्य बन्द हुनेछ ।

भुइँबेतको गाजल

**हिज्जलस्य फलं घृष्ट्वा पानीये नित्यमञ्जनम् ।**
**चक्षुःस्रावोपशान्त्यर्थं कार्यमेतन्महौषधम् ॥१०२॥**

भुइँबेतको फललाई पानी पिँधेर दिनहुँ गाजल लगाउनाले पनि आँखाबाट पानी बहन बन्द हुन्छ ।

निर्मलीको गाजल

**कतकस्यफलं घृष्ट्वा मधुना नेत्रमञ्जयेत् ।**
**ईषत्कर्पूरसहितं स्मृतं नेत्रप्रसादनम् ॥१०३॥**

निर्मलीको फललाई महमा घोटेर थोरै कपूर मिसाई गाजल लगाउनाले आँखा प्रसन्न वा स्वच्छ हुन्छ ।



आँखाको शिरोत्पात रोगमा गाजल

**सर्पिः क्षौद्रं चाञ्जनं स्याच्छिरोत्पातस्य शातने ।**

घिउ र मह मिसाएर गाजल लगाउनाले आँखामा हुने शीरजन्य पीडा नाश हुन्छ ।

अन्धोपन नाशक गाजल

**कृष्णसर्पवसा शङ्खः कतकात्फलमञ्जनम् ॥१०४॥**
**रसक्रियेयमचिरादन्धानां दर्शनप्रदा ।**

कालोसर्पको बोसो, शङ्ख र निर्मलीका गेडा मिसाएर घोटी गाजल बनाई लगाउनाले लामो समयको अन्धो मानिसले पनि अति चाँडै देख्न थाल्दछ ।

लेखन गाजल

**दक्षाण्डत्वक्शिलाकाचैः शङ्खचन्दनगैरिकैः ॥१०५॥**
**द्रव्यैरञ्जनयोगोऽयं पुष्पार्मादिविलेखनः ।**

कुखुराको फुलका बोक्रा, मनशिला, सेतो सिसा, शङ्ख, रक्तचन्दन र गेरु बराबर मात्रामा मिसाई पिँधेर धुलो बनाउनू । यसको गाजल लगाउनाले आँखाको फुलो, मासु पलाएको र अर्म रोग नाश हुन्छ ।

रतन्धोमा गाजल

**कणाच्छागयकृन्मध्ये पक्त्वा तद्रसपेषिता ॥१०६॥**
**अचिराद्धन्ति नक्तान्ध्यं तद्वत् सक्षौद्रमूषणम् ।**

बोकाको बलेजोको मासुमा पिप्ला राखी भुङ्ग्रोमा पोल्नू । पछि यसलाई निचोरेर रस निकाल्नू र पिप्ला मिसाएर पिसी गाजल लगाउनू । रतन्धो ठिक हुन्छ । मह र कालो मरिचको गाजलले पनि रतन्धो ठिक गर्दछ ।



आँखा चिलाउने आदि रोगमा गाजल

**शाणार्धं मरिचं द्वौ च पिप्पल्यर्णवफेनयोः ॥१०७॥**
**शाणार्धं सैन्धवं शाणा नव सौवीरकाञ्जनात् ।**
**पिष्टं सुसूक्ष्मं चित्रायां चूर्णाञ्जनमिदं शुभम् ॥१०८॥**
**कण्डूकाचकफार्तानां मलानाञ्च विशोधनम् ।**

कालोमरिच आधा शाण, पिप्ला र समुद्रफेन दुई दुई शाण, सिधेनुन आधा शाण र गाजल नौ शाण बटुली चित्रा नक्षत्र परेका दिनमा पिँधेर धुलो बनाउनू । यसलाई लगाउनाले आँखा चिलाउने र आँको काच नामक रोग तथा कफजन्य आँखाका विकार नाश हुन्छ ।

आँखाका सबै रोगको गाजल

**शिलायां रसकं पिष्ट्वा सम्यगाप्लाव्य वारिणा ॥१०९॥**
**गृह्णीयात्तज्जलं सर्वं त्यजेच्चूर्णमधोगतम् ।**
**शुष्कञ्च तज्जलं सर्वं पर्पटीसन्निभं भवेत् ॥११०॥**
**विचूर्ण्य भावयेत्सम्यक्त्रिवेलं त्रिफलारसैः ।**
**कर्पूरस्य रजस्तत्र दशमांशेन निक्षिपेत् ॥१११॥**
**अञ्जयेन्नयने तेन सर्वदोषहरं हितम् ।**
**सर्वरोगहरं चूर्णं चक्षुषोः सुखकारि च ॥११२॥**

रसक (फिटकिरी ?) लाई ढुङ्गाको खलमा पिसेर मसिनु बनाउनू । यसपछि यसलाई पानी हाल्नू । फेरी त्यो पानीलाई निथारेर अर्को भाँडामा हाल्नू । यसपछि पनि बाँकी रहने रसकका टुक्रा निकालेर फाल्नू । अनि पुनः अर्को भाँडामा हाली सुकाउनू । यसपछि रसकको पाप्री बन्दछ । यसलाई निकालेर धुलो पार्नू । यसलाई त्रिफलाको काँढापानीमा तीन पटक घोट्दै सुकाउँदै गर्नू । अनि धुलोको दश भागको एक भाग कपूर मिसाएर गाजल लगाउनू । यसले आँखाका सबै रोग नाश भई आँखा आनन्दित हुन्छ ।



सौवीराञ्जन

**अग्नितप्तं हि सौवीरं निषिञ्चेत्त्रिफलारसैः ।**
**सप्तवेलं तथा स्तन्यैः स्त्रीणां सिक्तं विचूर्णितम् ॥११३॥**
**अञ्जयेन्नयने तेन प्रत्यहं चक्षुषोर्हितम् ।**
**सर्वानक्षिविकाराँस्तु हन्यादेतन्न संशयः ॥११४॥**

गाजललाई आगोमा तताउनू र त्यसमा त्रिफलाको काँडापानी छम्कनू । जब सेलाउँदछ तब पुनः तताउनू यो क्रम सात पटक गर्नू र आठौं पटकमा स्त्रीको दूध छर्केर चिसो पार्नू । अनि यसलाई राम्ररी पिँधेर काँटीले गाजल लगाउनू । यो सौवीराञ्जन नामक गाजल आँखाका लागि अति नै लाभदायक एवं आँखाका सबै रोग नाशक हुन्छ, यसमा कुनै शङ्का छैन ।

### सिसाको काँटी

**त्रिफलाभृङ्गशुण्ठीनां रसैस्तद्वच्च सर्पिषा ।**
**गोमूत्रमध्वजाक्षीरैः सिक्तो नागः प्रतापितः ॥११५॥**
**तच्छलाका हरत्येव सर्वान्नेत्रभवान्गदान् ।**

त्रिफलाको काँढा, भृङ्गिराजको रस, सुठोको रस, घिउ, गहुँत, मह र बाख्रीको दूध यी प्रत्येकमा सिसा पगाल्दै सात सात पटक चोपल्नू । त्यसपछि सिसाको काँटी बनाउनू । यो काँटी दल्नाले आँखाका रोग नाश हुन्छ ।

### प्रत्यञ्जन

**गतदोषमपेताश्रु सम्पश्यन्सम्यगम्भसि ॥११६॥**
**प्रक्षाल्याक्षि यथादोषं कार्यं प्रत्यञ्जनन्ततः ।**



सिसाको काँटी दलेर आँखाका रोग नाश भएपछि, आँखाबाट पानी निस्केपछि रोगीले एकछिन चिसो पानीमा हेर्नू । यसपछि पानीले आँखा पखाली त्यसमाथि अर्को गाजल लगाउनू । (यसबारेमा पछि बताइन्छ) ।

### गाजल लगाएर आँखा धुन हुँदैन

**नवाऽनिर्गतदोषेऽक्ष्णि धावनं सम्प्रयोजयेत् ॥११७॥**
**प्रत्यञ्जनं तीक्ष्णतप्ते नेत्रे चूर्णः प्रसादनः ।**

आँखाको रोग ठिक नभएसम्म गाजल लगाएर आँखा धुन हुँदैन । तिक्खर गाजल दलेर आँखाका पीडा भए अर्को शीतल गर्ने गाजल लगाउनू । (यो प्रत्यञ्जन र वा प्रसादन गाजलका बारेमा पछि बताइन्छ) ।

### अमृत गाजल

**शुद्धे नागे द्रुते तुल्यं शुद्धं सूतं विनिक्षिपेत् ॥११८॥**
**कृष्णाञ्जनं तयोस्तुल्यं सर्वमेकत्र चूर्णयेत् ।**
**दशमांशेन कर्पूरं तस्मिँश्चूर्णे प्रदापयेत् ॥११९॥**
**एतत् प्रत्यञ्जनन्नेत्रगदजिन्नयनामृतम् ।**

सिसालाई प्रशोधन गरी आगोमा तताएर पातलो बनाउनू । यसमा यतिनै प्रशोधित पारो मिसाउनू । यी दुई बराबर गाजल मिसाउनू । यी सबैको धुलो जति हुन्छ त्यसको दश भागको एक भाग कपूर मिसाउनू । यसलाई प्रत्यञ्जन चूर्ण भनिन्छ । यसलाई लगाउनाले आँखाका सबै रोग नाश हुन्छन् । यसले आँखामा अमृतको काम गर्दछ ।

### विष नाशक गाजल

**जयपालस्य मज्जाञ्च भावयेन्निम्बुकद्रवैः ॥१२०॥**
**एकविंशतिवेलं तत्ततो वर्तिं प्रकल्पयेत् ।**
**मनुष्यलालया घृष्ट्वा ततो नेत्रे तयाञ्जयेत् ॥**
**सर्पदष्टविषं जित्वा सञ्जीवयति मानवम् ॥१२१॥**

अजयपालको गेडाको गुदी एक्काईस पटक कागतीको रसमा घोट्दै सुकाउँदै गर्नू । त्यसपछि रानम्ररी पिँधेर गोली बनाउनू । यसलाई मानिसको थुकमा घोटेर आँखामा लगाउनाले सर्पले डसी लागेको विषको असर हटी मानिस होसमा आउँदछ ।

### आँखाको ज्योति बढाउने सरल उपाय

**भुक्त्वा पाणितलं घृष्ट्वा चक्षुषोर्यदि दीयते ।**
**जाता रोगा विनश्यन्ति तिमिराणि तथैव च ॥१२२॥**

खाना खाएर चुठेपछि चिसै हत्केला हलुका रगडेर आँखामा दल्ने गर्नू । आँखाका अगिल्तिर अँध्यारो देखिने आदि जस्ता रोग निको हुन्छ । (शर्याति च सुकन्यां च च्यवनं शक्रमश्विनौ । भोजनान्ते स्मरेन्नित्यं चक्षुस्तस्य न हीयते ॥)

दृष्टि क्षमता बढाउने उपाय

शीताम्बुपूरितमुखः प्रतिवासरं यः कालत्रयेण नयनद्वितयञ्जलेन ।
आसिञ्चति ध्रुवमसौ न कदाचिदक्षिरोगव्यथाविधुरतां भजते मनुष्यः ॥१२३॥

हरेक दिन दुई तीन पटक मुखभरी चिसो पानी लिनू र त्यही बेलामा चिसो एवं सफा र स्वच्छ पानी आँखामा छम्कनू । यसो गर्नाले अति दुःख दिने आँखाका रोग कहिल्यै हुँदैन ।

ग्रन्थकर्ताको अनुरोध

आयुर्वेदसमुद्रस्य गूढार्थमणिसञ्चयम् ।
ज्ञात्वा कैश्चिद् बुधैस्तैस्तु कृता विविधसंहिताः ॥१२४॥
किञ्चिदर्थं ततो नीत्वा कृतेयं संहिता मया ।
कृपाकटाक्षनिक्षेपमस्यां कुर्वन्तु साधवः ॥१२५॥



समुद्रसमान आयुर्वेदबाट मणिसमानका कुराहरु बुझी अनेक विद्वानहरूले लेखेका संहिताबाट अलिअलि सारांश निकाली यो शार्ङ्गधर संहिता लेखेको हुँ । महात्माजनले यसलाई कृपागरी अवलोकन गर्नु होला ।

ग्रन्थ अध्ययनको फल

विविधगदार्तिदरिद्रनाशनं या हरिरमणीव करोति योगरत्नैः ।
विलसतु शार्ङ्गधरस्य संहिता सा कविहृदयेषु सरोजनिर्मलेषु ॥१२६॥

काँढापानी, धुलो, गोली, अवलेह आदि नै रत्न भएको, अनेक प्रकारका जरो आदि रोगको दुःख नाश गर्ने यो शार्ङ्गधर संहिता कमल समान निर्मल कविका मनमा शोभायमान बनोस्

। यो ग्रन्थ रत्नको खानी लक्ष्मी भक्तजनको दुख हटाउन सक्षम भएजसरी नै मानिसको दुःख हटाउन सक्षम बनोस् ।

## उपसंहार

**अल्पायुषामल्पधियामिदानीं कृतं समस्तश्रुतिपाठशक्ति ।**
**तदत्र युक्तं प्रतिबीजमात्रमभ्यस्यतामात्महितप्रयत्नात् ॥१२७॥**

प्रायः कलियुगका मानिसको आयु र बुद्धि कम हुन्छ त्यसैले यो युगमा सबैले पढ्न योग्य, आत्मकल्याणकारी यो संहिता बनाएको छु । यसलाई ध्यान दिएर पढी प्रयत्नपूर्वक व्यवहारमा उतार्न प्रयाश गर्नू ।

इति श्रीदामोदरसूनुना शार्ङ्गधरेण विरचितायां
संहितायामुत्तरखण्डे त्रयोदशोऽध्यायः

✷

श्रीशार्ङ्गधर संहिताको उत्तरखण्ड अन्तर्गत तेह्रौं अध्यायको मोहन
प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-२,३१२+१२७=२,४३९

✷

समाप्ताऽयं ग्रन्थः

✷

हिमालको काखमा रहेको सुन्दर देश नेपालको बाग्मती अञ्चल, काभ्रेपलाञ्चोक जिल्ला, अनैकोट
गा.वि.स., वडा नं.३, चारघर टोलमा जन्म भई हाल सोही अञ्चल, काठमाडौं जिल्ला,
गोकर्णेश्वर न.पा., वडा नं.७, दक्षिणढोकामा बसोबास गर्ने मोहन प्रसाद
सापकोटाद्वारा श्रीशार्ङ्गधर संहिताको नेपालीमा
गरिएको भावानुवाद पूर्ण भयो

✷

शुरुदेखिको श्लोकको संख्याः-२,२६७+४५=२,३१२

✷

सबैको सदा सबैतिर कल्याण होस् !

# नाप विवरण

(प्राचीन नापो अनुसारका आधुनिक नाप सामाजिक सञ्जालमा विभिन्न श्रोतमा फरक फरक पाइन्छन् त्यसैले उल्लेख गरिएन, आधिकारिक श्रोतबाट यकीन गर्नु हुन अनुरोध गर्दछु)

| सर्षप आदि नाप (कलिङ्ग विधि) | | परमाणु आदि नाप (मागध विधि) | | व्रिही आदि विधि | |
|---|---|---|---|---|---|
| ३ राजिका (रायो) | १ सर्षप (सर्सिउँ) | | १ परमाणु | ४ व्रीही | १ गुञ्जा |
| १२ सर्षप | १ यव | ३० परमाणु | १ त्रसरेणु | ५ गुञ्जा | १ पण |
| २ यव | १ रक्ति | ६ त्रसरेणु | १ मरीचि | ८ पण | १ धरण |
| ३ रक्ति | १ वल्ल | ६ मरीचि | १ राजिका | २ धरण | १ कर्ष |
| ४ वल्ल | १ माष | ३ राजिका | १ सर्षप | ४ कर्ष | १ पल |
| ४ माष | १ शाण | ८ सर्षप | १ यव | ११ पल | १ तुला |
| २ शाण | १ कर्ष | ४ यव | १ गुञ्जा | २० तुला | १ भार |
| २ कर्ष | १ शुक्ति | ५ गुञ्जा | १ पण | | |
| २ शुक्ति | १ पल | ६ गुञ्जा | १ माष | | |
| २ पल | १ प्रसृति | ४ माष | १ शाण | | |
| २ प्रसृति | १ कुडव | ४ शाण | १ कोल, तोला | | |
| २ कुडव | १ मानिका | २ कोल | १ कर्ष | | |
| २ मानिका | १ प्रस्थ | २ कर्ष | १ अर्धपल, २ तोला | | |
| ४ प्रस्थ | १ आढक | २ अर्धपल | १ पल, ४ तोला | | |
| ४ आढक | १ द्रोण | २ पल | १ प्रसृति, ८ तोला | | |
| २ द्रोण | १ शूर्प | २ प्रसृति | १ कुडव, १६ तोला | | |
| २ शूर्प | १ खारिका | २ कुडव | १ मानिका, ३२ तोला | | |
| १०० पल | १ तुला | २ मानिका | १ प्रस्थ, ६४ तोला | | |
| २० तुला | १ भार | ४ प्रस्थ | १ आढक, २५६ तोला | | |
| | | ४ आढक | १ कलस, १०२४ तोला | | |
| | | २ कलस | १ शूर्प, २०४८ तोला | | |
| | | २ शूर्प | १ द्रोणी, ४०९६ तोला | | |
| | | ४ द्रोणी | १ खारी, १६३८४ तोला | | |
| | | १०० पल | १ तुला, ४०० तोला | | |
| | | २००० पल | १ भार, ८००० तोला | | |
| | | | | | |

# केही शब्द र अर्थ

अकरकरा :- वर्षातको शुरुमा पहाडी भूभागमा उम्रने, डाँठ र हाँगा कान्छी औंला जति मोटा र एक बित्ता लामा हुने, भित्र खोक्रो हुने, भुसिला, टुप्पामा पातका गुच्छा हुने र पहेँलो केसर हुने एक पोथ्रो । यसको पिरो र परपराउने स्वाद हुन्छ, अकरकला, अकारकरभ ।

अगस्ति :- पन्ध्र बीस हात अग्लो हुने, माटोभैंm फुस्रो बोक्रा हुने, सेतो काठ सेता भेट्ना र फिक्का गुलाफी रङको टुप्पा हुने, एक हात लामा कोसा लाग्ने, चार अमल जति लामा चेप्टा खालका घुम्रिएका फूल कार्तिक वा मंसिर महिनामा फुल्ने र फूलको अचार वा तरकारी खाइने एक किसिमको रुख । यसका सेता, राता, पहेँला र काला गरी चार प्रकारका फूल हुन्छन् र यसैका आधारमा यसलाई चार प्रकारका मानिएको छ । यसको फूललाई बकपुष्प भनिन्छ ।

अतिसार :- खाएका कुरा नपची पातलो दुर्गन्धी दिसा भइरहने रोग; आउँको रोग । यसका कफजन्य, वातजन्य, पित्तजन्य, आमजन्य, सन्निपातजन्य र शोकजन्य गरी छ किसिम हुन्छ । यो रोगमा सामान्यतः आमाशय सुन्निएर खाएको कुरा नपची पातलो दिसा र डकार आइरहन्छ, अमन हुन्छ र शरीर लखतरान भएर गल्दछ ।

अधा :- आधा टाउको दुख्ने रोग, अर्धभेदक, अर्धावभेदक ।

अनुपान :- खाना वा ओखती खाएपछि त्यसलाई पचाउन लगत्तै पिइने पेय पदार्थ ।

अनुलोमन :- कब्जियत भएर पेटभित्र रहेको मल वा रोकिएको मूत्रलाई खुकुलो बनाई आन्द्राभुँडी सफा गर्दै तलतिर धकेलेर दिसापिसाब मार्फत बाहिर निकाल्ने औषधी । जस्तै : हर्रो ।

अन्धो :- परेलाका डिलमा आउने एक किसिमको खटिरो; अन्नो । अञ्जननामिका, अर्जुन ।



अपची :- घाँटीमा माला लगाए जसरी खटिरा आई फोका उठेर पीप बग्ने एक रोग, गण्डमाला रोगको एक प्रकार ।

अपतन्त्र :- वायुविकारबाट हुने रोग । यो रोग हुँदा शरीर टेढो हुने, टाउको र कञ्चट दुख्ने, गला बज्ने, आँखा तन्कने र सास फेर्न कठिनाई हुने गर्दछ ।

अपतानक :- आइमाईमा गर्भपात हुँदा र पुरुषमा ठूलो चोटपटक लाग्दा वा धेरै रगत जाँदा हुने रोग । यसमा पटकपटक बेहोस हुने, कफले गर्दा घाँटीबाट घ्यारघ्यार आवाज आउने गर्दछ ।

अपबाहुक :- पाखुरामा हुने वायुले नसा सुकाएर पाखुरा सुकाउने एक रोग ।

अभिष्यन्द :- पोल्ने, रातो हुने तथा आँशु झरिरहने र चिप्रा लागिरहने आँखाको रोग, अधिमन्थ ।

अभिष्यन्दी :- थलथले गुणले गरुङ्गोपनबाट रस निकाल्ने चौबीस थरी शिरा नामका नसाहरू थुनेर शरीरलाई भारी (गरुङ्गो)

अरुषिका :- कफ, रगत बिग्रेर वा कीराका कारणले आउने धेरै मुख हुने र अति दुख्ने खटिरो ।

अर्दित :- मुखको कुनै भाग वातदोषले गर्दा नचल्ने हुने एक रोग विशेष (फेसियल प्यारालाइसिस) ।

अर्म :- आँखाको पुतलीमाथि सेतो दाग वा छिटा जस्तो हुने आँखाको रोग ।

अलसक :- एक प्रकारको अजीर्ण रोग ।

अल्काई (रोग):- गुदद्वारको भित्रपट्टि खटिरो आई रगत बग्ने रोग । अर्श, अलकाई, गदगुदज, गुदाङ्कुर, दुर्नामक, दुर्नाम, हर्सा ।

अष्ठीला :- मूत्राशयमा गाँठा पलाएर मूत्रत्यागमा अवरोध हुने एक रोग (प्रोस्टेट ग्ल्याण्ड) ।

आक्षेप :- शरीर काम्ने वा नसाभित्र हावा छिरी कुनै अङ्ग झट्कार्ने रोग, आक्षेपक ।

आध्मान :- पेट फुल्ने एक रोग, अपानवायु रोकिनाले छालाको थैलो फुले जसरी पेट फुल्ने रोग ।

आनाह :- पचेर अथवा नपची दूषित भएको मलमूत्र पेटमा रोकिएर हुने रोग ।

| | |
|---|---|
| आम :- | खाएपिएका कुरा पचेपछि बन्ने रस । सामान्यतः “आम” पनि रसै हो तर आहार राम्ररी नपाकी वा नपची बनेको रस हो (शार्ङ्गधर) । |
| आमदोष :- | कमजोर पाचनशक्तिका कारण शरीरमा नपचेका खानेकुरा सडेर बन्ने विषालु तत्व । |
| आमवात :- | आमरस वा आउँका कारण हुने जोर्नी दुख्ने वातरोग । |
| आस्थापन वस्ति :- | विभिन्न औषधीको काँढापानी बनाई त्यो काँढापानीलाई छदाउन वा दिसा पिसाब गराउन प्रयोग गर्ने विधि । |
| इन्द्रलुप्त :- | रौँको जरामा रहने रगत खराब भएर रौँ झारिदिने र फेरी रौँ पलाउन नदिने रोग (के.यन.स्वामि), कपाल झर्ने रोग विशेष (चरक.सं.) । तालुखुइलने रोग । |
| उदावर्त :- | अपानवायु माथितिर सरी मलमूत्रलाई पनि माथिमाथि तान्ने पेटको रोग । अपानवायु, दिसा, पिसाब, हाई आँसु, हाच्छिउँ, डकार, बान्ता, शुक्र, भोक, तिर्खा, निःश्वास र निद्रा आउन लाग्दा जबरजस्ती रोक्ने गरे यो रोग लाग्दछ । रोग लागिसकेपछि दिसा, पिसा र अपानवायु बन्द हुन्छ । पेट कराउने गर्दछ । शरीर कमजोर भई दुख्न थाल्दछ । |
| उन्माद :- | पागलपन, कडा रिस, मानसिक रोग । |
| ऊरुस्तम्भ :- | तिघ्रा शिथिल हुने रोग, आढ्यवात । |
| ऊर्ध्ववात :- | धेरै डकार आउने रोग । |
| कण्डू :- | शरीर चिलाउने रोग । |
| कण्डेउलो :- | कमरमुनिको फिलाको हाड जुन् तीन भागको हुन्छ । त्रिक, त्रिकस्थि । |
| कब्जियत :- | पेटमा मल रोकिएर बस्ने रोग विशेष (आनाह) । |
| कलेजोका मांसखण्ड :- | कालखण्ड, यकृत् । |
| कल्क :- | कुनै नरम वा सुकेको ओखतीलाई पानी मिसाई पिसेपछि बन्ने धुलो वा लेदो ।क्रक । |
| कला :- | धातु भित्र रहने हँडिदो (हल्का हरियो रङ तथा अमिलो र उग्लिएको स्वादको पदार्थ) जो शरीरको तातोले पच्ने गर्दछ, त्यसलाई कला भनिन्छ । |
| कान्तिसारलौह :- | जुन फलामे भाँडोमा राखेको पानीमा तेल पर्दा फैलिँदैन, तातेको भाँडामा फुराएको हिङ्मा गन्ध आउँदैन, नीमको रस पर्दा गुलियो बन्दछ, दूध तताउँदा उम्लेर जाँदैन, पानी राखेर चना भिजाउँदा कालो हुन जान्छ, यस्तो गुण भएको फलाममलाई कान्तिसारलौह भनिन्छ । कान्तम् । |
| काम्बलिक :- | फलको रसलाई अमिला फल वा कन्दमूल हाली (प्रायः तिलको छोप र अनारदाना) तयार पारिने अमिलो पेय पदार्थ । |
| कालकूट :- | भारतको श्रृङ्गवेर, कोंकण, काकोदाचल पहाडतिर हुने पीपलको रुखको जस्तो चोप आउने नौथरी कन्दविषमध्येको एक विष । |
| कुष्ठरोग (विशेष) :- | किटिभ । |
| कुष्ठरोग (टाटे) :- | कोठ, मण्डलक । |
| कुष्ठरोग (सेतो) :- | कुष्ठ, श्वित्र । |
| कृच्छ्र :- | मूत्रकृच्छ्र आदि पिसाबसम्बन्धी रोगहरू । |
| कोठी :- | छालामा आउने कोठी, तिलकालक । |
| क्लम :- | कुनै परिश्रम नगर्दा पनि शरीर थाकेर मन खिन्न हुनु । |
| क्रोष्टशीर्ष :- | क्रोष्टशीर्षक, क्रोष्टुशीर्षक, वायु र रगत बिग्रेर घुँडाको बीचमा स्यालको टाउको जस्तो खुब ठूलो र मोटो अत्यन्त दुख्ने गरी सुन्निने रोग वा रोगी । |
| क्षतक्षीण :- | धेरै परिश्रम वा मैथुनका कारण छाती भित्रको रस वा मासु सुक्ने रोग । |
| क्षवथु :- | हाच्छिउँ आइरहने एकप्रकारको नाकको रोग । |

खिल :- चर्मकील ।
खोकी :- कास
ग्रहणी :- जठराग्निको आधार भएकी नाइटोभन्दा केही माथि ग्रहणी (खानपिन ग्रहण गर्ने) एउटा नाडी हुन्छे । यिनको काम नपचेको कुरा पचाई मलमूत्र मनाएर शरीर बाहिर निकाल्नु हो । यो नाडीमा कुनै विकार भई खाएपिएको नपची बाहिर निस्कने वा पचेपनि पटकपटक गरेर बाहिर निस्कने रोगलाई ग्रहणी भनिन्छ । अन्य अर्थ : खाएको चिजमा बोसे आन्द्रोले गर्नुपर्ने काम गर्न नसक्दा हुन जाने पेटको रोग । यसले पेट फुल्ने, दुख्ने, दिसा लागिरहने र भोक नलाग्ने समस्या हुन्छ ।
गानुगोला (रोग) :- गुल्म । (क) नसा सुन्निएर गाँठो पर्नु । (ख) वात आदि दोषले छाती वा पेटमा हुने हावाको गोला पर्ने रोग ।
गुदभ्रंश :- गुदद्वारको भित्री भाग बाहिर आउने वा गुदद्वारमा मुजा पर्ने एक रोग ।
गृध्रसी :- कम्मरको जोर्नी, कम्मर, ढाड र गोडा निदाई सियाले घोचेझैं दुख्ने र काम्ने, वात वा पित्त विकारले हुने एक रोग ।
ग्राही :- जुन औषधीले पेटभित्रको अग्निलाई बाल्दछ, “आम” आदिलाई पचाउँदछ, गर्मीकारक हुनाले गर्दा जलले पैदा गर्ने कफ आदि दोष, धातु र मललाई सोस्दछ त्यसलाई वा त्यस्तो गुणलाई “ग्राही” भनिन्छ । जस्तै : सुठो, जीरा, चाभा आदि ।
ग्लानि :- थकाइ, सुस्तता, अरुचि, घिन, पछुतो, मानसिक कष्टबाट हुने लाचारीको दुःख ।
घाउ :- अरुस्, ईर्म, व्रण ।
घाउ (विशेष) :- नसासम्म गढेको नथाक्ने घाउ, नाडीव्रण ।
चिप्रा :- दूषिका ।
चिलाइ (लुतो जस्तै रोग) :-कण्डु, कण्डू, कण्डूया, खर्जू ।

छारेरोग :- अपस्मार, अपस्मृति, मृगी ।
छेदन :- जुन औषधीले एक आपसमा मिली जमेर बसेको कफ आदि दोषलाई आफ्नो तागतले अलग गरी फोर्दछ (तर बाहिर निकाल्न सक्ने क्षमता हुन्न) त्यसलाई “छेदन” भनिन्छ । जस्तै : यवक्षार, मरिच, शिलाजित आदि ।
जठराग्नि :- आयुर्वेद अनुसार तीन थरी अग्निमध्ये नाइटो र मुटुको बीचमा रही पित्तरूपले खाएको कुरा पचाउने अग्नि ।
जतुमणि :- शरीरको छालामा टाटा हुने एक रोग ।
जाड्य :- (क) लोसेपन, सुस्ती । (ख) मूर्खपन । (ग) जडपन, चेतना नहुने अवस्था ।
तूनी :- मूत्राशयबाट दुख्दै गुदद्वार वा तल्लो पेटसम्म दुख्ने एक वातरोग । तूणी ।
तोद :- पीडा, दुःख ।
त्रिकटु :- सुठो, मरिच र पिप्पला बराबर मिसाई तयार पारिएको धुलो । फलत्रिकम्, व्योष ।
त्रिदोष :- वात, पित्त र कफ यी तीन दोष वा यी तीन दोषबाट हुने रोग ।
त्रिफला :- फलत्रिकम्, वरा, श्रेष्ठा ।
दाद :- दद्रु ।
दादुरा :- मसूरिका ।
दारुणक :- टाउको रुखो भई भुसजस्तो धुलो झर्ने रोग विशेष । चाया ।
दीपन :- जुन औषधीले आम (खाएको कुरा पचेर बनेको रस) लाई पचाउँदैन तर पाचकाग्निलाई बाल्दछ त्यस्ता औषधीलाई “दीपन” भनिन्छ । जस्तैः सुप ।

| | |
|---|---|
| दीपनपाचन :- | जुन औषधीले पाचकाग्निलाई पनि बाल्दछ र आमलाई पनि पचाउँदछ त्यस्ता औषधीलाई “दीपनपाचन” भनिन्छ । जस्तै : चितू, अरिड । |
| दुबी :- | किलास, सिध्म । |
| दूषीविष :- | शरीरका धातुलाई बिगार्ने खालका विष । |
| दोलायन्त्र :- | काँढापानी आदि पातला पदार्थ हालिएका कुनै गाग्रा आदिमा भरी शुद्ध हुने ओखतीलाई ( त्यसपछि) पोको पारी झुण्ड्याएर पसिना निकाल्ने विधिलाई दोलायन्त्र भनिन्छ । |
| धातुको व्यथा :- | प्रमेह, मेह । |
| धान्याभ्रक :- | धानका सहायताले अभ्रख शुद्ध पार्ने तरिका वा त्यसरी शुद्ध पारिएको अभ्रख । टुक्रा पारिएका अभ्रकलाई यसको एक चौथाई धानमा मिसाउनू र कुनै बलियो कपडामा पोको पार्नू । अनि कुनै फराकिलो भाँडामाथि यसलाई हातले समाउनू र पानी हाल्दै माड्दै गर्नू । यसो गर्दा पोकोमा भएको जति अभ्रख तल भाँडामा पानी मिसिएर आउँदछ । यसरी सबै अभ्रख पानीसँग मिसिएर आएपछि पानी निथारेर फाल्नू । अभ्रखको धुलो घाममा सुकाउनू । यसलाई धान्याभ्रख भनिन्छ । |
| नकुलान्ध :- | न्याउरीमुसाको जस्ता आँखा हुने र रङ्गीबिरङ्गी देखिने आँखाको एक रोग । |
| निलोतुथो :- | तामाको उपधातु; तामाको नीलो क्षार वा लवण । तुत्थक, नीलाञ्जन, नीलाञ्जना, सङ्ग । |
| नौसादर :- | एक प्रकारको फस्को र कडा क्षार पदार्थ । |
| पक्वातिसार :- | गाढा पहेंलो र पातलो दिसा हुने रोग (ब्लोस डाएरिया) । |
| पक्वाशय :- | आन्द्रासँग जोडिएको भुँडिको तल्लो भाग, पाकाशय । |
| पक्षाघात :- | वायुविकारले गर्दा शरीरको एक हर वा कुनै अङ्ग अथवा पूरै शरीर निधाएझैं हुन गई चल्न चरपटाउन नसकिने रोग । |
| पचाउन कठिन :- | गुरु, सर । |
| पथ्य :- | रोग नभड्काउने, रोगीलाई हित गर्ने, फाइदा गर्ने, योग्य, उचित । |
| परिणामशूल :- | खाना पच्ने बेलामा पेटमा हुने शूल वा दुखाइ, पक्तिशूल । |
| पाचन :- | जुन औषधीले आमलाई पचाउँदछ तर पाचकाग्निलाई बाल्दैन त्यस्ता औषधीलाई “पाचन” भनिन्छ । जस्तै : नागकेसर । |
| पाण्डु :- | सम्पूर्ण शरीर र रौं सेतो हुने एक रोग; श्वेतकुष्ठ; सेतो कोढ । |
| पातालयन्त्र :- | घोप्टो र उत्तानो पारी मुखमुख जोडेर बनाइने रसादि ओखती पकाइने माटोको यन्त्र (भाँडो) विशेष । |
| पामा :- | धेरै पीप बगिरहने, धेरै पोल्ने र चिलाउने, ससाना बिमिरा आउने लुतो विशेष, भैंसे लुतो विशेष, यसलाई अठार थरीका कुष्ठरोगमध्येको एक मानिन्छ । |
| पार्श्वशूल :- | उरोग्रह । |
| पिडका :- | सानातिनो खटिरो वा पिलो वा पिड्को । |
| पिनास :- | प्रतिश्याय । |
| पिल्लम् :- | अलिअलि चिप्रा वा पानी निस्कने आँखाको एक रोग । |
| पुण्डरीक :- | सेतो कमलको पातजस्तै सेतो र भित्री भाग रातो हुने हल्का उठेको देखिने, बीचमा केही रातो हुने अठार प्रकारका कुष्ठ रोगमध्ये एक । |
| पूतिनासा :- | नाक गनाउने रोग विशेष । |
| प्रत्यष्ठीला :- | वातरोग विशेष । |
| प्रदर :- | स्त्री-जननेन्द्रियबाट सेतो पानी बग्ने रोग । |

प्रदेह :- फोका वा खटिरामा लगाइने लेप

प्रमाथि :- जुन द्रव्य आफ्नो शक्तिले कान, मुख, नाक आदि प्वालबाट वा अरु प्वालबाट शरीरभित्र सञ्चित कफ आदि दोष र गढेका रोगलाई बाहिर निकाल्दछ त्यसलाई वा त्यस्तो गुणलाई “प्रमाथि” भनिन्छ । जस्तै : मरिच, बोझो आदि ।

प्रमेह :- पिसाबसँग मिसिई वीर्य अथवा शरीरका अरू धातु पातलिएर जाने विभिन्न रोगहरू ।

प्रवाहिका :- कुपित भएको वायुले गर्दा सञ्चित भएको कफ मलसहित भई गुदद्वारबाट धेरै पटकपटक गरी निस्कने रोग ।

प्रसेक :- मुखबाट र्‍याल वा योनिबाट पानी बहने रोग । बमन, मुखबाट पानी र नाकबाट सिङान झरिरहने रोग, एक निको पार्न कठिन हुने रोग ।

फलामको किट :- मण्डूर, मुण्ड ।

बृंहण :- शरीर वर्धक ।

भगन्दर :- गुदद्वार र अण्डकोशको मध्यमा आउने खटिरा विशेष ।

भस्मक :- जति खाएपिए पनि पच्ने र खाएपिएको कुरा पचाउन नपाउँदा शरीरका धातुलाई तानेर पचाउने रोग ।

भिरिङ्गी रोग :- रक्तविकारले जननेन्द्रियमा खटिरा आउने एक सङ्क्रामक रोग, उपदंश, फिरङ्ग ।

भेदन :- वात आदि दोषले पेटभित्र अड्किएका वा गोटा परेर बसेका मलमूत्रलाई टुक्राटुक्रा पारी मलद्वार वा मूत्रनली मार्फत बाहिर निकाल्ने औषधी वा गुण । जस्तै : कटुकी ।

मण्डल :- यो शब्दको अर्थ आयुर्वेदका पुस्तकमा आठ दिनदेखि अठचालीस दिनसम्म लगाएको पाइन्छ ।

मण्डलकुष्ठ :- सेतो, रातो, सारो, नरम र चिल्लो छाँटको कोढ रोग, जसको आकार एक अर्कोसँग मिल्दोजुल्दो हुन्छ ।



मदकारी :- जे कुरा (खानपिन गर्ना) ले बुद्धिलाई लोप गराउँदछ त्यसलाई “मदकारी” भनिन्छ । यस्ता कुरामा तमोगुण बढी हुन्छ । जस्तै : सुरा, मद्य आदि ।

मदात्ययः- मात लाग्ने खालका खानपिन वा व्यवहार बढी गरेका कारण हुने रोग ।

मन्थ :- ओखतीको धुलो वा कुटेर मसिनो पारिएको लेदोलाई चार पल पानी सहित माटाको हाँडीमा हाली मथेर निकाली छानिएको रस ।

मन्यास्तम्भ :- गर्दनको नसो साह्रो हुने एक रोग ।

मलमूत्र बन्द हुने रोग :- आनाह, विबन्ध ।

मशक :- छालामा आउने कालो वा रातो ससाना मासुका दाना (मुसा) ।

मुर्दासङ्ख :- वेदार नामक पर्वतको टाकुरामा पाइने, टल्कने, पहेँलो रङको, घाउखीटरामा लगाइएने एक औषधी । कुष्ठ ।

मूढवात :- कुनै एक ठाउँमा गुटमुटिएको वायु ।

मूत्रकृच्छ्र :- पिसाबले च्याप्ने तर गर्न खोज्दा थोपा थोपा मात्र हुने रोग ।

मूत्राघात :- पिसाब बन्द हुने बाह्र थरीको रोग ।

योगवाही :- शरीर भित्र गर्मी गर्ने पदार्थसँग मिलेर अति गर्मी गर्ने र ठण्डी गर्ने पदार्थसँग मिली अति ठण्डी गर्ने औषधी वा त्यस्तो गुण ।

रक्तपित्त :- मुख, कान, आँखा, नाक, गुदद्वार तथा मूत्रद्वारबाट रगत बहने रोग ।

रक्तप्रमेह :- पुरुषका पिसाबबाट गनाउने खालको रगत बहने एक रोग ।

रसाञ्जन :- चुत्राको काँडा, बोक्रा वा जराको काँढापानीमा त्यति नै दूध मिसाएर खुवा जस्तो हुने गरी पकाइएको ओखती सुकाएर पारिएको धुलो । तार्क्ष्ज ।

रसायनी :- बुढ्यौली आउन नदिने वा बूढालाई तन्नेरी गराउने ओखती वा गुण । जुन औषधीले शरीरको बुढ्यौली (सत्तरी वर्ष पछि) मा हुने रोग र (सबै उमेरका) जरो आदि रोगलाई निको पार्दछ त्यसलाई वा त्यस्तो गुणलाई “रसायन” भनिन्छ । जस्तै : गुर्जो, रुदन्ती (हिमाली सागजातको बूटी विशेष), गोकुलधूप, हर्रो आदि ।

रेचन :- पेटमा रहेका राम्ररी पचेका वा केही नपचेका खाएका कुरालाई पातलो बनाई मलद्वारतिर धकेल्ने औषधी वा गुण । जस्तै : सेतो निशोध ।

रेतस :- पुरुषको शरीरमा रहेको शुक्र धातुलाई सक्रिय (चैतन्य) बनाउने वा उत्पन्न गर्ने खालका औषधीलाई वा गुणलाई “रेतस” भनिन्छ । जस्तै : दूध, माष, भलायोको फलको गुदी, अमला आदि ।

लङ्घन :- नखाएर, बान्ता गरेर, दिसा गरेर, रगत निकालेर, तातो पानी पिएर, पसिना निकालेर, बान्ता र दिसा दुबै उपायले, पानी नपिएर, हावामा बसेर, घाममा बसेर, खाएको पचाएर, खाना नखाएर, परिश्रम गरेर र शिरो विरेचन गरेर शरीरलाई हलुका बनाउने आयुर्वेदीक तरिका ।

लुतो :- कण्डू, कच्छू, खर्जू, पामन्, पामा, विचर्चिका ।

लेखन :- जुन औषधीले रस आदि धातु वा वात आदि दोषलाई (भित्रभित्रै) सुकाएर (वा घटाएर) शरीरबाट बाहिर निकाली दिन्छ त्यसलाई वा त्यस्तो गुणलाई “लेखन” भनिन्छ । जस्तै : ठूलो बिही, तातो पानी, बोझो, जौ आदि ।

वमन :- जुन औषधीले नपचेका तर पित्त र कफ बनेर पेटभित्र अड्किएका कुरालाई बलपूर्वक मुख मार्फत (बान्ता गराई) निकाल्दछ त्यसलाई वा औषधीमा हुने त्यस्तो गुणलाई “वमन” भनिन्छ । जस्तै : मैनफल ।

वाजीकर :- जुन औषधीले पुरुषको धातु बढाई त्यस मार्फत स्त्रीमा रोमाञ्च सहितको शक्ति सञ्चार (मैथुन सुख) पैदा गर्दछ त्यसलाई “वाजीकरम्” भनिन्छ । जस्तैः गुनालु (एकजातको बलु झार), जाइफल, कुरिलो, दूध, सखर, काउसोका गेडा आदि ।



वातरक्त :- हातगोडाका औंला वा अरु भागका जोर्नी सुनिई दुख्ने रोग

वातोदर :- वायुविकारबाट उत्पन्न हुने पेटको रोग विशेष ।

विकाशि :- जुन औषधीले (नपच्दै) शरीरका सबै बन्धनलाई खुकुलो पार्दछ र रसादि धातुका तेजलाई त्यो धातुबाट सोस्दछ त्यसलाई वा त्यस्तो गुणलाई “विकाशि” भनिन्छ । जस्तै : सुपारी, कोदो ।

विचर्चिका :- खोप लगाउँदा देखिने जसरी छालामा केही सुन्निएर रातो टाटा देखिने र पछि त्यसमाथि सेतो र चम्किलो पाप्रा देखिने र त्यो उप्किएपछि रगत आउने दादजस्तै एक प्रकारको छालाको रोग ।

विदारीका :- घाँटीको रोग विशेष । कानको रोग विशेष । काखीका फोका आउने रोग विशेष ।

विद्रधि (रोग) :- गुदद्वार, वस्ति, नाभि, कोखा, तिघ्राका जोर्नी, मिर्गौला, मुटु, कलेजो, फियोमा पैदा भएर कालान्तरमा फुट्ने खटिरा विशेष ।

विदाह :- पित्तप्रकोपले हात, गोडा, छाती आदि पोल्नु ।

विलेपी :- चामलभन्दा चार गुना बढी पानी हालेर पकाइने खाद्य वस्तु ।

विश्वाची :- पाखुराको पछाडिदेखि औंलासम्म हुने कण्डरा नामक नसा सुकेर हात खुम्च्याउन फैलाउन नसकिने रोग ।

विष्टम्भ :- दिसा रोकिएर पेट फुल्ने रोग विशेष ।

विष्टम्भी :- मलमूत्र अवरोध गर्ने, विष्टिम्भि ।

विष (गरविष) :- दुई वा दुईभन्दा बढी द्रव्यको संयोगले पैदा हुने विष ।

विषमज्वर :- कहिले चिसो कहिले तातो, कहिले मन्द र कहिले तीव्र भएर अनियमित रूपले आउने जरो; कामजरो ।

विषाद :- चाहना पूरा नहुँदा मनमा हुने दुःख, शारीरिक शिथिलतावा निश्चेष्टता, डिप्रेशन ।

विसर्प :- शरीरमा ससाना फोका उठी जरो आउने छालाको एक रोग । सुके लुतो ।

विस्फोट :- छाला काला, रातो र पातलो हुने एक प्रकारको कुष्ठरोग, विष्फोटक ।

विस्रम् :- काँचो मासुको गन्ध आउने ।

वैक्रान्त :- खानीबाट निकाल्दा विकृत रूप भएको हिरा ।

व्यङ्ग :- मुखभरि ससाना खटिरा वा काला दाना दाना आउने रोग ।

व्यवायि :- नपाकेको तर खाएपछि शरीर भरी फैलिने र मदिरा वा विष जसरी पच्ने (र असर गर्ने) औषधीलाई वा गुणलाई "व्यवायि" भनिन्छ । जस्तै : भाँग, अफिम आदि ।

शमन :- मानिसले खाएपिएको कुरासँग विद्वेष नगरी ती शरीरभित्र जहाँ छन् त्यहीँ गई ती कुरासँग मिसिएर तिनको दोष नष्ट गर्ने (वान्ता वा दिसा नलगाई रोग ठिक गर्ने) औषधी वा गुण । जस्तैः अमला ।

शालाक्यतन्त्र :- नाक, कान, मुख, आँखा आदिको चिकित्सा गर्ने शास्त्र ।

शीतपित्त :- चिसो र पित्तविकारले शरीरमा डाबर आए जसरी आउने एक किसिमको दाद ।

शुक्रल :- जुन औषधीले शुक्र वृद्धि गर्दछ त्यसलाई वा त्यस्तो गुणलाई "शुक्रल" भनिन्छ । जस्तै : अश्वगन्धा, मुसलीकन्द, सखर, कुरिलो आदि ।

शूकदोष :- जननेन्द्रिय बढाउन प्रयोग गरिएका ओखती दल्नाले पुरुषलाई हुने रोग ।

शूल : - (क) टाउको, हात, गोडा आदि कुनै पनि अङ्गमा हुने ज्यादा दुखाइ । (ख) वायुप्रकोपले हुने पेटको ज्यादा दुखाइ । (ग) वातरोग । गानु, गानो, गानुगोला, गोला ।



शोधन :- जुन औषधीले वात दोषका कारण शरीरभित्र कतै जमेर बसेका मललाई फोरफार गरी माथि नाकमुखबाट वा तल मलमूत्रद्वारबाट बाहिर निकाल्दछ, त्यसलाई वा त्यस्तो गुणलाई "संशोधन" भनिन्छ । जस्तैः देवदार ।

शोफ :- शरीरको कुनै अङ्ग सुन्निनु, शोथ ।

शोष :- शरीर सुक्नु, छ किसिमका क्षयरोग ।

श्वास :- दम; कमजोरी, रोग, परिश्रम आदिले छिटोछिटो चल्ने सास; धक्ने रोग; धम्कीको रोग ।

सूक्ष्म :- जुन औषधी रौँका प्वालप्वालमा छिर्दछ त्यसलाई व त्यस्तो गुणलाई "सूक्ष्म" भनिन्छ । जस्तै : सिधेनुन, ठूलो कण्टकारी, नीम वा अडिरको तेल आदि ।

सूर्यावर्त :- जति जति घाम माथि आयो उतीउती टाउको दुख्दै जाने र घाम अस्ताउँदै गएपछि कम हुँदै जाने रोग ।

सोमरोग :- आइमाईको योनिबाट सङ्लो सेतो पानी बग्ने रोग ।

संस्रन :- पछी पच्ने सम्भावना रहेका तर वात आदि दोषले गर्दा कतै पेटभित्र अड्किएका खाएको कुरालाई नपच्दै तल्लो भागमा लेराई मलद्वार मार्फत निकाल्ने खालका औषधी वा गुण । जस्तै : राजवृक्ष फलको गुदी ।

स्तम्भन :- (क) रुखो, शीतल टर्रो र चाँडै पच्ने अवस्थाकम र वायुलाई उल्टो गतिमा हिँडाउने ओखती वा गुण । (ख) वीर्य आदि धातु वा दिसा रोक्ने ओखती वा गुण । (ग) शरीरको कुनै अङ्ग वा पूरै शरीर चल्न चरपटाउन नसक्ने स्थिति वा अवस्था । जुन औषधी रुखो, ठण्डीग र्ने र टर्रो स्वादका हुनाका कारण पाकेपछि हलुका हुन्छन् र वातदोष जन्माउँदछन् तिनलाई वा त्यस्तो गुणलाई "स्तम्भन" भनिन्छ । जस्तै : ठूलो कुरो, टटेलो आदि ।

स्तैमित्य :- इन्द्रियले काम नगर्ने वा जड हुने अवस्था ।
स्फिच् :- कमरमा लागेको मासु ।
स्वर बस्नु :- स्वरभेद ।
हनुस्तम्भ :- चिउँडो र कञ्चटको बीचको हाड नचल्ने रोग ।
हलीमक :- पाण्डुरोग विशेष ।
हारिद्र :- हलेदाको पातझैं पात तथा गानो हुने, हलेदाको खेतमा हुने नौथरी विषमध्ये एक ।
हैजा :- विशूचिका ।